# नेपाल को इतिहास

## अर्थात् दिग्दर्शन

लेखक—रामजी उपाध्याय।

# समर्पण —

"त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पणम् ।"

श्री ५ महाराजाधिराज,

स्वस्तिश्री श्रीगिरिराज चक्र चूडामणि सदा समर विजयी

ऐतिहासिक नेता स्वरूप देशका

अधीश्वर

महाराणा त्रिभुवन वीरविक्रम शाह देव शमशेरजंग

का

बाहुलीमा, आफ्ना ऐतिहासिक वीरपुंगवहरूको विमल गाथा,

देशका उत्थानकालका स्वर्ण-युगको र वर्तमान

शोषित देशका पतनको र पतनका कारणको

वास्तविक वर्णन गरिएको यो

नेपालको इतिहास

समर्पित छ.

प्रभू,

आफ्ना वंश-प्रवर्तक रघु पछि भगवान् रामचन्द्रका विमल
आदर्श-चरित्र, कष्ट-सहिष्णुता वीरश्रेष्ठ कार्यको र आफ्ना
पूर्वपुरुष बप्पारावल जस्ले पगलेको शीशालाई पचाई
शिशौदिया नाम चलाए, राणा हमीर जसले आफ्नो
गइसकेको राज्यको एक्लै निरस्त्र भएर पनि केवल
भिल्लहरूका सहायताले उद्धार गरे, राणाप्रताप
जसले आफ्ना साहसका भरले अगाध शक्ति
सम्पन्न मोगल सम्राट्लाई तुरकका
ठाऊँमा राजा सम्म भनेनन् र
प्रातःस्मरणीय राजा पृथ्वीनारायणशाह र राजा रणबहादुरशाह
जसले नगण्य आबादीको गोर्खाराज्यका आफ्ना मुठीभरीका
मानिसका भरले नेपाल साम्राज्य खड़ा गराएको आदर्शा-
नुरूप महान् साहस पूर्वक नीचाशय नमकहराम भृत्य-
हरूका विघटन र नेपालका पुनरोद्धार लाई
उठाएको कदमले सर्कार को जन्म सार्थक र
सफल भई, सर्कार पनि आफ्ना ऐतिहासिक
महापुरुष हरू तुल्य प्रातःस्मरणीय रूपले
सदाका निमित्त देशमा स्मरणीय होइ-
बक्सिएको छ.

देश र दुनियाँ सर्कारका साथ छ.

# भूमिका

इतिहासको विषय अत्यन्त गहन तथा महान् छ। त्यसमा कुनै विद्वान् सज्जनले कलम उठाउने स्थानमा म जस्तो अशिक्षितले कलम उठाउनु हास्यास्पद हो ता पनि समयको मागले मैले आफ्नो चंचल चित्तलाई रोक्न सकिन। आफ्ना त्यस चांचल्यता-वश आफ्ना घरको वंशावलि र पितामह स्वर्गीय सुब्बाहोमनाथ उपाध्यायले लेखेका "वर्तमान नेपालेर इतिवृत्त" बाट प्रेरणा पाई यो पुस्तकलाई लेख्ने प्रयास गरेको हूँ। कवि कुलगुरु कालीदासका शब्दमा "सूत्रस्ये वास्ति मे गतिः" झैं मैले पार्वत्य वंशावली र अनेक देशी विदेशी विद्वान्हरूले लेखेका इतिहास हरु बाट उधृत गरेको लेखहरू लाई एक सूत्रमा गाँथी यो इतिहासरूपी माला तयार गरेको हूँ। यस्मा मैले नेपालका अनेक बृद्ध, पुराना भारदारहरूका मुखबाट सुनेका कुरा हरूको पनि संग्रह गरेको छ। मेरा अल्पज्ञतामा दृष्टि न दिई देश भाई हरूले यस पुस्तिका बाट यत्किंचित् पनि लाभ वा आत्मतुष्टि उठाउन वा प्राप्त गर्न पाउनु भयो भने म आफ्नो परिश्रम लाई सफल सम्झनेछु। मैले यो ग्रन्थ लेख्दा राइट, प्रिंसेप, डिग्वे, क्र्यांसीटाट, विलियम, कनिंघम, मिल्स, पर्सिवल, फ्रांसीस हैमिल्टन, डा० भगवानलाल इन्द्रजी, जायसवाल, वेंडल, डाक्टर सुन्दरलाल, वीरवर सावरकर, सूर्यविक्रम ज्ञवाली, पं० बलदेव मिश्र, पं० नारायण पाण्डे

पं० अम्बिकाप्रसाद उपाध्याय आदि विद्वान् सज्जनहरूका इतिहासग्रन्थ बाट घटना संग्रह गरेको ले म वहाँहरूको बडो आभारी छु । मलाई मौखिक घटना हरू बताउने सज्जनहरू लाई पनि म सहर्ष धन्यवाद दिन्छु ।

यसमा अनेक घटनावलि छुट्न पनि सक्छन् । त्यस विषयमा विज्ञ सज्जनहरूले प्रकाश दिई सप्रमाण लेखि पठाउनु भयो भने त्यस्लाई सहर्ष स्वीकार गरी अर्को संस्करणमा उचित स्थान दिनेछु ।

यो ग्रन्थ अत्यन्त हडवडीले छपेको र यस्मा भएका तस्वीर-हरू को ब्लाक चाँडो तयार गर्नका निमित्त स्वयं मैले नै दौड-धूप गर्नु पर्दा प्रूफ करेक्सन लाई समय न पाएको र हिन्दी का कम्पोजिटरहरूले नेपाली भाषा कम्पोज गर्न न जानेको ले यस पुस्तकमा वेठेगान अशुद्धी हरू रहेका छन् । तसर्थ पाठक हरूमा मेरो करबद्ध प्रार्थना छ कि मेरो यो ठूलो अपराध वहाँ हरूले क्षमा गर्नु होला । अर्को संस्करणमा ती अशुद्धि हरू अवश्य संच्याईने छन् ।

आफ्ना स्वामी हरुको विमल विजय श्री युक्त कीर्ति कलाप ।
लेखी नेपालवासी हरू सब जनमा गर्दछू यो प्रकाश ॥
कल्लेरीग्राम स्वामी, द्विज, प्रभु-कुलका भक्त प्रख्यात नाऊँ ।
सुब्बा श्रीहोमनाथात्मज तनय म श्री रामजी नाउँको हूँ ॥

नन्दन साहुको गली
काशी ।

विनीतः—
रामजी उपाध्याय

# विषयानुक्रमणिका ।

नेपाल चित्रावली —



नेपाल संगठयिता श्री ५ राजा पृथ्वीनारायण शाह



(१७४२-१७७४) (५)



वर्तमान महाराजाधिराज
स्वस्ति श्रीगिरिराजचक्र चूड़ामणि नरनारायणेत्यादि
विविध विरुदावलि विराजमान
मानोन्नत—श्री ५ महाराजाधिराज
His Majesty the King त्रिभुवन वीर विक्रम शाह
देव सम्शेर जङ्ग सदा समर विजयीनाम्। (१)




ROYAL ARMS OF NEPAL

नेपालको राजमोहर



महाराजाधिराज श्री ५ त्रिभुवन वीर विक्रम शाह

को हस्ताक्षरको प्रतिलिपि



श्री ५ महाराजधिराज को श्रीपेंच ( राजमुकुट ) (३)





जंगबहादुरका पहिलेको र पछिको नेपालका
प्रधानमंत्रीहरूको तीनचाँदे पगरी



श्री ५ राजा श्री रण बाहादुर शाह

श्री ५ राजा गीर्वाणयुद्धवीरविक्रमशाह (५)



श्री ५ राजा राजेन्द्र वीर विक्रमशाह
(१८१६-१८४७) (६)



सन् १८४६ को कोतपर्व कारिणी महाराज्ञी श्री ५ राज्यलक्ष्मी देवी (७)



श्री ५ राजा सुरेन्द्रवीर विक्रमशाह ( १८४७-१८८१ ) (८)



श्री ५ वलिअहद महाराज त्रैलोक्यबीरविक्रमशाह (९)



श्री ५ राजा पृथ्वीवीर विक्रमशाह (१८८१-१९११) (१०)



सिंहासनासीन श्री ५ महाराजाधिराज त्रिभुवनवीर विक्रमशाह (जन्म ३० जुन १९०६ राज्यग्रहण १९११) (११)



सिंहासनासीन श्री ५ महाराजाधिराज त्रिभुवनवीर विक्रमशाह (जन्म ३० जुन १९०६ राज्यग्रहण १९११) (११)



धिराज के स्वारी का दृश्य ।



श्री ५ महाराजाधिराज, युवराजधिराज र भारतका प्रधानमंत्री पं० जवाहरलाल नेहरूका साथ दिल्लीमा (१३)



श्री ५ महाराजाधिराज र
भारतका प्रधान मंत्री जवाहर लाल नेहरु
काठमान्डु मा



सिंहासनारूढ अवस्था का वखतका
श्री ५ राजा पृथ्वीवीर विक्रमशाह



सिंहासनारूढ अवस्था का
वखतका श्री ५ राजा त्रिभुवन
वीरविक्रमशाह



नेपाल का
सिंहासनासीन
गराइएका
श्री ५ शाहजादा
ज्ञानेन्द्रवीर
विक्रमशाह (१५)



आफ्ना वंश प्रवर्तक जंगवहादुर पछि रणोद्दीप, वीरशम्सेर, चन्द्र शम्सेर ले शिशु वालख राजा पाई चलाएको स्वयंभू ठिकेदारी-को पुनरावृत्ति गर्न खोज्ने मोहनशम्सेरले गराएको नाटकीय शिशु शाहजादा ले राज्याभिशेषमा ग्रहणगरेको सलामीको दृश्य (१६)

श्री ३ श्री मातवर सिंह थापा (१८४२-१८४५)



राणावंश तथा शासन प्रवर्तक श्री ३ जंगवहादुर



श्री ३ रणोद्दीप सिंह (१८७६-१८८५) (१९)





श्री ३ वीर शम्सेर (१८८२-१९०१)



श्री ३ देवशम्सेर (१९०१ का ५ मार्च देखि १६ जून) (२१)



श्री ३ चन्द्रशमशेर आफ्ना जमानीमे महाराजका पोशाकमा



(१९०१-१९२९) (२२)



चन्द्रशम्सेर आफ्ना पुत्रहरूका साथ (२३)



श्री ३ भीम शम्सेर (प्रधान मंत्री हुनुभन्दा पहिले थे) (१९२९-१९३२)



श्री ३ पद्मशम्सेर (१९४५-४८) (२४)

नेपाल चित्रावली :—



प्रजापरिषद्‌का वीर सेनानी श्री टंकप्रसाद् शर्मा अध्यक्ष प्रजा-परिषद् नेपाल र नेपाल राष्ट्रीय कांग्रेश



वीर रामहरी शर्मा, प्रधान मंत्री प्रजापरिषद् नेपाल



अमर शहीद् धर्मभक्त प्रजापरिषद् नेपालका वीर सदस्य (२६)



अमर शहीद श्रीशुक्रराज शास्त्री



अमर शहीद गंगालाल प्रजापरिषद नेपाल



अमर शहीद श्री चिनियामानसिंह (२७)



श्री ३ मोहनशम्सेर १९४८ (वीचमा) दाहिने मिनिष्टर ववर-
शम्सेर, देब्रे तिर केशरशम्सेर (२८)



लेखकका परिवारमध्यमा लेखकका पिता स्वर्गीय पं० केदारनाथ स्वर्गीय माता मीनकुमारी देवी, पछाडि स्वर्गीय भाई देवनाथ, स्वर्गीय दाजू भैरवप्रसाद, स्वयं लेखक र कान्छा भाई गोपीनाथ उपाध्या (२९)



स्वस्ति श्रीगिरिराजचक्रचूडामणिनरनारायणेत्यादि विविध विरुदावली विराजमानमानोन्नत श्रीमन्महाराजाधिराज श्रीश्रीश्री कस्य रुक्का ।

नेपाल का सनद रुक्का परवानगी माथि लागेको श्री ५ को लालमोहर र प्रसस्ति—
जंगबहादुर प्रधानामात्य को पहिलेको र पछिको भारदारहरुको सही (३०)

Kings Standard



National Flag











H. M the King's



H. H. the Maharaja's



H. E. Commander in Chief's



Senior Commanding General's

S t a n d a r d & F l a g s

नेपाल का श्री ५ महाराजाधिराजको झंडा, राष्ट्रीय झंडा, प्राइम्मिनिष्टरको झंडा कम्यान्डर-इन-चीफको झंडा, लाठसाहबको झंडा। (३१)



















नेपालके बौद्धमार्गीयोंके इष्टदेव भगवान बुद्ध तथा भगवति ताराओंके चित्रावली



पाटन का पश्चिमी स्तूप



पाटन का पूर्वीस्तूप (३७)





केन्द्रीय स्तूप पाटन

अशोक स्तुप पाटन



The Temple of Minnath Patan (37)



भादगाँउको दत्तात्रयको मन्दिर



भादगाँव दरबारको कालीगढी पूर्ण झ्याल 



राजा भूपेन्द्रमल्लका मूर्ति । (४४)



मल्लराजाओं का स्थापित हाती-मूर्ति





सुन्दरी चौक धारा हनुमान ढोका 



काष्ठमाण्डप जसबाट राजधानी को काठमाण्डु नाम परे को हो (४६)



स्वयम्भूनाथ का मन्दिर (४७)



बुढा-नीलकण्ठ (४९)



वालाजी का वाईस धारा (५०)



हनुमान ढोको तलेजु को मन्दिर (५१)



कोतपर्व हत्याकाण्ड का स्थान





भीमसेनथापा के समय में बना हुआ बृटिश लिगेशन (लैन) (५३)



वाघदरबार तथा श्री ३ भीमसेन थापा का बनाया हुआ धरहरा।     (५४)



मुक्तिनाथ को भित्री दृश्य (६०)



श्री ३ भीमसेनथापा के समय के सिपाही उनके चाँद तोडा व वर्दि (४)



सिपाही १९३७-१९५९



नेपालका आधुनिक सिपाही बर्दि लगाएका (६५)



सिपाही १९३७-१९५९



नेपालका आधुनिक सिपाही बर्दि लगाएका (६५)



सिपाही १९३७-१९५८



नेपालका आधुनिक सिपाही बर्दि लगाएका (६५)



नेपाल को दर्जा ३ को तगमा



नेपाल को चतुर्थ दर्जा को तगमा



सैनिक तगमा












परापूर्वकाल देखिका नेपाल का सिक्काहरु (७१)

# नेपाल को इतिहास



## भौगोलिक

वर्तमान नेपाल राज्य पृथ्वीको मानचित्रका पूर्वी गोलाईका अन्तर्गत एसिया महाद्वीपका हिमालयका काखामा भारतको उत्तर शिरोमुकुटझैं बसेको छः। यसको दक्षिण सीमा भारतवर्षको संयुक्त प्रदेश, विहार. वंगाल, पूर्वी सीमा सिकिमराज्य वा फलेलूं पर्वत, उत्तर सीमा सुविस्तृत हिमालय, तिव्बत, भोट प्रदेश तथा पश्चिमी सीमा कुमाऊ, रुहेलखण्ड वा महाकाली ( सरयू ) नदी हुन्। यद्यपि सन् १८१६ सम्म यस राज्यको सीमा सहारनपुर कुमाऊँ गरी समद्रु नदीका किनार सम्म फैलिएको थियो, तर सन् १८१६ इश्वीका सुगौलीको संधि भए देखि ती सबमा अंग्रेजहरूको अधिकार भएको हुनाले अब त्यो भारतीयसंघका आधीनमा छ। यस राज्यको वर्तमान विस्तार पूर्व पश्चिम लामो र उत्तर दक्षिण चौड़ा छ। यसको सब भन्दा ज्यास्ति लंवाई मोरङ जिल्लाका धुलावारीबजार देखि डोटी जिल्लाका दार्चुला गाउँ सम्म करीब ३०० कोशको र सबै भन्दा ज्यास्ति चौडाई, इलाका मुस्ताङ देखि पाल्हो जिल्ला भगवानपुर सम्म, अन्दाजी ७० कोशको छ। सब ठाउँ एतिको लंबा चौडा छैन। यसको पूर्व पश्चिमको सरदर लंवाई प्रायः २७० कोश. उत्तर दक्षिणको चौडाई ५० कोश सम्मको भई आक्षा २६°२५ देखिन् ३०° १७। ७ः और प्राघि ८०° देखिन् ८८°१४। भूमिको परिमाण ५४००० वर्ग मील को छ। यस राज्यको भूभाग

पूर्वी उत्तरी तथा पश्चिमी पर्वतमय तथा दक्षिणी भूभाग संथल छ, सं
भागलाई तराई भन्दछन्। नेपालको जन संख्या सन् १९१० मा भएको
नेपाल सरकारका मत गणनाले ५५७३७९१ र सन् १९२० को मतग
नाले ५५७४७५६ मानिन्छ, तर यो भ्रामक हो। नेपालमा अद्यावधि
जन मतगणनाको कुनै प्रबंध समितीनै बनेको छैन। तसर्थ अन्दा
नेपालको जनसंख्या पुगनपुग ६४००००० को नैछ। नेपाल समस्त भा
को पुण्यभूमि हो। यहाँको प्राकृतिक दृश्य मनोहर—मनोरम तथा आश्च
मय छ। हिमालमा नेपालका दरीबाट हिमश्रेणिको जो अद्भुत दृ
देखिन्छ, त्यो ता विस्तार र विभवमा अद्वितीय नै छ। यस तुषारमं
शुभ्रकाय भूमागका जता तिर दृष्टि दियो उतै तिर कुसुम सेवित वि
फलकाभारले नुहेको तरुश्रेणी मात्र देखिन्छन्। यहाँ नाना किसिमका वि
गमहरूले निनादित मकरन्द वासित कानन र उपकाननहरूको ठेगा
छैन। जताततै कल निनादिनी निर्झरी झरी प्राणी मात्रको मन
आल्हादित गराउँछ।

इ समस्त दृश्य नेत्रानन्दका साथ हृदयमा कोमल भावको उत्प
गर्दछ। अतिशय विस्तृत साखु, उत्ताल, साल, देवदारू तथा उप
हरूको दर्शन गरी अन्तःकरणमा यउटा अत्युन्नत गम्भीर भक्ति
अलौकिक भाव आर्विभूत भई अति क्षुद्र मनलाई समेत विष्फारित
शक्ति सम्पन्न तुल्याउँछ। नेपालमा प्रकृति देवी आफ्ना अलौ
मूर्तिले सदा उन्मत्तवत् उमंग भावले नृत्त्य गर्दछिन्। त्यसको लोक
उन्नत भाव सहसा दर्शकहरूका हृदयमा प्रवेश गरी अवल
कार्पण्यता, दीनता प्रभृति समस्त जड़भावलाई छुटाई हृदय पनि त्या
ले उन्मत्त भई नाच्न लाग्दछ। समस्त ससारको सुन्दरताको
स्थान नेपाल कवि र जिज्ञाशु विज्ञानान्वेषीहरूको मन आफ्ना तरफ आ
गर्न लाई यथेष्ट छ। यहाँ का ऋतुहरू पनि मोहक तथा स्वास्थकर हु
शरदकालमा स्वच्छ तथा ठिहिर्याउने वायु बहन्छ तथा प्रातःका

तुषारो परेको देखिन्छ । रात्रीमा चऊरमा थर्मामिटर राखेमा २० डिग्री सम्म ओर्लन्छ । ग्रीष्मकालमा विशेष गर्मी हुँदैन । यहाँका गर्मीको डिग्री ६० अंतिम हो । यहाँ वर्षा ६० इञ्च सम्म हुन्छ ।

# प्राकृतिक विभाग पर्वत् र पहाड़ हरू

---०---

उत्तरमा

नेपालका उत्तर भागमा हिमालय पर्वत छ । यो पर्वत संसारका सबै पर्वतहरु भन्दा अग्लोछ । यसका अनेक हाँगा हरू दक्षिण तर्फ फैलिएका छन् । तिनका नाम कुम्भकर्ण, महालंगूर, थाक्ले, इत्यादि ठाऊ ठाऊमा वेग्ला वेग्लै रहेका छन् ।

हिमालय पर्वत का अनेक अग्ला अग्ला टाकुराहरु छन् । तल लेखिएका टाकुराहरु ऊचाईमा समुद्र का सतह देखिन् २०।२० हजार फुट भन्दा पनी अग्ला छन् ।

( १ ) कंचन जंघा–पल्लो किराँत को उत्तर पूर्व भागमा कुंभकर्ण हिमालयमा सीमानै नेर, २८१४६ फुट अग्लोछ ।

( २ ) मकालु–पल्लो किराँत का उत्तर पश्चिम भागमा कुंभकर्ण हिमालय मा २७७६० फुट अग्लो छ ।

( ३ ) एभरेष्ट –पूर्व ३ नम्बर इलाकाको उत्तर भागमा, महालंगूर हिमालयमा सीमानैमा २६००२ फुट अग्लो छ ।

( ४ ) गौरीशंकर--पूर्व नं० २ इलाका को उत्तर भागमा रोल्वालिङ हिमालय मा सीमानै मा २३४५७ अग्लो छ ।

( ५ ) लामटाङ--पश्चिम नं० १ इलाका का उत्तर भागमा नुवाकोट जिल्लाको लामटाङ् हिमालय मा २३७३१ फुट अग्लो छ ।

( ६ ) धौलागिरी--पर्वतजिल्लामा धौलागिरी हिमालयमा २६८१० फुट अग्लो छ ।

( ७ ) गोसाइँथान—पश्चिम नं० १ को उत्तर लामलाङ् हिमाल
मा २६२९१ फुट अग्लो छ।

हिमालय का दच्चिण पट्टि

( १ ) महाभारत नाम को पर्वत प्राय हिमालय कै हारा हारा मेचं
देखिन् महाकाली ( शारदा ) सम्मन फैलियेकोछ

( २ ) महाभारत का दच्चिण पट्टि चुरे नाम को होचो पहाड कोसं
देखिन् महाकाली ( शारदा ) सम्मन फैलियेकोछ।

पूर्वमा

( १ ) नगर कोट को पहाड

( २ ) कालिञ्चोकको पहाड—यो चरीकोट वाट ३ कोस उत्तर
डाँडांको टिप्पामा छ। यहाँ जलमय देवा को रमर्णाय स्थान छ।

पश्चिम मा—

( १ ) नागार्जुन ( २ ) भीम फटके ( ३ ) शर्शालेक ( ४ ) स्वं
हारीको लेक हरु छन्।

# घाटी हरू

—-❀—-

हिमालयका टाकुराहरु सदा हिऊँले ढाकीएर रहेका हुन्छन्।
हिऊँदमा फेदी सम्म हिऊँ पर्दछ। त्यस बखत पर्वत लाइ नाघ्न
असाध्य हुन्छ। बर्सातमा फेदीतिरको हिऊँ पाग्लन्छ। त्यसबखत
मा नदी नाला हरूले छेर्डा बनाएका घाटीहरूबाट हिमालय पार गरी भोट
प्रदेश तिर मानिसहरु जावत आवत गर्दछन्।

१—टिपताला—१६७४० पल्लोकिराँत, ओलाङ्चुङ्का उत्तर
कुंभकर्ण हिमालय छ।

२—पोरतिया—१३९३३ पल्लोकिराँत हटियाका उत्तर कुंभकर्ण
हिमालयमा छ।

३—चाँगवा—१९०६५ पूर्व नं ३ इलाका दूधकोसीका तीर, महालंगूर हिमालय छ।

४—फलाकलामटाङ्—पूर्व नं २ इलाका तामाकोसीको तीर, वगरका उत्तर, रोल्वालिङ् हिमालयमा छ।

५—फ्रुर्वि ध्याकु—२१५४४ पूर्व नं०१ पहाड़ इलाका जुगल हिमालयमा छ, यहाँ बाट कुती उत्रिन्छ।

६—रसूवा—६००० पश्चिम नं० १ इलाका (नुवाकोट) त्रिशूली गण्डकीका तीर, लामाटङ् हिमालयमा छ। यहाँ बाट केरुङ् उत्रिन्छ।

७—साल्पु—१६५३७ पश्चिम नं०१ इलाका (सल्ल्यान) बुढी गण्डकी र स्यालखोलाका तीर थाप्ले हिमालय छ।

८—लार्कों—१७१०२ पश्चिम नं०२ इलाका (गोरखा) लार्कें हिमालयमा छ।

९—मुस्ताङ्—पर्वत जिल्ला मुस्ताङ् हिमालयमा, काली—गण्डकीको तीरमा छ।

१०—नाम्जा—१०२२० जुम्जा जिल्ला टाकेखोलाको तीर, छाङ्ला हिमलयमा छ।

११—नालकंकर—जुम्ला जिल्ला हुमूला नेर ताख हिमालयमा छ।

१२—व्यास—डोटी जिल्ला, महाकाली नदीका तीर व्यास हिमालयमा छ।

## ( नदी हरू )



नेपालमा मुख्य ३ नदीहरू छन्। पूर्व भागमा कोसी, मध्यभागमा गण्डकी र पश्चिमभागमा कर्नाली पर्दछ। ई तीनै नदी हिमालय पारी भोटबाट आएर भारतवर्षमा गई गंगा नदीमा मिल्दछन्। इनीहरु का मुख्य सहायक नदीहरू केही हिमालय पर बाट आयेका छन्। केही

हिमालय का दक्षिण पाखा बाट आये का छन्। तिन मुख्य ई हुन्।

## कोसी



| नदी, | मूल, | मुख्यनदी वासहायक, | अर्कोनदीसितमिल्नेठाऊँ |
|---|---|---|---|
| तामाकोसी | भोट मा | सुनकोसीको सहायक | घुमाउने चैनपुर नेर |
| लिखु | महालंगुर हिमालयमा | ऐ० | संगनास घाटी नेर |
| दूधकोसी | ऐ० | ऐ० | जयरामघाट नेर |
| सुनकोसी | भोट मा | अरुणको सहायक | दानकेरा |
| इन्द्रावती | जुगल हिमालयमा | सुनकोसीको सहायक | दुलालघाट |
| अरुण | ऐ० | कोसीको मुख्यनदी | गंगामा |
| तमोर | कुंभकर्ण हिमालयमा, | अरुण को सहायक | दानकेरा |

## गण्डकी

| नदी, | मूल, | मुख्यनदीवासहायक | अर्कोनदीतिसिमिल्नेठाऊँ |
|---|---|---|---|
| सेती | अन्नपूर्णा हिमालयमा | त्रिशूलीको सहायक | कात्राङ् नेर |
| मादी | पेरी हिमालयमा | सेतीको सहायक | दमौलीघाट |
| कालीगण्डकी | मुस्ताङ् हिमालयमा | त्रिशूलीको सहायक | त्रिवेणी घाट |
| मर्स्याङ्दी | ऐ० | ऐ० | ऐ० |
| बुढी गण्डकी | लार्कें हिमालय | ऐ० | कल्लेरी नेर |
| त्रिशूली | भोटमा | गण्डकी मा मुख्य नदी | गंगामा |

## कर्णाली

| नदी, मूल, | मुख्यनदीवासहायक, | अर्कोनदिसितमिल्नेठाऊँ |
|---|---|---|
| कर्नाली भोटमा | मुख्य नदि | गंगामा |
| भेरी कागमारालेक | कर्नाली को सहायक | कूरिन घाट ( दैलेख ) |
| सेतो ब्याँस हिमालयमा | ऐ० | वलैंठागाउँ ( अछाम ) |
| महाकाली ( शारदा ) ऐ० | ऐ० | जसवाघाट ( भारत ) |

ई वाहेक उल्लेख गर्न लायकका नदीहरू

१—बुढ़ी गंगा ( अछाममा ) ( २ ) मोदी ( पश्चिम ४ नं० मा )

३—राप्ती ( प्यूठानमा र ( ४ ) बागमती ( नेपालमा )

# ताल र ठुला ठुला पोखरीहरू

१—टौदह—चोभारको दक्षिण पट्टी ( २ ) कटुवालदह-दक्षिण-काली पूर्वमा

३—कामिनीदह—अमलेखगंजको दक्षिण, पश्चिम ( ४ ) दूध-कुण्ड पूर्व नं० ३ मा

५—गोसाइंकुण्ड पश्चिम नं० १ ( ६ ) फेवाताल नं० ३ पूर्व पोखरी ( ७ ) दिपाङ्ताल, ऐ

८—मेर्दाताल ऐं ( ९ ) वेगनाताल ऐ ( १० ) रुपालताल ऐंजन,

११—सत्यवतीताल पाल्पामा ( १२ ) गडुवाताल चितौनमा ( १३ ) तमोरघैलाताल, ऐं मा

१४—कसराताल ऐं मा(१५) नन्दनताल पाल्ही जिल्लामा( १६ ) वाहकुने ताल, दाङमा

१७—स्यापुंताल—जाजरकोटमा ( १८ ) वझाङताल वझाङमा

१९—खयूतर को ताल—डोटीमा ( २० ) रार दह—जुमलामा

# प्रदेश

पहाड का सिलसिला बमोजिम नेपाल ३ भागमा बाँडिये को छ।

१--मुख्य हिमालय का सिलसिलामा रहेको भाग 'हिमाल' कहिन्छ। त्यसमा भागमा पहाडै पहाड भयेको हुनाले यस ठाउँलाइ पहाड प्रदेशका जिल्ला हरु भदन्छन्।

२--मध्य हिमालयका सिलसिला मा रहेको भाग (पहाड) कहिन्छ। नेपाल को राजधानी काठमाडौं (कान्तिपुर) पहाड प्रदेश मै छ। नेपाल राजधानीलाइ चारै तिर वाट घेरेर रहेका चार दिशा का शिखरहरुलाइ चार भञ्ज्याङ् भन्दछन्। पूर्वमा साँगा भञ्ज्याङ् दक्षिणमा ताङ् कोट भञ्ज्याङ् पश्चिममा भेडुङ्गा वा पाँचमाने भञ्ज्याङ् उत्तर को पाटीभञ्ज्याङ् इनै ४ भञ्ज्याङ् हुन्। यस चार भञ्ज्याङ् भित्र को जगा जो राजधारी हो तेस् लाइ खास नेपाल भन्ने चलन छ। यस खास नेपालमा ३ जिल्ला छन्।

काठमाणौं (कान्तिपुर) वागमती नदीको पश्चिम उत्तर किनारमा छ।

पाटन (ललितपुर) काठमाणौं का दक्षिण तर्फमा छ—भदगाउँ (अथवा भक्तपुर) काठमाणौं को पूर्व तर्फमा छ।

खास नेपाल देखिन् पूर्वमा कोसी प्रदेश छ। यस प्रदेश मा ७ जिल्ला छन्—(१) काभ्रेपलाञ्चोक (२) सिन्धु पाल्चोक (३) घेलखा (४) त्रिसंखु (५) माझ किराँत (६) पल्लो किराँत (७) इलाम।

खास नेपाल देखिन् पश्चिम पट्टी गण्डकी प्रदेश छ। यस प्रदेश मा २६ जिल्ला छन्। (१) नुवाकोट (२) लामी डाँडा (३) सल्यान (४) धादिङ् (५) गोर्खा (६) लंजुङ् (७) तन्हौ (८) कास्की (९) सिरिङ् (१०) घिरिङ् (११) ढोर (१२) पल्लो नुवाकोट (१३) भिर्कोट (१४) सतौं (१५) गह्रौं (१६) पय्युँ (१७) पर्वत (१८) पाल्पा (१९) गुल्मी (२०) गल्कोट (२१) धुरकोट (२२) मुसी कोट (२३) इस्मा (२४) अर्घा (२५) खाँची

( २६ ) स्यूठाना ।

गण्डकी प्रदेश देखिन् पश्चिममा कर्नाली प्रदेश छ। यस प्रदेश मा ६ जिल्ला छन् ( १ ) सल्यान ( २ ) दैलेख ( ३ ) दुल्लु ( ४ ) जुम्ला ( ५ ) अछाम ( ६ ) डोटी ।

३--तल्ला हिमालय का सिलसिलामा रहेको भाग मधेस ( तराई ) कहिन्छ । यसका दुइ भाग छन्:—( अ ) भित्री मदेश ( आ ) मधेस वा ( तराई )

( क ) भित्री मधेसमा जम्मा ६ जिल्ला छन् । पूर्वतिर ( १ ) मग-वानपुर ( २ ) सिंधुली ( ३ ) उदयपुर माझमा ( ४ ) चितौंन ( ५ ) नवलपुर पश्चिम तिर ( ६ ) दाङ ( ७ ) देउखुरी ( ८ ) सुनार ( ९ ) सुखेंत ।

( ख ) मधेस वा तराइमा जम्मा १५ जिल्ला छन्:—पूर्व ७ जिल्ला ( १ ) पर्सा ( २ ) बारा ( ३ ) रौतहठ ( ४ ) सर्लाही ( ५ ) महोत्तरी ( ६ ) सप्तरी ( ७ ) मोरङ् । बुटोल ४ जिल्ला ( ८ ) पाल्ही ( ९ ) माझखण्ड ( १० ) खजहनी ( ११ ) स्यूराज । नयाँ मुलुक ४ जिल्ला छ। ( १२ ) बाँके ( १३ ) वर्दिया ( १४ ) कैलाली ( १५ ) कंचनपुर ।

## खास नेपाल

——ॐ——

सीमाना उत्तर नुवाकोट जिल्ला पूर्व, सिन्धुपाल्चोक र काभ्रेपलाञ्चोक जिल्ला, दक्षिण मकवानपुर जिल्ला पश्चिम लामाडाँडा र नुवाकोट जिल्ला यहाँ को जन सख्या जम्मा ३०६९०९ छ ।

मुख्य शहर—खास नेपाल का तीन शहर छन्। १ काठमाडौं वा. कान्तिपुर यो शहर काठमाडौं जिल्लामा बाघमतीको पश्चिम उत्तर किनारमा छ। नेपाल राज्यको मुख्य राजधानी हुनाले देश भरि

को मुख्य ठुलो शहर यही हो। यहाँ नेपालका राजा श्री ५ महाराजाधिराजको नारहिटी दर्बार, नेपालका प्रधानमंत्री हरु को सिंहदरबार, उहिलेका राजाहरुका पाला देखिनको मुख्य दर्बार हनुमानढोका र अरु भारदार हरुका राम्रा राम्रा महल घर स्कूल कालेज इत्यादि छन्। १९ साल का ठुलो भूकम्प पछि नयाँ किसिम्का सड़क इत्यादि बनेर यो शहरको शोभा झन् बढेको छ। यहाँ को जनसंख्या १०८८०५ छ।

२---पाटन वा ललितपुर यो शहर पाटन जिल्लामा काठमाडौं का दक्षिण पट्टि छ। पाटन जिल्लाको मुख्य शहर यही हो। नेपाल को प्राचीन राजधानी यही थियो। यहाँ को धातु, काठ, इत्यादि आदि को काम प्रशंसनीय छ। यहाँको जन सख्या १०४९२६ छ।

३—भक्तपुर वा भादगाउँ यो भक्तपुर जिल्लाको मुख्य शहर हो। यहाँको जन संख्या ९३१७६ छ।

नदीहरु---वाग्मती, कर्मनाशा, प्रभावती वा नक्खु। ई तीनै नदी काठमाडौंका दक्षिणमा छन्। विष्णुमती र भद्रमती वा भाचाखुसी काठमाडौंका पश्चिममा छन्। रुद्रमति धोबीखोला वा मणिमति मनोहरा वा हनुमती वा हनुमन्ते इक्षुमती वा टुकुचा ई ४ नदी काठमाडौंका पूर्व तिर पर्दछन्।

## पूर्व पहाड़ का जिल्ला हरु

### पूर्व १ नंबर इलाका

सीमाना—उत्तर भोट, पूर्व दोलखा जिल्ला, दक्षिण सिंधुली जिल्ला र बाग्मतीको खाजोर गाउँ, पश्चिम नुवाकोट, काठमाडौं, भक्तपुर पाटन जिल्ला।

यस इलाकामा साना साना दुइ जिल्ला छन्। उत्तर भागमा

सिन्धुपालचोक जिल्ला छ, त्यहाँ का मुख्य वासिन्दा तमाङ् हरु हुन् । दक्षिण भागमा काभ्रेपलाञ्चोक जिल्ला छ, त्यहाँका मुख्य वासिन्दा नेवार हुन् । तर ई दुवै जिल्लामा अरु जातको पनी कमी छैन । यस इलाकामा अन्दाजा १७१००० मानिस छन् ।

मुख्य वस्ती—सिन्धुपाल्चोक तर्फ कोदारी, लिस्ति, तातापानी यहाँ भन्सार र हुलाक घर छन् ।

घुमथोक वाह्रविसे यहाँ एउटा सानो बजार र पाठशाला छन् ।

तौथली, नवलपुर, सिपा, पाल्चोक, चौतर, यहाँ पूर्व नं० १ गोस्वारा, मूलजंगी परेठ, सिन्धुपाल्चोक माल, अदालत सानु अंग्रेजी दवाखाना पाठशाला र हुलाक छन् ।

फूलपिंग, हेल्मु । काभ्रे पलाञ्चोकतर्फ—धूलि खेल—यहाँ छोटी जंगी परेठ काभ्रेपलाञ्चोक माल र अदालत छन् । बनपा,—जिल्लाको मुख्य बजार यही हो । काभ्रे, संखु, दारवा, पनौती, पाल्चोक,

नदी—इन्द्रावती, मिलोंचे, बलेफा, सुनकोसी—यही सुन कोसी लाइ ध्याउवासे देखिन् उत्तर पश्चिम भोटे कोसी भन्दछन् । रोसी—

## पूर्व नं० २ इलाका

सीमाना—उत्तर भोट पूर्व त्रिसंखु जिल्ला, दक्षिण सिंधुली जिल्ला पश्चिम् सिन्धु पाल्चोक र काभ्रपलाञ्चोक जिल्ला ।

आवादी—यस इलाकामा दोलखा जिल्ला छ । यहाँका मुख्य वासिन्दा नेवार तामाङ् र नेवार छन् । अरु जातका मानिसहरु पनी प्रशस्त छन् । यहाँ को जन संख्या १३३००० छ

मुख्य वस्ती—दोलखा - यो नेवार हरुको वस्ती को शहर हो । यस बजार एक पाठशाला आयुर्वेदी औषधालय र हुलाक छन् । यसै शहरा नेर चरीकोटमा छोटी जंगी परेठ र अदालत छन् । रामेछाप गोस्वारा

मूल जंगी परेठ (दोलखा) माल अड्डा र पाठशाला छन्। ल्याङ् ल्याङ् चिसा पानी दुंजा, नदी भोटेकोसी का उत्तर भागमा सिन्धु पाल्चोक जिल्ला को सीमाना, तामा कोसी र सुनकोसी दक्षिण भागमा।

## पूर्व नं० ३ इलाका

सीमाना—उत्तर भोट र माउन्ट एभरेष्ट, दुग्दकुण्ड, पूर्व माझ किरात जिल्ला साप्सु नदी, दक्षिण—सुनकोसी, उदयपुर जिल्ला, पश्चिम लिखुनदी, दोलखा जिल्ला।

आवादी – यस इलाकामा चिसंखु जिल्ला छ। यसमा माझ किरांत र दोलखाको समेत केही भाग गाभिए को छ। मुख्य वासिन्दा किरांती छन्। अरु जातका मानिस हरु पनी प्रशस्त छन्। यहाँ को जनसंख्या १०८००० को छ।

मुख्य बस्ती—ओखलढुङ्गा यहाँ गोस्वारा अड्डा, मूल जंगी परेठ, माल, अदालत, हुलाक र पाठशाला हरु छन्। ई भन्दा वाहेक यहाँ तोपखाना, म्यागिजन, अंग्रेजी दवाखाना हरु पनीछन्। यस जिल्लामा यताउति पर्वतका चुलीहरुमा पुराना भग्नावशेष जिल्ला गढी हरु पनी पाइन्छन्। ऐसेलु खर्क, मानेभञ्ज्याङ्। नदी—सुनकोशी, दक्षिण भागमा उदयपुरका सीमानामा दूध कोसी—।

प्रसिद्ध ठाउँ—यस जिल्ला का उत्तर भागमा महालंगूर हिमालयमा एभरेष्ट भन्ने हिमालयको टाकुरा समुद्र को सतह भन्दा २९००२ फुट अग्लो छ संसार भरिको सब भन्दा अग्लो टाकुरा यही हो।

## पूर्व नंबर ४ इलाका

सीमाना—उत्तर हिमालय, पूर्व अरूण नदी, दक्षिण कोसी नदी पश्चिम मयाम् खोलो र साप्सु खोलो ।

आवादी—यस इलाकामा भोजपुर जिल्ला छ। मुख्य वासिन्दा किराँती छन्। अरू जात का मानिस थोरै छन् । यहाँ २७०००० मानिस छन् ।

मुख्यवस्ती—भोजपुर यहाँ गोस्वारा मूल जंगिपरेठ, माझिकिराँत माल अदालत, पाठशाला र हुलाक छन्। खिकामाछा—यहाँ बजार र पाटशाला छन्। खोटाङ् —यहाँ छोटी जंगी परेठ छ। दिलाङ् —यहाँ छोटी जंगी परेठ, पाठशाला छन्।

# पल्लो किराँत इलाका

—·—

सीमाना—उत्तर भोट, पूर्व भारतवर्ष को दार्जीलिङ्ग र इलाम जिल्ला दक्षिण मोरङ् जिल्ला, पश्चिम चिसंखु र भोजपुर जिल्ला ।

आवादी—यस जिल्लाका मुख्य पुराना वासिन्दा लिम्बु हुन्। तर अरु जातिका मानिस पनी छन्। यहाँको जनसंखया ३५३००० छ ।

मुख्यवस्ती—धनकुटा, यहाँ गौडा, दफ्तर, अपिल, अदालत, माल, पैसा टकसार, पाठशाला अस्पताल, आयुर्वेदिय औषधालय र हुलाक छन्। यो जिल्लाको सदर मुकाम हुनाले यहाँ बजार पनी छ। म्याङलुङ् चैनपुर—यहाँ माल अड्डा, पाठशाला र हुलाक छन्। ताप्लेजुङ्—यहाँ अमिनी, पाठशाल रहुलाक छन्। ओलाङ्चुङ् यहाँ भन्सार अड्डा र गारत चौकी छन्। हटिया—यसका उत्तर भागमा भोटजाने बाटाको प्रसिद्ध ठाउँ छ। तोपके, आठराईं, मुलपानी ।

नदी—अरुण पश्चिम सीमाना, तमोर र कावेरी पूर्व उत्तर सीमाना मा छन् ।

## इलाम

सीमाना—पश्चिममा तमर नयाँ खोलो, निमु खोलो, पूर्व मोगलान् र दार्जलिङ् जिल्ला, उत्तर भोट राज्य सीमाना, दक्षिणमा मोरङ् पर्छ । यहाँ जनसंख्या ८७००० छ ।

मुख्य बस्ती—इलाम, माइपार, पुवापार, फाकफोक, र दशमिझया हो ।

नदी—तमरखोलो अरु माईखोलो, जोगमाईखोलो र फाकफोक देउमाई खोलो समेत सानासाना नदी छन् ।

# पश्चिम पहाडी जिल्ला हरु

---

## पश्चिम नं० १ इलाका

सीमाना—उत्तर भोट, पूर्वचौतरा, दक्षिण त्रिशूली, महेशखोला ( सुब्बा होमनाथका पिता कल्लेरीका वितवार नन्दुमुखियाले फर्काए को ) चिसापानी गढी, चितवन र खास नेपाल पश्चिम बुढी गण्डकी ।

आवादी—यो इलाका नुवाकोट, लमीडाँडा, सल्यान, पाँचसय खोला र धादिङ् मिलेर बनेकोछ । यस इलाकामा १६५०० मानिस छन् ।

मुख्य बस्ति—नुवाकोट,—यो जिल्लाको सदर मुकाम हो । यहाँ गोस्वारा, माल, अदालत र जङ्गी परेट छन् । यहाँ मुख्यदेवी भैरवीको मन्दिर पनि छ । त्रिशूलीबाजार,—यहाँ मुख्यदेवी त्रिपुरसुन्दरी छन् अष्टादशैंका दिन ठुलो जात्रा हुन्छ । रसुवागढी,—यहाँ मालअदालत र एउटाजङ्गी परेठ रहेको छ । यहाँ एउटा पहरा भित्र प्रसिद्ध गुफा

माहादेव छन्। पाँचसय खोलो,—केरुङ् भोट् तिरको आवत जावत यहीं बाट हुन्छ। यही जङ्गी परेठ् र भन्सार छन्। कविलास, धुन्चे, नर्जा, धैवुङ्, लार्माडाँडा, धुनीवेसी, सल्यान्, बुढी थुम, कटुजे, घादिङ्, गजुरी, मानखु, मुन्खानी, छेत्रेबजार, किराङ्चोक,।

नदी—त्रिशूली, लामटाङ् खोलो, ओखुखलो (बुढीगण्डकीको शाखा) तार्दीखोलो (त्रिशूलीको शाखा)।

**पश्चिम २ नंबर इलाकाः**—सीमाना—उत्तर अठारसयखोलो लार्कें भोट्, पूर्व र दक्षिण बुढीगण्डकी, पश्चिम चेपेखोलो मर्स्याङ्दी

आवादी—यस इलाकामा गोरखा एक जिल्लामात्र छ।

यहाँको जनसंख्या ७ हजार मानीसको छ।

मुख्यबस्ती—गोरखा,—यो इलाकाको सदर मुकाम हो। यहाँ गोस्वारा, माल, अदालत र मूलजङ्गी परेठहरू रहेका छन्। यही गोरखनाथ र कालीको दर्शनियमन्दिर छन्। यसको नजीकै श्रीमनकामना भगवतीको मन्दिर छ। मार्गशुक्ल जेष्ठ कृष्ण पञ्चमीमा यात्रा समेत हुन्छ। मकैसीङ् आरु, स्यार्ताङ् सिरान्चोक, बोर्लाङ्, खोप्लाङ्, स्याल्चोक, लुईटेल। नदी—दरौंदी नदी (बीचमा,) बुढीगण्डकी (पूर्वसीमानामा) चेपेखोला र मर्स्याङ्दी पश्चिमी सीमाना

## पश्चिम ३ नम्बर इलाका।

———

सीमाना—उत्तर मनाङ् भोट्, पूर्व चेपेखोलो मर्स्याङ्दी, दक्षिण कालीगण्डकी देवघाट, पश्चिम मादीखोलो।

आवादी—लमजुङ्, कास्कीं,—यहाँको सुन्तला प्रसिद्ध छ। तनहुँ, रीसिङ्, घरिङ्, ढोर समेत जम्मा छ जिल्ला मिली यो इलाका बनेको छ।—रिसिङ्, घिमिङ्, तनहुँपुर्कोट, ड्डुम्रिखर्क आँखु। यहाँ कपासको खेति विशेष हुन्छ। इनी मध्दे पछिल्ला दुई जिल्ला सान साना छन्। यस्को आवादि २२२००० छ।

मुख्यबस्ती—पोखरा,—इलाकाभरको सदरमुकाम यही हो। यहाँ गोस्वारा, मूलजङ्गीपरेठ् अपिल अदालत, राज्यतहसील, हुलाक, पाठशाला छन्। यहीं गण्डकी प्रदेशभरको ठुलो बजार पनि छ। यहिं श्रीविंध्यवासिनी भगवती छन्। अर्घौ, तल्लाकोट ( कास्कीमा ) कुन्छा—यहाँ पश्चिम ३ नम्बरको जङ्गीपरेठ् र राज्यतहसीलको छोटो अड्डा औषधालय र ठाउँ ठाऊमा पाठशाला हुलाक छन्। घनपोखरा, पानेचौतारा, दुरा डाँडा, चिती, परेवाडाँडा ( लंजुङ्मा ) चंदिपुर—तनहूँ, रिसिङ्, घिसिङ्, र ढोर समेतको सदर मुकाम यहीं हो—यहाँ जङ्गीपरेठ् माल अदालत हुलाक पाठशाला र औषधालय हरू छन्। तनहुँ मूरतनहूँमा, साभुङ् रिमीङ् मा पुरकोट।

नदी—( चेपे र गोरखा र लमजुङ्का सिमानामा ) मर्स्याङ्दी ( गोरखा, र तनहूं सीमाना मा ( दोर्दीखोलो ) मर्स्याङ्दीको उत्तरमा भाग लंजुङ् मा—मादी, लंजुङ् र कास्कीका सीमानामा सेती, कास्कीमा, कास्की र लंजुङ्का सीमानामा तनहु र रिसिङ्का सीमानामा, मोदी कास्की र पर्वत जिल्लाका सीमानामा।

प्रसिद्धठाउ—करापुर लमजुङ्मा मादीको तीरमा यहाँ ईशानेश्वर माहादेव को प्रसिद्ध मन्दिर छ। शिव रात्रि देखि फागुन् पुर्णिमा सम्म जात्रा हुन्छ।

## पश्चिम ४ नम्बर इलाका।

# पश्चिम ४ नम्बर इलाका ।

सीमाना—उत्तर थाक खोलो र मुस्ताङ् भोट, पूर्व सेतीगण्डकी, मोदीखोलो दक्षिण र पश्चिम कालीगण्डकी ।

आवादी—नुवाकोट ( पल्लो ) भिर्कोट, गह्रौं सतौं, पैयूँ समेत ५ जिल्ला मिली यो इलाका बनेको छ । पछिल्ला दुई जिल्ला सानासाना छन् । कालीनदी पूर्वको पर्वत जिल्लाको ठुलो भाग पनि अदालतको काम बाहेक यसै इलाकामा गाभिएको छ । यहाँको १ लाख ८३ हजार मानिसको जनसंख्या छ ।

मुख्यवस्ती—नुवाकोट—यो वस्ती इलाकाको सदर मुकाम हो । यहाँ गोश्वारा, मूलजंगी परेठ माल, अदालत, पाठशाला, हुलाक र अस्पताल छन् । पुतली खेत—यहाँ सानो बजार छ । स्याङ्जा लिमिठाना, कुस्ती, देउराली, वर, वाहाकोट, कोल्मा, ( नुवाकोट जिल्लामा ) कुस्मा —यहाँ छोटी जङ्गीपरेठ र सानो बजार छ । मोदीबेनी—काली र मोदीको दोभानमा यो एक प्रसिद्ध मोदीवेनी तीर्थ छ । देउपुर घारुङ्ग दाङसिङ्ग ( पर्वत जिल्लामा ) भिर्कोट ( भिर्कोटमा ) गह्रौंकोट—यहाँ छोटी जङ्गीपरेठ छ । ( गह्रौंमा ) मालकटेरी, चादी ( सतौंमा ) धुँवाकोट, वाङ्गागाऊं ( पैयूँमा ) ।

नदी—काली ( पर्वत जिल्लामा, गह्रौ पैयूं सतौं पर्वत र गुल्मीको सिमानामा ) मोदी ( कास्की र पर्वतको सिमाना ) आँधी खोलो ( भिर्कोट जिल्लामा ) ।

## पाल्पा र गुल्मी समेत ८ जिल्ला ।

सीमाना—उत्तर भोट, पूर्व कालीगण्डकी, दक्षिण बुटौल, पश्चिम प्यूठाना ।

आवादी—पाल्पा, गुल्मी, अर्घा, खाँचो, इस्मा मुसिकोट, पर्वत गलकोट र धुर्कोट समेत जम्मा ९ जिल्ला पाल्पा गौंडाका तालुकामा रहे

२

का छन्। पाल्पा, पर्वत र गुलमी तीन जिल्ला ठुला छन्, अरु सानां छन् । पर्वत का उत्तरभागमा थाक खोलो र थाक उत्तर पट्टि मुस्ताङ्ग भोट छ। नवै जिल्लामा गरी जम्मा ३ लाख हजार मानिस छन्।

मुख्यबस्ती—तानसेन वा श्रीनगर—यो नवै जिल्लाको सदर हो। यहाँ एउटा सानो शहर छ। पाल्पा गौंडा अपील, माल ( जिल्लाको ) अदालत अस्पताल, आयुर्वेदीप औषधालय पनि छन्। यो जिल्लामा भाँडाहरू बेस बन्दछन्। त्यसमा पनि गरी पाल्पाली हुक्का करुवा कचौरा अंखोरा राम्रा र बलियां हु तानसेन हालको बस्ती र श्रीनगर पुरानो बस्ती हो। नयाँ जितागढी—यो एउटा प्रसिद्ध लडाइ भएको ठाउँ हो। यसै कर्णेल वजीरसिंह थापाको मातहतमा गोर्खालीले जनरल उड्का मात वृटिश सेनालाई संवत् १८७१ सालमा हराएका थिए। बल्लुवां ठूलो हटिया ( पाल्पामा ), चन्द्रकोट, रिढी—कालिका तीरको प्रसिद्ध हो। यहाँ एउटा सानो बजार छ। वामी खर्जेङ्ग ( गुल्मीमा ) पाल्पावाहेक अरू आठ जिल्लाको सदर मुकाम हो। यहाँ माल र अ छन्। भीमपोखरा, बेनीशहर—काली र मस्र्याङ्दिका दोमानको बजार छ। यो भोट या मुक्तिनाथ जाने बाटोमा रहेको छ। थाकमा, यहाँ नूनको भन्सारअड्डा छ। ढकुचे—थाकमा, अदालत छ।

नदी—कालीगण्डकी—यस नदीमा शालिग्राम पाइने हुनाले शालीग्रामी नदी पनि भन्दछन्। ( पर्वत जिल्लामा )-बड़ीगाड़ ( गुल्मी मस्र्याङ्दी ( पर्वतमा ) ई दुवै कालीका सहायक हुन्।

## प्यूठाना जिल्ला।

सीमाना—उत्तर पर्वत र सल्याना, पूर्व अर्घा र खाँची,

खाँची पश्चिम रोल्पा सल्याना ।

आवादी--यहाँको जनसंख्या १ लाख २२ हजार मानिसको छ ।

मुख्यवस्ती--प्यूठाना,—जिल्लाको सदर मुकाम यही हो। यहाँ गौडा माल र अदालत छन् । यहाँ प्राचीन जंगीअसवावखाना पनि छ । यहाँ देखि ६।७ कोस पर स्वर्गद्वारीकी लेक छ । त्यहाँ एक प्रसिद्ध महात्मा थिए ।—वादीकोट लिवाङ्ग् द्वारी ।

हिमालय पर्वतका उत्तर भागमा पूर्व पट्टि मुस्ताङ्ग भोट हिमालय र पश्चिमपट्टि पाल्चुङ्गहङ्गा हिमालय छ। मुस्ताङ्गका दक्षिणपट्टि थाक र पाल्चुङ्‌हङ्गाका दक्षिणमा छार्काभोट ( भोटेवस्ती ) छ । मुस्ताङ्गको उत्तर भञ्याङ्ग पार गरी र पाल्चुङ्गहङ्गा हिमालयका उत्तर पश्चिम भागमा १९६०० फुट अग्लो मरेमभञ्याङ्ग पार गरी भोटमा आवत जावत हुन्छ । मुस्ताङ्ग हिमालयका दक्षिणपट्टि धौलागिरि हिमालय छ । यसको धौलागिरि भन्ने टाकुरा २८,८१० फुट अग्लो छ। कालीनदीका बाँया पट्टि थाक खोलामा २१,१४२ फुट अग्लो ठाउँमा मुक्तिक्षेत्र पर्दछ । यहाँ मुक्तिनाथ-को प्रसिद्ध मन्दिर छ । गर्मीमा त्यहाँ भारतका समेत हजारौं यात्रीहरू आउद छन् । मुस्ताङ्गमा दामोदरकुण्ड भन्ने कालीका मूलको तीर्थ छ । )

नदी—माडीखोलो, झिरुक— यीदुवै नदी मिलेपछि रापती कहलाउँछ ।

## सल्याना जिल्ला ।

सीमाना--उत्तर जुम्ला, पूर्व प्यूठाना, पश्चिम दाङ्‌देउखुरी, वाँके वर्दिया, पश्चिम दैलेख, सुर्खेत ।

आवादी—यस जिल्लाका उत्तर भागमा जाजरकोट मालनेटा र दक्षिण भागमा फलावाङ्ग भन्ने नेपाल सरकारका आधीनमा रहेका राज्यछन्। यो जिल्लामा जम्मा २ लाख १५ हजार मानिस छन् । यस मध्ये सरकारी इलाकामा करीव १ लाख ३६ हजार फलावाङमा करीव ५ हजार र जाजरकोटमा करीव ७४ हजार मानिस छन् ।

मुख्यबस्ती—सरकारी इलाकामा—सल्याना—यहाँको अदुवा बडो असल हुन्छ। यसै अदुवाबाट असल खालको सूठों बन्दछ। यतिको असल सूटो देश भरमा अन्त कतै पाइँदैन। ( चारदारी ) माल नेटा—यहाँ सक्कुमहर ताल छ। रुकुमकोट—यो राजाको सदर मुकाम हो। ( पल्लो ) रोल्पा गुर्माकोट, फलात्राङ्गमा—यो राज्यको सदर मुकाम हो। जाजरकोटमा जाजरकोट ५।

नदी—शारदाखोलो, बबै ( सल्यानामा ) भेरी ( पश्चिमपट्टि ) सानीभेरी ( जाजरकोटमा ) सानीभेरी र ठुली भेरीको संगम जाजरकोट इलाकाका सिमानामा हुन्छ।

## दुल्लु दैलेख र सुर्खेत।

सीमाना—उत्तर जुम्ला, पूर्व सल्याना जिल्ला, दक्षिण भेरी नदी र बर्दिया जिल्ला, पश्चिम सेतीनदी ( ६० सालदेखि )

टिप्पणी—सल्याना जिल्लाका उत्तर पट्टि जुमला जिल्ला भएको र हिमालयमा नै पर्नै हुनाले यस जिल्लामा हिमालय छैन।

आबादी—यहाँको जनसंखया १ लाख २ हजार मानिसको छ।

मुख्यबस्ती—दैलेख—तीनै जिल्लाको यो सदर मुकाम हो। यहाँ ( गौडा र दुल्लु र दैलेख को ) अदालत छ। सुर्खेत—यहाँ माल अदालत छ।

नदी—कर्नाली ( जिल्लाको माझमा ); भेरी ( जिल्लाको पूर्व र दक्षिण सीमानामा )

## डोटी र आछाम।

सीमाना—उत्तर भोट, पूर्व कर्नाली, र जुम्ला इलाका, दक्षिण कर्नाली नदी र कैलाली जिल्ला, पश्चिम बैतडी डडेल्धुरा।

टिप्पणी—( क ) यहाँ साना साना ज्वालामुखी का चिह्नहरू छन्। दुल्लुमा शिर स्थान र पाउकास्थान दुइ चिन्ह मिलाई देवीको मूर्ति

मानिएको छ। ती दुइका बीचमा नाभिस्थान भन्ने तीर्थ छ। दैलेखमा कोटिल्ला नामको तीर्थ छ, यहाँ कोटिलेश्वर महादेव छन्। दुल्लुमा ज्वालामुखीकै अर्को चिन्ह भएको ठाउँलाई धूलेश्वर मानिएको छ। ई ५ लाई पंचतीर्थ भन्दछन्।

आवादी—डोटी जिल्लाका उत्तर पूर्व भागमा बझाङ् र बाजुरा दुई राज्य नेपालसरकारका अधीनमा छन्। यस इलाकाको जनसख्या २ लाख १६ हजारको छ— डोटीमा १ लाख ५३ हजार, बझाङ्मा ४३ हजार र बाजुरामा २० हजार छ।

मुख्यवस्ती - रिड़ीकोट, मंगलसेन, सापे बजार (अछाममा); सिलगढ़ी,—जिल्लाको सदर मुकाम हुनाले यहाँ एउटा बजार छ। डोटीका मुखय गौंड़ा, अपील, अदालत माल अस्पताल, औषधालय, पाठशाला र हुलाक समेत यहीं छन्। कर्णालीप्रदेश भरमा ठूलो छाउनी पनि यहीं छ। यहाँ श्रीशैलेश्वरी देवीको मेला कार्तिक पूर्णिमामा हुन्छ। - राजपुर, जोरायल, चैनपुर, बाजुरा।,— बझाङ्मा, राजाको सदरमुकाम। बाजुरे राजाको सदरमुकाम। थलहरा (डोटी पूर्व भागमा)।

नदी—कर्नाली (अछाम जिल्लाको पूर्व भागमा) बूढ़ी गंगा (अछाममा), सेती (डोटी जिल्लाको सीमानामा)।

(क) डोटीका पूर्व भागको हिमालय जुम्ला जिल्लामा पर्दछ। पश्चिम भागमा ब्यांस हिमालय छ। महाकालीका तीरैतीर गई टिङ्कर खोलातिर लागी त्यस हिमालयको टिङ्करलिपु भञ्जाङ् पार गरी भोटमा आवत जावत हुन्छ।

(ख) खपतड भन्ने लेक अछाम र डोटीका सीमानामा छ। त्यहीं बझाङ राज्यको सीमानामा जोरिएको छ। त्यहाँ ठाउँठाउँमा मैदान परेको छ। सो मैदानमा अनेकौं रङ्गका र राम्रा राम्रा जंगली फूलहरू पाइन्छन्। त्यहाँ बड़ा बड़ा निगालाघारी छन्। त्यहाँका निगालामा

बाघका छालामा जस्ता बुट्टा परेका हुन्छन्। त्यस निगालाका नली मुलुक-भरमा प्रसिद्ध छ।

आछाममा सानासाना ३ फुट सम्मका पनि दुधार गाई हुन्छन्। आछाम र जुम्लाका सीमानामा श्रीमालिका भगवतीको मन्दिर छ। यहाँ श्रावणशुक्ल पूर्णिमामा ठूलो मेला हुन्छ।

मध्यभागमा पीलकोट गर्खामा चाखुरा लडाका र तेज हुन्छन्। पश्चिम-उत्तर भागमा गरेर ब्याँसमा नरम पाखी र गलैंचाहरू बुनिन्छन्। पश्चिम भागमा बैतडीमा चिउरीका फूलको महबाट असल गुड बन्दछ। चिउरीका बिउबाट उन्दा फुलेल पनि बन्दछ।

## बैतडी डँडेल्धुरा।

—:o:—

सीमाना—उत्तर भोट, पूर्व डोटी जिल्ला, दक्षिण कंचनपुर, पश्चिम महाकाली नदी। हाम्रो मुलुकको अन्तिम पश्चिम सीमाना यही हो।

आबादी—यस जिल्लाको आबादी ७८ हजार मानिसको छ।

मुख्यबस्ती—डँडेल्धुरा,—यो डँडेल्धुरा जिल्लाको सदर मुकाम हो। यहाँ गौंडा, अदालत, पाठशाला र औषधालय छन्। यहाँबाट २ कोस उत्तर प्रसिद्ध श्रीउग्रतारा देवीको कार्तिक पूर्णिमामा मेला हुन्छ। अजेमीर, मस्टामाण्डु (डँडेल्धुरामा), बैतडी,— बैतडी जिल्लाको सदरमुकाम हो। यहाँ गौंडा अदालत, माल र पाठशाला छन्। यसको १ कोस नैऋत्य भागमा श्रीत्रिपुर सुन्दरीको कार्तिकशुक्लाष्टमीमा मेला हुन्छ। दार्चुला,—यहाँ ठूला धनिमी छ। पाटन, लेकम, ब्यास (बैतडीमा)।



नदी—चौलाने (जिल्लाको पश्चिम भागमा)।

# जुम्ला ।

सीमाना—उत्तर भोट, पूर्व पर्वत, पाल्पा; दक्षिण सल्याना, दैलेख, बैतडी, डँडेल्धुरा जिल्ला, भन्दा पश्चिम ( कर्नाली, बाजुरा ) बभाङ ।

आबादी—मुलुकभरका जिल्ला यो सबै भन्दा ठूलो छ तापनि हिमालयका काखैमा हुनाले यहाँ उब्जा बहुतै कम हुन्छ। त्यसै कारणले यहाँको आबादी बहुतै थोरै छ। जनसंख्या ८९ हजार छ।

मुख्यबस्ती छिनासिम—जिल्लाको सदर मुकाम तिलानदीका तीरमा. यहाँ गौंडा, माल, अदालत, पल्टन, हुलाक, पाठशाला समेत छन्। श्रीचन्दननाथको प्रसिद्ध मन्दिर पनि यहीं छ। तिब्रकोट—पूर्व भागमा, यहाँ त्रिपुरसुन्दरीको प्रसिद्ध मन्दिर छ। हुम्ला,—भोटका सीमानैनेर यहाँ अदालत छ। जुम्ला जिल्लाको उत्तर पश्चिम भाग पनि हुम्ला कहिन्छ। सिजा र पाँचसय।

नदी—कर्नाली ( जिल्लाको मुख्यनदी, डोटीको सीमानामा र जिल्लाका माझमा ); टाँके खोलो, मुगुखोलो ( उत्तर भागमा )।

# भित्री मधेस

—❀—

## मकवानपुर ।

सीमाना—उत्तर बूढी गण्डकी; पूर्व धूलिखेल, सिंधुली; दक्षिण रौतहट, बारा, पर्सा, चितवन; पश्चिम बूढीगण्डकी।

आबादी—यस जिल्लामा ४८ हजार मानिस छन्।

मुख्यबस्ती—मकवानपुर—यहाँ माल अड्डा र एक गढी ( चिसापानी गढीका तालुकको ) छ। चिसापानी—महाभारतका दक्षिण पाखामा

यहाँ एक गढ़ी, अदालत र भन्सार छन्। यसैका फेदीमा भीमफेदी सानो बजार छ। नेपालबाट मधेसमा आवत जावत गर्ने मुख्य यही हो।

जुम्लामा पूर्वदेखि लिएर क्रमैले लद्दाख (पाल्चुङ्ङा हिमालय) छाङ्ला, ताख, हिमालय छन्। लद्दाख हिमालयमा टाँके खोलाको बाटो गरी नाम्जा भन्ने १६, २२० फुट अग्लो टाकुरो नेरको भंज्याङ् पार गर्दा भोटमा आवत जावत हुन्छ। छाङ्ला हिमालयमा चुवाखोलाको बाटो गरी तांखु नेरको भंज्याङ् र ताख हिमालयमा कर्णालीको बाटो गरी तालकंकर नेरको भंज्याङ् पार गरेर पनि भोटमा आवत जावत हुन्छ।

कान्द्राङ्—पश्चिम भागको सानो गढी यहाँ छ। यो चिसापानी गढीको मातहतमा छ। उपर्दाङ—

नदी—वाग्मती (पूर्व भागमा) राप्ती (पश्चिम भागमा)।

सिंधुली !—टिप्पणी—काठमाडौंबाट हिन्दुस्थान जाने मूल सडक भीमफ़ेदीदेखि चुरे सम्मको ठूलो सड़क यसै जिल्लामा पर्दछ। पहाड़ छेड़ी सुरुङ् बनाई सो मूल बाटो जोड़िएको छ।

सीमाना —उत्तर धूलिखेल इलाका भ्यागुरे खोलो, सुनकोसी; उदयपुर; दक्षिण कमला नदी, सर्लाही, महोत्तरी; पश्चिम बागमती, मकवानपुर।

आबादी—यस जिल्लाका उत्तर भागका मौजाहरू दोलखा माल, पश्चिम भागका मौजाहरू मकवानपुर मालबाट र दक्षिण भागका मौजाहरू मलङ्गवा (सर्लाही) मालबाट चर्चिआएको छ। जनसंख्या ... हजार मानिसको छ।

मुख्यवस्ती—सिंधुली—यहाँ अदालत भन्सार र एउटा गढ़ी छ।

हरिहरपुर—यहाँ पश्चिमभागको सानो गढ़ी छ।

नदी—सुनकोसी (उत्तर पट्टि जिल्लाका सीमानामा), ... पट्टि जिल्लाका सीमानामा) मरिन खोलो।

# उदयपुर

सीमाना—उत्तर चुरे, दक्षिण महाभारत, पश्चिम सप्तकोसी, पूर्व कमलानदी।

आवादी—यस इलाकाको जनसंख्या ४९ हजार छ।

मुख्यवस्ती—उदयपुर, यस इलाकाको सदर मुकाम यही हो। यहाँ गौंड़ा अदालत, गढ़ी र मालअड्डा समेत रहेका छन्। चिसापानी, चौ दण्डी।

# चितवन र नवलपुर।

— ❋ —

सीमाना—उत्तर महाभारतलेक (तानसेनको पूर्वी चुच्चो), पूर्व मकवानपुर, दक्षिण सोमेश्वर पर्वतश्रेणी, पश्चिम बुटौल तानसेन। चितवन र नवलपुरलाई बीचमा नारायणीले छुट्याइदिएको छ।

आवादी—चितवन जिल्ला अलग्गै रहेको छ, तर नवलपुर जिल्ला बुटौल पाल्पी जिल्लामा गाभिएको छ। यस इलाकामा जम्मा ३२ हजार मानिस छन्। चितवनमा २१ हजार मानिस र नवलपुरमा अन्दाजी ११ हजार मानीस छन्।

मुख्यवस्ती—भ्रुवानी, जिल्लाको सदर मुकाम यही हो। यहाँ माल र अदालत छन्। ठोरी—यहाँ वीरगंजगोस्वाराका मातहतमा रहेका बजार अड्डा र काठमहाल छन्। सोनवर्सा—३ र ४ यी दुवै ठाउँमा वेथरी गोस्वाराका मातहतमा रहेका हात्तिसार छन्। उपर्दाङ् (चितवन तर्फ); नवलपुर, गैंडाकोट, कोल्हुवा (नवलपुरमा)।

यस जिल्लाका जंगलमा प्रशस्त जंगली जानवरहरू पाइन्छन्। तिन मध्ये विशेष हात्ति गैंडा पनि पाइन्छन्,

# दाङ् देउखुरी र सुनार

—❀—

सीमाना—उत्तर सल्याना, पूर्व पाल्या, दक्षिण बुटौल, गोण्डा र बहराइच; पश्चिम बाँके ।

आबादी—दाङ् करीब ३ खण्डको १ खण्ड फलावाङ् राज्यमा मिलेको छ। बाँकी दाङ् र देउखुरी जिल्ला खजाइनी गोस्वाराका मातहतमा रहेका छन्। सुनार जिल्ला सानो छ। यो बाँके बर्दिया गोस्वाराको मातहतमा छ। यस इलाकाको जम्मा जनसंख्या १ लाख १२ हजार छ। फलावाङ्का हिस्साको दाङ्मा अन्दाजी ३१ हजार सरकारी इलाकाका दाङ् र देउखुरीमा अन्दाजी ७८ हजार र सुनारमा ३ हजार मानिस छन्।

मुख्यबस्ती—घोराही—जिल्लाको सदर मुकाम हो। यहाँ दाङ् अमिनी र माल छन्, सानो बजार पनि छ। मानपुर—राज्यपट्टिको सदर मुकाम, यहाँ एउटा सानो बजार पनि छ। छिल्ली बिजौरी—यहाँ दाङ् देउखुरी माल छ। (दाङ्मा) कोइलावास—जिल्लाको मुख्य बजार यहाँ बाँके बर्दिया गोस्वाराका मातहतका काठमहाल र कोइलावास बजार छन्। (देउखुरीमा), भोजपुर (सुनारमा)।

मुख्य नदी—रापती।

———

# मधेस तराई

## पर्सा र वारा ।

सीमाना—उत्तर मकवानपुर जिल्ला, पूर्व रौतहट्, दक्षिण मोग-
न् चम्पारन जिल्ला, पश्चिम मोगलान् चंपारन जिल्ला र चितवन
ल्ला । यी जिल्लाहरूमा पर्सा र वाराको बीचमा सिर्सिया नदी पर्दछ ।

आवादी—यी दुवै जिल्ला वीरगंज गोस्वाराका मातहतमा छन् ।
हरूको जम्मा जनसंख्या २ लाख ७६ हजार मानिसको छ ।

मुख्यवस्ती—अलौ, राममौरी—यहाँ एउटा हात्तिसार छ । पर्सा
पर्सामा ) वीरगंज—यहाँ गोस्वारा, पर्सामाल, अमिनी, बजारअड्डा,
लकैया काठमहाल, टेलिफोनआफिस, अस्पतालहरू छन् । यहाँ एउटा
ठूलो बजार छ । यहाँको फलामे ताप्के प्रसिद्ध छ । यसका दक्षिण
दुइ मीलमा मोगलान्‌का रक्सौल स्टेशन छ । कलैया—यहाँ वारा
जिल्लाको अमिनी, चन्द्र मिडिल स्कूल र एउटा सानो बजार पनि छ ।
बेला—वारा माल यहाँ छ । भवानीपुर, अमलेखगंज—स्वर्गवासी श्री
३ महाराज चन्द्रशम्शेरबाट करियाहरू अमलेख भएको उपलक्षमा
रहेको हो । यहाँदेखि २४ मील दक्षिण रक्सौलसम्म नेपाल गभर्न्मेन्ट
रेल्वे छ । ( वारामा )

नदीहरू—गनगाई, सिर्सिया, तिलाउ ( पर्सामा ), बंगरी, जमुनी,
( वारामा ) पसाहा, बकैया, तियर ।

## रौतहट र सर्लाही ।

—❀—

सीमाना—उत्तर सिंधुलीगढी, मकवानपुर जिल्ला; पूर्व महोत्तरी
जिल्ला, दक्षिण मोगलान मुजफ्फरपुर जिल्ला, पश्चिम वारा जिल्ला ।

आबादी—यी दुवै जिल्ला ९४ साल कार्तिक १ गतेदे खडा भएको रौतहट सर्लाही गोस्वाराका मातहतमा रहेका दुइ जिल्लाको गरी जम्मा जनसंख्या २ लाख ९५ हजार छ।

मुख्यबस्ती—गौर, कटहरबन, बैरिया, छतौना,—यो रौतहट को सदर मुकाम हो। यहाँ गोस्वारा, छतौना जमुनीद्वार, माल, बजार अड्डा, टेलिफोन आफिस र अस्पताल छन्।

पर्सा, समनपुर, हनुमनियाँ, मोल्सरी ( रौतहटमा )। मलंगवा- सर्लाही माल, अमिनी, हुलाक, टेलिफोनआफिस, तेजारथ, पाठशाला, बजारअड्डाहरू सरकारिया र मरिङ् पत्रिङ् बिर्ता काठमहाल पनि छन्। हरपुर—यहाँ हरपुर हाकिम हरिपुर्वा—यहाँ सरकारी आयुर्वेद त्रिचन्द्र औषधालय छ। (सर्लाही

नदीहरू—बागमती, मनुसमारा, बवैया ( रौतहटमा ) लखनदेई झिमबाँके ( सर्लाहीमा )।

# महोत्तरी।

सीमाना—उत्तर सिंधुली, पूर्व कमला र सप्तरी, दक्षिण मोतिहारी मुजफ्फरपुर र दरभंगा, पश्चिम बागमती नदी र रौतहट जिल्ला।

आबादी—यो जिल्ला महोत्तरी गोस्वाराको मातहतमा छ। यसको जम्मा जनसंख्या ३ लाख १४ हजार मानिसको छ।

मुख्यबस्ती—जलेश्वर—यो सदर मुकाम जलेश्वर महादेवका नाम बाट रहेको छ। यहाँ गोस्वारा, महोत्तरीमाल, अमिनी, बनजाँच, गोदाम, महोत्तरी गुठीमाल, टेलीफोनआफिस, एक्सचेञ्ज आफिस मिलिटरीब्यारेक, तेजारथ, अस्पताल, बजारअड्डा छन्। यहाँ पनि छ। जनकपुर,—यहाँ रामचन्द्रजीको र जानकीजीको दुइ मन्दिर र अनेकौं पवित्र कुण्डहरू छन्। यहाँ चैत्रशुक्ल नवमीमा मेला लाग्दछ। जनकपुरदेखि मोगलान जयनगर स्टेशनसम्म नेपाल

नगर जनकपुर रेल्वे पनि छ । मटिहानी, भस्मपुरा,—यहाँ काठमहाल । रुपौला—यहाँ एउटा हात्तिसार छ । सत्रेला, रघुनाथपुर, त्रैरिया, खा- यहाँ प्रसिद्ध धनुष मन्दिर छ, माघमा मेला पनि लाग्छ. खजुरी, वा,—जयनगर जनकपुर रेल्वेको हेडक्वार्टर् छ । भिंभा, त्रिसापानी राकट्टी ।

नदी— मडहा, बिगही, रातो, जलाधर, गंगाजमुनी ( यी दुइ सरकारको सीमानामा छन् ), कमला ( सप्तरी र महोत्तरीको सीमानामा पर्छ ) ।

## सप्तरी ।

सीमाना—उत्तर उदयपुर, पूर्व सप्तकोसी, मोरङ; दक्षिण मोगलान इलाका र भागलपुर; पश्चिम कमला नदी, महोत्तरीजिल्ला ।

आबादी—यो सिराहा समेतको जिल्ला सप्तरी गोस्वाराको मातहतमा यहाँ जम्मा २ लाख ७८ हजार मानिस छन् ।

मुख्यबस्ती—हनुमान्नगर,—जिल्लाको सदर मुकाम यही हो । यहाँ एउटा बजार छ । सप्तरी जिल्लाका माल, गोस्वारा, अमिनी, बजारअड्डा, हुलाक तेजारथ र टेलिफोन आफिस, अस्पताल छन् । बनजाँच, को ठाना भगवानपुरमा छ । कोइलाडी,—यस त्रिजुगा नदीमा १५ माइल लामो चन्द्र-नहर बनेको छ । यसका हाँगाहरूको लमाई माइल छ। यस नहरले सप्तरी जिल्लामा प्रगन्ना भडौरा, खालिसा, पकरी रे जमीनलाई पानी पुऱ्याएको छ । ,तिलाठी, सखुवनी,—यहाँ हात्तिसार छ । फत्तेपुर, भगवतपुर, छप्की, बैरवा, बरमझियाँ,—चन्द्रनहर अड्डा रहेको छ । भगवानपुर, गुदीगाउँ, साहान्बजार —यहाँ सिरहा ४ प्रगन्नाको माल, अमिनी तेजारथ, टेलिफोन चन्द्रगंज —यहाँ एउटा बजार र बजारअड्डा पनि छ । यहाँघाट मुर्गीको निकासो हुन्छ । सारसोर, मिर्चैया, औरही ।

सप्तकोसी र कोकाहा नदीको संगममा।

नदी—कमला ( पश्चिम सीमानामा). कोसी ( पूर्व से
त्रिजुगा—वाराहक्षेत्रमा श्रीवाराह भगवान्‌को प्रसिद्ध मन्दिर
कार्तिकशुक्ल पूर्णिमामा ठूला मेला लाग्दछ। बलान, जमुनी,

## मोरङ्।

सीमाना—उत्तर धनकुटा ( पल्लौ किराँत ) इलाका, मह
पूर्व मेचा नदी, मोगलान दार्जिङ् लिङ् जिल्ला; दक्षिण मो
जिल्ला, पश्चिम सप्तकोसी र सप्तरी जिल्ला।

"आबादी—यो जिल्लाको पश्चिम भाग विराटनगर
पूर्व भाग झापा छोटी गोस्वाराको मातहतमा छ। यहाँ
२ लाख ११ हजार मानिसको छ।

मुख्यबस्ती—विराटनगर, —जिल्लाको सदर मुकाम यहीं
एउटा बजार छ। यहीं गोस्वारा माल ( रतुवा पश्चिमका प्रगन्नाको)
बजारअड्डा, कोसी पुर्वारी काठमहाल, वनजाँच र छोटा अ
हालमा यहाँ १६ लाखको पूँजीबाट सनको एउटा भारी म
छ; रँगेली—यहाँ वक्राहा काठमहाल र अस्पताल छन्। है
एउटा हात्तिसार छ। जुद्धनगर—यो महाभारतका फेदीको बर
बजार हो, यहाँ एउटा बजार अड्डा छ। ( धरान ), वि
झापा, झिलमिल्िया—यहाँ झापा छोटी गोस्वारा (झापामाल
प्रगन्ना ), अमिनी, वनजाँच, हुलाक तेजारथ बजारअड्डा
अस्पताल छन्। अनारमनि, भद्रपुर—यहाँ एउटा बजार
छ। आठमौजा, भूलाबारी, सर्ताघट्टा – यहाँ कीचकवध म
किंवदन्ति छ।

नदी—कोसी ( पश्चिम सीमाना ), रतुवा, कनकाई, ब
पूर्वमा हाम्रो सीमाना यही मेची सम्म हो।

# पाल्ही र माझखण्ड।

सीमाना—उत्तर पाल्पा जिल्ला, पूर्व नारायणीनदी, दक्षिण मोगलान गोंडा, बस्ती जिल्ला, पश्चिम खजहनी जिल्ला।

आबादी—यी दुवै जिल्ला भैरहवा गोस्वाराका मातहतमा छन्। दुवै जिल्लाको जम्मा जनसंख्या १ लाख ८५ हजार मानिसको छ।

मुख्यबस्ती—भैरहवा यो जिल्लाको सदर मुकाम हो। यहाँ एउटा बजार छ। गोस्वारा, माझखण्डको माल, अमिनी, अडिटरआफिस र अस्पताल यहीं छन्। बुटौल बजार,—यो बुटौल जिल्लाको मुख्य बजार हो, यहाँ बजार अड्डा अस्पताल छन्। भगवान्पुर परासी,—यो पाल्ही जिल्लाको सदर मुकाम हो, यहाँ एउटा बजार छ। यहीं पाल्ही जिल्लाको माल, अमिनी, वनजाँच, बजारअड्डा र अस्पताल छन्। त्रिवेणी—यहाँ एउटा सानो बजार छ। त्रिवेणी काठमहाल र बजारअड्डा यहीं छन्। (पाल्हीतर्फ)।

नदी—तिनाउ।

# खजहनी र स्यूराज।

सीमाना—उत्तर पाल्पा, पूर्व पाल्ही माझखण्ड जिल्ला, दक्षिण मोगलान बस्ती जिल्ला, पश्चिम मोगलान बहराइच जिल्ला।

आबादी—ई दुइ जिल्ला खजहनी गोस्वाराका मातहतमा पर्दछन्। यहाँको जनसंख्या १ लाख २२ हजार मानिसको छ।

मुख्यबस्ती—तौलिहवा,—जिल्लाको सदर मुकाम यही हो। गोस्वारा, माल, अमिनी, वाणगंगा, काठमहाल, अडिटरआफिस, वनजाँच र अस्पताल यहीं छन्। झंगमनोहरपुर—यहाँ एउटा हात्तिसार छ। (खजहनीमा); बहादुरगंज—स्यूराज जिल्लाको सदर मुकाम यो हो।

यहाँ माल र अमिनी बसेका छन् । कप्तानगंज, महाराजगंज, शिवगढ़ी ( स्यूराजमा ) ।

नदी—वाणगंगा, सुरही, चिरोही ।

## बाँके र बर्दिया ।

सीमाना—उत्तरमा बर्दिया माथि अलिकति दैलेख पर्छ, अरू सब सल्याना जिल्ला; पूर्व दाङ्, देउखुरी; दक्षिण मोगलान् बहराइच; पश्चिम कर्नाली नदी । यी जिल्लाहरूलाई मान भन्ने नदीले छुट्याएको छ ।

यी दुइ जिल्ला बाँके बर्दिया गोस्वाराका मातहतमा छन् । यहाँको जनसंख्या १ लाख ५ हजार छ ।

मुख्यबस्ती—बाँके—यो जिल्लाको सदर मुकाम हो । यहाँ एउटा बजार छ । गोस्वारा, माल, अमिनी, बजारअड्डा, रापती काठमहाल, घनजाँच र अस्पताल यहीं छन् । वा नेपालगंज ( बाँकेमा ) गुलरी—माल र अमिनी बसेको ठाउँ । राजापुर—यहाँ एउटा बजार र बजारअड्डा छन् । पकरिया, गंगापटवा—यहाँ बबै कर्नाली काठमाहाल बसेको छ । पदमाहा ( बर्दियामा ) ।

नदी—रापती ( बाँकेमा ); कर्नाली, बबै ( बर्दियामा ) ।

## कैलाली कंचनपुर ।

सीमाना—उत्तर डोटी र बैतडी डँडेल्धुरा जिल्ला, पूर्व कर्नाली नदी र बर्दिया जिल्ला, दक्षिण मोगलान; मोहना नदी र खेरी र पिलीभीत जिलाहरू पश्चिम महाकालीनदी । पश्चिममा हाम्रो सीमाना यही महाकाली नदीसम्म हो ।

यहाँको जनसंख्या लगभग ४७ हजार मानिसको छ ।

मुख्यबस्ती—झनगढ़ी वासनीनगर— जिल्लाको सदर मुकाम यही हो। यहाँ गोस्वारा माल, अमिनी, पथरैया मोहाना काठमहाल, वनजाँच ७ हजारअड्डा हुलाक र अस्पताल छन्। कैलाली, भजनी—पथरैया द्वारा यहां छ। जिल्ला भरको गुल्जार ठाउँ यहीं हो। सती, मालाखेति र चौमहला ( कैलालीमा ) कंचनपुर, बेलौरी—जिल्लाको सदर मुकाम हो। गोस्वारा, माल, अमिनी, काठमहाल, हुलाक, वनजाँच, चौकी र छोटी हजार अड्डा बसेका छन्। ब्रह्मदेउ, टनकपुर, जिमुवा, देखतभूली र कलुवाँपुर ( कंचनपुरमा )।

नदी— पथरैया, घुराहा, शिवगंगा, मोहाना, काढा, कनरा, खुटिया र कर्नाली ( कैलालीमा ) महाकाली ( शारदा ) दोंदा, वतहरा, स्यहाली ( कंचनपुरमा )

## नेपालका बाइशी दून पच्छिम उपत्यका अथवा राज्य

भेली, करनाली र शिंगरफ र अनेक सहायक नदीहरू द्वारा सिंचित नेपालका तिन दून हरु अनेक सानासाना दून हरुमा विभक्त भएकाछन्। सबैदूनहरु हरिला भरिला सानासाना पर्वत शृंगले सोभीत भएका छन्। सन् १७७१ गोर्खेश्वर पृथ्वीनारायण शाह का पहिले इनै वाईशी दून वाइशी राज्यका नाउले प्रसिद्ध भई जुमालेश्वरका अधिनस्त सानसाना बाइशी राजाहरुका अधिकाररमा थिए। तिनीहरुको नामावली तल लेखिएको छ।

(१) रुकम (२) पल्लो मुसीकोट (३) आजरकोट (४) बाँकी (५) शल्याना (६) मालमेटा (७) दाङ्ग (८) चिल्ली (९) मजल (१०) दार्मा (११) जैहरी (१२) डुल्लू (१३) आछाम (१४) डांटी (१५) जुम्ला (१६) वभाङ्ग (१७) वाजुरा (१८) भलहरा (१९) कालागाउँ (२०) घुघुरकोट (२१) थामी (२२) दैलेख।

**सतगण्डकी—मध्य उपत्यका वा चौविशी दून अथवा राज्य**

धवला गिरि र गोसाईं थानका मध्य भागलाई चौविशी दून वा सप्तगण्डकी प्रदेश भन्दछन् । अघी इनै चौविशी दूनहरू चौविशीराज्यले प्रसिद्ध मई जुम्लेश्वर का अधीनस्त चौविशी राजा हरूका अधिन थिए , पछी गोर्खेश्वर पृथ्वीनारायणशाह र निजका उत्तराधिकारीहरूले क्रमसः नेपाल साम्राज्यमा मिलाएका थिए । तिनि हरुको नामावली यो हो:—

(१) तनहुङ्ग (२) रिसिङ्ग (३) घिरिङ्ग (४) गजकोट (५) पाल्पा (६) भिर्कोट (७) गहुङ्ग (८) ढोर (९) पैन्यू (१०) पल्ल्नोनूवाकोट (११) सुतुङ्ग (१२) कास्की (१३) लंजुङ्ग (१४) गुल्मी (१५) अर्घा (१६) खांची (१७) पर्वत (१८) गलकोट (१९) मुसांकोट (२०) धुर्कोट (२१) इस्मा (२२) पिउठाना (२३) खुप्रीकोट (२४) भिर्ग्रीकोट ।

## सन् १६२० मा नेपालको सर्कारी जन्मत गणनामा भनेको नेपाल को जनसंख्या

तीन मुख्य नगरको जनसंखया

| नगर | पुरुष | स्त्री | जम्मा |
|---|---|---|---|
| काठमाण्डू | ५३,३१३ | ५५,४९२ | १,०८,८०५ |
| ललितपत्तन | ५३,६२१ | ५१,३०७ | १,०४,६२८ |
| भक्तगाऊँ | ४७,३०८ | ४५,८६८ | ९३,१७६ |

मध्य भाग तिरको

| ठाँऊ | घर | आबादी |
|---|---|---|
| उपत्यका भित्र | ६४,४५० | ३,०६,९०९ |
| उपत्यका बाहिर | १० ३६१ | ६०,१०१ |
| | ७४,८०१ | ३,[illegible]७,०१० |

### पश्चिमी तिरको

| | | |
|---|---|---|
| एक नम्बर | ३८,३६७ | १६५,२५१ |
| दुइ नम्बर | १४.५९७ | ७९,२०३ |
| तिन नम्बर | १५,९७६ | ८२,१६० |
| चार नम्बर | २९,५२३ | १,८३,४१७ |
| पाल्पा र गुल्मी | ६३,६१५ | ३,७६,६०० |
| पिथुठाना | २१,३४५ | १,२२,०६३ |
| सल्यान | ३२,५३१ | २,१४,३२९ |
| डोटी | २४,३३२ | १,५१,२२९ |
| बैतडी | ६,११६ | ७७,८६५ |
| दइलेख | ११,७८९ | ८४,१७३ |
| जुमला | १४,२९६ | ८६,०२२ |
| | २,७८,५१७ | १६,२७,६४२ |

### कास्की-लमजुंगको

| ठाँऊ | घर | आबादी |
|---|---|---|
| कास्की लमजुंग | २३,७७५ | १,३६,५६५ |
| | घर | |
| पल्वंग | ७९० | ४,५३० |
| भाचरकोट | १२,१३७ | ७३,८७४ |
| भमांग | ५,८२१ | ४३,०४३ |
| मजुरा | २,४८३ | २०,२२० |
| | ४५,००६ | २,८१,२३२ |

पूर्वतिरको

| | | |
|---|---|---|
| एक नम्बर | ३६,६६६ | २,१३,७०२ |
| दुइ नम्बर | ३१,७८५ | १ ७७,०७२ |
| तिन नम्बर | २०,६६६ | १;०८,१०६ |
| चार नम्बर | ४६,९५८ | २,६६,६६८ |
| धनकुटा | ५८,७८४ | ३,५३,०६२ |
| इलाम | १४,६७० | ८७,४७५ |
| | २,१५,८६५ | १२,०६०८६ |

फुटकर

| | | |
|---|---|---|
| वीरगंज, वारा, परसा रौतहट | ७७,०६५ | ४.१४,६५७ |
| महोत्तरी र सरलाही | ७१,२७९ | ४,७१,२९२ |
| सप्तरी | ६२,७६६ | ३,७७,८५५ |
| उदैपुर | ६,०३२ | ४८,६१३ |
| मोरंग ( विराटनगर र झापा ) | ३६,२५७ | २, १,३०८ |
| खजहनी र शिवराज | १९.१५६ | १,२२,५८ |
| पाल्ही माझखंड | २८,६४४ | १.८४,५८२ |
| बाँके, वरदिया | १७,४०५ | १,०४ ४६६ |
| कैलालि, कंचनपुर | ४.७०७ | ४६,८१६ |
| मकवानपुर | १०,१०६ | ५६,५१६ |
| कन्दरंग | १,४२५ | ९,५५६ |
| चित्तावन | २ ०८८ | २०,५१० |
| सुनार | ३५१ | २,७८ |
| सूरखेत | ३,०६९ | १७,३११ |
| | ३,४३,४२० | २०,८८,८२१ |

प्रकृतिक खण्डानुसार जनसंख्या ।

| खण्ड | पुरुष | स्त्री | जम्मा |
|---|---|---|---|
| पर्वत | १५,५७३,६४८ | १४,७७,६३४ | ३०,३१,८८२ |
| उपत्यका | १,८५,०३५ | १,८१,९७५ | ३,६७,०१० |
| तराई | १०,६१,०५९ | ११,१४,८०५ | २१,७५,८६४ |
| | २८,००,०४२ | २७,७४,७१४ | ५५,७४,७५६ |

—:❀:—

# हुलाक एक्स्चेञ्ज आफिसहरु ❀

श्री ५ तृभुवन वीरविक्रम शाहका पालामा १९९४ साल देखि नेपाल राज्य भरि बाट भारतवर्षमा जाने सादा चिठ्ठी र सादा बुकपोष्टहरुमा नेपाली टिकट लगाई चलाउने नियम भए अनुसार तपसीलमा लेखिए बमोजिमका हुलाक एक्स्चेञ्ज आफिसहरु कायम गरी त्यहाँबाट नेपाल राज्य भरि चिठ्ठी पुऱ्याउने बन्दोबस्त मिलाएको छ ।

## भारतवर्षतिरका डाँकघर, नेपालतिरका डाँकघर

१ नैपाल (लिगेशन)—काठमाण्डु एक्स्चेञ्ज आफिस—यस आफिस बाट नन्दिपुर, भक्तपुर, धूलिखेल, चौतारा, ताता पानी, त्रिशूली, धादिङ, रसुवा, गोरखा, चितोन र परेवाडाँडा सम्मको चिठ्ठी जान्छ ।

२ रक्सौल—वीरगंज एक्स्चेञ्ज आफिस—यस आफिसबाट अमलेखगंज, भीमफेदी, कलैया र कटहरवन सम्मको चिठ्ठी जान्छ ।

३ सुरसण्ड—जलेश्वर एक्स्चेञ्ज आफिस—यहाँ बाट सर्लाही, सिरहा, उदयपुर, ओखल्डुङ्गा, सिंधुली, दोलखा, ल्याङ्ल्याङ् र हनुमानगर सम्मको चिठ्ठी जान्छ ।

४ फर्बेसगंज—विराटनगर एक्स्चेञ्ज आफिस—यहाँ बाट रंगेली, झापा, विजयपुर, धनकुटा, तेह्रथुम, तप्लिजुङ्, भोजपुर र चैनपुर सम्मको चीठी जान्छ।

* सुखियापोखरी—पशुपतिनगर एक्स्चेञ्ज आफिस-यहाँबाट इलाम सम्म मात्रको चीठी जान्छ।

६ रुपैडिहा—बाँके एक्स्चेञ्ज आफिस—यहाँबाट बर्दिया, कैलाली, कञ्चनपुर, दङ्गवन, प्यूठाना, डुँडरा पहाड, सल्यान र दैलेख सम्म जान्छ।

७ नौतनवा बजार—भैरहवा एक्स्चेञ्ज आफिस—यहाँबाट वेर्पा, तौलिहवा, स्यूराज, परासी, शेरगंज, बुटौल, पाल्पा, रिढी, स्याङ्जा, पोखरा, बाग्लुङ र थाक सम्म जान्छ।

८ झूलाघाट—बैतडी एक्स्चेञ्ज आफिस—यहाँबाट दार्चुला, डडेल्धुरा, डोटी, रिडाकोट, कर्नाली र जुम्लासम्म चिठी जान्छ।

नेपालमा चिठिमा टाँसने टिकट महाराजाधिराज तृभुवन वीरविक्रम शाहका पालामा चन्द्रसम्सेर द्वारा प्रचलन गरेको थियो। त्यस टिकटमा हिमालय पर्वतमा विराजमान पशुपतिनाथको मुर्ति अंकित छ। पछि युद्ध सम्सेर द्वारा लिफाफा पनि चलाएको हो। त्यसमा पनी हिमालय तर्वतमा विराजमान पशुपतिनाथको मुर्तिको चित्रछ। हाल शालका टिकट र लिफाफामा नेपालका पुराना दर्शनीय ठाऊका थरि थरि का चित्र अंकित गरिएका छन्।

---

* विदेशबाट चिठ्ठीपत्र पठाउँदा खाममा सबभन्दा तल भारतवर्षको एक्स्चेञ्ज आफिसको नाम दिनु आवश्यक छ।

## मदेश तराई तर्फका जिल्ला, डाकखाना र स्टेशनहरुको नाम ।

| नेपाली जिल्ला | | रेलवे स्टेशन | डाकखाना | भारतका जिल्ला |
|---|---|---|---|---|
| मोरङ्ग | झाँपा | गलगलिया | डिगल्व्याङ्क ( Digalbauk ) | पूर्णियाँ |
| जिल्ला | विराटनगर ( रँगेला ) | जोगवनी | कुवाँडी ( Koari ) | ऐ. |
| | | भपटियाई | कुनौली बजार ( Kunauli Bazar ) | भागलपुर |
| सप्तरी | हनुमान्नगर | | | |
| जिल्ला | सिराहा | जयनगर | जयनगर ( Jainagar ) | दरभङ्गा |
| जलेश्वर ( मह्षोत्तरी जिल्ला | | जनकपुर रोड | मधुवापुर ( Madhwapur ) | ऐ. |
| सर्लाही | | सितामढी | सोनवर्षा ( Sonbarsa ) | मुजफ्फरपुर |
| गौर ( रौतहट जिल्ला ) | | बैरौगनियाँ | बैरगिनियाँ ( Bairginia ) | ऐ. |
| कलैया ( बारा जिल्ला ) | | आदापुर | आदापुर ( Adapur ) | चम्पारन |
| वीरगञ्ज ( पर्सा जिल्ला ) | | रक्सौल | रक्सौल (Raxaul ) | ऐ. |
| | | नौतनवाँ | नौतनवाँबजार ( Nautanwa Bazar ) | गोरखपुर |
| | भैरहवा ( माँझखंड जिल्ला ) | | | |
| बुटौल | परासी ( पाल्ही जिल्ला ) | शिशुवा बजार | ठुटी बाडी ( Thuthibari ) | ऐ, |
| जिल्ला | भगवानपुर ( माझखण्ड ) | नौगढ़ | लाटन ( Lotnn ) | वस्ती |
| | खजहनी जिल्ला | सोरथगढ़ | सो॰थगढ़ (Shortgadh). | ऐ. |
| | स्यूराज ( शिवराज ) जिल्ला | बढनी | बढ़नी ( Badhani ) | ऐ. |

| | | | |
|---|---|---|---|
| बाँके जिल्ला | नेपालगञ्ज रोड | रुपैडीहा ( Rupaidiala ) | बहराईच |
| बर्दिया जिल्ला | कतर्नियाँ घाट | कतर्नियाँ घाट ( Katarnian-ghat ) | ऐ. |
| कञ्चनपुर जिल्ला | पुरनपुर | पुरनपुर ( Puranpur ) | पिलीभीत |
| त्रिनगर ( कैलाली जिल्ला ) | गौरी फाँटा | दुधवाघाट, पलिया कलात | खेरी |
| डुडुवा पहाड़ दाङ जिल्ला | जरुवा | तुलसीपुर ( Tulshipur ) | गोण्डा |
| इलाम जिल्ला | घुम | सुकिया पोखरी ( Sukiya Pokhari ) | दार्जीलिङ |
| बैतडी जिल्ला — धार्चूला | | खेला ( Khela ) | अलमोडा |
| बैतडी जिल्ला — बैतढ़ी | | झूलाघाट | ऐ. |

मासुली चिठ्ठी पत्र नेपाल भरिका हुलाकबाट पठाएर नेपाल र भारतवर्षका प्रत्येक स्थानमा जान सक्दछ । तर बिमा, रजीष्ट्रि चांठी पार्शल किंवा भि पि पार्शलहरू नेपाल राज्यमा कतै वहिं जादैन । भारतवर्षमा पठाउनु परे वा पठाइएका नेपालका हुलाक एक्सचेञ्जका भारतीय डाकखाना आएर पठाउनु पर्दछ पाउदछन् ।

# नेपाल का उत्सवादि ।

नेपाल भक्ति प्रधान देश हो। यहाँ काशीपुरी तुल्य देवी देवता हरूका असंख्य मंदिरहरू छन्। २२।३३ वर्णनीय तीर्थ चेत्र वा देवालय हरूमा पर्व पर्वमा उत्सव हुन्छ। यस्ता प्रकार नेपालमा प्रायः प्रति दिन भई रहेका कुनै न कुनै उत्सवहरूको वर्णन लेख्न लाई यौटा स्वतंत्र पुस्तकनै लेखनू पर्नें छ। यहाँ केवल नेपालका २ प्रधान पीठ वा देवालय तथा पर्वदिनका उत्सवको संक्षित वर्णन गरीन्छ।

१ - मत्सेन्द्रनाथयात्रा—राता मत्स्येन्द्रनाथको मंदिर पाटन नेर बुगमती ग्राममा छ। मंदिरमा लिङ्गरूप मूर्ति स्थापित छ। बैसाख शुक्ल चतुर्थिका दिन यहाँ को उत्सव प्रारम्भ हुन्छ। उत्सवका दिन ग्रह स्नान पछि नेपाल राजगुरुज्यूको पल्टनले नेपालेश्वरको तलवार लाई मूर्तिका चरखमा राखेर पूजा गरी, मूर्तिलाई सज्जित रथमा विराजमान गराई, पाटन शहरमा पुऱ्याउछन्। त्यो रथ त्यहाँ १ महीना सम्म राखिए-र फेरी शुभ मूहुर्तमा बुगमती ग्राममा फर्कन्छ।

यात्राका कालमा स्थान स्थानमा मूर्तिको भोटो देखाउदै लै जाने प्राचीन प्रथाले यस उत्सव लाई भोटो देखाउने यात्रा पनी भन्दछन्। ई नेपाल अधिष्ठाता आर्य्यावलोकितेश्वर मत्स्येन्द्रनाथ देवको ठुलो र सानु भनी सालमा दुई पटक उत्सव मनाइन्छ।

२—नेता देवी यात्रा।

३—पशुपती यात्रा।

४—वज्र योगिनी यात्रा ( नील सरस्वती देवी )

साँखू नगर का मणिपूर डाडाँ माथा इन्को मंदिर छ। बैसाख शुक्ल तृतीया का दिन यस उत्सव को प्रारम्भ हुन्छ। त्यस दिन देवी प्रतिमा लाई खाटमा राखी, साँखु नगर को प्रदक्षिणा गराइन्छ। इनैका मंदिर का सम्मुख खड्ग योगिनी देवीको मंदिर छ। खड्ग योगिनी देवी प्रतिमा का सम्मुख

दिन रात धुनीबलि रहन्छ । त्यहाँ नेर वीर विक्रमादित्य को शिरको आका पनि एक ठुलो कडाई नेर राखिएको छ ।

५ – सिठी यात्रा ( कुमार यात्रा ) काठमांन्डू र स्वयभूनाथका मध्य- वर्ति, विश्नुमतीका तटमा जेष्ट मासमा यो उत्सव हुन्छ ।

६ – गठ्या मंगल वा घंटाकर्ण—यस उत्सवमा घंटाकर्ण को पूजन गर्नाले गृहस्त बालखहरूलाई मारक रोग लाग्दैन भन्ने किम्बदन्ती छ । नगरबाट घंटाकर्ण राक्षस लाई भगाउने उदेश्यले नेवार बालख नरक पराल्को ठुलो ठुलो राक्षस प्रतिमा बनाएर नगरका दोबाटामा उम्भाई त्येताबाट आउने जाने प्रत्येक मानिस सित जगात माग्दछन् । सबैले जगात दिंछन् । उत्सवका अन्तका कुनै एक च्यामेका मुखमा रातो कालो घसी, त्यस लाई प्रतिमा मार्था बसाई, त्यस प्रतिमा लाई चौबाटो तिर घुमाउदै बाघमती वा विश्नुमतीमा सेलाइन्छ । त्यस चढाएका फलामे औंटीहरू गृहस्थहरू "रक्षाकवच" मानी लैजान्छन् ।

बाडाँ यात्रा—श्रवण ८ र भादौ १३ का दिन बौद्धमार्गी नेवारहरू का मुख्य प्रोहित हरू सुवर्ण मुकुट धारण गरी प्रत्येक गृहस्थका द्वारमा वार्षिक भिक्षान्न माग्न निस्कन्छन् । प्राचिन कालका इनै बाँडाहरूका पूर्व पुरुष "बौद्ध" प्रोहितहरू देशका शुभका निमित्त साल भरी देवार्चनमै लीन रहने हुदा भिक्षु वृत्ति द्वारा आफ्नो काल निक्षेपण गर्दथे । तिनै बौद्ध महात्माहरूका वंशज बाँडाहरूले पनि आफ्नो पूर्व पुरुष हरूको अनुगत चलनको पालन गर्न लाई सालमा दुई दिन भिक्षावृत्ति गरेकाहो । त्यस दिन प्रत्येक नेवार हरू आफ्ना घर तथा पसल लाई पुष्पादिले सज्जित गरी आएका बाँडाहरू लाई अन्न दिए र संतुष्ट गराँउदछन् ।

८ नागपंचमी—प्रतिवर्ष श्रावण पंचमीका दिन ब्राह्मण तथा प्रोहित द्वारा गृहद्वारमा नागका चीत्र टाँसदन्छन् । त्यस दिन चाँगुनारायणका मंदिरका गरुड मूर्तिको पूजन गरिन्छ । त्यस दिन गरुण मूर्ति लाई पुजेर

लुगा सर्पविषको ठुलो औषधी मानी हरएक गृहस्त ले १।१ टुक्रा त्याई राख्दछन् ।

९—जनैपुर्णिमा—श्रावणपुर्णिमाका दिनको यो उत्सव ब्राह्मण जाति को मुख्य पर्व हो । यस दिन ब्राह्मण क्षत्रियले श्रावर्णाकर्म गर्द छन् तथा ब्राह्मण तथा प्रोहितहरू आफ्ना शिष्य वा जजमानहरूका हातमा रक्षा सूत्र बाँधी तिनीहरूका कल्याणका निमित्त आशीर्वाद दीनूछन् ।

१०—कृष्णाष्टमो—भाद्र कृष्ण अष्टमीका दिन कृष्णजन्मोत्सवमा यो उत्सव गरीन्छ ।

११ - गाइ यात्रा—नेवार हरूको यो जातीय उत्सव हो । साल भित्र परिवारको मानिस मरेको छ भने त्यस परिवारको एक मानिसले माघ कृष्ण प्रतिपदाको दिन गाईको मुखुण्डो धारण गरी शहरका चारै तिर नृत्य गर्दै घुम्दछन् । अन्तमा महाराजाधिराजको दर्शन र वहाँबाट फूल पुष्प पाए पछी त्यसको अन्त हुन्छ । वाघ यात्रा—गाई यात्रा का अर्को दिन पर्दछ ।

१२—इन्द्रयात्रामा भाद्र शुक्ल द्वादसी का दिन हनुमान ढोकोनेर प्राइमिनिस्टर लगायत गैह्र भारकार सामिल भई इन्द्रध्वजा वा लिङ्गो खडा गराउँदछन । तथा आठ दिन सम्म गद्दी बैठक देखी लगायत हनुमान ढोका सम्म चारै तिर गाइनेहरु द्वार नृत्य गीत हुन्छ । अनन्त चतुर्दसीका दिन कुमारी पूजन गरी कुमारी हरु लाई रथमा बसाई गणेस र भैरव को गरी ३ रथ को सहर परिक्रमा गराउछन् । परिक्रमा गर्दा प्राईमनिस्टर लगायत गैह्र भारदार पलटन समेत ले देव रथका संग सगै घुम्नु पर्दछ । परिक्रमा गरी कुमारी हरुको रथ वसन्तपूर मा फर्केर आए पछी यौटा गद्दी स्थापित गरी स्यसमा महाराजधिराज को खड्ग राखिन्छ । त्यहाँ प्राइमिनिष्टर लगायत गैह्र राज कर्मचारीहरु र २२ कोठी का महाजन हरुले अनेक प्रकार को भेटी चढाउदछन् । यो आद्याशक्ति देवी को उत्सव नेपाल मा दस दिन लागातार हुन्छ ।

१३—विजया दसमी—दसैं, आश्विन शुक्ल प्रतिपदा देखी वि
दशमी सम्म बड़ा समारोहले मानिन्छ। प्रथम घटस्थापनाका
ब्राह्मण हरुले पूजन स्थानमा पंचधान्य रोपी पवित्र जलले स
सिंचनवाट उमारे को जमरालाई दसौं दिन यजमान तथा शिष
लाई आशिर्वाद स्वरुप दिन्छन्। नँउ दिन सम्म नेपालका ह
गृहस्थ तथा हरएक देवी मंदिरमा सप्तमीको फुलपातीको दिन
गर्नुपर्दछन्। त्यस दिन राजकीय बलि प्रदान हुन्छ। हनुमानढोका द
भित्र दुर्गाका मन्दिरमा नवरात्र भरि पूजन भई नवमीका दिन
कोतमा बलि प्रदान गरिन्छ। त्यस दिन त्यहाँ प्रथम संकल्प प्राईमि
द्वारा भई रोल अनुसार अरु भारदार हरुले संकल्प गर्दछन्। त
तहाँ १०।१२ बोका ४ हजार राँगा र ५००।६०० सै हांस को
प्रदान गरि। दसैका दिन प्राईमिनिस्टर लगायतका गैह्र भारदारह
५ महाराजधिराज को दर्शन गरी दर्शन भेटी चढाउँद छन्।

१ —कोजाग्रत पूर्णिमा—आश्विन शुक्ल पूर्णिमाका दिन ल
जी को पूजा हुन्छ।

१५—तेहार—कार्त्तिकका द्वादसी देखि कार्त्तिक शुक्ल द्वि
सम्म पंचक भरि मानिन्छ। द्वादशीका दिन गाई तेहार, त्रयोद
दिन काग तेहार, चतुर्दसीका दिन लक्ष्मी तेहार, परेवाका दिन गो
पूजा र द्वितीयाका दिन भाई तेहार पर्दछ। गाई तेहार का दिन
योग्य गाईको पूजन गरिन्छ। काग र कुकुर तेहारका दिन का
कुकुर लाई भोजन दिइन्छ। अमावश्याका दिन धनाधिष्ठात्री भग
लक्ष्मीको पूजन तथा रात्रिमा जाग्रम हुन्छ। भाई तेहारमा दिदिबै
दाजू भाई लाई निमंत्रण गरी टीका लगाई भोजन पान गराउछन्।
दिन दाजू भाईले शक्यानुसार आफ्ना दिदी बैन्हा लाई वस्त्र गहना
दिई संतुष्ट पार्दछन्।

१६—बाला चतुर्दशी (समाधुर्मे) मार्ग शीर्ष बदि चतुर्द

दिन पर्दछ। यस दिन मानिस कैलासपर्वत देखि समी छदैं मृगस्थली बनका वानर हरु लाई चामल र मिष्ठान्नहरु खुवाएर पशुपति नाथ को दर्शन गरी फर्कन्छन् ।

१७—कार्त्तिक पूर्णिमा—अनेक मानिस पशुपतिनाथका मंदिर मा वसी, यस दिन एक महिना सम्म गरेका उपवास को पारायण गरि उत्सवादि गर्दछन्। उपवास भरी मानिसहरु पशुपतिनाथजीका स्नान को जल बाहेक अरु केही ग्रहण गर्दैनन्। त्यस दिन पशुपतिनाथको देवल दीपकहरुले लुत्रै सज्जित रहन्छन्। त्यस दिन महादीप हरु बल्दछन्। आर्कोदिन कैलाश पर्वत माथि ब्रह्म भोज हुन्छ।

१८—चतुर्थी —माघ महिनामा पर्दछ।

१९—श्री पंचमी—प्राइमिनिस्टर लगायत गैह्र भरादारहरु ले हनुमानढोकामा बसंतोत्सवका उत्सवमा सामेल भई अन्त मा श्री ५ महाराजधिराजको सलामी दिन्छन्।

२०—फागु—यो उत्सव पुरानु वर्ष रुपी चीर लाई जलाई नयाँ वर्ष का स्वागत लाई गरिए को उत्सव हो। फागुन शुक्ल अष्टमीका दिन बसन्तपुर दर्बार गद्दी बैठकका सम्मुख निसाना युक्त चीर गाडी, द्वादशी का दिन प्राईमिनिस्टर लगायतका गैह्र भारदारहरु सामेल भई श्री ५ महाराजधिराजका दरबारमा गई फागु खेली सलामी चढाउछन्।

२१—माघी पूर्णिमा—माघी यात्रा यस पर्वमा मानिस हरु माघ भरी पवित्र नदीहरुमा स्नान गर्दछन्। पूर्णिमाका दिन अनेक मानिस हात मा पिठ्यूँ मा, छातीमा वा गोडामा वत्ती बाली डोर्लीमा सुतेर स्नान गरी देव दर्शनार्थ हिंड्दछन्। तिनका साथ अरु स्नानका यात्री हरु जलपूर्ण सहश्रधारा युक्त गाग्री लिएर हिंड्दछन्। त्यस गाग्रीका सहश्र धारा बाट झरेको पानीलाई पवित्र मानेर मानिस हरु महार्चन गर्दछन्।

२२—घोडे यात्रा—चैत्र कृष्ण अमावश्याका दिन टुँडीखेल परेडका मैदानमा नेपालका प्राइमिनिस्टर लगायतका जंगी अफसर र गैह्र भारदार हरू तथा पलटन समेत श्री ५ महाराजधिराज को सवारी हुन्छ। त्यस दिस त्यहाँ घुड दौड हुन्छ। महाराज तथा राणा प्रवर्तक कँवर खलकका प्रथम प्राइमिनिस्टर जंगबहादुरको सालिक स्थापित भएको वार्षिकोत्सका उपलक्षमा यो उत्सव भएको हो। घोडे यात्राका १५ दिन पछि चैत्र शुक्ल पूर्णिमाका दिन टुँडीखेलमा कमान्डरइनचीफ जनरल धीरसमसेरको सालिक स्थापित भएको वार्षिकोत्सवका उपलक्ष्यमा प्राइममिनिस्टर वीरसमसेरका पाला देखि एक दिन एक रात जुवा फुक्ने गरेको छ।

२३—पिशाच चतुर्दशी—यो वज्रवाराहीदेवीको उत्सव हो। चैत्र कृष्ण द्वादशी का दिन मानिसहरु मन्दिरमा जम्मा भंई बलि प्रदान गर्दछन्। त्रयोदशीका दिन कन्या तथा बटुक लाई भोजन गराई, चतुर्दशी व्रतकल्पको प्रारम्भ गरिन्छ। रात्री भर दीप बल्दछन्। अर्का दिन बेहान वज्रवाराहीदेवीको प्रतिमालाई रथमा स्थापित गरी, बडा धूमधामका साथ नगर को परिक्रमा गराई, पुनः मन्दिरका नजीकै को महादेव प्रतिमाका संमुख ल्याएर स्थापना गर्दछन्।

२४—पचली भैरव यात्रा—आश्विन शुक्ल पंचमीका दिन प्रारम्भ हुन्छ।

२५—लाखे यात्रा—अघि परापूर्व कालमा बोधीवृक्षका तल बसेर ध्यानस्थ साक्यमुनिको ध्यान लाई भग गर्न आएका सुरराज इन्द्र साक्य-मुनि का योग बलले परास्त भए पछि, भगवानब्रह्मादि देवगणले साक्यमुनि लाई आशीर्वाद दिन आएका थिए। त्यसै दिन को स्मरण लाई यो उत्सव गरिए को हो। यसै दिन महाराजधिराजको नौरानुहिटी दरबारमा भक्कु लाई राँगो दिइन्छन्। ताखे ले थाप दिए र मस्त दर्प चूर भएको राँगो लाई वशमा गराउने दृष्य अति भयकर हुन्छ।

२६—भैरव यात्रा ( विश्वकेटी लिंगो यात्रा ) भादगाऊ का अधिष्ठाता भैरव देवको आराधनार्थ वैसाख गते का दिन भैरव मन्दिरमा हुन्छ। त्यस दिन भैरव मन्दिरका सम्मुख लिंगो गाडेर त्यसको पूजन गर्दछन्।

२७—अमीताम बुद्धको उत्सव, स्वयंभूनाथका मन्दिर बाट अमीताभ बुद्धको मुकुट र अरु पवित्र सामग्रि हरु काठमाण्डू मा ल्याई यो उत्सव गरीन्छ। पूजन पछि बाँडा हरुलाई अन्न तथा अन्य पदार्थहरु दिन्छन्। बाँकी रहेको देवोच्छुन्ह नैवेद्यादि मार्गमा राखी दिन्छन्। उत्सवमा योग ग्रहण गर्दछन्।

३०—रथयात्रा, राजा जयप्रकाशमल्लका राजत्वकालमा सन् १७४० र १७५० का बीचमा कुनै एक बांडा की सात वर्ष की कन्या ले कुमारी शक्ति देव का अंश बाट उत्पन्न भएको हूँ, भन्ने प्रचार गरेको मा राजा जयप्रकाश ले त्यस लाई मिथ्या मानी, त्यस कन्या लाई शहर निकाला गरी, त्यसका बाबूको घर खेत हरु समेत जफत गरें। संयोग ले त्यसै रात्रिमा राजा जयप्रकाशकी रानी लाइ वायुरोग भई, म माथी देव कुमारी चढेकी छन् भनी उलिर्न लागिन, राजा ले त्यो कुरा हेरी जान्ने हरु लाई डाकी बुझ्न लगाउदां तिनै, कुमारी स्वरुपिणी बाड़ाँ कन्या लाई देश निष्कासन गरेको प्रत्यवायले भएको भन्ने बुझेर ससन्मान ती कन्या लाइ डाकी, निज का बाबू को घर खेत फर्काई, रथमा बसाई, शहर परिक्रमा गराई, तिन्को क्रोध शान्त गरेका थिए। त्यसै दिन देखी यस उत्सव को उत्पत्ति भई, सालिन्दा तिनै कुमारी को प्रतिमा राखी रथयात्रा हुन्छ। प्रतिमा का रक्षा का निमित्त दुई जना बाँडा पुत्र हरु नियुक्त रहन्छन्। वर्षा ऋतुका प्रारम्भ जेष्ठमास लाग्ना साथ स्वयंभूनाथ सिखर लाई वस्त्र ले ढाकि पर्व का दिन त्यस वस्त्र लाई झिकिन्छ। बौद्धमार्गी हरु को यो अत्यन्त पवित्र पर्व हो। त्यस दिन नेपालमा सर्वत्र भगवान बुद्ध को पूजन हुन्छ।

३२—मत्स्येन्द्रनाथको सानु यात्रा । जस्ता जस्ता प्रकार पाटनमा पद्ममणि उत्सव गरिन्छ सोही वमोजीम काठमाण्डूमा समन्तभद्रका स्मरणार्थ सालका चैत शुक्लाष्टमी देखी एकादशी सम्म यो उत्सव गरिन्छ । समन्तभन्द्र को नाऊँ सर्व साधारणमा विशेष प्रसिद्ध न भएकाले यस पर्वोत्सवलाई मत्स्येन्द्रनाथको सानु यात्रा भन्दछन् । समन्तभद्रको प्रतिमालाई रथमा स्थापन गरी, प्रथम दिन रानी पोखरी बाट असन, द्वितीय दिन असन बाट दरबार, तृतीय दिन दरबार लाधवताल सम्म पुर्याई, चतुर्थ दिन फर्काएर पुन: रानीपोखरी मैं लगिन्छ । दैवदुर्विपाकले केही विघ्न भयो वा रथका पाङ्ग्राहरु भाँचियो भने उत्सव एक दिन अरु पढ्न सक्दछ ।

३३—रामनवमी—चैत शुक्लाष्टमी देखी सूर्यनारायण उत्तरायणमा चरण राख्ने हुनाले यस शुभ दिन नेपालका सबै मानिस सपरिवार देव पूजा गर्दछन् । नवमीका दिन भगवान रामचन्द्रको जन्मोत्सवमा व्रत तथा पूजन हुन्छ ।

३४—नारायण पूजा—शिवपुरी पर्वतका तल बुढा नीलकण्ठ तथा नागार्जुन पर्वतका तलका बालाजीको बडा धूमधाम ले पूजा हुन्छ । बौद्धमार्गिहरु नारायणको पूजन गरी पर्वत माथी बौद्ध चैत्य दर्शनार्थ जान्छन् । उपरोक्त भगवान विष्णू को शख चक्र गदा पद्म युक्त शेषशायी मूर्ति सरोवरका मध्यमा जलभित्र छ । भगवान बुढा नीलकण्ठका सरोवर माथी अघि कुनै एक नेवार कृषकको खेत थियो । एक दिन कृषकका कोदालाले लाग्न गएका बुढा नीलकण्ठका मूर्तिका पाउको बुढी औला काटिन गएकामा रक्त बगेको देखी त्यो कृषक डराई सबै मानिषमा त्यस कुरालाई जाहेर गर्दैमयो । जनताले "यो क्या हो" भनी त्यस खेत लाई खनेमा त्यहाँ श्री बुढा नीलकण्ठको मूर्ति प्रकट भएको हो । देवाज्ञाले नेपालका महाराजाधिराजले त्यस तीर्थमा न जानु हुनाले इनैको प्रतिमा [illegible] बालाजीको स्थापना गरिएको हो ।

३५—शिवरात्री—फागुन-कृष्ण महिनामा शिव चतुर्दशीका दिन श्रीभगवान् पशुपतिनाथजीको पूजन तथा जाग्रम गर्दछन्। भारत बाट लाखौं यात्री हरु आउँछन् योगी संन्यासी वैरागीहरु पनि धेरै पुग्दछन्। नेपालको यो उत्सव पनि ठूलो हो।

माथि कहिएका यात्रा तथा पर्वहरुका साथ हिल्यायात्रा ( कान्तिपुर स्थापित भएको महात्म्यका स्मरणार्थ गरिएको यात्रा, कृष्णयात्रा, मठयात्रा, शृंगवेरयात्रा, लोकेश्वरयात्रा, सर्वलोकेश्वर यात्रा ) पनि उल्लेखनीय छन्। यस बाहेक जस्तो कि माथि लेखिएको छ नेपालका पर्वहरुको अन्त्य छैन।

## हिमवत्खण्डमा लेखिएका नेपाल महात्म्य तीर्थ स्थान।

तीन कोटि सहस्रोत्तर चतुषष्ठि लिङ्ग मध्ये चतुषष्ठि लिङ्ग प्रधान र नेपाल क्षेत्रका प्रसिद्ध छन्। पहिले कुशेश्वरदेखि दर्शन गर्दै पशुपतिनाथ पर्यन्तमा चतुषष्ठि लिङ्गको दर्शन गर्दा नेपाल परिक्रमा पूर्ण हुन्छ। ई चौसट्ठी लिङ्गको महात्म्य हिमवत्खण्ड स्कन्धपुराणले ६४ नै अध्यायले वर्णन गरेकोछ। यहाँ सङ्क्षेप गरी त्यही लेखिन्छ।

सब भन्दा पहिले ( १ ) कुशेश्वर को दर्शन गर्ने महात्म्य छ। कुशेश्वरदेखि ३ योजन पर तम्राचूड़ पर्वतमा ( २ ) भीमेश्वर छन्। यस देखि पश्चिम ३ योजनमा ( ३ ) कार्पाशवर छन्। यस देखि पश्चिम ३ योजनमा ( ४ ) कश्यपेश्वर छन्। यस देखि १ योजन पर चन्द्र-कान्ति हिमश्रवा नदीका बीच गो तीर्थमा स्फटिकेश्वर छन्। आश्विनशुक्ल ५ मा अति पुण्य दायक मेला लाग्दछ। यस देखि पश्चिम आधा योजन पर स्कन्दपर्वत उग्रतीर्थमा ( ६ ) चण्डेश्वर छन्। माघकृष्ण ५ मा पुण्य दायक मेला लाग्दछ। इनका नगीचमा धनदायक ( ७ ) धनेश्वर छन्। यसका पश्चिममा ६ हजार गज पर पुष्प तीर्थमा (८) विकटेश्वर छन्। इनका आग्नेयमा लीलावती, रुद्रावती नदीको मेलको

शचीतीर्थमा (६) इन्द्रेश्वर छन्। यस का पश्चिम लीलावतीमा (१०) मानेश्वर छन्। माघकृष्ण ६ मा पुण्य दायक मेला हुन्छ। (११) इनदेखि दक्षिण योजन पर सिद्धतीर्थमा गुप्तेश्वर छन्। (१२) इन देखि १ योजन पर ईशानमा मनोवति र सरस्वतीका बीच मनश्रीतीर्थममा तिलेश्वर छन्। (१३) यसका पश्चिम २०० गज पर सरस्वती तीर्थमा चम्पेश्वर छन्। (१४) इनदेखि ३ हजार गज पर प्रभावती र सरस्वती नदीका मेलमा राम तीर्थ छ, तहाँ रामेश्वर लिङ्ग छन् (१५) इनदेखि ३ योजन दक्षिण मा कालतीर्थ छ। उज्जयन्त पर्वतमा घरघरा नदी र वैतर्णगिरिभूत वैतरणी नदीका सङ्गममा कालेश्वर पर्दछन्। (१६) यस देखि पश्चिम तीन योजन पर ब्रह्मतीर्थमा कुटेश्वर छन्। (१७) इनदेखि ३ योजन पर विष्णुका पसीना देखि उत्पन्न धर्मगंगा तीर्थ छन्। यहाँ व्याघ्राचल्मा व्याघ्रेश्वर छन्। यहीं रुद्रकुण्ड पनि छ। (१८) यस देखि उत्तर गोकर्ण र वाग्मती मेलमा गोपालेश्वर छन्। (१९) यज्ञगंगा र विष्णुतीर्थमा गोपालविष्णु र चम्पेश्वर छन्। (२०) इनदेखि पश्चिम कोस भर पर स्वर्णतीर्थमा उन्मत्तेश्वर छन्। माघशुक्ल ६ मा पूजादि श्रेष्ठ मानिन्छ। (२१) यसदेखि दक्षिण ४ सय गज पर नन्दातीर्थमा नन्दिकेश्वर छन्। (२२) यसदेखि १ कोस पर गोतीर्थ पर्वतमा गोखुरेश्वर छन्। (२३) यसदेखि १ योजन पर भद्रातीर्थमा भद्रे केश्वर छन्। (२४) इनदेखि पश्चिम १ योजन पर गालवतीर्थमा गाले श्वर छन्। (२५) यसदेखि उत्तर डेढ़ योजन पर असिततीर्थमा असितेश्वर छन्। माघशुक्ल १२ मा पुण्यदायक मेला हुन्छ। (२६) यसबाट उत्तर डेढ़ योजन पर इन्द्रावती र गण्डकी का मेलमा भैरवेश्वर छन्। यहीं भकेरा गण्डकी, देवाद्रि, सम्भवा, सिप्र, सैत्या हिमश्रवा का मेलमा भैरव तीर्थछ। यहाँ जलमय लिङ्ग छ। माघकृष्ण १४ मा पुण्य दायक मेला लाग्दछ। (२७ यसका पूर्व १ योजन पर ब्रह्मतीर्थमा ब्रह्मेश्वर छन्। यहीं भीमासुरले वर पाएकी हो। भनि भ दछन्। फाल्गुन १५ मा,

दायक मेला हुन्छ । ( २८ ) उपलाचलका दक्षिण केही अधोभागमा चन्द्रदीप्ति नदी छन् । यहाँ सिद्ध र सोद्भूत पारसमणिको नदीश्वर लिङ्ग छ । ( तद्रस स्पर्शनाद् धातु सद्यःस्वर्णं भवेत् किल ) स्पर्श गर्नाले अरू धातु सुवर्ण हुन्छ भनि हिमवत्खण्डमा छ । चैत्र शुक्ल १४ मा मेला लाग्छ । ( २९ ) यस देखि पूर्व मृगेन्द्राचल नृसिंहतीर्थमा शतरुद्रेश्वर छन् । ( ३० ) यसका पूर्व २ कोस पर काकेश्वर छन् । देवी काकरूप र शिव लिङ्ग रूपका छन् । माघकृष्ण ५ मा पुण्य दायक मेला हुन्छ । यहीं आकाश गंगा छन् । ( ३१ ) यसका पूर्व १ कोस पर चूडा-गिरिमा मणिचूडेश्वर छन् । फाल्गुनशुक्ल अष्टमीमा मेला लाग्दछ । (३२) यसका पूर्व ? कोस पर नारायण ह्रदमा नारायण छन् । माघकृष्ण १४ मा पूजा र दर्शन विशेषले पुण्य छ । (३३) यसका पश्चिम योगतीर्थमा योगेश्वर ज्योतिर्लिङ्ग महारुद्र छन् । ( ३४ ) यसका पश्चिम सहस्र धनु पर नारायणेश्वर छन् । वैशाख पूर्णिमामा पूजा गर्ने प्रथा छ । ( ३५ ) यसका पश्चिम आधा योजनमा रत्नचूडेश्वर छन् । तहाँ ब्रह्महृदको स्नान र पूजादि माघकृष्ण १४ र आषाढ़ १५ मा गर्ने चलन छ । (३६) यसका आधा कोस पर वागेश्वर छन् । ( ३७ ) यसका पश्चिम आधा योजन दोला पर्वतमा किलेश्वर छन् । माघशुक्ल १५ र श्रावणशुक्ल ५ मा पर्व पर्छ । ( ३८ यस देखि आधा योजन पर वीरभद्र तीर्थमा वल्मिकेश्वर र हनुमानजी छन् । चैत्रशुक्ल ३ मा मेला लाग्दछ । (३९) यसका पश्चिम सय गज पर मंगलेश्वर छन् । चैत्रशुक्ल ३ मा दर्शनले पुण्य छ । ( ४० ) यसदेखि सहस्र गज पर निकुञ्जकन्दरामा विमलेश्वर छन् . यहीं विमलोदकगंगा पनि छन् । चैत्रशुक्ल ७ र मार्गकृष्ण १४ मा स्नान र दर्शन ले अति पुण्य छ । ( ४१ ) यसका पश्चिम ऋष्याश्रम पर्वतमा अनन्तेश्वर छन् । भाद्रकृष्ण अष्टमी र चैत्रकृष्ण ६ मा मेला लाग्दछ । वृद्धगंगामा विरूपेश्वर छन्, वैशाख १५ मा पूजा हुन्छ । (४२) कोपगंगा नेर सोमतीर्थमा सोमेश्वर छन् । कार्तिक शुक्ल ८ , १४ तथा

आश्विन १५ मा पूजादि श्रेष्ठ र मेला पनि हुन्छ। (४३) यसदेखि दक्षिण ६ सय गज पर गोश्रृङ्गार चन्द्रानदी मेलमा श्रृङ्गीऋषिले तपस्या गरेको श्रृङ्गीतीर्थमा गोभटारेश्वर छन्। चैत्रशुक्ल १२ र आषाढ कृष्ण १४ मा दर्शनले पुण्य हुन्छ। (४४) यसदेखि नैऋत्य आधा कोस सुवर्णमय लिंग भएका भृङ्गीश्वर छन्। त्यहीं यउटा सिद्धरस कुण्ड पनि छ। चैत्र शुक्ल १५ मा मेला हुन्छ। (४५) यसका उत्तर ४ गज पर कुपितेश्वर छन्। चैत्र कृष्ण २ मा मेला हुन्छ। (४६) यसका उत्तर ४४ गज पर गौरीकुण्ड र शिवगंगामा सर्वेश्वर छन्। इनैलाई कुम्भेश्वर र मृत्युञ्जय पनि भन्दछन्। यहाँ कार्तिक १५ मा मेला हुन्छ। (४७) यसका १ कोस पर गोपालेश्वर र गोपालकृष्ण छन्। चैत्र कृष्ण ६, कार्तिक १५ र भाद्र कृष्ण ८ मा मेला हुन्छ। त्यहाँ तक्षक कर्कोटक हृद पनि पर्दछन्। (४८) यसदेखि १ कोस पर मणितीर्थ छ। (४९) यसका पश्चिम २ सहस्र गज पर भस्मगंगा नवघाट तीर्थमा चन्दनभटारेश्वर छन्। यहाँ इन्द्रहृद धेनुतीर्थ र विष्णु तीर्थादि छन्। (५०) यस तीर्थमा यक्षेश्वर छन्। (५१) पिण्डारक तीर्थमा पिण्डारेश्वर छन्। यहाँ हयग्रीव विष्णु छन्। (५२) धर्मतीर्थमा धर्मेश्वर शिव र वक रूप धर्म छन्। चैत्रकृष्ण १४ मा मेला हुन्छ। ताहीं निकटमा जलशायी नारायण छन्। (५३) यहाँदेखि दुइकोसमा गोकर्णेश्वर छन्। चन्द्रभागा नदी र वाग्मती मेलमा ब्रह्मतीर्थ छ। यसैलाई उत्तर गया भन्दछन्। यसका दक्षिणमा मणिमती नदी र आकाशगंगा छन्। याँहीं हनुमान तीर्थ छ। चैत्र शुक्ल ३ मा मेला हुन्छ (५४) यसदेखि वायव्य २ हजार गजमा कोटीश्वर छन्। ताहीं शंखमूल तीर्थ पर्दछ। यस लाइ शंखमूल उत्तर प्रयाग तीर्थ पनि भन्छन्। नेपाल उत्तर काशी तीर्थ हो। (५५) यसका ...

१ दशगया समोज्ञेय तद्भूमिं स्पर्श मात्र तः ॥ हि० खं०

२ – नेपाल उत्तर काशी कथ्यते उत्तरे गुणैः॥ हिमवत् खण्ड

गज्र पर ज्ञानेश्वर छन् । ताहीं मयूरतीर्थ पर्दछ । चैत्रशुक्ल ६ र ज्येष्ठशुक्ल ९ मा मेला लाग्दछ ।

(५६) यहीं वाणेश्वर पर्दछन् (५७) पर्वतेश्वर शिवजी त्यहीं पर्वतमा छन् । (५८) पर्वतेश्वर देखि पूर्व ४ सय गजमा जलमग्न जलेश्वर छन् । चैत्रपूर्णिमाका रात्रि र आश्विनकृष्ण १४ मा विशेष पूजा हुन्छ । (५९) वाग्मतीका दक्षिणमा किरातेश्वर छन् । (६०) यहीं नेरै भस्म गंगा कुण्डमा भस्मेश्वर छन् । यसका पश्चिममा ज्ञान-कुण्ड छ । (६१) ताहीं भुवनेश्वर छन् । (६२) रुद्रगारेश्वर शिवको दर्शन र रुद्रस्नानोदक कुण्डको स्नानको प्रथा छ । (६३) वासुकी गुफामा नागेश्वर छन् (६४) तहाँ देखि गई सिद्धेश्वर पशुपतिनाथ-को विधि पूर्वक दर्शन र महाँ पूजनादि गरे पछि नेपाल परिक्रमा तीर्थयात्राको समाप्ति हुन्छ ।

## नेपालका विशेष तीर्थः—

किरातेश्वर रहेका पर्वतमा अनेक कन्दराहरू छन् । त्यसमा ब्रह्मतीर्थ छ । यसका केही पर सुन्दरीतीर्थ छ । यस पछि स्कन्धतीर्थ, स्तनकुण्ड र शूलगंगा छन् । ताहीं नेर भृगु अगस्त्यवापी र सप्तऋषि तीर्थ छन् । बाग्द्वारदेखि कुटेश्वर तकको भूमि कामना दायक र वज्रयोगिनीदेखि गोकर्ण तकको भूमि मोक्ष दायक, विकटेश्वरदेखि गन्धभटेश्वर सम्म कर्म सिद्ध दायक, गोदावरी देखि नीलकण्ठ सम्म जप तप योग्य र पशुपतिनाथ देखि वज्रयोगिनीसम्म योग साधन सिद्ध भूमि, चाँगूनारायण स्थल मुक्ति दायक भूमि, पशुपति देखि चारै तर्फ १—१ कोस पर सम्म सुवर्ण-मय मण्डप हो भनि हिमवत्खण्डमा लेखिएकोछ ।

## नेपालका मुख्य स्थान

नेपाल राज्यमा चार शहर छन् । अघि अघिका मल्लराजाहरुका पालामा ई चारै शहर चार स्वतन्त्र राजाहरुका राजधानी थिए । नेपाल

साम्राज्यको वर्तमान राजधानी काठमाण्डू, कीर्तिपुर, पाटन वा ललित-पत्तन र भक्तपुर वा भादगाऊँ वाग्मति नदीका किनारामा बसेका छन्। काठमान्डू नगर तेर्सो बसेको छ। यसको मुष्टि भाग दक्षिण तिर बाग्मति र विष्णुमतिका सङ्गममा तथा उत्तर तिर ठमेलमा हुं (नाऊँ) को आकार जस्तो परेको छ। यो नगर उत्तर दक्षिण एक माइलको र चौडाईमा कहीं केही बढ़ता छ। यसको पुरानो नाऊँ नागह्रद मञ्जुपाटन र कान्तिपुर हो। हनुमान ढोका दरबारका अगाडी सन् १६ ई० मा राजा लक्ष्मीनरसिंह मल्लले बनाएको एउटा काठको घर छ। यसै काष्ठगृहले गर्दा शहर को नाऊँ (काष्ठमंडपको अपभ्रंश भई) काठमाण्डु परेको हो। काठमाण्डु भारतीय सीमा बाट ७५ माइल पर्दछ। अघि मल्ल राजाहरुका राजत्वकालमा काठमाण्डु, पाटन तथा भादगाउँ चारै तिर परखाल बनेका थिए। परखाल भित्र घेरिएको काठमान्डु शहरमा ३२ ढोका थिए। आज पनि कहीं कहीं परखालका ध्वंसावशेष र ३२ ढोका मध्येका १।२ ढोका पाइन्छन्। काठमाण्डु शहरमा अनेक सडक तथा गल्लीहरु छन्। हालमा बनेको नया सडक र अपूर्व को युद्धसडक, गद्दी बैठक देखि लगायत टुंडीखेल सम्म पुगेको छ। यस सडकका दुवै तरफ एक नासका ठूला र दर्शनीय घर बनेका छन्। यसै सडकमा कम्पनी हाऊसका नामले रहेका आधुनिक रीतका ठुला साना अनेक पसलहरू पनि छन्। युद्धसडक बनेका बखत तयार भयेको सभागृहमा हिजो आज बाइस्कोप सिनेमा घर बनाएको छ। त्यो सिनेमा नेपाल सरकारका सत्वाधिकारमा छ।

नगरका पश्चिमीय ढोकाका संमुख नारान् चोकमा हनुमानजीको वृहत् मूर्ति स्थापित छ। त्यसैले त्यस ढोकालाई हनुमानढोका भनेको हो। यो ढोका सुवर्ण मंडित छ। अघिका मल्ल नरेन्द्रहरुका पालाको वृहत् दरबार यसै ढोकानेर बनेकाले हनुमानढोका दरबारको नाऊँले प्रसिद्ध छ। त्रैलोक्यवीर श्रीमहाराजाधिराज सुरेन्द्रवीरविक्रम शाह तथा वलेट महाराज

विक्रम शाहका पाला सम्म राजपरिवार यहीँ राज गर्दथ्यो। हनुमानढोका दरबारका उत्तरनिर अति सुविस्तृत अत्युत्कट गगनस्पर्शी सुवर्णमंडित तुलजा-भवानीको मंदिर छ। यस मंदिर भित्र मूर्ति प्रतिमा, यन्त्र अथवा केही छ छैन भन्ने कुरा साधारण जनता लाई थाहा छैन। मंदिर भित्र राजा तथा चारजना पारिषद बाहेक अरू कोही जान पाउन्नन्। तलेजु मंदिरका दक्षिण तिर महाराजाधिराज पृथ्वीनारायण शाहले बनाइबक्सेको बसन्तपुर दरबार, कैलास नाऊँ गरेको अत्यन्त अग्लो मन्त्रणागार तथा अभ्यर्थना-गृह पर्दछ। त्यहाँ बाट शहरका यावत् घरहरु देखिन्छन्। यसका पूर्व-तिर पुरानो राजोद्यान, भंडारखाल, खजानागृह र पश्चिम तिर सिंहदर्बार पर्दछ। दरबारका हाता भित्र प्राचीन र नवीन चालका बनेका दर्शनीय महलहरू छन्। ताहाँ आनन्दभैरव, कालभैरव, कर्णोठचांक भगवता, दिगुतलेदेवीको देवल पनि छ। हनुमानढोकाका पश्चिमी भित्तामा अनेक पार्वतीय तथा पार्वत्य भाषामा उर्दू र आँग्ल भाषामा आठ फुट लामो दुइ फुट चौडा शिलालेख पनि छ। यसलाई कसैले पढ्न सकेका छैनन्। त्यो शिलापत्र कुनै शिलालेखको अर्ध भाग मात्रै हो, त्यसको अर्को आधा भाग कहीं अन्यत्र पर्दछ भनि सिल्वनलेवीले भनेका छन्।

नगरको आबादी पुग न पुग ८० हजारको छ। यहाँ का प्रधान बासिन्दा नेवारहरू हुन्। नगरका पूर्व तिर नेपाली सैन्यको परेडस्थान टुँडीखेल नाउँ को सुविस्तृत मैदान पर्दछ। यसै टुंडीखेलका सिलखाना नेर दिउसो १२ बजेको तोप दागिन्छ। यो प्रथा महाराजाधिराज पृथ्वीवीर विक्रम शाह का पालामा प्रधानमंत्री देवशंम्सेरले प्रचलित गरेका थिए। यसै टुँडीखेलमा सन् १८५६ ई० मा सर्व प्रथम जंगबहादुरले आफ्ना सालिक स्थापित गरे। त्यस पछि क्रमशः रणोद्दीप सिंह, बीर-शम्सेर, चन्द्रशम्सेर र युद्धशम्सेरको सालिक पनि यहीं टुंडिखेलमा स्थापित गरिएको छ। बीरसंम्सेर भाट आफ्ना पिता कम्पान्डरइन् चीफ धीरशम्सेरको तथा युद्धशम्सेरले आफ्ना पिताको र आफ्नो माता

धीर शम्सेरकी द्वितीय पत्नीको सालिक स्थापित गरे । भीमसम्शेरले आमात्य देवसंम्सेरको सालिक राखेको छ । उपरोक्त जम्मै सालिकहरू रानींपोखरी का डील देखि बाग्दरबार सम्ममा पर्दछन् । बाग्दरबार शाहजादा उपेन्द्रविक्रमले बनाएका थिए । श्री ५ महाराजाधिराज पृथ्वीवीरविक्रम शाहको सालिक रानीपोखरीका पश्चिम कोणमा स्थापित भएको छ ।

टुंडिखेलका मार्गमा माहांकालको प्राचीन तथा प्रसिद्ध मंदिर छ। यसमा महांकाल नाउँले शिवमूर्ति स्थापित छ। बौद्धमार्गीहरू यस मूर्तिलाई पद्मपाणी बोधिसत्वको प्रतिमा तथा मूर्तिका मस्तक माथिको मूर्तिलाई पद्मपाणीको आभिताप मूर्ति भन्दछन् ।

रानी पोखरीका उत्तर पश्चिम कोणमा नेपाल राजवंशको विलास नारायणहिटी दरबार पर्दछ । यो दरबार श्री ५ महाराजाधिराज पृथ्वीवीर विक्रमका पालामा वीरसंम्सेर बाट निर्माण गरिएको हो। यस दरबारका हाता नेर पुरानो श्री नारायणको मंदिर छ तथा त्यसैका समीपमा एउटा पोखरी ( हिटी ) पर्दछ । तिनै नारायण तथा हिटिका नाऊँले त्यस दरबारको नाऊँ नारायणहिटी दरबार भन्ने प्रसिद्ध भएको हो । यसका पूर्वमा नक्साल, पश्चिममा ठमेल, दक्षिणमा वीरसंसेरको वासस्थल लालदरबार तथा उत्तरमा भारतीय दूतावास अर्थात् लइन पर्दछ। यो दूतावास सन् १८१६ का सुगौलि सन्धि पछि अंग्रेज राजदूत का वासका निमित्त बनाइएको थियो । भारत स्वतन्त्र भए पछि भारतीय र वृटिस राजदूत वासस्थल भएको छ । लइन देखि काठमाण्डु एक माइल दक्षिण तिर पर्दछ । लइनका पूर्व बुढानीलकण्ठ जाने बाटामा वर्तमान प्रधानामात्य· मोहनशम्सेरको पुरानु वासस्थल लक्ष्मिनिवास पर्दछ। कृष्ण शम्सेरको महल पनि त्यहीं नेर छ ।

भारतीय दूतावासका पूर्वोत्तर कोणमा बीरधाराको रिर्जब्रघर (पोखरी) बनेको छ। यस पोखरीमा बुढानीलकण्ठका समीपका खोलाको पानी

जम्मा गर्ने शहरका धाराहरूमा बाँडिइन्छ। बीरधारा, श्री ५ महाराजाधिराज पृथ्वीवीरविक्रम शाहका पालामा बीरसम्सेरले बनाए का हो। महाराजाधिराज त्रिभुवनवीर विक्रम शाहका पालामा भीमसम्सेरले पनि त्यस धाराका साथ साथ थप जलकलको प्रबन्ध गरेको छ।

रानीपोखरीका पूर्व सड़क नेर एउटा बृहत् तथा दर्शनीय घंटाघर छ। यस घंटाघरको शब्द शहर भरीका र शहर बाहिरका मानिस राम्ररा सुन्न शक्छन्। यो घंटाघर महाराजाधिराज पृथ्वीवीरविक्रम शाहको पालामा बीरसम्सेरका बखतमा बनेको हो। संवत् १९९० सालका भैंचालाले यसको माथिल्लो तला भत्की खसेको थियो। हालमा फेरी मरम्मत भएको छ।

रानीपोखरीका दक्षिणमा हात्ति माथि चढेका राजा प्रतापमल्ल र उनकी रानीको पाषाणमूर्ति छ। इनै राजा प्रतापमल्लकी रानी ले यो पोखरी बनाएकी थिइन्। त्यसैले त्यस पोखरीको नाऊँ रानीपोखरी प्रसिद्ध भएको हो।

काठमाण्डुका पश्चिम स्वयंभूनाथ डाँडाका दक्षिणमा छावनीको टुंडिखेल पर्दछ। यहाँ बाट राती १० बजेको र बेहान ४ बजेको तोप पड्कन्छ। संमान सूचक सलामीका तोप पनि यहीँ बाट दागिन्छन्। शहरका दक्षिण बाघमति र बिष्णुमतिका संगम स्थल माथि बाघमतीका दक्षिण किनारामा कँवर खलकका दोश्रा प्रधानमंत्री बमबहादुर द्वारा निर्मित (पुग् न पुग ३०० हात लामो पत्थरको) पक्का घाट छ। काठमाण्डु कान्तिपुर नाऊँ ले (कलिगत बर्ष ३८२८ सन् ७२ ई मा) लिच्छवीय राजा जयदेव गुणकालले बसाएको हो। विष्णुमति पारी दक्षिण पश्चिमको कुना कालिमाटीमा माहिला र कान्छा शाहजादाहरूको दरबार पर्दछ।

रानीपोखरीका अभ्न दक्षिण टुंडिखेल छावनीका पश्चिममा धरहरा पर्दछ। यो धरहरा महाराजाधिराज राजेन्द्रवीरविक्रम शाहका पालामा थापावंशका प्रधानामात्य भीमसेन थापाले निर्माण गरेका

थांयः। यसको लम्बाई १५० फुटको छ। यसका बीचमा सिंढी र बीचमा द्वारहरू छन्। १८५६ ई० का झञ्झावातले यसको केही भत्केको थियो, पुनः सं० १९९० साल माघ २गतेका भैंचालो भत्केर त्रिभुवनबीरविक्रमशाहका पालामा युद्धसम्सेरले पुनः निर्माण गराए। धरहराका सन्मुख प्रधानामात्य जनरल भीमसेन थापा बनाएको एउटा अर्को पनि स्तम्भ थियो तर त्यो सन् १८३३ को भैंचालामा ध्वंस भई भूमिशायी भएको हुनाले त्यसको चिन्ह समम रहेन।

टुंडिखेल.पूर्वको भद्रकालीको मंदिर देखि पूर्व थागथलो बाट उत्तर तरफ कँवर खलकका राणा प्रधान मंत्र हरूको आफिसियल विशाल दरबार पर्दछ। यो दरबार श्री ५ महाराजाधिराज पृथ्वीवीरविक्रम शाहका पालामा चन्द्रशंसेरका तत्वावधानमा बनेको हो। यसलाई सिंहदरबार भन्दछन्।

टुँडिखेल देखि पूर्वोत्तर कोणमा पुग न पुग दुइ माइल पर शम्सेरको टंगाल दरबार पर्दछ। यो दरबार महाराजाधिराज पृथ्वी विक्रमशाहका पालामा बीरशम्सेरका तत्वावधानमा बनेको र संसेरले भीमशम्सेरलाई दिएका हुन।

पाटन जाने बाटो त्रिपुरेश्वरमा वर्तमान महाराजाधिराज त्रिभुवन विक्रमशाहको सिंगमरमरको सालिक छ। त्यसै नेर नेपालको हाउस पर्दछ।

पाटन इलाकामा बाघमति पारी पुग न पुग डेढ माइल दक्षिणमा युद्धशंसेरको वासस्थल जाउलाखेल दरबार पर्दछ। यसलाई पृथ्वीवीरविक्रम शाहका पालामा श्री युद्धसंसेर जंगले आफु सीनियर लाट भएका बेलामा बनाएको हो। यहाँका चिडियाखाना नेर भीमशम्सेर के सालिक छ। त्यसैका सामुन्ने एउटा अर्को घोडचढी सालिक छ।

यस बाहेक पुराना तथा नया जरनेलहरूको अनेक दर्शनीय प्रासाद अट्टालिकाहरू काठमाण्डु शहर बाहिर यत्रतत्र अनेकौं छन्।

पाटनलाई छुट्याई बगेका बाग्मति वार, अघिका प्रधानामात्य थापाहरूको वासस्थल थापाथली पर्दछ। यहाँ प्रधानामात्य भीमसेन थापाहरूका पुराना चालका अनेक महल थिए, जंगबहादुरले नेपालको प्रधानामात्य पद पाए पछि आफ्नो वासस्थल बनाई थापाथली दरबारको निर्माण गराए। त्यसैले पछि कास्कीपाखरा तथा लंजुग राज्य जागीर स्वरूप पाएर त्यसको जागिर पदवी पाएमा यसै वासस्थल अनुरूप उनलाई जनसाधारण बाट थापाथली महाराज भनि संबोधन गरिन्थ्यो। पछि जंगबहादुरका पुत्रहरू काटिई मारिई लखारिएमा यो दरबार देवशम्सेरको वासस्थल भयो। बाग्मतिको पुल त्यसका उत्तरांसमा बनेको (कछुवाका पिठ्यूँ माथिसिंह भएको पाषाणस्तम्भहरू) प्रधानामात्य भीमसेन थापाको कीर्ति हो। यो इलाका पाटनमा पर्दछ।

पाटन – नेपालका शहरहरूमा ठूलो शहर हो। यस नगरको पुरानो नाऊँ ललितपट्टन हो। पाटन नगर काठमान्डुका दक्षिण पूर्व करीब डेढ़ माइल बाग्मतिका दक्षिण तीरको अग्लो भूमिमा बसेको छ। पाटनमा अघिका मल्ल नरेशहरूका पालामा बनेका अनेक दर्शनीय दरबार, मंदिर तथा प्रसिद्ध स्थानहरू छन्।

कीर्तिपुर – चन्द्रागिरी पहाडका माथिल्ला डांडाका मार्गका तल जति गाऊँ र नगर छन् तिन मध्ये थानकोट प्रसिद्ध छ। यसैका पूर्वमा अनेक गाऊँहरू पर्दछन्। त्यसमा कीर्तिपुर ग्राम निकै प्रसिद्ध छ। यो गाऊँ अघि स्वतन्त्र मल्लराजाको राजधानी थियो। पछि यसलाई पाटनका मल्ल अधिपतिले आफ्ना अधीन गरेका थिए। कीर्तिपुर समथर भूमि भन्दा ४०० फुट माथि पर्ने हुँदा आक्रमणकारीका निमित दुर्भेद्य छ। यो गाऊँ पाटन र काठमाण्डु बाट डेढ़ कोस टाढा पर्दछ। यस गाऊँ लाई आत्मसात् गर्न गोरखालीहरूले सन् १७६५ देखि १७६७ सम्म ३ वर्षको अनवरत परिश्रम गर्नु पर्‍यो। अघिका राजाहरूका दरबार र देवता मंदिरहरू पश्चिम सीमाका डांडा माथि बना। थिए। यहाँका

पहेँलो रंगको ढुंगाका मंदिरमा गौरीको प्रतिमा थापित थियो। मन्दि-
को छत भत्के पनि त्यहाँको हात्ति र सिंहहरूको मूर्ति आजसम्म छँदैछ।
यो मन्दिर पनि प्रधान मन्दिर मानिन्छ। यस मन्दिरमा मनुष्याकार र
लिंग प्रतिमाका बदलामा रंग विरंगका पाषाणका व्याघ्रका मूर्तिहरू छन्।
तिनै प्रतिमाहरुलाई देवमूर्ति मानी पूजन गरिन्छ।

कीर्तिपुरका उत्तरीय डाँडा माथि गणेशजीको मन्दिर पर्छ।
सन् १६६५ ई० मा यस मन्दिरलाई कुनै जैसी ब्राह्मणले बनाएको हो।
यसका तोरणमा कपालिकादेवि, बीचमा गणेशजी, देब्रे तिर मयु-
वाहिनी कुमारी र तिन्का देब्रे महिषारोहिणी बाराही र तिनका देब्रे
शिवा रोहिणी चामुंडा र गणेश, तिनका दाहिनेतिर गरुडारोहिणी वैष्णवी
ऐरावतमा चढेकी इन्द्राणी, हसवाहिनी ब्रह्माणी, वृषारोहिणी रुद्राणी
का मूर्ति बनेका छन्। अष्ट देवीहरूका यस मूर्तिलाई अष्टमातृका भन्छन्।
दुबै द्वारका कोणमा मध्याविन्दुयुक्त षट्कोण यंत्र छ। त्यसका दुबै ति
पंखयुक्त सिंह मूर्ति र त्यसका मनी कलश तथा श्रीवत्सको चिह्न बनेका

कीर्तिपुरका दक्षिण पूर्व अंशमा चिल्लनदेव नाऊँको बौद्ध मन्दिर
छ। यस मन्दिरमा बौद्धशास्त्र वार्ता तथा बौद्ध चिह्नादि र बौद्ध देवप्रति
बनेका हुनाले यसको विशेष आदर गरिन्छ। कीर्तिपुरका पूर्व काठमाडौं
भन्दा एक कोश दक्षिण तिर चौवहाल नामक ग्राम पर्दछ। यहाँ अघि
बौद्ध वहाल (बिहार) थियो। यसका डेढ कोस पूर्व तिर भादगाउँ
अर्थात् भक्तपुर पर्दछ।

भक्तपुर— महादेव पोखरी शिखर बाट डेढ कोस काठमान्डु बाट
दक्षिण पूर्व तिर चार कोश टाढा हनुमानमति नदीका देब्रे किनारामा
बसेको छ। नगरका पूर्व र दक्षिणमा हनुमानमति नदी र उत्तर पश्चिम-
मा कंसावति नदी बग्दछन्। यो नगर शंखका आकारको छ। काठमाडौं
र भादगाऊँका बीचमा खेमीबुटी भन्ने गाऊँ पर्दछ।

हरिसिद्धी— ... पनि छ।

गोदावरी—फुलचोक डाँडाका बेसीमा पाटन भाट दक्षिण मार्ग माथि नै पर्दछ। यहाँ १२ वर्ष पछि एउटा कुण्ड नेर एक मैन्हा सम्मको मेला लाग्दछ। दक्षिणको गोदावरी नदी सित त्यस कुलोको मेल हुनाले त्यस स्थानको नाऊँ गोदावरी परेको हो। यसका आसपास अनेक साना २ पोखरी तथा नउ ओटा धाराहरू र मंदिर हरू छन्। गोदावरी माथि टाकुरामा एउटा सानु पवित्र मंदिर छ। यहाँ वीरसमसेर ले हंरापुर नगर बसाई आफ्नो दरबार बनाएको थियो। पछि अरू कँवर खलकका अनेक राणाहरूले पनि महलहरू बनाएका छन्। यस मंदिरका नगीचै एउटाका सिरामा करवाको तथा आर्कोमा त्रिशूलको चिन्ह भएको दुइटा माटाका स्तम्भ बनेका छन्। डाँडाको माटो बहुतै उर्वरा हुनाले यहाँ अलैंचीको खेती लायक प्रशस्त जमीन छ। यस डाँडामा जातजातका पुष्प इत्यादि फुल्ने हुनाले यो डाँडाको नाऊँ फुलचोक परेको हो।

पशुपतिनाथ काठमान्डुका डेढ कोश पूर्वोत्तर तिर एउटा मार्ग नवसागर, नन्दीगाऊँ, हरीगाऊँ चावेल र देवपाटन गाऊँका मध्यमा हुँदै पशुपतिनाथ सम्म गएको छ। यहाँ जगत् विख्यात श्री पशुपतिनाथ विराजमान छन्। मंदिरको गजुर सुवर्णमण्डित छ। मंदिरका चार ढोका छन्। पश्चिमको ढोका सुवर्णमंडित, दक्षिणको रौप्यमंडित, पूर्वको पित्तलमंडित तथा उत्तरको ढोका फलाममंडित छ। यहाँको प्रतिमा ज्योतिर्लिङ्ग माथि पंचमुखी अष्टबाहुले युक्त शिवमूर्ति छ। यो मंदिर बाग्मतिका पश्चिम किनारमा स्थित छ। प्रतिवर्ष फागुन मासमा शिवरात्रीका दिन भारतवर्षका प्रायः हिन्दू सबै प्रान्तका यात्री हरु तथा योगीहरू भगवान् पशुपतिनाथको दर्शन गर्न आँऊछन्।

नदीका पारी देवीपीठ श्रीगुह्यकालीको मन्दिर छ। यस पीठमा कुनै प्रतिमा छैन। यो एक अतलस्पर्श कूप हो। यो कूप पूर्व कालमा अनावृत रहन्थ्यो तर हिजो आज यस माथी सुवर्ण कलश राखिदिएको छ।

चांगुनारायण—यो गाऊँ पशुपतिनाथ भाट दुई कोश टाढा पर्दछ।

यस गाऊँका निकट मनोहरा नदी बग्दछिन। चांगुनारायणगाऊँ चा गाऊँको समष्टि हो। प्रत्येक गाऊँमा वेगलै २ नारायणको मन्दिर छ मन्दिरका देवताका नाम अनुरूप ती गाऊँहरूको नाऊँ परेको छ दिन भरिमा चारै गाऊँका चार नारायणको दर्शन गर्नाले ठुलो महत्व छ चार देवको नाऊँ:—चांगुनारायण, विसंखुनारायण, शिखरनारायण र इचंगुनारायण हो। चारै गाऊँको परिधि २२ कोसको छ।

शाँखु—चांगुनारायणका पूर्वोत्तर तरफ एक कोस टाढामा शाँखु भन्ने तीर्थ स्थान पर्छ। यहाँ सिद्धिविनायक गणेशको प्राचीन मन्दिर छ। भादगाऊँका सूर्यविनायक, काठमान्डुका अशवविनायक तथा चोभार का विघ्नविनायक ई ४ नेपालका प्रसिद्ध गणेशका मन्दिर हुन्।

गोकर्ण—श्रीपशुपतिनाथका पूर्वोत्तर तिर बाघमतिका किनारमा पर्दछ। यो पनि नेपालको प्रसिद्ध तीर्थ मध्येको एउटा हो। यसैका निकट जंगबहादुरका पालामा एउटा सिकार वन बनाइएको थियो।

बौद्धनाथ—पशुपतिनाथ र काठमाण्डुका बीचमा पशुपतिनाथबाट आधा कोस उत्तर तिर, बौधनाथ मन्दिरका चारै तिर चक्राकार रूपमा बसेको बुद्धनाथ नाउँको ग्राम पर्दछ। मन्दिर गोलाकार भई वेदी इंटले बनेको छ। वेदीका माथि तिर १५ इञ्ची उच्चा र ६ ई० चौडा व्यासको कुलंगाका बीचमा बोधिसत्वको प्रतिमा छ। मन्दिरको व्यास १०० गजको छ। भोटे तथा तिब्बतीयहरू यस मन्दिरको विशेष आदर गर्दछन्। शरत्कालमा भोटे तथा तिब्बतीय यात्रीहरू दर्शनार्थ आउँछन् तिनताक यहाँ कवच र जंत्रहरू को ज्यादै विक्री हुन्छ।

बुढानीलकण्ठ शिवपुरी पर्वतका वेसीमा नीलकंठ-पोखरीका तट नीलकंठ नामको ग्राम छ। यसै पोखरीका जल भित्र बुढानीलकंठ एघारफणा शेष माथि शयन गरेका भगवान् विष्णुको मूर्ति छ।

बालाजी— विष्णुमती पारी नागार्जुन पर्वतका बेसीका निकुञ्ज प्रदेश मा बालाजी नाउँ पर्दछ। यसै गाऊँमा बुढानीलकंठका अनुरूप नवम

युक्त शेष माथि शयन गरेका भगवान् विष्णुको प्रतिमा छ। यहीं पर्वतका वेसीका झरनामा शयनशील महादेवजीको पनि मूर्ति छ। बाग्मतीमा प्राचीन कालको दर्शनीय धारा छ।

स्वयंभूनाथ—काठमाण्डुका पश्चिम तीन माइल टाढा पर्दछ। यहाँ पर्वत शिखर माथि बौद्ध देवता स्वयंभूनाथ को २५० फुट अग्लो मन्दिर छ। मन्दिरमा जान ४०० सिंढी बनेका छन्। सिंढीका तल बुद्धावतार श्रशाक्यसिंहको एउटा बृहदाकार मूर्ति पर्दछ। त्यहाँनेर तीन फुट अग्लो वेदीमा इन्द्रका वज्रको प्रतिमा छ।

मोगवती—कीर्तिपुर बाट अढाई कोस दक्षिण बाघमतिका पूर्वी किनारमा पर्छ। यसै गाऊँमा रथारूढ मत्स्येन्द्रनाथको प्रतिमा ६ मैन्हा सम्म राखइन्छ। अति परापूर्वकालमा नरेन्द्रदेव र उनका आचार्यले पाटन बाट पवित्र जल कलश लिएर कपोतपर्वत जाने बेलामा एक दिन यसै गाऊँमा वास बसेका थिए।

नुँवाकोट—नुँवाकोट उपत्यकाको प्रधान नगर हो। काठमाण्डुका पूर्वोत्तर तिर ८ कोस टाढा धैबुङ्गका दक्षिण, पश्चिम शिखरमा यो नगर बसेको छ। नगरका पूर्व आधा कोसमा त्रिशूली गंगा तथा पूर्व र दक्षिणका आधा कोस पर सूर्यमति नदी बगेकी छन्। आघ सन् १८१३ ई० का पहिले वर्तमान राजावंशको ग्रीष्म निवास यहां थियो। तिनताकका दरवारहरु अझ तान भग्नावस्थामा छन्। नेपालका विख्यात भैरवी-देवीको मंदिर यहीं छ।

देवीघाट—( नुँवाकोट ) डेढ माइल पर देवीपाटन भन्ने गाउँ छ। यहां त्रिशूलीगंगा र सूर्यमति मिलेका छन्। संगमस्थलमा देवी भैरवीको मंदिर छ। वैसाख महिनामा देवीका दर्शनार्थ यात्रीहरू आउँछन्। मंदिरमा कुनै प्रतिमा स्थापित छैन तर यात्रीहरु आउने बेलामा नुँवाकोटको देवीको प्रतिमा ल्याएर स्थापित गर्दछन्।

थानकोट—नेपाल उपत्यकाको सीमाका अन्तमा पर्दछ।

मंगकोटघार—काठमान्डु बाट ७० कोस पश्चिममा पर्दछ। यहाँ अमात्य चूडामणि भीमसेन थापाले बनाएका अनेक पाषाण मंदिर छन्।

महेशडोबंग—काठमाण्डुका दश कोस पश्चिम पर्दछ। यसै गाउँमा त्रिशूलीगंगा र महेशखोलाको संगम भएको छ।

पोखरा—सेतुगंज नदीका तटमा छ। यो अघि स्वतन्त्र राज्यको राजधानी थियो। नगर ठूलो र बस्ती घना भएको छ। यहाँ एउटा ठूलो वार्षिक मेला लाग्दछ। यो राज्य महाराजाधिराज सुरेन्द्रवीरविक्रम शाहका पालादेखि कँवर खलका हुने प्राइम्मिनिष्टरहरूको जागिर भइ आएको छ। कँवर खलकका राणा मुख्तियारहरू यसै जागिर राज्यमा जागिर रहे सम्म महाराज कहलाउँछन्।

तानसेन—नेपाल बाट पश्चिम ६१ कोस पर्दछ। यो सेन वंशी राजाहरूको राजधानी थियो। यहाँका गुरुङ्गहरू सुती कपडा राम्रो बनाउँछन्। यहाँ एक हजार जंगी सेना रहन्छ। जिल्लाका बडा हाकिम बस्ने ठाऊँ यही हो।

गोर्खानगर— घरमदी नदीका पूर्व र दक्षिण किनारामा काठमाण्डु बाट २६ कोस टाढा हनुमानगंज पर्वतका उत्तरमा गोर्खा राज्यवंशको प्राचीन राजधानी गोर्खानगर छ। यहाँ गोरखा जातिका इष्टगुरु गोरख-नाथको मन्दिर छ। विजया दशमीमा काठमाण्डु बाट श्री ५ महाराजा-धिराजका कलसेउलीहरूले गई यहाँ की मनकामना देवीमा बलिदान गरी परम्परागत पूजनको आयोजन पूरा गर्दछन्।

तनहूँ—काठमाण्डु बाट ३४ कोस टाढामा छ। यो नगर सेन वंशी राजाहरू को राजधानी थियो। आज पनि तिनका दरबारहरूका ध्वंसावशेष पाइन्छन्।

पाल्पा—काठमान्डु बाट ६३ कोस टाढा छ। यो नगर सेन वंशीय राजाहरूको मुख्य राजधानी थियो।

प्यूठान— काठमाण्डुका पश्चिम ६३ कोस टाढा पर्दछ। यहाँ बारुद तथा बन्दूक बनाइने कारखाना छ। निकटका मुषिनिया भंज्याङ्गमा सोरा निस्कन्छ।

सल्यान— काटमाण्डु बाट एक सय दश कोस टाढा छ। यहाँका दरबार र मंदिर हरु दर्शनीय छन्। यो राज्य नेपालका मांडलिक राजाका अधीनमा छ।

जाजरकोट— भेरी गंगा नदीका किनारामा बसेको छ। यो नगर प्राचीन राजाहरु को राजधानी थियो। यहाँका प्राचीन मंदिर तथा दरबारहरु ध्वंस हुँदै गएका छन्।

तरीया— घेवुङ्ग पर्वत तथा जीवूजीबिया पर्वतका साखा माथी मोटे हरूको बस्ती भएको तरीया गाऊँ पर्दछ। यसैका निकट दुइ तिन सय मानिस बस्न हुने एउटा ठूलो स्वाभाविक गुफा छ। गोसाँईथान जाने तीर्थ यात्रीहरू यहाँ बिश्राम गर्दछन्। नेवारहरू यसलाई भीमलपाकु र पर्वतेहरु भीमलगुफा भन्दछन्। अघि पूर्वकालमा भीमलकार्जाले तिब्बत माथि आक्रमण गर्दा, तिब्बतीयहरूले माथी तिर बाट नेपाली हरूलाई थिचेर मार्ने बिचारले एउटा ठुलो पर्वतखण्ड खसाएको थियो। त्यसलाई भीमलकार्जाले हातले रोकेको वा त्यसै गुफामा पसी आफ्ना दलको रक्षा गर्ने सकेको त्यस गुफाको लेनाऊँ भीमल गुफा परेको हो।

दुमुजा— भीमलगुफा भन्दा डेढ कोसपर यो गाऊँ पदछ। यहाँ एउटा बौद्ध पाषाण मन्दिर छ। मन्दिरका मूल कुलंगमा बौद्ध त्रिशूल र शिखरमा डुइटा छत्र छन्। यसै गाऊँ नेर पर्वत माथि पाषाणखंड रुपका लौहीविनायक गणेशजी को मन्दिर छ। गोसाईथानका तीर्थ यात्रीहरुले प्रथम लौहीविनायकको दर्शन गरी अगाडि जानू पर्दछ। यात्राका दर्शनार्थी हरुले आफ्ना हातको लठी यहाँ छाड्ने नियम छ।

मुक्तिनाथक्षेत्र—शालिग्रामी वा गंडकी नदीका माथि अवस्थित

५.

छ। यस स्थानमा एउटा ज्वालामुखी छ। अक्षयतृतीयाका दिन यहाँ ठूलो मेला लाग्दछ। विशेष गरी वैरागी योगीहरू दर्शनार्थ आउँदछन्।

तराईमा—विराटनगर, हनुमाननगर, जलेश्वर, भैरहवा, नेपालगंज मुख्य स्थान हुन्। बीरगंज नेपालको राजपथ हो। हिजो आज तराईमा अनेक स्थानमा मिल, फयाक्टरीहरू बनेका छन्। भगवान बुद्धको जन्मस्थान "रुक्मेमनी" (लुम्बिनि) तराईका बुटवल जिल्लामा पर्दछ।

# जाति तत्त्व

समस्त नेपालराज्य पर्वत श्रेणीहरू द्वारा अग्लो होचो भए पनि प्रकृतिले कान्ला कान्लाका उच्च भूमिलाई मनुष्यका वास योग्य बनाएको छ। नेपाल राज्यमा बस्ने मुख्य ९ जातिको तल उल्लेख गरिन्छ:—

१—मगर जाति—नेपालका भूमागको धेरै जसो जग्गामा मगर-हरूको बस्ती फैलियेको छ। काली नदी पूर्व भेरी र मर्स्याङ्दी नदीका किनारका पहाडी डाँडाहरू मगर जातिको वासभूमि हो। मगर हरू साह्रै वीर तथा स्वामीभक्त हुन्छन्। यो जाति अनार्य मंगोल जातिको वंश भए ता पनि पक्का हिन्दू धर्मानुयायी भएका छन्।

२—गुरुङ् जाति—उपरोक्त मगर वासस्थानदेखि माथि हिमालयका तुषारवेष्टित—स्थान सम्म समस्त पर्वत खंडमा गुरुङ् जातिको निवास छ। इनीहरू मध्य नेपाल र उत्तरमा दामोदरकुण्ड, कुक्लाङ् पहाडि र मुक्तिक्षेत्रका दक्षिण र पूर्वमा नुँवाकोट र काठमाण्डु सम्म फैलिएका छन्। गुरुङ् हरू शूरतामा प्रसिद्ध छन्। यो जाति भोटे मंगोलिया जातिको शाखा हो। इनीहरु हिन्दू धर्मानुसार रहन्छन्।

३—नेवारजाति—नेपाल राज्यमा इनीहरूको बस्ती थोरै देशहरूमा छ। काठमाण्डु, भाँदगाऊँ, पाटन, कीर्तिपुर, थानकोट, नुँवाकोट आदि इनको वासभूमि हो। अघि गुजरातका नेयार भन्ने स्थान र कर्नाटक राज हरिसिंह देवका साथ आएका हुनाले इनीहरूको आग

नाउँ नेवार रह्यो। यो जाति व्यापार कुशल, कृषि-जीवी, मिष्टभाषी हुन्छ। इनमा अनेक वर्णछन्। धार्मिकताका दृष्टिले इनिहरू शिवमार्गी र बुद्धमार्गी भन्ने दुइ शाखामा बाँडिएका छन्।

काठमाण्डु तथा वरीपरि का स्थानमा च्यामे, सार्की, कामी, सुनार, गाइने, भानरे, दमाई, आगरी, कुमाले, पोढ़े, चुनरा, कँसाजी, च्यामखले, डोङ्गवायुगी, कौ, धूसी, अवेले, वाल्मी, नाँउ, सङ्गत, तडी, गप्ठे, सातो, छिपा, सिकर्मी, डकर्मी, ल.डोङ्गकर्मी आदि कर्मानुसार जातीय नाऊँ भएका मानिसहरूको बस्ति छ।

४—किराँत जाति ( वारवोम्वा ) ई नेपाल उपत्यका का

५—लिम्बु वा ( याक थुम्बा जाति ) भूमिमा पूर्व पार्वत्य

प्रदेशका सर्वोपेक्षा आदिम अधिवासी हुन्। इनीहरू अरुण र कोसीका पूर्व तटदेखि कंचनजंघा, महानन्द नदी, विजापुरक्षेत्र, मगमा, राहुलगंज, माँझ किराँत सम्म फिजेकाछन्। किराँती वा लिम्बूहरू परम साहसी, हठकर्मी तथा क्रोधी स्वभावका हुन्छन्। इनीहरू अनार्य मंगोल जातिकै शाखाका हुन् ता पनि हिजो आज पूर्णतया हिन्दू आचार विचार लाई पालन गर्दछन्।

६—लेप्चाजाति—नेपालराज्यका पूर्वि सीमाका अन्तमा सिक्किम तथा दार्जिलिङ् प्रदेशका पश्चिम तिर यो जाति बसेको छ। यो जाति अनार्य म्लेच्छाचारी भई भ्रष्ट बौद्ध धर्मका उपासक मानिन्छन्।

७—भोटेजाति—किराँत प्रदेशका उत्तर तिरका पहाडका कान्ला कान्ला तथा तिब्बतीय सीमा पर्यन्तका स्थानमा यस जातिको बास देखिन्छ। यो, स्थानका भोटेहरूलाई 'लोक्पा' अरू लाई, 'टुक्पा' भन्दछन्। यो जाति अनार्य बौद्ध मतावलम्बी भए पनि इनको आचार विचार म्लेच्छाचारपूर्ण छ।

८—राइजाति—( खम्बुस वा यक्ष ) हिमालय पारी तिब्बत सिमानेर भोटे बस्तीका र अरुणानदीका पश्चिमि तटमा दूधकोसी खुरकोट, सिंधुलिगढि, कमलानदीका नज़ीकका क्षेत्रमा फैलिएका छ इनै स्थान नेर सिएना, काट, भोटे, पलु, सेन, थासेन, सर्प जातीय नाऊँ गरेका अल्प संख्यक जातिको वासस्थल छ।- इनी अनार्य भए ता पनि हिन्दू आचार पालन गर्दछन्।

९—गोरखाजाति - इसवीका बाह्रौ शताब्दिमा भारतवर्ष बाट प्रदेशमा आएका उदयपुरे शिशौदिया महाराणाहरूका वंशका महाराजा धिराज द्रव्यशाहले गोर्खा विजय गरी त्यहाँ बसे पछी यो जाति गोरखा भनी प्रसिद्ध भयो। गोरखा जाति वेदानुयायी सनातन आर्य जातिको शाखा हो। यस जातिमा ब्राह्मण ( पूर्विया र कुमाई नाऊँले ) ठकुरी शाह, शाही, सेन, मल्ल खान, चन्द्र आदि गरिएका जातीय नाँऊले ठ खस क्षत्रीहरू पांएडे, थापा, बस्नेत, खएडका विष्ट, कँवर आदि नाम प्रसिद्धछन्। वर्तमान नेपालराज्य सिंहासनमा श्री ५ महाराजाधिराज पृथ्वी नारायण शाहका पाला देखि जेष्ठ राजकुमारको उत्तराधिकार क्रमले यसै गोरखाजातिका उदयपुरे शिशौदिया वंशज शाह ठकुरी हरू अधिपत्य चलि आएको छ। कँवरखलकका जंगबहादुर राणाका पाला देखि कास्कि लम्जुङ् का जागिरे 'महाराज पदवियुक्त प्रधानामात्य र निजामति र जंगी पद हरूको एकाधिकार भाई' क्रमरोलले कँवरखलक राणाहरूको स्वयंभू ठिकेदारीमा चलिआएको छ।

यस बाहेक तल्ला उपत्यका तथा तराईमा कुशवार, दनुवार, सुनुवार, तभर, कूर्मी आदि नाउँ गरेका अगणित अनार्य उपजाति मानिसहरू वस्तछन्। इनीहरू अनेक काल देखि हिन्दू धर्मावलम्बी हरूका संसर्गमा रहिआएकोले आफुलाई हिन्दू धर्मानुयायी मान्दछन् इनिहरू द्वारा नेपालको र तराई को कृषिकर्म सम्पन्न हुन्छ।

महाराजधिराज पृथ्वीनारायणशाह बाट समस्त नेपाल राज्य

एक सूत्रमा ग्रथित गराए पछि, माथि लेखिएका समस्त जातिले आफु-लाई नेपाली राष्ट्र को अङ्ग समझी, आपुसमा वर्ण भेद को क्रम बनाई बसिआएका छन्। नेपालमा संस्कृत, गोर्खाली वा नेपाली, नेवारी, भोटे बिहारी हिन्दी भाषा को प्रचलन छ। राज्यको राष्ट्रभाषा नेपाली हो र देवनागरि लिपिको व्यवहार हुन्छ।

## कृषि

नेपालको भूमि समथल न भए पनि ऋतुका अनुरुपले अन्न मधुर फल तथा अनेक किसिमका वनस्पतिहरू यथेष्ट उत्पन्न हुन्छन्। जलवा-युका गुणानुसार फलफुलमा ओखर, काफल, ऐंसेलू, चुत्रों, रसभरी आदि अनेक वन्य फल प्रचुरताले पाइन्छ। गर्मी अधिक हुने होचा पहाडमा दाडिम, उखु तथा केही मटियार भूममा जऊ गहू उत्पन्न हुन्छन्। शरद कालको सुन्तला यहाँ को मुख्य फल हो। वृष्टि अधिक हुने ठाउँमा धान, मकई आदिका खेतीमा खूबै फायदा हुन्छ। शरदकालमा गहूँ जऊ सरस्यू आदिका खेतलाई बसन्तका प्रारम्भमा पुनः जोता मूला लसुन आदि उत्पन्न गरिन्छ। डंडा माथिका ढालु समथर जग्गामा मटर, चना, गहूं, मकै तथा खुर्सानी प्रचुर मात्रामा उब्जन्छन्। त्यस्ता भूमिमा तोरी, उखु, तथा अलैंचा रोपे पनि राम्रो फाइदा हुनसक्छ। पानी न लाग्ने त्यस्ता भूमिमा राम्रो बालि हुदैन।

नेपालको मुख्य खाद्य पदार्थ चामल हो। अतएव नेपालमा सर्वत्र धानको खेति हुन्छ। विशेष गरी पहाडका खोंजमा पानी लाग्ने भूमिमा धान खूब राम्रो हुन्छ। नेपालमा हुने घैया नामक धान पहाडका शुष्क तथा उच्च भूमिमा हुन्छन्। यसलाई विशेष जलको आवश्यकता पर्दैन। खास गरी काठमाण्डुका वरिपर र पश्चिम ३ नम्बर इलाका पोखरा र आछामका खेतमा धानको खेती ... राम्रो हुन्छ। झापामा मकई, कोदो, गहूँ, जऊ, मास इत्यादि हुन्छन्। नेपाल राज्य को

मूल अन्नागार ( भकारी ) तराई प्रान्तको पाटो हो । जो केवल १० माईल देखि ३० माईल सम्म चौडाईमा छ । यहाँ धान, तीरी, आलस, गहुँ भटमास, फाफर, चना, तमाखू, उखु, कोदों, सन्, पटूवा र रुइको खेती हुन्छ । पहाडबाट झरी बगेका अनेक खोला नाला नदी भएकोले तराईमा पानीको अभाव हुंदैन । नेपालमा कृषि योग्य भूमि पुग न पुग ८० लाख एकड प्रायः तेत्तिनै बिगहा छ ।

नेपाल तराईको कोसौं सम्म फैलिएको विस्तृत जंगल सिसौ, साल, खैर, सल्लो, मुल्ता, सोनी, रुईं, डुमर, सिमल वृक्षको अत्यन्त मूल्यवान खानी हो । डांडा माथीका जंगलमा सल्लो, देवदारू, तिलपत्र, मंडल, पहाडीकठैल, कंजरू, तालिसपत्र, मंडल, सिंगाडी, ओखर, सुन्तला, नास्पाती, ज्यामिर, कागती, निबुआ, चम्पा, सिरिस र स्याऊ आदि वृक्ष प्राधान्यताले छन् । यहाँ दालचीनी र मोम पनि पैदा हुन्छ । यस वाहेक पूर्व इलाम इलाकामा अलैची र चीयाको फसल खूप राम्रो हुन्छ । अधि अधि नेपालमा अलैंची को बहुतायतले खेती हुन्थ्यो । तेसूका बिक्रीलाई भारतवर्षका विभिन्न शहरहरुमा नेपाल सरकारले आफ्नु अलैची कोठीहरु स्थापित गर्नु परेको थियो । हिमालय का लेक वाट कस्तूरी र हिमालका रंग विरंगका मृगचर्म र चँमर पनि आउछन् ।

दक्षिण हिमालयका पाद भूमिमा हुने अन्न आदि र वृहद् काष्ठ वाहेक अनेक दुष्प्राप्य जँडी बूटीहरू पनि पाइन्छन् । जस्को संसारभरिको मंडीमा माग रहन्छ । सुगन्धवाला आदि बृक्षवाट रँगहरु बन्न सक्छ । अधि नेपालमा इनै काष्ठ वाट बनेका रँगको प्रचलन थियो । मुक्ति क्षेत्र गंडकी नदीमा हिरण्यगर्भ, लक्ष्मीनारायण, शिवनाभ आदि नाउँ गरिएका सालिग्राम पाइन्छन् ।

नेपालका जंगलमा बाघ, भालु हात्ती वँदेल गैंडा इत्यादि हिंसक जन्तु

जन्तु तथा अनेक जातका मृग, किसीम-किसीमका पक्षी प्रचुरताले पाइन्छन्।

## भूमि तत्त्व वा खनिज

नेपालका पहाड़ी अंशमा पाइने मूल्यवान् पत्थर उप पत्थर तथा मैला धातु द्वारा सहज अनुमान हुन्छ कि नेपालका अनेक अंशमा मूल्यवान खनिज पदार्थहरू छन्। शीशा तामा फलाम गंधक आदि भूमिका केही तलनै छन्। आजका ६०।७० वर्ष पहिले सम्म नेपालमा इनै तामा तथा फलामको व्यवहार हुन्थ्यो। गन्धक प्रचुरताले निकालेर विदेशमा पठाइन्थ्यो, पश्चिमी र पूर्वीय खोलाहरूका बालुवामा निस्केको सुवर्ण स्वयमेव भन्दछ कि नेपालमा सुवर्ण खानी छ। सुनामुखि, रूपामुखि, अभ्रक र निलोतुथो, स्फटिक नेपालमा प्रसस्त पाइन्छन्। यस बाहेक मार्बल, सिमेन्ट, चुना बनाइने तथा राताकाला इमिटेशन रत्न बनाइने पत्थरको पनि अभाव छैन। नेपालमा पाइएका कोइला खानिको कोइला निकाल्न र आवागमन सुविधा पाउन २।३ वर्ष देखि भारत सरकार सँग लेखा पढी समेत भई सकेको छ। यस प्रकारले नेपालमा अपार खनिज सम्पत्ति, भएको साबित हुन्छ, तर कँवरखलकका मुखितयारहरूको अविछिन्न द्रव्य अपहरण ले खनिज उद्योगमा देशले केही काम गर्न पाएको छैन।

## व्यापार

कँवरखलकका राणाहरूका द्रव्य लूटका वुभुक्षु आकांक्षाले धन हीन भएको नेपालले आफ्ना सड़क वा आवागमन मार्ग समेत न बनाउन सक्दैनले नेपालको व्यापार-उन्नत हुन सकेन। नेपालले मुख्यतया तल लेखेका वस्तुहरूको निर्यात गर्दछ। पसुहरूको छाला, अफीम, औषधिद्रव्य गुँद, राल, रँग, जूट, गहूं, दउलू, चामल, घ्यू तैलिक-वस्तु, मसाला, तमाखु र घर बनाउने कामका लकड़ी र शोरा। नेपालबाट निर्यात भएका वस्तुहरूको माल प्रायः ४ करोड़ रुप्या हुन्छ।

नेपालमा मुख्यतया गौंजाति, पशु, भेड़ा, बाखा, च्यांग्रा, औषधि द्रव्य, रंग, रुई, रेसम र सूती र उनी लुगा–फलाम र तामाका भाँडाहरु बाहिर बाट झिकाइन्छ। त्यसको मोल पुग न पुग साढे तीन करोड रुपया हुन्छ।

## कला तथा शिल्प

नेवार विशेष परिश्रमी जाति हो। नेवारे स्त्री तथा मगर जातिका पुरुषहरू कपासको राम्रा लुगा बुन्न जान्दछन्। पस्मिनाको ऊनी ओढने गलैंचा मगर र गुरुङ्हरू बुन्दछन्। व्यवहार हुने पाखीहरु भोटेहरूको शिल्प हो। भादगाऊँले र पाटने नेवारहरु फलामे, तामा, पितल तथा काँसका भाँडाहरु बनाऊनमा चतुर हुन्छन्। उपरोक्त स्थानमा बनेका भाँडाको ठूलो व्यापार हुन्छ। यहाँ राम्रा र ठूला घंट पनि बन्दछन्। एक किसिमको वृक्षको छाला जलाई नेकु बन्दछन्, त्यस बाट नेपालमा चलको कागत बन्दछ। काली किनारमा बस्ने भोटेहरु पनि कागत बनाउँछन्।

## साहित्य

नेपाली भाषा साहित्यको इतिहास नगण्य छ। अरण्य बहुल नेपाल इसवीका अठारौं शताब्दि सम्म अनेक आदिम निवासिहरूका दलमा विभक्त भएर रहने हुदाँ जातीय संगठनका अभावले त्यस् बेला कुनै पनि प्रौढ भाषाको शृष्टि हुन सकेको थिए। श्री ५ पृथ्वीनारायणशाह द्वारा समस्त नेपाल लाई एक सूत्रमा आबद्ध गराए पछि राष्ट्रभाषाका रुपमा वर्तमान नेपाली भाषाको प्रचार भएको हो।

महाराजधिराज पृथ्वीनारायण शाहका पाला देखि महाराजाधिराज गीर्वाणयुद्ध वीर विक्रमशाहका पाला सम्म, विद्वद् मंडलीको अध्ययन भाषा तथा विद्याध्ययन को विषय संस्कृत मात्र थियो। तिनताक राष्ट्रभाषा

को स्वरूप साँऊ अक्षर चिन्हेर लेखने सम्म अभ्यास भएमा परंपराले भएको भाषाज्ञान द्वारा सर्वत्र काम चल्दथ्यो। अद्यावधि नेपालमा भाषा साहित्यका विषयमा अध्ययन वा मननयोग्य न ता कुनै पुस्तक छापिएका छन्, न ता त्यस ओर उपयोगिता तिर कसैले ध्यान दिएका छ। वर्तमान नरेश श्री ५ त्रिभुवनवीरविक्रमशाहका शासनकालमा चन्द्र शम्सेर द्वारा "गोरखा भाषा प्रचारिणी" नामक यउटा संस्था अवश्य खड़ा गरिएको छ। त्यसबाट केहि स्फुट पुस्तकहरू र स्कूलोपयोगी पुस्तक जो कि अंग्रेजी किंवा हिन्दीका स्कूलिपुस्तक हरुका आधारमा उनैको मद्दा नक्कल गरि छपाएका छन् वा कँवर खलकका पूर्वजहरू लाइ कुँवर किंवा राजकुमार साबित गर्न लेखिएका अनगेल कथाचरित्र वा उपन्यास प्रकाशित गरिएका छ। नेपालमा कसैले कुनै विषय (धार्मिक संस्कृतका समेत) मा लेखेका पुस्तक "गोरखा-भाषा-प्रचारिणी समिति" बाट पास न गराइ छपाउन लाई कँवर खलकका राणा सरकारले ऐन विरुद्ध ठहराएको छ। संसारमा कहिं कतै न भएको य विचित्र ऐन आफ्ना लूट सत्ताका रक्षाका निमित्त कँवरखलकका राणा हरूको विचित्र सूझ हो। वरू स्वदेश बाहिर दार्जिलिङ् प्रवासि भाइ हरुले नेपाली साहित्य सम्मेलन नामको संस्था खडा गराइ, (धनाभावले त्यसका प्रगतिमा मन्दता भए पनि) त्यस द्वारा अनेक समयोपयोगि साहित्य प्रकाशित गरेका छन्।

पुग न पुग डेढ सय वर्ष देखि हाम्रो नेपाली राष्ट्रभाषामा संस्कृत ग्रंथका अनुरुप संस्कृत धर्मग्रन्थ को अनुवाद वा स्वतन्त्र अनुवाद हुँदै आएको छ।

## भाषा साहित्य निर्माण

हाम्रो भाषा साहित्य निर्माणमा सर्व प्रथम रघुनाथ भट्ट को नाऊँ लिनु पर्दछ। हाम्रा आदि कवि इनै हुन। इन् ले सम्पूर्ण अध्यात्म रामायण

लाई नेपाली श्लोक बद्धमा लेखेको छ। इनको रामायणको सुन्दरकाण्ड ज्यादै प्रचलित भएकोले अद्यावधि पाइन्छ। त्यस सुन्दरकांडको एउटा सुन्दर संस्करण कवराज दीननाथ सापकोटाका सम्पादकत्वा दार्जिलिङ 'नेपाली साहित्य सम्मेलनले छापेकोछ। आदि-कवि रघुनाथ भट्ट पछि कवि बसन्त पुत्र परमानन्द ले कृष्ण चरित्र नामक पौराणिक उपाख्यानलाई संक्षिप्त स्वतन्त्र रूपमा लेखेका छन्।

कवि परमानन्द पछि तनहूँ प्रदेशान्तरगत रंग्रा गाऊँ, वेसी चुंगी स्थान निवासी भानुभक्ताचार्य नामक प्रसिद्ध कवि भए। इनले अध्यात्म रामायणको अनुवाद तथा अनेक स्फुट पुस्तक लेखी नेपाली साहित्यको गौरव बढाए। इन्ले लेखेको रामायण सर्व प्रथम कवि मोतिराम भट्टका सम्पादकत्वमा भारत जीवन प्रेस बाट छापा रूपमा प्रकाशित भई, पछि विश्वराज हरिहरशर्माले कतिपय संस्करण छपाएका थिए। अद्यावधि सुब्बा होमनाथ केदारनाथ अध्यक्ष हितैषी कम्पनी बाट त्यसको सत्तरी एकहत्तरी संस्करण छपाउंदै आएका छन्। यसको एउटा सुलभ तथा सुन्दर संस्करण विद्वान लेखक तथा नेपाल इतिहासका अन्वेषक श्रीसूर्यविक्रम ज्ञवाली बी० ए०बी० टी० का साम्पादकत्वमा प्रकाशित भएको छ। साहित्यिक दृष्टिले कवि भानुभक्त प्रशंसनीय पुरुष हुन्। तथा अशिक्षित नेपालीहरूका निमित्त पथ प्रदर्शक महान आत्मा मानिइन्छन्।

यस पछि कवि भानुभक्तका समकालिन सुब्बा होमनाथ उपाध्यायले नेपाली साहित्यमा पदार्पण गरे। इनको प्रथम जीवन राजनैतिक कटुतामा वितेको थियो। पछि इनले रामाश्वमेध, श्रीमद्भागवत कृष्णचरित्र, महाभारत विराटपर्व, सभापर्व नामक ग्रन्थ तथा अनेक स्फुट पुस्तक लेखी नेपालीहरूमा सर्व प्रथम प्रेस "विंध्यवासिनी प्रेस" काशीमा स्थापित गरी प्रकाशित गराए। इन्का पुस्तकहरू पनि गोर्खा संसारमा निकै प्रचलित भएका छन्। साहित्यिक दृष्टिले इनका कविताहरूमा जतिको सरसता अतिमधुरता तथा काव्यगुण पाइन्छ त्यो कुनै प्राचीन

कविहरूका काव्यमा देखिदैन। तसैथ कवि भानुभक्तका साथ सुब्बाहोमनाथ लाइ पनि अज्ञानधकारमा आछन्न भएका गोर्खाजनताको पथप्रदर्शक स्वरूप मानी हामीले उनको पनि सन्मान गर्नु आवश्यक हो। सुब्बा होमनाथ पछि कवि मोतीराम भट्ट को नाम लिनु पर्दछ। इनका मृत्यु कचा उमेरमा न भएको भए इनबाट नेपाली साहित्यको निकै सेवा हुने थियो। इनका पुस्तक भानुभक्त जीवन चरित्र, मनोद्वेगप्रवाह, प्रह्लाद भक्ति, उषाचरित्र अद्यावधी छापिदै छन्। नेपालमा गीतिकाव्य को चलन "संगीत चद्रोदय" लेखी इनै ले चलाएका थिए।

आधुनिक कवि तथा लेखकहरूमा नेपालका लक्ष्मी प्रसाद देवकोटा, बालकृष्णसंसेर, श्रीरुद्रराज पांडे. सोमनाथ सिग्देल, चक्रपाणि चालिसे आदि उल्लेखनीय हुन्। पं० लेखनाथ पौड्यालको नाम कविहरुमा सर्व प्रथम लिन सकिन्छ। पं० कुलचन्द्र गौतम नेपालका श्रेष्ठ कवि तथा विद्वान पुरुष हुन्।

काशीस्थ श्रीमद्भगवत् गीताका लेखक तथा प्रकाशक पं० केदारनाथ उपाध्याय पनि अनेक पुस्तकका रचयिता तथा साहित्य प्रचारक हुन्। दार्जिलिङ् प्रवासी नेपालीहरूमा श्रीधरणीधर कोईराला, श्री सूर्यविक्रम ज्ञवाली, पारसमणि प्रधानहरू प्रसिद्ध लेखक तथा साहित्यिक हुन्।

## पत्र साहित्य

हाम्रो पत्र साहित्यको इतिहास केहि छैन भने पनि हुन्छ। संवत १९४४-४५ मा काशीबाट पं० मोतीराम भट्टका सम्पादकत्वमा हिन्दी भारतजीवनकार्यालय बाट भारतजीवनको नेपाली संस्करण निस्केको थियो। त्यो पत्र छ मैन्हा भित्रै बन्द भयो। सन् १९१६-१७ मा काशीबाट सुब्बा देवीप्रसाद सापकोटाका सम्पादकत्वमा निस्कने 'गोरखाली' साप्ताहिक पत्र नेपालको आदि राष्ट्रीय पत्र थियो। त्यस पत्रले पाँच वर्ष सम्म जनताको सेवा गरी अंग्रेजहरूका राणा चक्रमा परी बन्द हुनु पर्यो।

वर्तमान नेपाली गद्य साहित्यको जनक गोर्खा लीलाइ भने हुन्छ । त्यस पछि देहरादून बाट सन् २७-२८ मा ठाकुर चन्दनसिंहका सम्पादकत्वमा "गोरखा-संसार" र 'तरुण गोरखा' नाऊँका राष्ट्रीय साप्ताहिक पत्र निस्केर अकाल-कलवित भए । सन् १९३६/३७ मा नेपाल बाट सुब्बा रिद्धिबहादुर मल्लका सम्पादकत्वमा सामाजिक मासिक पत्र शारदा र तिनैका दाँजादाँजा काशीबाट काशीबहादुर श्रेष्ठका सम्पादकत्वमा प्रकाशित भएको उदय मासिक पत्र हरू अद्यावधि छापिदैछन । सन् १९४४-४५ मा दार्जिलिङ् बाट डम्बरसिंह गुरुङ्गका सम्पादकत्वमा 'गोर्खा' नाऊँको साप्ताहिक पत्र प्रकाशित हुदैछ । सन् १९४७ मा काशीबाट लक्ष्मीप्रसाद देवकोटाका सम्पादकत्वमा "युगवाणि" नामको राष्ट्रीय साप्ताहिक पत्र प्रकाशित भइ पुग न पुग ११ महीनामा बन्द भयो । सन् १९४८ मा कलकत्ता बाट वि. लाल मोक्तानका सम्पादकत्वमा 'नेपाल पुकार' प्रकाशित भई हिजो आज पटनाबाट प्रकाशित हुदै छ । । सन् १९४९ देखि त्यसको एउटा हिन्दी संस्करण पनि मासिक पत्रका रुपमा निस्कि रहेको छ ।

नेपालराज्यको मुखपत्रका रुपमा देवशम्सेरका पाला देखि नाऊँ मात्रको "गोर्खा पत्र वा समाचार" भनिने साप्ताहिक भोट पत्र निस्कि रहेको छ । त्यसको हास्यास्पद ढंगको संचालन र सम्पादन हेरे र नेपालका स्वयम् ठेकेदार कँवरखलकका राणा हरूका बुद्धि विचक्षणताका कौतुकमा दया आउछ । त्यस पत्रमा हिन्दी पत्र पत्रिका बाट उद्धृत गरेका छेऊ न टुप्पका समाचार, पहाड पर्वत तराई प्रान्त तिरका थाङ्ने कुरा र कँवरखलकका राणाखलकको असोभनीय अनर्गल प्रसंसावलि बाहेक अरु क्यै तथ्य रहदैनें । यो पत्र वर्तमान ठेकेदार मुख्तियारहरुका देश तथा साहित्यानुराग को उज्वल प्रमाण हो ।

# शिक्षा तथा विद्यालय

नेपालका शिक्षा तथा शिक्षालयका विषयमा केहि लेखनु आवश्यक हुदाँ यहाँ यो लेखन गरि रहेका छु । अन्यथा आजमा देश तथा जाति का

पतन लाइ कूट चक्रा ठेकेदार मुख्तियार हरूको साधन भए को यस विषय को उल्लेख न गरे को भए पनी हुन्थ्यो। जहाँ स्वयं भाषा साहित्यका अध्ययन र पठन पाठन का निमित्त उपयोगी पुस्तक हरू छैनन्। वहाँ स्वतन्त्र पाठशालाको पो आवश्यकता के छ र, नेपाली विद्यार्थीहरूले संस्कृत किंवा अंग्रेजी पढ्न भारतवर्ष झरेर कइन्नै हजार का पैसा खर्च गरि पढ्नु पर्दछ।

श्री ५ महाराजाधिराज त्रिभुवनवीरविक्रमशाहका पालामा चन्द्र शम्सेरका तत्वाविधानमा स्थापित भएको काठमान्डु को त्रीभुवन) चन्द्र कालेज नामको आंग्ल शिक्षाको कालेज र अघि देखि चलिआएका संस्कृत विद्यालय, भाँदगाऊ, पाटनका अंग्रेजी स्कूल, र यत्र तत्र जिल्ला २ का एक दुई स्कूल पाठशाला बाहेक नेपाल भरि अरु कुनै शिक्षा संस्थाको प्रबन्ध छैन। यति लाइ ५०० कोशको परिधि भएको नेपाल राज्यका र ६४,०००० अधिवास हरुको शिक्षा प्रबन्ध लाइ कँवर खलकेराणाहरुले पर्याप्त संझेका छन्! यस्को खर्च पनि गुठाका आयको रकमले चल्द छ।

## भूमिसत्व

प्रकृतरुपले नेपालको समस्त भूभाग महाराजाधिराजका तत्त्वाधीन छ। भूमिका विभागानुसार मालपोत वा भूमिकर वसूलीका निमित्त खास नेपालमा अमाली, थरी, मुखिया पहाड़प्रान्तमा मुखिया तराई प्रान्तमा जिमिदार गराई तिनीहरु बाट असूल भई सरकारी खजानामा दाखिल हुन्छ। प्रजाले प्रदेशका चलन अनुसार निर्दिष्ट मालपोत बुझाउनु पर्दछ। नेपालमा भूमिकर रोपनि-मूरीका हिसावले पहाड़तिर मूरी माटाको र हलोका हिसावले तथा तराईमा विगहाका हिसावले मालपोत पर्दछ। नेपालमा मूरी-रोपनी को अढाई मूरी धान सम्म, पहाड़मा मूरी माटा वा हलोको ३० पाथी धान सम्म तथा तराईमा बिगहा को नगद

कं रु० ४) देखी १८) रुपया सम्म मालपोत पर्दछ। उसंग भूमिकरमा सरकारका तजबीजले घटबढ़ हुन सक्तछ। सरकारबाट रोक्का गराए वाहेकको पहाडका नयाँ भीर भित्तो फाडने गृहस्थहरुले फाडिएका समस्त पाखा को कायमी १) देखी ४) रुपया सम्म मालपोत तिर्नु पर्दछ। तराईका जीमिन्दारहरु असामीलाई खेत बन्दोबस्त गरी त्यसबाट निर्दिष्ट मालपोत असूली गरी ५) रुपया सैकड़ा खानगी काटी सरकारी खजानामा जमा गर्दछन्। अनेक ठाउँमा नम्बरी खेतमा असामीको सत्वाधिकार हुदैन।

नेपालमा विर्ता देवगुठी जागीर भनाँउने भूमि निष्कर हुन्छ। त्यस भूमिका अधिकारी स्वयं मालिक हुन्छन्। समान्य अधिकार र पोता असूली मुद्दा स्वयं इनीहरु छिन्न सक्तछन्। मांझ किरांतमा लिम्बू सरदारहरुलाई माफी बक्सिएको जग्गालाई किपट भन्दछन्। नयाँ कानून ले विर्तावाल हरुको अधिकार धेरै सीमित हुँदै गई काहीं काहीं त केही पोता समेत तिर्नु पर्ने भएको छ। त्यसलाई पोता विर्ता भन्दछन्। हिजो आज कँवरखकका हुने मुख्तियारहरुले विर्ता आर्जन हांकमा प्रतिद्वन्दिताले नेपालराज्यको समस्त भूमाग आफ्ना, आफ्ना पत्नी छोरा संतान भीत्रेनी तिन्का पुत्र पुत्रीमा दिएर खलकको एकाधिपत्य गर्दै गएका छन्।

विर्ता वाहेक अरु पनि दुइ प्रकारका निष्कर भूमि छन्। तिनलाई राजबन्धकी तथा वितलब सर्वाङ्ग माफी भन्दछन्। अघिका राजा हरुले अर्थ संकष्टमा बन्धक राखी प्रजालाई दिएको भूमिलाई राजबन्धकी र राजाबाट कुनै विरोचित कार्यमा प्रसन्न भई बक्सिएको निष्कर जमिनलाई वितलब सर्वाङ्ग माफी भन्दछन्, दरमाहका सट्टामा दिएको भूमलाई जागिर भन्दछन्। पुस्ता लाई खान दिएको भूमाग लाई खुवाविर्ता भन्छन्।

यस बाहेक नेपाल राज्यमा सिर्ता वा ठेकराज्य नामक भूमि पनि छन्। ई भूमिक स्वामी ... चौबिसी राजाहरु

मद्धेका बाँचेका राजाहरु हुन् । हिजो आज इनीहरुको सत्वाधिकार सामान्य जमिन्दार तुल्य मात्र छ । आफ्ना राज्यमा इनीहरुको आफ्नु शासन चल्दछ ता पनि इन्ले छिनेका मुद्दाको नेपालमा अपील हुन सक्दछ । कर रुपमा इनीहरुले आफ्ना राज्यको आधा वा चौथाई ठेकिएको आम-दनी सालिन्दा नेपाल सरकार लाई बुझाउनु पर्दछ ।

# नेपालको आय

उपरोक्त राजस्व नेपालको मुख्य आय हो । तथा काष्ठ विक्रय, भंडार, बजार अड्डा, गाँजा, भट्टी जलकर, बनकर, चरसा, वस्तुविशेष को बन्दोबस्तहरुबाट पनि नेपालको ठूलो आय छ । नेपाल राज्यको आय व्ययको कुनै बजट वा फाँट प्रकाशित न हुने हुनाले नेपालको निश्चित आय कसैले भन्न सक्तैन ता पनि राज्यको कुल आमदनी अंदाजि ९ करोड रुपया छ भन्ने जन श्रुति छ ।

# नेपाली मुद्रा

नेपाली मुद्रा तीन प्रकार को छ, त्यस मध्ये स्वर्ण मुद्रालाई असरफी, आधा असरफी लाई पाटले र चाराने लाई सूका, दुई आने लाइ सुको र आने र दाम भन्दछन् । ई मुद्राहरुको नेपालमा सरकारी निर्धारित मूल्यमा र भारतवर्षमा सुनका मूल्यमा सर्वत्र चलन हुन्छ । रौप्य मुद्रालाई रुपया, आधा लाई मोहर, चारआने लाई सुका, दुईआनेलाई रुपी सुको, आना या द्दाम भन्दछन् । इनको नेपालमा निर्धारित मोल तथा भारतवर्षमा क्रमसः तौलका मुताबिक चल्ने नियम छ । ताम्र मुद्रा लाई पैसा वा ध्याक भन्दछन् । सब भन्दा न्यून ताम्र मुद्रा फुकादाम हो । ४ फुका दामको १ चुनदाम, ४ चुनदामको १ पैसा, २ पैसाको १ ध्याक, अढाई ध्याकको १ पाँच पैसे, ५ पैसेको १ सूकी, २ सुकाको १ सुका, २ सुकाको १ मोहर, २ मोहरको १ रुपी अथवा रुपया हुन्छ ।

यस बाहेक अघिअघि नेपालमा अरु तीन प्रकारका मुद्रा थि[illegible] थे। मनसुरी पैसा लोहिया पैसा (काला पैसा) पातला पैसाको च[illegible] थियो। पुरानो मुद्रामा एकातिर नेपालका इष्टदेव गुरू गोरखनाथ [illegible] भवानी तथा अर्कातिर तत्कालिकवि महाराजाधिराज वा राजा हरु[illegible] नाम रहन्थ्यो। हिजो आज चलेका नयाँ टकका मुद्रामा एकातिर श्री पशु[illegible] पति नाथ नेपाल र अर्कातिर वर्तमान श्री ५ महाराजधिराजको नाँउ [illegible] उपरोक्त मुद्राहरु नेपाल पर्वत-खण्डमा मात्र सरकारले निर्धारित गरेका मूल्य[illegible] चल्दछन्। आफ्नै राज्य तराइमा यो मुद्रा चल्दैन भारतवर्षमा नेपा[illegible] मुद्राको मूल्य धातुका मूल्यका अनुरुप हुन्छ। नेपालमा भारत सरकार[illegible] गिन्नी (भारतको स्वर्ण मुद्रा) र रुपया जसलाई नेपालीहरु कम्प[illegible] रुपया वा लाटशाही भन्दछन् र पैसा भारत सरकारले निर्धारित गरे[illegible] मूल्यमा चल्दछन्। भारत सरकारको नोट पनि नेपालमा भा[illegible] सरकारका निर्धारित मूल्यमा चल्द छ। महाराजाधिराज त्रिभुव[illegible] वीरविक्रमशाहका पालामा, वहाँको प्रतिच्छव दिई खजाञ्ची जनकमा[illegible] हस्ताक्षरको पाँच, रुपये नोटको चलन युद्धशम्सेरले चलाएकाछन्। [illegible] नोट को नेपाल राज्य बाहिर कुनै मूल्य छैन। न ता संसारका [illegible] अन्य देश वा बैंकहरूमा जस्तो की संसार का अन्य देशहरु[illegible] एक दोसराका नोटको आदान प्रदान (एक्चेञ्ज) व्यवस्था मिलाए[illegible] हुन्छ, त्यसको कुनै प्रबन्ध गरिए को छै।

## तौल

राज्यमा सुन चांदी आदि धातुहरू र सुखेका अथवा आलो पदा[illegible] हरु र अन्य वस्तुहरुका तौल तथा निश्चयका निमित्त गोर्खेश्वर [illegible] ५ राजा राम शाह बाट तल लेखिये को बाट तथा नाप प्रचलि[illegible] गरिएको छ।

| सुन— | चाँदी— | अन्य धातु— |
| --- | --- | --- |
| १० रत्ती या लाल को १ माशा। १० माशाको १ तोला | आठ रत्ती या लाल को एक माशा। १२ माशाको १ तोला | साढ़े चार तोलाको एक चखंची चार चखंचीको १ पोया, चार पोयाको १ मानु, ३ सेरको १ धार्नि—१ धार्नि को भारतीय अढ़ाई सेर हुन्छ। |

**अन्न र सुखेका वस्तुहरुको तौल**

२ मानाको १ कुरवा ४ कुरवा को १ पाथी २० पाथी को १ मूरी, यो १ मूरी भारतको दुई मन हुन्छ।

**तरल पदार्थ को नाप:**—४ दियो को १ चौथाई २ चौथाई को १ आधा मानो २ आधा मानो को १ मानो ८ मानाको १ पाथी २० पाथीको १ मूरी।

# समय विचार

पूर्व कालमा नेपालमा पनि समय निरुपणका निमित्त जो परिमाण निर्धारित गरिएको थियो त्यो तल लेखिन्छ।

६० विपल को १ पला ६ पला को १ घडी २४ मिनट वा ६० घडीको दिन वा २४ घंटा मानिन्छ। प्रात:कालमा हातका रौं राम्ररी देखिन थाले भए पछि दिवसको प्रारम्भ मानिने हाम्रो पुरानु चलन थियो। भारतवर्षमा कटौरामा प्वाल पारि पानी द्वारा समय बुझ्न बनाएको जस्तै सरी नेपालमा पनी ताँवा को बाटुलो घडीपात्रमा प्वाल पारी त्यसलाई पानी भरेका नाँदमा छाडी दिइन्थ्यो। घडीपात्रमा त्यत्रै प्वाल पारिन्थ्यो, जसले ठीक १ घडीमा त्यो घडीपात्र नाँदमा डुब्न सक्थ्यो। यस प्रकारका यंत्र द्वारा समयमा एक पलाको पनी फरक पर्दैनथ्यो। भारतवर्षमा दिन र रात गरि दुई भाग मा बाडिएको छ। तर नेपालमा दिन र रात गरि चार भागमा विभक्त गरिएको छ। पहिलो प्रभात दोखपूर्वाध

सम्म द्वितीय पूर्वार्घ देखि संध्या सम्म, तृतीय संध्या देखि अर्धरात्रि सम्म, चतुर्थ अर्धरात्रि देखि प्रभात सम्म मानियेको छ ।

## नेपालका उपाधिहरु

नेपालमा—साम्राज्य—प्रोज्वल नेपाल महाधिपति को पदवी मुख्यहो। गैंड मास्टर– प्रोज्वल नेपाल ताराधिशको पदवी, प्रथम श्रेणी सुप्रदी को पदवी । द्वितीयश्रेणी - प्रद्वीप्त मान्यवर को पदवी, तृतीयश्रेणी-मान्यवर को पदवी, चतुर्थश्रेणि–मान्यको पदवी हरु छन् । निम्नलिखित पद र तकमा सैनिक विभागमा अत्युत्तम कार्य गरेका फलस्वरु वीरता को सम्मान सूचक पदवी हो—द्वितीय श्रेणि—आर्डर आफ दी स्टार आफ नेपाल सैकेन्ड क्लास, तृतीय श्रेणि –आर्डर आफ दी स्टार आफ नेपाल तृतीय क्लाश हुन्छन् । नेपालको सर्वश्रेष्ठ उपाधि -ओजस्वी राजन्य, तृशक्ति-पट्ट तथा प्रसिद्ध प्रबल गोरखा दक्षिणबाहु पहिला दूसरा र तीसरो श्रेणिका छन् ।

## सैनिक विभाग तथा सैनिक शिक्षा

नेपाल राज्य का निर्दिष्ट सैन्यमा २४००० पदातिक सैनिक तथा २००० रिसल्ला छन् । यस सैन्य वाहिनीलाई जंगी फौज भन्दछन् । फौजमा प्रधानतः ठकुरी, क्षत्री, खस, मगर, किरांती, गुरुङ्, राई, लिम्बू आदि मानिषहरु छन् । यो जङ्गी फौज महारजाधिराज गीर्वाण युद्धवीर विक्रमशाहका पालामा सगठित भई अनेक दल वा पल्टनमा वाडिएको हो । पदातिक सैनिक लाई प्रधानामात्य भीमसेन थापाका पाला देखि नीलो वर्दि र चांदीको चाँदी तोडा दिइन्थ्यो । तर महाराजधिराज तृभुवनवीरविक्रमशाहका शासन काल मा आमात्य चन्द्र शंम्सेर का पाला देखि सैनिक हरु लाइ खाकि वर्दि तथा खाकि मिलटरी हैट दिइने गरेको छ । ज.गार किंवा वेतनमा,

फौजका चूणान्त आफिसरे सुप्रिमकम्पान्डर–इन्–चीफ, कम्पान्डर-इन्-चीफ, कम्पाडिङ् जेनरल, जनरल तथा कर्नल सम्मलाई विस्तृत भूखड जागीरमा मिलेको छ। वहाँ पछिका सुबेदार सम्मका आफिसरमा अनेक लाई भूखंड तथा अनेकलाई नगदी वेतन जागीर रुपमा मिलेको छ। पदातिक सैनिकलाई सर्वत्र नगद ११) देखि १५) रुपया सम्म वेतन छ। पहिले ईनि हरू लाई पनि जागीरमा भूखंडनै दिइन्थ्यो। तर चन्द्र शंसेर ले त्यस नियम लाई खारेज गरे। पदातिक सैनिकले सैनिक कार्य बाहेक सडक पिटनु, महल दरबार आदि बनाऊनमा मदत दिनु, संतरिको काम गर्नु सबैमा नापी गर्नु र ईट ओलारने कार्य समेत गर्नु पर्दछ।

निर्दिष्ट जंगी फौज वाहेक अनिर्दिष्ट मिलिसिया सैन्य पनि हुन्छन्। त्यसको संख्या पुग न पुग ४८ हजार सम्मको हुन्छ। यस मिलिसिया फौजमा नेपालका सबैजातका मनुष्यहरु संमिलित छन्। मिलिसिया सैन्य शिक्षाको निमित्त राज्यका १२ स्थानमा अड्डा बनेको छ। प्रत्येक अड्डामा सालिन्दा ४ हजार सैनिक लाई ११ हजारको डफ्फा गरि शिक्षा दिइन्छ। मिलिसिया सैनिक हरू ४ महिना ६ महिना सम्म र कोही कोही वर्ष भरीको तलब पाउछन्। आवश्यकतानुसार राजाज्ञा भएमा ई मिलिसिया सैनिक हरूले जंगी फौजमा सामेल हुन्नु पर्दछ। नेपालको जंगी फौज काठमान्डु वाहेक राज्यभरिका मुख्य स्थान तानसेन, पोखरा, प्यूठान, चिसापानीगढि, धनकुटा, सिंधूलीगढी, भादगाऊ पाटन तथा धोकामा रहन्छ। गिसल्ला फौज काठमान्डुमा रहन्छ। यस सैन्य संगठन प्रणालीका संस्थापक प्रधानामात्य भीमसेनथापा हुन्।

१—नेपाल का जंगी फौजको सर्वश्रेष्ठ पदलाई कँवरखलकका राणा प्रधान मंत्रीले स्वयं सुप्रिमकम्यान्डर-इन-चीफ पदस्वरुप अधिकार गरे को छ। वर्तमान सुप्रिमकमान्डर इन--चीफ मोहन शंसेर जं०ब० रा० छन्।

२—कम्यान्डर-इन-चीफ लाई जंगी तथा निजामति दुबै काम हुने

अधिकार छ। कँवरखलकका राणाहरूका भाइ रोल क्रमले बब शम्सेर ज० बा० रा० नेपालका वर्तमान कम्पान्डर-ईन-चीफ छन्।

३—नेपाल को जंगी फौज चार भागमा विभक्त गरिए को छ। प्रत्येक भागमा ६।६ हजार सैनिक हरू अलग अलग कम्यान्डिङ्ग जनरलका मातहतमा छन्। भाई रोल क्रमले एकमात्र कँवरखलकका राणा हरूको यसमा एकाधिकार छ। पश्चिम कम्पाडिंग आफिसर सिनियर कमाडिङ्ग जेनरल ( लाट साहेब ) केसर संसेर ज० बा०रा०, पूर्व क० ज० बहादुर शंसेर ज० बा० रा०,दक्षिण--क० ज० सिंह शंसेर ज० बा० रा० तथा उत्तर क० ज० अग्नी शंसेर ज० बा० रा० छन्।

यस पछी क्रमशः लेफ्टिनेन्ट जनरल, मेजर जनरल सम्म कँवर खलकका राणा हरूको ठिकेदारी अधिकारमा भई ती पदहरूमा पनी गैर कँवरखलकका नेपाली हरूको प्रवेशाधिकार छैन। कम्यान्डिङ्ग करनल, चीफ, कनरल, व्रुगेडियर कनरल, लेफिनेन्ट करनल आदि र मेजर कप्तान, कप्तानहरू जंगी आफिसियल पद हुन्छन्। इ पदहरूमा पनि कँवरखलकका राणा हरूका बी० सी० श्रेणीका भित्रेनी सन्तान तथा आफ्ना पिठ्ठूहरू लाई नै प्रमुखता दियेको छ। तिनी हरूको योग्यतामा विचार हुदैन। जंगी अफसर सुबेदार माथी लेफ्टिनेंट, लेफ्टनेन्ट माथी कप्तानको पद हो। जंगी सैनिक सिपाही र १० सिपाही माथी को प्यूठ हुन्छ। एक प्यूठ माथी हवल्दारको हुकुम चल्द छ। हवल्दार माथीको अफिसर जमादार हुन्छ। जमादार माथी सुबेदार हुन्छन्।

नेपाली सेना आफ्ना वीरता सूरता तथा अमानवीय युद्ध साहस मा संसार प्रसिद्ध छ। तर कँवर खलकका ठिकेदारहरूका स्वार्थले आधुनिक युद्धास्त्र व्ययहारमा तथा समर कौशलका शिक्षामा तथा त्यसको साधन न भयेको ले अर्धशिक्षित छन्। ऐटन अफसर द्वारा इनीहरू लाई सैनिक शिक्षा दिने भीमसेन थापा का पाला देखी चले को प्रबन्ध आज सम्म कायम छ। आधुनिक शिक्षाको प्रबन्ध छदै छैन। ऐटन

अफिसर आडीटर सुवेदार देखि करनल सम्मका अफिसर हुन्छन्। ई कर्नेल अफिसर सम्मका ऐटन अफिसरहरु ले मेहनत गर्नु पर्ने हुँदा यसमा गैर कँवर खलकका दुनियाँको वाहाली हुन्नन सक्दछ।

# शस्त्रास्त्र

महाराजधिराज गीर्वाण युद्ध बीर विक्रम शाह का पाला देखि प्रधानामात्य भीमसेन थापा द्वारा तोप, वन्दूक, तरबार, खुकुरी, कार्तुस टोटा, बारुद आदि शस्त्रास्त्र तथा त्यसका उपकरण हरु नेपालमा नेपाल कै सामग्रीले बनाउने चलन प्रचलित गरेको थियो। वर्तमान ठिकेदार मुख्तियार हरुका शासन कालमा त्यस उपकरण हरूका उत्पादन मा केहि उन्नति गरेको देखिएको छैन।

नेपालको मुख्य शस्त्रास्त्र बनने स्थान सुन्दरीजल म्यागजिन हो। यहाँ तोप बन्दुक ढालिन्छन् तथा गोली गठ्ठा टोटा कातुस हरू बन्दछन्। शिशु तल भंडार वेसीका बारुद खानामा गैं जस्तो बारुद तथा बिजुली बारुद तैयार हुन्छ। यस वाहेक साना साना मेगजिन ता नेपालका प्राय: सबै जिल्लामा छन्। पूर्व ठोसेखानी र पश्चिम प्यूठान र पूर्व धनकुटाको मेगजिन खुकुरी, तरवार, खुडाँ बनाउने मुख्य स्थान हो।

पहिलेका प्रचलनका गे-राइफल, लेखु—राइफल, हिजो आज खारेज गरिएका छन्। त्यसका स्थानमा आधुनिक युरोपीय बन्दूक हरू व्यवहृत हुन्छ। खारेज भएका विक्रम्मा बन्दूक दरबार हरूका परखालमा थाँडएका छन्। तयारी टोटा तथा कार्तुस ठिमीका हेडगठ्ठाघरमा, र सिंहदरबारमा तथा केंही कम्यान्डर-इन-चीफका महलमा राखिन्छन्। टुंडिखेल मुनी तिर सँगसंगै भएको कोतखान तथा तोपखानमा अनेक किसिमका प्राचीन र अर्वाचीन तोप, विलायती लुइस गन तथा मिसीन-गन हरू राखिएका छन्। बन्दूकखानमा नेपाली बन्दूकका साथ विलायती हेन्डीस र लिविन्हफोर्ड आदि नाउँका बन्दूकहरू राखिएका छन्। पुरानो हतियार सीलखान छावनीमा प्रदर्शनार्थ राखिएका छन्।

## नेपालेश्वर श्री ५ महाराजाधिराज को प्रशस्ति

अघि गोर्खेश्वर श्री ५ रामशाहका राजत्व कालमा यो प्रशस्ति राज वंशको प्रशस्ति मानिएर लेखिने प्रचलन गरिएको हो । पछि नेपाल संगठन कर्ता श्री ५ पृथ्वी नारायणशाह बाट पनि यसै प्रशस्तिलाई व्यवहार गरि बक्सएकोले वर्तमान नेपाल नरेशहरू को प्रशस्ति यही मानिएको छ । तर तिन्‌लाक "स्वस्ति श्री गिरिराज चक्र चूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत श्री ५ महाराजाधिराज श्रीमत्...देवनां सदा समर विजयिनां लेखन्थ्यो ।

वर्तमान श्री ५ को प्रशस्ति—"स्वस्ति श्री गिरिराज चक्र चूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत प्रोज्ज्वल नेपाल ताराधिमहीपति हिज म्याजेष्टी दि किङ् श्रीमान् महाराजाधिराज श्री ५ त्रिभुवन वीर विक्रमशाह बहादुर शम्सेर जंग देवानां सदा समर विजयिनाम्" लेखिन्छ ।

## महाराजाधिराजको सलामी

श्रीमान् गंभीर गोर्खा प्रचण्ड प्रतापी भूपति । श्री पाँच सरकार महाराजाधिराजको सदा रहोस् उन्नति ।। गखुन चिरायु ईशले प्रजा फैलियोस् पुकारौं जय प्रेमले हामी गोर्खाली भाई साराले ।

वैरी सारा हराउन शान्त होउन सबै विघ्न व्यथा,
गाउन् सारा दुनियांले सहर्ष नाथको सुकीर्ति कथा ।
राखौं कमानभारी वीरताले नेपालमाथी सधैं नाथको
श्री होस ठुलो हामी गोरखाली को,

## राजवंशको उत्तराधिकार

( १ ) महाराजाधिराज



( २ ) धिराजका जेठा पुत्र र नाती । ( अर्थात् युवराज

शाहजादानै बाबूले राजा न हूँदै स्वर्ग भए बाजे को गद्दी पाउने छ) यस उत्तराधिकार क्रममा उमेरको व्यवधान छैन।

(३) धिराजका युवराज वा तिन्का शाहजादा न भए भाइ वा तिन्का छोरा वंश क्रमले।

(४) धिराजका शाहजादि वा तिन्का राजपुत्र वंशानुक्रमले।

(५) धिराजका काका।

## पदाधिकारी पद मर्यादा तथा खानगी

१– जंगबहादुर द्वारा चलाईएको नेपालका वर्तमान प्राइमिनिष्टर लाई अन्यान्य विदेशीय महाराष्ट्र हरू बाट समेत संम्मानित पदक हरू मिले को हुन्छ। निजलाई नेपाली पदमर्यादा संयुक्त "स्वस्ती श्री मद्दति प्रचण्ड भुजदंडेत्यादि ओजस्वि राजन्य, प्रोज्वल नेपालतारा, अतिप्रबल गोरखा दक्षिणबाहु, पृथुलाधीश, हिज हाईनेश श्री श्री महाराज ...कास्की लमुंग, प्राइमिनिष्टर ऐन्ड सुप्रिम् कम्पान्डर–इन चिफ आफ नेपाल भनिन्छ। निजको वैध मानिएको खानगी कास्की पोखरा र लमजुंङ् राज्य जागीर स्वरुप हुँदा, त्यसको आमदनी तथा अन्य अनेक पद ददाखानकि खालि खण्ड जागीर, सवारी खर्च को नाऊँ गरी ठेकिएको वार्षिक जम्मा ३५ लाख रुपया भन्दा बढ्ता हुन्छ। दुनियाको घरजायजात भएको धन पनि मुख्तियारको निजी हुन्छ। त्यस माथि इनी हरू बखत बखतमा श्री महाराजाधिराजको बकस पत्र गराई स्वयंमेव इच्छानुसार चाहिएको भूखंड बित्ताका नाऊँले लिन सक्दछन्। यस बाहेक नेपाल राज्यको समस्त आय नेटर सैनिका नाऊँले भारत पुर्याइ आफ्ना नाऊँमा जम्मा गरि वर्तमान कालका प्रत्येक ठिकेदार कंवर प्राइमिनिष्टर हरू आफ्ना आफ्ना कार्यकालमा अनायास कडोरपती अरबपती हुँदै गएका हुन्। इनलाइ सन्मान सूचक १९ तोपको सलामी दिइन्छ। नेपालमा प्राइमिनिष्टरको पदमर्यादा तथा शक्ति अभूतपूर्व छ।

महाराजा, सरकार, प्रभू, धर्मावतार, इनका संबोध सूचक शब्द हुन् प्राईमिनिष्टरका सन्मुख अरु कसैको केही अस्तित्व बुझिन्न। चप प्राईमिनिष्टर पदमा रहेको पदाधिकारी समेत प्राईमिनिष्टरका सन्मुख यस्तो नगन्य नागरिक जती पनी स्वतंत्र व्यक्तित्व राख्दैन भने अरुको ठेगाना! अवश्य प्रत्यक्ष रूपमा एकमात्र श्री ५ महाराजाधिराजका सन्मुख प्राई मिनिष्टरको मस्तक नत हुन्छ, तर महाराजाधिराज वंसका भाई साहेबज्यू को प्राईमिनिष्टरताके दल विशेष का सन्मुख केही व्यक्तित्व छैन। साहेबज्यू हरूको यो दयनीय पदावनती अवश्य एक पटक भएको होइन, अपितु क्रमशः घट्तै आइ आज यो रूप देखिए को छ।

## जंगबहादुरका पाला देखि चलेको प्राइमिनिष्टरको सलामी

हिम शैल सुमंडित सुहिन्दुताश्रीत्
अधिदेवता पशुपति प्रसादित
नयपाल तीन सरकार वीरको
जयहोस निरामय चिरायु भै रहोस्

२

रिपु नष्ट हुन् अटल शासना रहोस्
गुणगान मगन सबलोक भै रहोस्
स्थिर भै रहोस् मुलुकमा स्वतंत्रता
सुखशान्ति उन्नति होस् जता तता।

२—नेपाल का चिफ्साहेब लाई श्रीमद्राजकुमार कुमारात्मज श्री सुप्रदिप्त मान्यवर हिज एक्सेलेन्सी कम्यान्डर-इन-चिफ आफ नेपाल भनिन्छ। निज को खानकि वार्षिक अन्दाजी ७० हजार आमदनी ठेकी को जागीर भूमि छ। हिजो आज तेस्बाट प्रायः सवा लाख आमदनी हुन्छ। नेपालका कम्यान्डर-इन-चिफ् लाइ संमान सूचक १७ तोप को सलामी दिइन्छ।

३ —नेपालका सिनियर कमाडिंङ् जेनरल लाई श्रीमद् राजकुमार कुमारात्मज पश्चिम कम्यान्डर जनरल आफ नेपाल भनिन्छ। इन्को खानगी वार्षिक ५० हजार आमदनी ठेकिए को जागीर भूमि छ। तेस्बाट प्रायः एक लाख भन्दा बढ़ता आमदनी हुन्छ। इन्लाइ संमान सूचक १५ तोपको सलामी दिइन्छ।

४—पूर्व कमान्डिङ् जनरल लाइ श्रीमद् राजकुमार कुमारात्मज श्री सुप्रदिप्त मान्यवर पूर्व कम्पान्डीङ् जनरल आफ नेपाल भनिन्छ। इन्को खानगी वार्षिक ४० हजार आमदनी ठेकिएको जागीर भूमि छ। हिजो आज तेस्बाट पुग न पुग लाख रुपया आमदनी हुन्छ। इनलाई संमान सूचक १३ तोप को सलामी दिइन्छ।

५—दक्षिण कम्यान्डीन् जनरल लाइ श्रीमान् राजकुमार कुमारात्मज श्री सुप्रदिप्त मान्यवर कम्यान्डिङ् जनरल आफ नेपाल भन्निछ। इन्को खानगी को जागीर पनी प० क० ज० मोताविकै हुन्छ। इन्लाई संमान सूचक १३ तोपको सलामी दिइन्छ।

६—उत्तर कम्यान्डिङ् जनरल लाइ श्रीमद् राजकुमार कुमारात्मज श्री सुप्रदिप्त मान्यवर कम्पान्डिङ् जनरल आफ नेपाल भनिन्छ। इन्को खानगी को जागीर पनी पू० क० ज० मोताविकैछ। इन्लाइ पनी १३ तोप का सलामी दिइन्छ।

७—यस पछि क्रमले पदाधिकारी भएका नेपालका असंख्यक लेफ्टिनेन्ट जनरल बहादूर, तथा मेजोर जनरल बहादूर हरू सुप्रदिप्त मान्यवर, मान्यवर, गोर्खा-दक्षिणाबाहु आदि गरिएका पदवी धारि हुन्छन्। तिन्को खानकि वार्षिक २० हजार रुपया देखि २५ हजार सम्म ठेकिएको जागीर भूमि हुन्छ। तेस्का आमदनो पनी हिजो आज दिगुण सम्म पुगी आएको छ। उपरोक्त पद हरू कँवरखलकका भाइमिनिष्टर वंसज रोलदार पदाधिकारी बाहेक अरु हरूले पाउदैनन्।

८—यसका पछि क्रमले कम्यान्डिङ् करनेल, चिफ कर्णेल, ब्रिगेडियर

कर्णेल, लेफ्टिनेंट कर्णेल हरूको पद हुन्छ। कम्यान्डिङ् करनेल पदमा रोल न भएका वा रोल काटियेका प्राइमिनिष्ट, वंश जात भोटेनि गर्मजात सम्मका सी श्रेणीका भाग्यवान लाई वार्षिक २ हजार सम्म सम्मको ठेकिएको भूभाग तथा अन्यवंसिजातका लाइ छ हजार सम्मको भूभाग जागीरमा पाइन्छ। यस्तै क्रमले रोलकाटिएका तथा वी र सी श्रेणी का प्राइमिनिष्टर बंशजात कर्णेलहरूलाई वार्षिक छ हजार देखि १० हजार सम्मको ठेकिएको जागीर तथा अन्य वंशजात नेपाली लाइ वार्षिक ३ हजार देखि ६ हजार सम्म ठेकिए को जागीर भूमि हुन्छ।

यसै क्रमले मे० कप्तान को १५००) सय वार्षिक को जागीर रूपमा जमीन, कप्तान लाइ १२००) सम्म को, जंगीका लेफ्टिनेन्ट लाइ ९००) सम्म सुवेदार लाइ ३६०) सम्म को वार्षिक आयको जागीर रूपमा भूमि मिल्ने को हुन्छ। जमादारको तलब १६) रु० मासिक, हवल्दार को १६, मासिक तथा सिपाहीले १०, ११, १२, १५, सम्म मासिक तलब पाउदछन्।

## धार्मिक पदाधिकारी र निजमती का पदाधिकारी हरूको

### खानकि

राज्यका श्रेष्ठ धार्मिक पदहरूमा धर्माधिकारी गुरु प्रोहित महाराजाधिराज का गुरु प्रोहितहरु हुन्छन्। इन्को मुख्य आय महाराजाधिराज परिवार मा जन्म देखि मरण सम्म परिआएका यावतीय दान प्रदान, नेपालीय प्रजाजन हरू द्वारा जम्मा भएको सार्वचन्द्रायणको रकम र त्यसका अलावा राज्य वाट वाधीएको वार्षिक भत्ता स्वरूप दरमाहा हो।

अघि गोरखेश्वर श्री ५ रामशाहका पाला देखि गोर्खाराज बंशका शुभेच्छु पूर्णेश्वा ब्राह्मणमा अर्ज्याल खदाल भट्टराइ पाण्डे थरका

पंडित तथा योग्य मानीष हरू गुरु प्रोहित हुन्थे। पछि श्री जंगबहादुर कँवर का पदोन्नतिमा वर्तमान कालका गुरु प्रोहित हरूका पूर्व पुरुष श्री विजयराजले ठूलो साहायता गरेको हुँदा कुमाईं ब्राह्मणहरूले यो पदमान पाएको हो

नेपालका धर्माधिकारी बड़ा गुरुज्यू लाईं वार्षिक २५) हजार ठेकिए को जागीर को भूभाग, नायब बड़ा गुरु ज्यू लाईं वार्षिक १०) हजार गुरु प्रोहित लाईं वार्षिक १०) हजार तथा क्रमशः गुरु बंश जात हर एक सदस्य लाईं भत्ता भनी ठेकिए को भूभाग छ।

कँवर दलका गुरू प्रोहित हरू पनि नेपालका सन्मानित धार्मिक पदाधिकारी हुन्छन्। इनी हरू पुर्बिया सत्याल थरका ब्राह्मण हुन्। इनीहरूलाई पनि हिजो आज गुरू प्रोहित भनिने अधिकार भीमशम्सेर द्वारा दिइएको छ।

# निजामती अफसर तथा कारिन्दा

निजामती भारदारको सर्वोच्च पद प्रधानामात्य किंवा प्राइमिनिष्टर हो। यस पछिका उच्च निजामती पद हरूमा कँवरखलकका राणा दल विशेषले रोल क्रमले आफ्नो एकाधिकार राखेकोछ। यस बाहेक जिल्लाका, बड़ा हाकिम, बड़ाकाजी, काजी, सरदार, मीर सुब्बा, सुब्बा, ना. सुब्बा, डिठ्ठा खरदार, ना० खरदार, मुखिया, ना० मुखिया, राइटर ना० राइटर, नौसिन्दा प्रभृति निजामती पद छन्। जिल्ला २ का बड़ा हाकिमको पद पनि हिजो आज बी० सि० श्रेणीका कँवरखलकका राणा हरूले आफ्ना एकाधिकारमा राखेको छ।

नेपालका बड़ा काजी लाइ वार्षिक १२, हजार, काजी लाइ वार्षिक ९ हजार, सरदार लाईं वार्षिक ३६०० सय, मीर सुब्बालाईं वार्षिक २५ सै सुब्बालाईं वार्षिक १६, सै० ना० सुब्बालाईं १२, सै० खरदार लाईं ६००) लप्टेनलाईं ६ देखि ९ सै० डिठ्ठा लाईं ६०० सै, मुखिया लाईं ३६०,

देखि ४००, सै० सम्म वार्षिक तलब ठेकिएको छ। वैद्यर १५) साथ मासिक तथा नौसिन्दाले ९, देखि ११, मासिक सम्म पाउदछन ।

## शाह वंशका नेपालका महाराजाधिराज हरूको नामावली

१ द्रव्यशाह—( १५५६-१५७० )
२ पुरन्दरशाह—( १५७०-१६०५ )
३ छत्रशाह—( १६०५-१६०६ )
४ रामशाह—( १६०६-१६३३ )
५ डम्बरशाह—( १६३३-१६४२ )
६ कृष्णशाह—( १६४२-१६५८ )
७ रुद्रशाह—( १६५८-१६६९ )
८ पृथ्वीपतिशाह—( १६६९-१७१६ )
९ वीरभद्रशाह—( राजा न हुँदै वरलोक भये )
१० नरभूपालशाह—( १७ ६-१७४२ )
११ पृथ्वीनारायणशाह—( १ ४२-१७७४ )
१२ सिंहप्रतापशाह—( १७७४-१७७७ )
१३ रणबहादुरशाह —( १७७७-१७६९ )
१४ गीर्वाणयुद्ध वीर विक्रमशाह —( १७६९-१८१६ )
१५ राजेन्द्र वीर विक्रमशाह—( १८१६-१८४७ )
१६ सुरेन्द्र वीर विक्रमशाह—( १८४७-१८८१, में तारीख १७)
१७ त्रैलोक्य वीर विक्रमशाह—( जन्म १ डिसेम्बर १८३७ ) राजा न हुँदै स्वर्ग )
१८ पृथ्वी वीर विक्रमशाह —( जन्म ८ अगस्त ८७५ )
( १८८१-१९११, डिसेम्बर ११ ता० राज्या रोहण )
१९ त्रिभुवन वीर विक्रमशाह—( जन्म ३० जून १९०६-१९११)

| | |
|---|---|
| १—सेनापति कालुपाण्डे | राजा पृथ्वीनारायण शाहका पालाका, देशका निमित्त वीरगति पाए। |
| २—शाहजादा बहादुर शाह | राजा रण बहादुर शाहका पालाका, पछि हत्या भयो। |
| ३—दामोदर पाण्डे | राजा रण बहादुर शाहका पालाका, पछि हत्या भयो |
| ४—जनरल भीमसेन थापा | राजा रण बहादुर गीर्वाण युद्ध र राजेन्द्र का पालाका, पछि भ्याल खानमा सेरिए भए स्वर्ग। |
| ५—पं० रंगलाल उपाध्याय | राजा राजेन्द्र का पालाका। |
| ६—चौतरिया फतेह जं. शाह | राजा राजेन्द्र का पालाका, कोत पर्वमा वीरगति। |
| ७—जनरल माथबरसिंह थापा | राजा राजेन्द्र का पालाका, पछि हत्या भयो। |
| ८—जनरल जंगबहादुर | राजा राजेन्द्र र सुरेन्द्र का पालाका |
| ९—जनरल बमबहादुर | राजा सुरेन्द्र वीर विक्रम का पालाका |
| १०—जनरल रणउद्दीपसिंह | राजा सुरेन्द्र र पृथ्वी वीर विक्रम का पालाका |
| ११—जनरल वीरशम्सेर | राजा पृथ्वी वीर विक्रम का पालाका |
| १२—जनरल देवशम्शेर | राजा पृथ्वी वीर विक्रम का पालाका, पछि पदच्युत भए। |
| १३—जनरल चन्द्रशम्सेर | राजा पृथ्वी वीर विक्रम र तृभुवन वीर विक्रम का पालाका। |
| १४—जनरल भीमशम्सेर | वर्तमान महाराजाधिराज तृभुवन वीर विक्रमका पालाका |
| १५—जनरल युद्ध शम्सेर | „ पछि पदत्याग गरे |
| १६—जनरल पद्म शम्सेर | „ पछि पदत्याग गरे |
| १७—जनरल मोहन शम्सेर | „ वर्तमान प्रधान मन्त्री |

प्रधान मन्त्री हरू

## रणउद्दीपका पालामा नेपालमा राज्यका उत्तराधिकारको क्रम

( १ ) रणउद्दीप
( २ ) जीतजङ्ग
( ३ ) पद्मजङ्ग
( ४ ) ※रणवीर जङ्ग
( ५ ) जुद्धप्रताप जङ्ग इनी जङ्गबहादुर का नाती र जगतजङ्ग का विवाहिता स्त्री का पुत्र थिये। इन्का पिता को हत्या भएको बखतमा इनी पनी काटियेका थिए।
( ६ ) केदार नरसिंह ( बदरी नरसिंह का पुत्र )
( ७ ) वीरशमशेर ( धीर शमशेर का पुत्र )
( ८ ) अम्बर जग ( जगतशमशेर का पुत्र )
( ९ ) धीजनरसिंह ( बदरीनरसिंह का पुत्र तथा रणोदीप का धर्मपुत्र )
( १० ) खड्ग शमशेर
( ११ ) भूपेन्द्र जङ्ग ( जगत शमशेर का पुत्र )
( १२ ) रण शमशेर
( १३ ) देवशमशेर
( १४ ) चन्द्रशमशेर
( १५ ) भीम शमशेर
( १६ ) फतेह शमसेर
( १७ ) ललित शमशेर
( १८ ) जीत शमशेर
( १९ ) ※भैरवनरसिंह बहादुर
( २० ) ※युद्ध विक्रम ( बम बहादुर का पुत्र )

माथी जसका नाउँका अंगाडि※ यस्तो चिन्ह छ तिनीहरू मित्रैमा पुगे हुन्। यस सूचीमा लेखिएका अरू मानिस हरू अथवा परिवार का मानिस हरूले भात खान सक्तैनन्।

# चन्द्रशम्सेरले तैयार गरेको प्रधान मन्त्री पद्का लागी उत्तराधिकारको क्रम ।

(१) प्राइम मिनिष्टर र मार्शल चन्द्रशम्सेरजङ्गबहादुर राणा जी० सी० एस० आई० (१९०५) जी० सी० बी०, (१९०८) डी० सी० एल० (१९०८) जी० सी० वी० ओ० (१९११) जी० सी० एम० जी० (१९१९)

(२ कम्यांडर-इन् चीफ जनरल भीम शम्सेर जङ्गबहादुर राणा के० सी० बी० ओ० १९११) के० सी एस० आई० (१९१७)

(३, सिनियर कमाण्डिङ्ग जनरल भीम शमशेर जङ्गबहादुर राणा पश्चिमी कमाण्ड) के० सी० आई० ई० (१९१७)

(४) कमाण्डिङ्ग जनरल धर्म समसेर जंगबहादुर राणा (पूर्वी कमाण्ड)

(५) कमाण्डिङ्ग* जनरल रुद्रशमसेर जंगबहादुर राणा (दक्षिणी कमांड)

(६) कमाण्डिङ्ग जनरल पद्म शमसेर जंगबहादुर राणा (उत्तर-तर्फका कमाण्ड)
के० सी० आई० ई० (१९११) जी० बी० ई० (१९२०)

(७) *जनरल तेज शमशेर जङ्गबहादुर राणा के० सी० आई० ई० (१९१९) के० बी० ई० (१९२१)

(८) जनरल मोहन शमशेर जङ्गबहादुरराणा के० सी० आई० ई० (१९२४)

---

१—भिन्नभिन्नै दिशा हरूका कमांडहरू आफ्ना आफ्ना महत्त्व का अनुसार—क्रमैले लेखिए का छन् । उन्नति जन्मतिथि का क्रमानुसार हुन्छ

( ९ ) *जनरल प्रताप शमशेर जङ्गबहादुर राणा

( १० ) जनरल बबर शमशेर जङ्गबहादुर राणा के० सी० आई० ई० १९१६ , के० सी० एस० आई० ( १९१६ ) जी० बी० ई० ( १९२० )

११—लेफ्टिनेन्ट जनरल बहादुर शमसेर जङ्गबहादुर राणा के० बी० ई० ( १६२४ )

१२—लेफ्टिनेन्ट जनरल शमसेर जङ्गबहादुर राणा ।

१३—लेफ्टिनेन्ट जनरल अग्नि शमसेर जंगबहादुरराणा ।

१४—लेफ्टिनेन्ट जनरल सिंह शमसेर जंगबहादुर राणा ।

१५—मेजर जनरल हरि शमसेर जङ्गबहादुर राणा ।

१६—मेजर जनरल प्रचण्ड शमसेर जंगबहादुर राणा ।

१७ - कर्नल भूपाल शंमसेर जंगबहादुर राणा ।

१८—मेजर जनरल कृष्ण शमसेर जङ्गबहादुर राणा ।

१९ - लेफ्टिनेन्ट कर्नल सूर्य शमसेर जङ्गबहादुर राणा ।

२०—मेजर जनरल विष्णु शमसेर जङ्गबहादुर राणा ।

२१- मेजर जनरल शंकर शमसेर जंगबहादुर राणा ।

२२—लेफ्टिनेन्ट कर्नल नारायण शमसेर जंगबहादुर राणा ।

२३—मेजर जनरल मदन शमसेर जंगबहादुर राणा ।

## युद्ध शम्सेरका पालामा भएको उत्तराधिकार भाइ क्रम

१—युद्ध शम्सेर जं. बा. रा.

२—पद्म शम्सेर जं. बा. रा.

३—मोहन शम्सेर जं. बा. रा.

४—बबरशम्सेर जं. बा. रा.

५—केद्रशम्सेर जं. बा. रा.

६—बहादुर शम्सेर जं. बा. रा.

७—अग्निसम्शेर जं. बा. रा.

८—सिंहसम्शेर जं. बा. रा.

९—हरिशम्सेर जं. बा. रा.

१०—कृष्णसम्शेर जं, बा. रा.

११—सूर्यसम्शेर जं. बा. रा.

१२—शंकरसम्शेर जं. बा. रा.

१३—नारायणसम्शेर जं. बा. रा.

१४—मदनसम्शेर जं. बा, रा.

यस उप्रान्त सूचीमा न आएका कँवरखलकका राणा जनरल हरुका विवाहिता पत्निका पुत्र उमेर ले पदक्रममा आउँछन् ।

१—वर्तमान प्राइम्‌मिनिष्टर मोहन सम्शेर राणा

२—कमाण्डर-इन-चीफ मिनिष्टर बबर सम्शेर राणा

३—पश्चिम तर्फका कमाण्डिङ् जनरल केशरसम्शेर राणा

४—पूर्व तर्फका कमाण्डिङ् जनरल बहादुर सम्शेर राणा

५—दक्षिण तर्फका कमाण्डिङ् जनरल अग्निसम्शेर राणा

६—उत्तर तर्फका कमाण्डिङ् जनरल सिंहसम्शेर राणा

७—जनरल हरिसम्शेर राणा

८—जनरल प्रचण्ड सम्शेर राणा

९—जनरल कृष्णसंशेर राणा

१०—जनरल शङ्करसंशेर राणा

११—लेफ्टिनेण्ट् जनरल नारायण सं० रा०

१२—लेफ्टिनेण्ट् जनरल मदन सं० रा०

१३—लेफ्टिनेण्ट् जनरल एकराज सं० रा०

१४—लेफ्टिनेण्ट जनरल शूर सं० रा०

१५—मेजर जनरल कल्याण सम्शेर राणा

१६—मेजर जनरल लक्ष्मण सम्शेर राणा
१७—मेजर जनरल बसन्त सम्शेर राणा
१८—मेजर जनरल मृगेन्द्र सम्शेर राणा
१९—मेजर जनरल ब्रह्म सम्शेर राणा
२०—मेजर जनरल नरसम्शेर राणा
२१—मेजर जनरल शारदासम्शेर राणा
२२—मेजर जनरल अर्जुनसम्शेर राणा
२३—मेजर जनरल विजय सम्शेर राणा
२४—मेजर जनरल अरूण सम्शेर राणा
२५—मेजर जनरल साम्राज्य सम्शेर राणा
२६—मेजर जनरल केन्द्र सम्शेर राणा
२७—मेजर जनरल युवराज सम्शेर राणा
२८—मेजर जनरल हरिहर सम्शेर राणा

ई वाहेक रोल्दार क्रममा र ७।८ जना नवयुवक १०।१२ जना बिड़ भात्री ठेकेदार कर्णैलहरू गरी ऐल्हेका रोल्दार हरुको सख्या ४८ हुन्छ।

इनै माथि लेखिएका ४८ जना मनिस नेपालका भाग्यविधाता शासक, शोषक तथा भोग-कर्ता हुन्। जंगबहादुर कँवरराणाका पाला देखि इनै कँवर खलकका मानिसमा जेठाका मृत्यु पछि भाई क्रमले नेपालका ठेकेदार मुख्तियार हुन्छन्। देशका खजानामा भाइ रोल क्रमले हुने प्राइमूमिनिस्टर को एकाधिकार हुन्छ। जङ्गी निजामति व्यापार ऐन-कानून सबैमा त्यसको इच्छानै सर्वोपरि हुन्छ। नेपाल देशका प्रत्येक वस्तु, प्रत्येक मानिस, प्रत्येकस्थानका हर्ताकर्ता विधाता इनै हुन्छन्। स्वयंभू ठेकेदार मुख्तियार ले आफ्नो जिह्वागत कानूनका अधिकार बलले निरपराधलाई मृत्युदंड र हत्याकारी सम्म लाई मुक्ति मान सम्पत्ति दिएमा त्यसलाई रोक्ने कुनै शक्ति छैन।

इनै ठेकदारहरूका हातमा राजकोष, गोलिगट्ठा र नेपालका शस्त्रागारको साँचो रहन्छ । प्रचुर मात्रामा बन्दूक गोलिगट्टा, स्टेनगन मेसीनगनहरु आत्मरक्षा लाई ठेकेदार दलका सदार ले आफु बस्ने घरमा राखेको छ । देशका रक्षा लाई संगठित गरिएको नेपालको जङ्गी का १५) रु० दर माह पाउने २४००० सैनिकहरूले ठिकेदार दलको संतरि को काम गर्नु पर्दछ वा उन्का हुकुमले संसार भरिका कहिं वा कसैका युद्धभूमिमा गर्धन दिनु पर्दछ । देश कार्य संचालन र राजस्व वसूलि का निमित्त संगठि पुग न पुग १२००० हारीहारी २०) रु० दर माह पाउने निजामति कार्य कर्ता हरू लाई पनी दल विशेषले आफ्नो करिया तुल्याइ राखेको छ । नेपालका निरीह तथा निर्वोध जंगी तथा निजामति सैनिक वा कार्य कर्ता लाई फौजी तालिम र कचहरी कार्य वाहेक अरू कुनै प्रकारको शिक्षा दिइन्न । ठेकेदार दलको हुकुम अमान्य गरेमा ज्यू धन जाने आतंकले तिनी हरूले ठेकेदार दलका मर्जिमा चल्न कर लागेको छ । यस प्रकार ३६००० मानिष का वलले ६४००००० प्रजाजनको धन अपहरण गरि नेपाल का देशद्रोही ४८ जना कँवर दल का लुटेरा हरू र तिन्का पिट्ठु भनाउदा हरूले दुनिया का आखाँमा छारो हालेको छ । इनै ३६००० निजामति र जङ्गी का जागीरे हरूलाई दिने खर्च र कँनर खलकका राणा हरूका दरबारमा बस्ने केटि, सुसारे, तालिमे र निजि स्टाफ का मानिष, आफ्ना पिट्ठु गुरू प्रोहितहरुलाई दिनु पर्ने दरमाहा र श्री ५ महाराजाधिराजको बाहुली खर्च र दरबार खर्च र भाई भारदार साहेब्जू चौतरिया हरूको भत्ता को खर्च जो वर्ष को एक करोड जति होला त्यो काटा राज्यका आयको बाँकी रहेंको नगद आठ करोड रुपैया (जागीर भूखण्ड को आग वाहेक) सालिन्दा दल का सरदार का नाउँमा विदेशका बंकमा जमा हुन्छ । राज्यका गुठी वन्दोवस्त अड्डाको आय पनी पुग न पुग ६२०००००) को छ। त्यस गुठीका आयका रुपयाले गरीब भएका कँवर खलकका राणा हरू लाई निर्व्याजि ऋण, वक्सिस र भत्ता

हरु दिइन्छ। नेपालका कालेज, स्कूल पाटशाला, हास्पिटल, औषधालय सड़क पूल जल कज्ञ हरूको यसै गुठी प्रबन्ध आयत्ते चलेको छ।

वृटिस कालमा चालीस करोड आबादी भएको भारत सामूराज्य भएका विदेशी भायसराय ले सालको दरमाह २५००००) पाउँथ्यो। भारतका ६ करोड सम्म आबादी भएका प्रत्येक प्रान्तको विदेशी गवर्नर हरूमा बम्बईको गवर्नर ले १२००००) इ पन्जाब बिहार र वर्मा को गवर्नरले ९६००० वर्षको, सेन्ट्रेल प्रान्तको गवर्नरले ७२०००) आसामका गवर्नरले ६६०००) र सीमा प्रान्त को गवर्नर ले ४८०००) सालको दरमाह पाउँथ्यो।

वर्तमान भारत संघ का प्रेसिडेण्ट बाबू राजेन्द्रप्रसाद को दरमाह १२००००) वार्षिक छ। भारतका प्रधानमंत्री जवाहरलाल नेहरू लाई ने ६५०००) सालिन्दा मिल्छ। भारतीय प्रान्तका गवर्नर हरूमा कसैको पनी ५००००) भन्दा बठता वार्षिक दरमाह छैन।

४००३३२०५२२५ डालर ( १२।१४ अरब रुपिया ) को आमदनी हुने अमेरिका संघ राज्यको प्रेसिडेण्टले दरमाह ७५०००) डालर ( करीब ५२५०००) रुपिया मैन्हा पाउछन्। फ्रान्सको प्राइमिनिष्टर ले ४००००) पौण्ड ६००००० ) सालको दरमाह पाउँछन्। भारत, कनाडा, अफ्रिका संयुक्त वृटिश सामूराज्यका प्राइमिनिष्टर को दरमाह ५०००) पौन्ड ( ७५००० रुपिया ) प्रतिमास थियो। ५५०००००००० जन संख्या भएको विशाल चीन सामूराज्यको अधिनायक चाङ्गकाइसेक को वार्षिक दरमाह ३१०००००) थियो।

तेस ठाउँमा नौ करोड आमदनी र ६४००००० जनसंख्या भएको हाम्रा नेपालका स्वयंभू प्राइमिनिष्टरले वैधरीतले लिएको २६७००००) वार्षिक दरमाह र नेपालको समस्त आमदनी मा सब मात्र लाई छाडी बाँकी बाँचेको आठ करोड रुपिया लाई नोट सटाई निहुँले विदेश पठाई आफना नाम जम्मा गर्ने लूटको संसारका अन्य

महान् देशका प्रेसिडेण्ट वा प्राइमिनिष्टर ले पाउने दरमाह र स्वदेशी ढुँवालकका लिएका स्वयंभू राणा पदाधिकारी हरूको दरमाह तुलना गर्नोस ।

# नेपाल को इतिहास

## परापूर्व काल

जसका भाल लाइ नागराज को स्वेत शुभ्र धवलागिरिले तुषार मुकुट दिएको छ, जसका हृदयमा पवित्र सप्त गंडकी र सप्त कौशीकि प्रवाहित छन्, जस्का चरणमा भक्ति धर्मले अवनत भारतवर्ष प्रणाम गर्दछ, ति हाम्री माता जननी जन्म भूमि नेपालको बन्दना गरी नेपालका इतिहासको प्रारम्भ गर्दछू ।

नेपाली हरूले वास गरिएको हिमालय तराइ को पहाडी अंश लाइ तिब्बत र हिमालय का उत्तारीय अंशमा वास गर्ने अनार्य हरू आफ्ना भाषामा पाल देश भन्दछन् । पाल शब्दको तिब्बतीय अर्थ पस्मिना (ऊन) हो तथा नेपाल देशमा पस्मिना भएका माल (वस्तु) हरु विषेश गरी पाइने हुँदा त्यसलाई तिनी हरुले पाल देश भनी भनेको हो। नेपाल देशका पूर्वका अंश र सिक्किम प्रदेश लाइ त्यहाँका मानिष हरु 'ने' भनी गर्दछन् र उत्तरीय हिमालयका मानिष हरुले धर गरी बस्न हुने पहाडी गुफा हरु लाइ पनी 'ने' भन्दछन् । तिब्बतीय (भोट प्रदेश का) लामा हरुका भाषामा ने शब्द को अर्थ पवित्र गुफा वा देवता हरुले वास गरिएको पवित्र स्थान भन्न लिइन्छ, तसर्थ नेपाली हरुले वास गरिएको हिमालय तराइ को पहाडी अंश पाल देश र स्वयम्भु र स्वयंभुनाथ आदि भएका 'ने' रूपी पवित्र स्थानहरु भएको ले त्यसका सम्मिश्रिणले देश को नाऊ नेपाल परेको हो ।

परापूर्व कालमा कुनै 'ने [illegible] ... वागमति र विष्णुमति

का संगमस्थलमा तपस्यागरि वसेका थिए। तिनैका आज्ञानुरूप नेपालका तात्कालिक राजा हरुले देशको शासनव्यवस्था चलाएको थियो। इन महर्षि "ने" मुनि द्वारा पालित भएकोले देशको नाँऊ नेपाल परेको भन्ने कथा पार्वत्य वंशावलिहरूमा लेखिएको छ।

भारतीय पुराण ग्रंथ मद्धेको स्कन्ध पुराणान्तरगतको नागरखंड, सह्याद्रिखंड, देविपुराण, बृहन्निलतंत्र, वाराहितंत्रका कथानक हरू परापूर्व कालमा नेपालमा सर्व प्रथम ज्योतिर्लिङ्ग को प्रादुर्भाव भएको कथा र श्लेष्मान्तक वनको सामान्य वर्णन पाइन्छ। स्कन्ध पुराणको हिमवत्खंडमा नेपालको विशेष वर्णन भए पनि नेपाल को तात्कालिक इतिहासको यथार्थ रूप रेखा देखन सकिंदैन।

बौद्ध तंत्र बौद्ध स्वयंभू पुराणले नेपालको प्रारम्भिक इतिहासका विषयमा विषेश प्रकाश दिएको छ। इतिहासका प्रारम्भिक कथानक उपरोक्त सनातनी पुराण र बौद्ध पुराणहरूमा केहि विभिन्नता भए पनि नेपालका राजाहरूको नाँऊ, तिन्को शासनकालका विषय धेरै जसो सदृश्यता देखिन्छ। नेपालका प्रायः सबै वंशावलिका लेखक हरूले आफ्ना इतिहासको प्रारम्भ बौद्ध पुराणका कथानकका आधार गरेका छन्।

परापूर्वका राजाहरूका समय अन्वेषणमा विदेशी तथा भारत पुरान तत्ववेत्ता र प्रो० दिल्ली रमणरेग्मीका मनमा अनेक विभिन्नता देखियेको छ। मैले त्यस विभिन्नताका वितन्डा वादमा न परी वंशावली का क्रमले इतिहासको धारा मिलाउने प्रयत्न गरेको हूँ।

जसरी राजतरंगिणी तथा नीलपुराणादि संस्कृत भाषाका ऐतिहासिक पुस्तकहरूमा अघि परापूर्व कालमा काश्मिर देश एउटा ठूलो दह थियो, त्यसलाई महर्षि काश्यपले पहाडको डांडो काटेर पानी गाए पछि त्यो दह मनुष्य वास योग्य भएको थियो भनी लेखेको छ, त्यसै किसिमले हिमवत्खंड आदि पुराण ग्रंथ हरूमा

नेपाल परापूर्व कालमा नाँऊ का आकार को ठूलो ह्रद थियो, त्यसलाइ डुने महात्मा / "गोर्खाज" मेजर पुस्तका लेखेके नार्थि तथा कैप्टेन माँरिस का कथनानुसार बौद्ध मार्गी मतले मंजु श्री र सनातनी मतले विष्णु ले ) डाँडो काटि पानी निकालेर त्यस् ठाँऊ लाइ मानिष वस्न हुने बनाएका थिए भन्ने लेखे को छ। बौद्ध पुराण तथा त्यसका आधारमा लेखिएको पर्वतीय वंशावलिहरूमा पनि नेपाल पहिले यउटा ह्रद थियो भन्ने लेखेको छ।

वर्तमान नेपाल खाल्डो ( दून ) को परापूर्वकालीन नाऊँ नाग ह्रद थियो, सत्ययुग कालमा विपस्वि नाऊँका प्रथम बुद्ध। नागह्रद (नेपाल) मा आएर चैत्र शुक्ल पूर्णिमाका दिन ह्रदका माझमा एउटा कमलको विऊ रोपेका थिए। त्यस कमलका विऊवाट उम्रे को फूल छ महिना आश्विन शुक्ल पूर्णिमाका दिन पूर्णरूपले फक्री सकेको थियो। त्यसै कमलका माँझमा ( बौद्धमार्गी मतले स्वयंभू नाथको र शिवमार्गी मतले पशुपतिनाथको ) ज्योतिमय मूर्तिको प्रादुर्भाव भएको थियो। त्यो कुरा थाहा पाएर शिखिनामका द्वितीय बुद्धले फुल्लोचगिरी ( फूलचोकको डाँडो ) मा आसन बाँधि भगवानको ज्योतिर्मय मूर्तिको दर्शन गरि जन्म सफल मानेका थिए। पछि त्रेतायुगकालमा विश्वभू नाऊँका तृतीय बुद्धले आफ्ना शिष्य मंडलिका साथ फुल्लोच्च गिरिमा आएर एक लाख फूलले ज्योतिर्मय भगवान्को पूजन गरेका र त्यस नागह्रदको पानि निकालेर गरि त्यसलाई जनवास योग्य गराउने प्रयत्न गरेका थिए। तिनै-पछि चीन देशवाट आएका मंजुश्री बोधिसत्व ले ज्योतिः स्वरूप भगवान को आराधनाका निमित्त महाचौपोखरि नगरकोट ( महामंडप गिरि ) मा तपस्या गरि, तीन दिन अहोरात्र अनिमेष दृष्टि राखि ज्योतिः स्वरूपको दर्शन गरेका थिए। मंजुश्री ले आफ्ना "वरदा" र "मोक्षदा" नामका खड्गका अनुकम्पाले नागह्रदको अवरुद्ध ( रुकेको ) पानी निकालेर त्यस ठाऊँ लाई मनुष्य वास योग्य बनाए। पहिले महामंडप गिरिका तल

तिरको शृंखलामा आई, वारी पारी फुल्लोच्च ( फुल्चोक ) र ध्यानोच ( कटुवाल दह माथि को डाँडो ) मा वरदा र मोक्षदा लाई स्थापित गरि त्यस शृंखलाका माँझमा काटेर नागहृदको निमेका पानी वाहिर लगेका थिए। गिरि शृंखला का माँझको काटियेको त्यो स्थान कटुवाल दह फर्पिङ्का पुछारमा पर्दछ। हिजो आज त्यसलाई चक्रतिर्थ भन्दछन्। त्यस मार्ग वाट पानी वग्न थाले पछि त्यस हृदका करकोटक वाहेक अरू यावत नागहरू पानीका धाराका साथ नेपाल बाट वाहिर भए।

नागहृद अर्थात् नेपाल खाल्डाको जम्मै पानी र साथ साथ नाग कुल समेत वगेर वाहिरिए पछि मंजुश्री ले पद्मकाष्थगिरिमा श्री गुह्येश्वरीको बीज मंत्रको स्थापना गरेका थिए। तिनले त्यस गिरिमा 'मंजु पत्तन' नाऊँको गाऊँ बसाएर आफ्ना शिष्यहरूलाई तहीं वस्ने आदेश दिए। पछि आफ्ना शिष्य मद्धे धर्माकर नाऊ गरेका भक्त शिष्यलाई त्यस गाऊँको राज्याधिकार सुम्पि आफु चीन फर्केका थिए।

त्यस घटना पछि मंजुपत्तनमा ( नेपालमा ) क्रकुच्छन्द नामक चतुर्थ बुद्ध आएका थिए। तिन्ले नेपालमा जलको अभाव देखेर भगवती गुह्येश्वराको प्रार्थना गरे। तिन्का प्रार्थनाले शिवपुरी पर्वतका उत्तर तिरवाट स्वयं गुह्येश्वरी वाग्मती गंगाका रूपमा प्रकट भइन्। वाग्मती गंगाको उद्गम स्थान लाई वागद्वार भन्दछन्। वाग्मती नदी वग्न थाले पछि ( नेपाल ) मंजुपत्तन को जन संख्या निकै बढेको थियो। तिनै निसंतानी राजा धर्माकर स्वर्ग भएको ले बुद्ध क्रकुच्छन्द ले धर्मपाल नाऊँका मानिष लाई ( नेपाल ) मंजुपत्तन को राजा बनाए। इनै धर्मपालका वंशका राजा सुधन्वा अयोध्यापति महाराजाधिराज भगवान रामचन्द्रका समकालीन थिए। राजा सुधन्वाले सांकाश्य नाउँको नगर बसाई, त्यसलाई आफ्नो राजधानी बनाएका थिए। इनी जगज्जननी सिताका स्वयंवरमा जनकपुर गएका वखत राजा जनकका भाई कुशध्वजका हातबाट मारिए। त्यस पछि राजा कुशध्वजले सांकाश्य नगरको राज्य

चलाए। इनका वंशजहरूले हजारौं वर्ष सम्म निर्विघ्न सांकाश्य (नेपाल) नगरको शासन गरेका थिए।

द्वापर युगका अन्त कालमा काश्यप नामका पंचम बुद्ध आइ ज्योतिर्मूर्ति र गुह्येश्वरीको दर्शन गरि गौड देश तिर गएका थिए। तिन्ले गौड देशका तात्कालिक राजा प्रचंडदेव संग ज्योतिर्मूर्ति तथा गुह्येश्वरी को माहात्म्यको वर्णन गरे। माहात्म्यले प्रभावित भएका राजा प्रचंड देव नेपाल आएका थिए। तिन्ले नेपालमा महात्मा गुणाकर लाइ आफ्नो दिक्षा गुरु बनाए। तिनी शान्तश्रीका नाँउले प्रसिद्ध भएका थिए। इनै शान्तिश्री ले पछि कलियुगका मानिषले प्रत्यक्ष दर्शन सहन सक्ने छैनन् भनी ज्योतिर्मूर्ति लाइ ढाकेर त्यसै ठाँऊमा यउटा चैत्यको निर्माण गराएका थिए। तिनैताक कुशध्वज वंसका अन्तिम राजा निसंतानी भै मरेकाले शान्तिश्रीले गौड राज कुलका यउटा पुरुषलाइ नेपालको राज्यासन दिएका थिए। त्यस गौड राज वंशका अन्तिम राजा सिंह देव परम योगी पुरुष थिए। तिन्का पालामा नेपालका वाणिज्य र व्यापार सिंहलद्वीप (लंका) सम्म फैलिएका ले निज लाइ सिंहल पनी भन्द थे। आफना अन्त्य समयमा इन्ले सिद्ध समाधि लिएको थियो। त्यसैका स्मृतिमा आज पर्यन्त ठवहिल टोलमा प्रतिवर्ष यात्रा हुँदैछ।

राजा सिंहदेव वा सिंहलका राज्यकालमा नेपालमा ठूलो भैंचाल गएको थियो। त्यसले गर्दा नेपालका अनेक देवस्थल र घर हरू ध्वंस भएका थिए। त्यसै वखत गौडेश्वर प्रचंड देव वा शान्तिश्रीले ज्योतिर्मूर्ति ढाकि बनाएको चैत्य समेत भत्केको थियो।

त्यसका अनेक काल पछि नेपालमा महर्षि "ने" मुनिको समय आँउछ। त्यस वखत नेपालमा भगवान् कृष्ण चन्द्रका साथ आएका ग्वाल वंसीहरूको संखया अधिक थियो। तिनै ग्वालहरू मद्धे यउटा गोपाल को ने नाउ की कुवारि गाई थिइन्। कुवारि भएर पनि ती गाई

आफ्नो दूध दिंदैनथिन् । निर्धारित समयमा जंगल पसी क्यै वेर पछि फर्केर आउने तिन्को रोजिन्दाको नियम थियो । एक दिन गाईका धनी गोपाल ले ई गाई सधैं कहाँ जाँदी रहिछन् भनी बुझ्न तिन्को चिर्यो गर्न थाल्यो । आफ्ना समयमा ती न नाँउ की गाई गोठवाट निस्की जंगल भित्र पसि. कुनै एक ठाँऊमा उभिइन् । गाईले उभिना साथ स्वयं तिन्का थुनवाट दूधको धारा वगी त्यस ठाँउलाई सिंचित गर्न थाल्यो। गाईका पछि लागी चीर्यो गर्ने ग्वाललाइ त्यस कुराले निकै आश्चर्य भयो । गाई फर्के पछि त्यसले दूध खसेको ठाँऊमा के रहे छ भनि खोश्रन लाग्यो । त्यसठाँऊ को मास्तीर को माटो हटना साथ त्यहाँ वाट ज्योति मूर्ति प्रकट भयो । त्यसै ज्योतिका प्रकाशले ती गोपाल तहीं भस्म भए । त्ये ज्योति जगदीश्वर पशुपति नाथको ज्योतिर्लिङ्ग रहे छ । यस किसिमले सनातन कालको देवल भत्केर त्यसका माटाले पुरिएर लुप्त भइ वसेको ज्योतिर्मय भगवा न् पुनः प्रकट हुनु भयेको हो।

## १—गोपाल वंशीय नेपालका राजा हरूको वंशावली।

त्यो समाचार सुनेर महर्षि ने मुनी त्यस टाँऊमा पाल्नु भयो तथा पशुपतिनाथको ज्योतिर्मूर्तिको दर्शन गरी त्यसको प्रतिष्ठा गर्नु भयो । ज्योतिर्लिङ्ग को दर्शन पाई भस्म भएको गोपाल मुखियाका छोरा भुक्तमान गुप्तलाई नेपालको शासक बनाउनु भयो ।

यस्ता प्रकारले गोपाल वंशमा प्रथम नेपालकी राज्यलक्ष्मीले वरमाला चढाइन् । गोपाल वंशीय प्रथम राजा भुक्तमान गुप्तले ८८ वर्ष सम्म राज्य गरे । इनका राज्यकालमा श्रीपशुपतिनाथ को प्रादुर्भाव तथा देवलको निर्माण भएको हो । इनका छोरा जयगुप्तले ७२ वर्ष राज्य गरेर क्रमशः परमगुप्तले ८० वर्ष भीमगुप्त ले ९३ वर्ष द्वितीय भीमगुप्त ले र मणि गुप्तले ३७ वर्ष विष्णु गुप्तले ४३ वर्ष र ... गुप्तले ७२ वर्ष सम्म राज्य

गरेका थिए। सबै मिलाए र आठ पुस्ता गरी ५२१ वर्ष सम्म गोपाल वंशीय हरूको शासन रह्यो। गोपाल वंशीय राजा हरूको वास स्थल कीर्तिपुरका दक्षिण मातातीर्थका निकटमा थियो। गोपाल वंशीय अन्तिम राजा यक्षगुप्त निःसंतान भएर मरेकाले भारतवर्षबाट आई वरसिंह नामक एक अहीर वंशीय पुरुषले यहाँ को राज्यधिकार हात लगाए।

## २—अहीर वंशीय नेपालका राजाहरूको वंशावली

वरसिंह पछि क्रमले उनका छोरा जयमतिसिंह तिनका छोरा भुवनसिंह अन्त्यमा राजा भए। इनका पालामा पूर्व तिरका किंरात सरदार यलंवरले नेपालमा आक्रमण गरेका थिए। त्यस युद्धमा भुवनसिंह मारिए पछि नेपालमा किराँत हरूको राज्य कायम भयो।

## ३—किराँत वंशीय नेपालका राजाहरूको वंशावली।

किराँत वंशीय प्रथम राजा यलम्बर द्वापर युगका अन्त्य तथा कलियुगका प्रारम्भमा भएका थिए। इनका २९ पुस्ताले नेपालको शासन गरेका थिए। इनका मृत्यु पछि क्रमशः इनका बंशधर २ पवि ३ स्कन्धर ४ वलम्ब ५ हृती ६ हुमती, इनैका पालामा पांडवहरू बनवास आएको र अर्जुनले शिव स्वरूपी किराँत सित युद्ध गरेको र पाशुपतास्त्र पाएको थियो। ७ जितेद्रास्ती, इन्नी कौरवपांडव युद्धमा सामेल भएका र थियो। ठूलो पराक्रम देखाएका थिए। इन्ले आफना यौवनावस्थामा अश्वमेध यज्ञ सम्म गरेको थियो ८ गाली ९ पुष्क, इनका पालामा शाक्यसिंह बुद्ध नेपाल पाल्नु भएको थियो। १० शुर्यमा ११ पर्व १२ बंका १३ स्वबन्द १४ खुङ्को इनका पालामा सम्राट् अशोक नेपाल गएका थिए तथा ललितपत्तनमा अधिकार गरी बौद्ध धर्मको प्रचार गरेका थिए। सम्राट् अशोकका डरले खुंको पछिका किराँती राजाहरू गोकर्णका जंगलमा गइ दुर्भेद्य दरबार

बनाई बस्न थाले १५ सम्राट अशोककी पुत्री चारुमतीले चावेल नगरबसाइ चित्राहाल बनाये का थिइन्। गाँगरी १६ नने १७ १८ प्योर १९ थोंका २० वर्मा २१ मुजा २२ पुष्क २३ केसु २४ सुगा २५ संसा २६ गुणन २७ खिम्बु २८ पातुका, इनका पालामा सोमवंशीय राजपूत हरुले पश्चिम तिरबाट आई आक्रमण गर्दा किराँती राजाहरुले मातातीर्थ लाई छाडी शंख-मूल तीर्थ नेर अर्को दरबार बनाई बस्नु परेको थियो २९ गस्ती; ई किराँती वंशका अन्तिम राजा थिए। इनले सोमवंशीय राजा निमिष द्वारा पराजित भई भाग्नु पर्‍यो। यस्ता प्रकार ५२६ वर्ष पछि किराँत राजा हरूका हात बाट नेपालको राज्याधिकार सोमवंशीय क्षत्री हरूका अधिकारमा आएको थियो।

## ४—सोमवंशीय नेपालका राजा हरूको वंशावली।

राज्याधिकार हस्तगत गरी राजा निमिषले फुलोच्छ पर्वतमा गोदावरी तीर्थ नेर आफ्नो दरबार बनाए। इनैका पालामा नेपाल देखि ४०० कोस पर भारतका मद्रास प्रान्त का गोदावरी नदीमा कुनै एक महात्माको बगेको माला मृगचर्मादि नेपालको गोदावरी ह्रदमा पाएको हुँदा, त्यसै बेला देखि त्यस स्थानमा प्रति बारह वर्षमा ठूलो मेला हुने प्रथा चलेको हो। राजा निमिष पछि वंशानुक्रमले ( १ ) मताक्षर ( २ ) काकवर्मा तथा ( ३ ) पशुप्रेक्षदेव नेपालका राजा भए। राजा पशुप्रेक्ष देवले कलिगत वर्ष १२१४ मा श्री पशुपतिनाथ का मंदिरको जीर्णोद्धार गरी नेपालमा चारैवर्णका हिन्दू हरूलाई बसाएका थिए। इनका पछि भास्कर वर्मा राजा भए। इनको विशाल सैन्य बाहिनी, अनेक देश विजय गर्दै सेतु बन्ध रामेश्वर सम्म पुग को थीयो। इनूले देवपाटन नामक सानु ग्राम लाई सुवर्ण पुरी नाम राखी समृद्धशाली नगर तुल्याएका थीए। ई भास्कर वर्मा सोमवंशीय राजा हरुमा पंचम तथा अन्तिम राजा थिए। इनले आफूलाई निःसंतान देखि शाक्यसिंह बुद्धका संग आएका, गौतम

गोत्रोत्पन्न सूर्यवंशी लिच्छवी क्षत्री, भूमिवर्मा लाई आफ्नो उत्तराधिकारी बनाए। त्यसैकाले, सोमवंशीय क्षत्री हरू पछि नेपालमा लिच्छवी राज वंशको अधिकार भएको हो ।

## ५—लिच्छवी वंशीय नेपालका राजाहरुको वंशावली ।

नेपालमा पाईएका अशोक लीपी बाट अधि कुनै कालमा शाक्य वंशीय राजा हरु राज्य गर्दथे । तथा त्यहीं ज्ञानावतार शाक्यसिंह बुद्ध प्रकट भई सकेको थियो भन्ने बुझिन्छ । वायु पुराण र ब्रह्माण्ड पुराणमा पनि शाक्य वंशीय राजा हरुको नामावली पाइन्छ । यसले भगवान् बुद्ध पछि शाक्यवंशीय ६।७ पुरुष हरुले त्यहाँ राज्य गरेका थिए भन्ने अनुमान हुन्छ ।

यस प्रकार सोमवंशीय अन्तिम राजा भास्कर वर्मा पछि पराक्रमी लिच्छवी वंशको नेपालमा उदय भयो । पटना का गुप्त सम्राट् द्वारा, प्रसिद्ध लिच्छवी नरेश सुपुष्य, पराजित भई नेपाल तराईमा आई बसेकी थिए। इनै सुपुष्यका २५ सौ पुस्तामा नेपालको राज्य हस्तगत गरी आफ्ना पराक्रम ले लिच्छवी हरु आर्य वर्तमा प्रसिद्ध भएका थिए ।

यद्यपि पहाडी वंशावली हरुमा लिच्छवी वंश भन्ने लखिएको छैन ता पनि नेपालमा पाइएका अट्ठाइस ओटा पुराना शिलालेख हरु बाट लिच्छवी राजवंशको नेपालमा राज्याधिकार भएको थाहा पाइन्छ । तिनै शिलापत्रका आधारमा प्रसिद्ध पुरातत्वविद् श्रीभगवानलालले त्यस वंशका नेपाल राजगणको जस्तो धारावाहिक नाम र काल निर्णय गरेका छन् त्यी तल लेखिन्छ ।

१—जयदेव प्रथम आनुमानिक सन् १ ई ।

२—देखि १२ । सम्म का एघारह पुरुषहरुको नामावली पाइएकोछ ।

१३—वृषक देव ( पन्ध्रौं लिपी अनुसार ३ आनुमानिक सन् २६०ई
१४—शंकर देव ( पन्ध्रौ तथा प्रथम लिपी अनुमान सन् २८५ ई
१५—धर्मदेव ( राजमती सँग विवाह गरे पन्ध्रौ र प्रथम लिपी अनुमान सन् ३०५।

१६—मानदेव ( प्रथम र पन्ध्रौ लिपी अनुमान संवत् ३८६-४१३ वा सन् ३२९—३६५

१७—महादेव प्रथम र तृतीय, प्रथम र पन्ध्रौलिपी अनुमान सन् ३६० ई।

१८—वसंतदेव वा वसत सेन ( „ „ संवत् ४३५ सन् ३७८ ई।

१९—उदय सेन ( चौथा लिपी अनुसार ) आनुमानिक सन् ४०० ई।

२०—देखि २७ सम्मका आठ पुरुषहरूको नांऊ पन्ध्रौ लिपीमा छैन।

२८—शिवदेव प्रथम ( चौथी लिपी अनुसार आनुमानिक सन् ६१० महासामंत अंशुवर्मा पछि महाराज लेखन थाले ( पांचौ लिपी अनुसार श्री हर्ष संवत् ३४-४५ सन् ६४०-१ वाट ६५१-२ ई।

२९—पन्ध्रौ लिपी मा छाडि दिएको छ।

३०—ध्रुवदेव ( छैटौ र आठौं लिपी अनुसार श्री हर्ष सं ४८ सन् ६५४-६५५ ई। जिष्णु गुप्त ( नवम र दशम लिपी„ श्री हर्ष सम्वत ४८ सन् ६५४-५५ ई।

३१—पन्ध्रौ लिपीमा नामछैन कदाचित् विष्णु गुप्त हुन्।

३२—विष्णु गुप्त ( नवम लिपी अनुसार )

३३—नरेन्द्र देव ( नवम लिपी अनुसार आनुमानिक सन् ६६० ई

३४—शिवदेव द्वितीय, इनले आदित्य सेनाकी तथा मौखरी राजा

भोगवर्मा की कन्या सित विवाह गरेका थीए। नमार्शल. अनुसार अंशुवर्मा सन् ११६–१४५ सन् ७२५–६–७५१–२ ई।

३५—जयदेव द्वितीय परचक्रकाम गौडोड् कलिङ्ग कोसलाधिपति भगदत्त वंशीय हर्षदेव की कन्या राजमती सित इनको विवाह भएको थियो। पञ्जौ लि. अनुसार आनुमानिक श्री हर्ष सन् १५३ वा सं० ७५६–६० ई।

उक्त विवरण प्रकाशित भई सके पछी श्री बन्डेल साहेब ले सन् ३१६ लाई सुचित गर्ने एउटा अर्को शिलालिपी प्रकाश गरे। यसमा अंशुवर्मा को नाऊँ भएकोले फ्लिट साहेबले यस अंकलाई गुप्त संवत् अर्थात् ६२५-६ सन् बताएका छन्।

डा. फ्लिट साहेबको मतले—श्री शिवदेवका समयमा खनिएको ३१६ अङ्क चिह्नित लिपी नै सब भन्दा पुरानो लिपी हो। त्यसैको आश्रय लिएर फ्लिट साहबका समयानुसार संक्षिप्त राजविवरण प्रकाशित भयो। त्यसलाई संक्षिप्त रूपले तल लेखिन्छ।

१—मानगृह वाटः—भट्टारक महाराज लिच्छवी कुलकेतु शिवदेवले महासामंत अंशुवर्माका उपदेश वा अनुरोध ले ३१६ ( गुप्त ) संवत् अर्थात् सन् ६२५ ई. मा एक ताम्र शासन दिए। यस शासनका दूतक स्वामी भोगवर्मा हुन्।

२— कैलास कूट भवन वाट ) महासामंत अंशुवर्मा ले हर्ष सम्वत् ३४ देखि ४५ सम्म अर्थात् सन् ६४०–६४९–५० ई० सम्म राज्य गरे।

३—अंशुवर्मा पछि कैलास कूट भवन बाट विष्णु गुप्त का लिपीमा संवत् ४८ सन् ६४३ ई० औं मानगृह का स्वामी ध्रुवदेवको नाम छ।

४—वृष देवका पनाती शंकर देवका नाता तथा धर्मदेवका पुत्र मानदेव गुप्त संवत् ३८३ सन् ७०५ ई मा राज्य गर्दथे।

५—परमभट्टारक महाराजाधिराज शिवदेव द्वितीय वर्ष संवत् ११९ सन् ७२५ ई मा राज्य गर्दथे।

६—पछि गुप्त संवत् ४१३ सन् ७३२–३३ ई मा मानदेव नामक एक राजाको नाम पाइन्छ ।

७—यसका पछि द्वितीय शिवदेवको एक अर्को लिपीले हर्ष संवत् १४३ सन् ७४८ ई मा राज्य गर्दथे भन्ने बुझिन्छ

८—मान गृहका स्वामी वंसतसेन गुप्तसंवत् ४३५ सन् ७४८ मा थीए ।

९—जयदेव द्वितीय विरुदपार चक्रकाम हर्ष संवत् ४५३ सन् ७५८ ई मा थीए । इनका लिपिमा प्राचीन लिच्छवी राजागणको वंशावली वर्णित छ ।

१०—राजपुत्र विक्रमसेन गुप्तसंवन् ५३५ सन् ८८४ ई मा भए । डा. फ्लिटले उपरोक्त राजागणका पर्यालोचना गरेर निश्चय गरे को नेपालका दुइस्थान मा दुइटा राजवंश राज्य गर्दथे । तिन मद्धे एकवंश प्राचीन लिच्छवी राजवंश तथा अर्को महासमान्त अंशुवर्मा वाट प्रारम्भ हुन्छ । यसमा निजले दुवै राजावंशहरुको सूचि प्रकाशित गरेको छ ।

| | | |
|---|---|---|
| १—जयदेव १ अनुमान ४२०–१५९ सन् २० ई०<br>२—शिला लीपी मा इनको नाऊँ छैन<br>३— ”<br>४— ”<br>५— ”<br>६—अनुमान ३५५ सन् ६३० ई०<br>७—<br>८—<br>९—<br>१०—<br>११—<br>१२—<br>महाराज शिवदेव प्रथम सन् ६३५ ई०<br>१३—वृषदेव— अनुमान सन्. ३६० संवत् सन् ६५५ ई० | अंशुवर्मा महासामंत का पछि सन् ६२५–६५ ई० | उदयदेव अनुमान् सन् ६७५-७०० ई० |

| मानगृह को लिच्छवी सूर्यवंश | कैलास कूटको | ठकुरी वंश |
|---|---|---|
| –शंकरदेव १३ शं० को पुत्र अनुमान सन् ६५५–६८० ई० | जिष्णु गुप्त सन् ६५० | नरेन्द्रदेव उदयदेव पुत्र सन् ७००–७२४ ई० |
| –धर्मदेव यसै १४ श. को पुत्र अनुमान सन् ६८०–७०४ ई० | | शिवदेव ( द्वितीय ) |
| –मानदेव ( १५ श. को पुत्र ) सन् ७०५–७३२ ई० | | नरेन्द्रदेव को पुत्र सन् ७२५ ७४८ ई० |
| –महिदेव ( १६ श. को पुत्र ) अनु० सन् ७३६-७५१ ई० | | जयदेव ( द्वितीय ) |
| –वसन्तदेव ( १६ श. को पुत्र सन् ५४ ई० | | शिवदेवको पुत्र सन् ७५०-७५८ ई० |

## पछि डा, होरनलिले समेत उक्त सूचिलाई ग्रहण गरे।

माथि लेखिएका दुई मत मध्ये पछिल्लो मतलाई सबैले ग्रहण गरेको छ, तर विचार पूर्वक बुझ्दा त्यो पनि ठीक मान्न सकिन, पूर्वोक्त शिला लिपीहरुका अक्षर र पूर्वापर घटनावली र सामयिक वृत्तान्त हरु व.ट डा. फ्लिट तथा डा. होरनलिले ठहराएको सिद्धान्त पनि परिवर्तन गर्नुं पर्ने भएको छ भन्ने बुझिन लागेको छ।

पं० भगवानलाल तथा बुलरसाहिबले प्रकाश गरेको मतमा कुनै कुनै अंश हरू भ्रान्ति पूर्ण छ ता पनि त्यसमा अनेक

नेपाल राज्यमा लिच्छवी राजवंशका पालाको जति शिलापत्र प्रकाशित भएका छन्, तिन् मद्धे धेरै शिलालेखमा लेखिएको वंशावली धारावाहिक छ तथा कहीं पूर्ण पनी छ ।

यद्यपि पार्वतीय वंशावलीका अनेक स्थानमा अतिरंजित कुराहरू लेखिएको हुनाले पूर्णतः विश्वास योग्य मान्न सकिन्न ता पनि अरु हरूका समकक्षमा त्यसबाट अनेक ऐतिहासिक यथार्थ कुराहरू पाइने हुनाले पार्वतीय वंशावली तथा उपरोक्त शिलापत्रका आधारमा पाठक हरूका संमुख भूमिवर्मा पछिका राजाहरुकको धारावाहिक इतिहास लेखिन्छ ।

## ६—लिच्छवी वंशीय नेपालका राजाहरू ।

वैशालि गणतंत्र राज्य मुजफ्फरपुर जिलाको वर्तमान बसाढ ग्राममा थियो । वैशालिको पतन भए पछि लिच्छवी राजपुत्र सुपुष्पल पुष्पपुर लाई वासभूमि बनाए । तिन्का पछाडिका २३ पुस्ताका राजपुत्रहरुको नाँऊ शिलालीपिमा लेखिएको छैन । तिन्का २४ सौं स्थामा राजपुत्र १ जयदेवले मानगृह ( नेपाल ) मा लिच्छवी वंश को राज्य स्थापित गरे । राजा जयदेव पछि भएका १२ राजा हरू को नाऊं शिला पत्रमा लेखिएको छैन । नेपालका १४ औं लिच्छवी नरेश प्रतापी वृषदेव भए । इन्ले यवनराज अलेकझेन्डर ( सिकन्दर शाह ) का सेनापति पराक्रमी सेल्यूकसका विरुद्धका युद्धमा नेपाली सेना पठाएर गुप्त साम्राज्य संस्थापक चन्द्रगुप्तको ठूलो मदत दिएका थिए । त्यसैका प्रत्युत्तरमा गुप्त सम्वत्त प्रवर्तक सम्राट् चन्द्रगुप्त विक्रमादित्य नेपाल गएका थिए । त्यहाँ तिन्ले राजा वृषदेव कि कन्या नेपाल राजपुत्री कुमारदेवीको पाणिग्रहण गरेको थिए । त्यसैले पछि निजले आफ्ना मुद्रा ( टक ) मा आफ्ना नाँऊका साथ लिच्छवया, शब्द थपी आफुलाई गौरवान्वित सम्झेका हुन् । इनै नेपाल राजपुत्री कुमारदेवीका गर्भबाट, भारत माथि आक्रमण गर्न आएका

दुर्दान्त शक विजेता सम्राट समुद्रगुप्त को जन्म भएको थियो। शक युद्ध मा पनी नेपाली सैन्यवाहिनीले ठूलो भाग लिएको थियो। राजा वृषदेवका पालामा वैश्य ठकुरी वंशका पराक्रमी महासामन्त अंशुवर्मा को नाँउ पाइन्छ। इन्का नाउँका साथ महासामन्त पदवी लेखिएको हुदाँ, इनी त्यस बेला सम्म नेपालराज्यका प्रधान पदमा पुगिसकेका थिए भन्ने स्पष्ट बुझिन्छ।

राजा वृषदेवका शेष पछि गुप्त सम्वत् ३५ सन् ३५४ मा महासामन्त अंशुवर्माको पद बृद्धि भएको थियो। १५ वौं महाराज शिवदेव बाट कैलाशकूट भवन राज्यको शासनाधिकार ताम्रपत्र द्वारा अंशुवर्मा ले पाए पछि तिन्ले आफ्ना नाँऊका अगाडि महासामन्त भन्ने पदवी लेखेका थिए। तिन्ताक अंशुवर्मा आफ्ना शौर्य वीर्य पराक्रम तथा विद्या बुद्धिमा सर्व प्रधान मानिएका थिए।

महासामन्त अंशुवर्मा, महाराज शिवदेव पुत्र १६ हौं लिच्छवी राजा ध्रुवदेव तथा तिन्का पुत्र १७ हौं राजा शङ्करदेवका राज्यकाल सम्म थिए। अंशुवर्माका यत्नले नेपालको ठूलो उन्नति भएको थियो। तिन्ताकका लिच्छवी राजा हरू सनातन तथा बौद्ध धर्मावलम्बीहरूलाई समान दृष्टिले हेर्दथें। अंशुवर्मा पनी दुबै धर्मका प्रति भक्ति राखथें। राजा ध्रुवदेव र राजा शंकरदेव पछि नेपालमा १८ रौं राजा मानदेव भएका थिए। इन्ले साके ३८६ देखी ४१३ सन् ४६४ देखी ४८१ सम्म अटल राज्य गरे। राजा मानदेव अत्यन्त पराक्रमी राजा थिए। इनका पालामा महासामंत अंशुवर्मा वंशका सामन्त ठकुरीराजाहरूले लिच्छवी नेपाल नरेशको अधीनता त्यागेर स्वाधीन हुने प्रयत्न गरेका थिए। तर राजा मानदेवका विक्रमका संमुख तिनीहरुले मुहुडा छिन सकेनन्। सिंह विक्रमी राजा मानदेवले पूर्व तथा पश्चिमका समस्त सामन्त ठकुरी हरूको दर्प दलन गरे। इनैका पालामा जयवर्मा नाऊँका कुनै भक्त पुरुष ले पशुपतिनाथका मंदिरमा जयेश्वर नामका लिङ्गमूर्तिको स्थापना गरेका थिए। त्यो मूर्ति पछि नष्ट भयो, तर त्यसैका नजीक राजा मानदेवका

पिता राजाशंकरदेवले स्थापित गरेको १४ हात अग्लो त्रिशूल अद्या-वधि छँदैछ। लिच्छवी वंशज १९ सौ राजा धर्मदेवले खासाचैत्य र चक्रविहार बनाएका थिए। २० सौं राजा मानदेव द्वितीय र २१ सौ राजा महीदेव २२ सौ राजा वसंतदेव कलिगत २८०० वर्ष शकाब्द ४३ मा भएका थिए। इनै राजा वसन्तदेवले सबै सामन्त ठकुरी राजाहरुलाई पूर्णत: वशमा गरी नेपालमा अवलोकितेश्वरको पूजा र प्रधानताको प्रचार गरे। त्यसै वेला देखि आज सम्म अवलोकितेश्वर वा मत्स्येन्द्रनाथ नेपालका अधिष्ठाता देवता मानिएका छन् तथा पूजि-न्छन्। २३ सौ राजा उदयदेव २४ सौं राजा नरेन्द्रदेवका पराक्रमको वर्णन जयदेव द्वितीयका शिलालेखमा विशेष रुपले लेखिएको छ। इनैका वलवीर्यले कान्यकुब्ज नरेश हर्षवर्धनले नेपाल विजयको आफ्नू उत्कट इच्छाको दमन गर्नु पर्‍यो। इनैका राज्यकालमा चीन देशका बौद्ध सन्यासी हि-आेङ्ग-साङ्ग नेपाल गएका थिए। निजले "म अनेक पर्वत र उपत्यका हरुलाई नाघेर नेपाल देशमा पुगेको थिञें। त्यो देश तुषारमय पर्वत मालाले घेरिएको छ। पर्वत उपत्यकाको परत बराबर लागेको पाइन्छ, त्यहाँ विश्वासी (बौद्ध) र अविश्वासी (सनातनी) दुवै संप्रदायका मानिषहरु एकै साथ रहन्छन्। संघाराम र देवमंदिर हरू नजीकै र बनेका छन्। त्यहाँ माहायान र हीनयान मतावलम्बी श्रवण हरुको संख्या २००० को छ। त्यहाँ लिच्छवी बंशका क्षत्रिय राजा राज्य गर्दछन्। ती विद्वान निर्मलचरित्र र उदारचेता पुरुष छन्। बौद्ध-धर्ममा तिन्को ठूला विश्वास छ' भनी लेखेका छन्। २५ सौ राजा शिवदेव द्वितीय को विवाह मगधराज आदित्यसेनकी नातिनी मौखरी राज भोगवर्मा कि राजपुत्री वत्सादेवी सँग भएको थियो। २६ सौ राजा जयदेव द्वितीय परचक्रकाम किंवा गुणकामको विवाह गौड उड्र कलिङ्ग र कोशलपति हर्षदेव को पुत्री राज्यमतीको साथ भएको

थियो। पर्वते वंशावलि मा "राजाशंकर देवका चतुर्थ पुस्ताका जय गुणकाम देवले इ० ७१३ मा काठमाण्डू नगर बसाएका थिए" भन्ने लेखेको छ। ती राजा गुणकाम वा परचक्रकाम जयदेव इनै लिच्छवी राजा जयदेव द्वितीय हुन्। इनी नेपालका अन्तिम लिच्छवी राजा भएका थिए।

## ७—नुवाकोटे महासामंत राजाहरुको वंशावली।

नेपालका अन्तिम लिच्छवी नरेश संतानहीन जयदेव गुणकाम स्वर्ग भए पछि नुवाकोटे महासामन्तहरुले नेपालमा आफ्ना कुलश्रेष्ठ श्री भास्करवर्मा लाई राजा बनाएका थिए। राजा भास्कर वर्माका ५ पुस्ता ले नेपालको राज्य गरे। १ भास्करवर्मा २ बालदेव ३ पद्मदेव ४ नागार्जुनदेव ५. शंकरदेव, इन्ले पाटनमा यज्ञकुंड बनाएका थिए। अघि शंकराचार्यका प्रचारका रीसले विलसानगरका बौद्धहरुले ७०० ब्राह्मण हरुलाई आगो लगाई मारेको हुँदा, ती ब्राह्मणका पत्नी हरुले सती भई, अपराधि बौद्धहरुलाई श्राप दिएर भस्म गरेर पनि तृप्त न भइ छल गरी मार्गका बटोहीहरुलाई दुःख दिने गरेका थिए। त्यसका शान्तिका निमित्त राजा शंकरदेवले शान्तेश्वर महादेवको स्थापना गरे। इन्लाई सूर्यवंशी राजपुत्र वामदेवले पाटन र कान्तिपुरका भारदारहरुका सहायताले मारी नेपालमा आफ्नो राज्य कायम गरेका थिए।

## ८—सूर्यवंशी राजवंशका नेपालका राजाहरुको वंशावली

१—वामदेवका बाह्र पुस्ताले नेपालमा राज्य गरे। २ हर्षदेव ३ सदाशिव देव, इन्ले कलिगत ३८५१ मा पशुपतिनाथका मंदिरको छाना बनाएका थिए। इनैका पालामा कीर्तिपुर गाँऊ बसेको थियो। नेपालमा सबभन्दा पहिले सुकि नामक (फलाम र तामाका संमिश्रणले बनेको) मुद्रा (टक) को प्रचलन इनैले गरेका हुन्। ४ मानदेव ५

नरसिंहदेव ६ नन्ददेव ७ रुद्रदेव ८ मित्रदेव ९ अरिदेव, इन्लाई मल्लयुद्ध अत्यन्त प्रिय थियो। इन्ले मल्लयुद्ध खेलिरहेका वखतमा पुत्र जन्मको खबर सुनेर पुत्रको नाऊँ 'मल्ल' राखे, त्यसै ले राजा अरिदेव पछिका सूर्यवंशी राजा हरुले आफ्ना नाऊँका साथ मल्ल लेखन थालेका हुन्। १० अभय मल्ल ११ जयदेवमल्ल, इन्ले आफ्ना भाई आनन्द मल्ल लाई भाँदगाऊको राज्यासन दिएका थिए। राजा जयदेवमल्लका अनुमतिले आनन्दमल्लका राज्यकालमा भाँदगाऊको साखवाल नामक कुनै शूद्र वणिकले प्रजाजन लाई, अऋृण तुल्याएर नेपाली संवत् चलाए को थियो। नेपाली संवत् सन् ८८० का अक्टूबर महिना देखि प्रारम्भ हुन्छ।

## ९—कर्णाट वंशका नेपालका राजाहरूको वंशावली।

न. सं. ९ साके ८०१ सन् ८८९ श्रावण शुक्ल सप्तमी शनिवार का दिन दक्षिण कर्नाट देशका राजा नान्यदेवले आफ्ना विशाल सैन्यका साथ नेपाल माथि आक्रमण गरे। तिन्का सैन्यमा नायेरा स्थान वासी ब्रह्मपुत्र क्षत्रिय आचार विचार राखने मानिषहरु आएका थिए। तिनै नाएराहरूले नेपाल लाई वासभूमि बनाए पछि तिनीहरू नेवार भन्ने जातीय नाऊँले प्रसिद्ध भए। राजा नान्यदेव संग पराजित भएका राजा जयमल्ल र आनन्दमल्ला तिरहुत तिर भागेका थिए। राजा नान्यदेवले भादगाउलाई आफ्नो राजधानी बनाए। कर्णाटवंशी राजा हरूले नेपालमा छ पुस्ता सम्म राज्य गरे। १ नान्यदेव २ गंगदेव ३ नरसिंहदेव इनले चम्पापुरी भन्ने गाऊँ बसाएको थियो। ४ शक्तिदेव ५ रामदेव ६ हरिदेव कर्णाट वंशका अन्तिम राजा भए।

## पाल्पा नरेश राजा मुकुन्दसेनको आक्रमण।

राज हरिसिंहदेवका पालामा नेपालमा प्रजाविद्रोह भएको थियो।

तिन्ले त्यस् प्रजा विद्रोह लाई शान्त गरेका थिए। तर विफल विद्रोही मध्येको कुनै एक पाल्पाली मगरले आफ्ना गाऊँ पाल्पामा गई, नेपाल राज्यका वैभवको प्रशंसा गरि, पाल्पा नरेश मुकुन्दसेनलाई नेपाल माथी आक्रमण गर्ने प्रोत्साहित गरेको थियो। राजा मुकुन्दसेनले ने स. २२८ साका १०३० सन् १०९८ मा आफ्ना खस र मगर सैन्यका साथ नेपाल माथी आक्रमण गरे। आक्रमणमा विजयी भएको पाल्पाली सेनाले नेपालमा ठूलो लूट तथा उपद्रव मचाएको थियो। तिनीहरूले नेपालका अनेक देवमूर्तिहरूलाई भंग गरेका थिए। विजयोपरान्त राजामुकुन्दसेनले मत्स्येन्द्रनाथका संमुखको विशाल अर्नाको मूर्ति लाई पाल्पा पठाए। निजले विजयका खूशीमा मत्स्येद्रनाथका मूर्तिमा चढाएको सुनको हार, आद्यावधि छदैछ। त्यसै वेला देखि नेपालमा खस र मगर हरूको पदार्पण भएको थियो।

युद्धोपरान्त नेपालमा विकरालरूपले माहामारी फैलियो र समस्त पाल्पाली सेंनाको नाश भयो। राजा मुकुन्दसेन स्वयं संन्यासी भेषमा नेपालका पूर्वतिर भागेका थिए। पछि पूर्ववाट फर्कंदा नुवाकोटका देवीघाटमा तिन्को मृत्यु भयो।

## १०—वैश्य ठकुरी राजपूत नेपालका राजाहरूको वंशावली।

राजा मुकुन्दसेनका आक्रमण पछि माहामारीले ध्वंस भएको नेपालमा आठ वर्ष सम्म कोई राजा भएनन्। आठ वर्ष पछि नेपालका शुन्य राज्याशनमा फेरी नुवाकोटे वैश्य ठकुरी वंशका अनेक राजा हरुले आफ्नो अधिकार गरे। तिन्ताक कान्तिपुरमा बारह राजा, पाटनमा टोल पिछे राजा र भादगाऊमा ३ जना राजा हरू राज्य गर्दथे। इनी हरूका अनेक पुस्ताका अनगिन्तीका राजाहरूले २२५ वर्ष सम्म नेपालको राज्य गरेको थियो।

# ११—अयोध्याका राजपूत वंशज नेपालका राजाहरूको वंशावली ।

सन् इस्वीका एघारौं शताब्दिमा भारतवर्षमा यवनहरुको आवागमन भइ सकेको र तिनका आक्रमणले भारतीय आर्य राजाहरू आक्रांत भई रहेका थिए। सन् १३२२ मा अयोध्याका सूर्य वंशीय राजा हरसिंहदेव पनि महम्मुद तुगलकका आक्रमणले व्याकुल भई आफना मन्त्री कुटुम्ब परिवार र धनागार समेत उत्तरीय भारतका मिथिला प्रदेशमा आई सिमरौनगढ लाई राजधानी बनाइ बसेका थिए। ( सिमरौनगढ चम्पारन जिल्लामा बंडासान रेल्वे स्टेशनका दुई कोस उत्तरमा पर्दछ ) सन् १३३४ ने. स. ४४४ मा दिल्लीश्वर तुगलकशाहले सिमरौनगढमा पनि आक्रमण गरी देशलाई समेत खोसे। तिनैताक भगवती तुलजाभवानीले स्वप्नामा 'मलाइ लिएर नेपाल तीर जाउ" भन्ने आदेश दिएको हुँदा श्रीहरीसिंहदेव भागेर पुष्य मैन्हाका अन्तमा भादगाँउ पुगेका थिए। नुवाँकोट वैश्य ठकुरी वंशका अनेक राजाहरुका शिथिल शासनमा रहेका नेपाली प्रजाजनहरुले श्री हरीसिंहदेव लाई स्वागत साथ नेपालका राज्याशनमा बसाए। नेपालको राज्याशन पाये र हरीसिंहदेवले मूलचोकमा तुलजा भवानीको बीजमंत्रको प्रतिष्ठा गराइ, तेहारमा यात्रा गर्ने प्रचलन गराए। तेस्का तेह्रौंवर्ष सन् १३३७ मा दिल्ली नरेश तुगलक शाहले आफ्ना चैन्दी ज्वाई मल्लीक खुसुरुलाई एक लाख घोडचढी सैन्यका साथ चीन माथी आक्रमण गर्न पठाएका थिए। चीन-माथी धावा गर्न हिंडेको तेस तुगलक वाहिनीले नेपाललाई बाटो बनायेकाले नेपाल देश पूर्णतः ध्वंश भएको थियो। पछि चीन सम्राट्को प्रति विरोधले टिक्न न सकी यवन सेना नेपाल तिरबाट नै दिल्ल भागेको थियो। त्यस पछि राजा हरीसिंहदेवले नेपालको पुनः निर्माण गराए। इन्ले अठ्ठाइस वर्ष सम्म राज्य गरे। ( २ ) मोतीसिंहले [illegible] वर्ष सम्म राज्य गरे। ( ३ ) शक्तिसिंह इन्ले

बनेपा लाई राजधानी बनाई बाइस वर्ष सम्म नेपालको राज्य गरेका थिए। शक्ति सिंह ले सरसौंगात पठाइ चीन-सम्राट् बाट चीनी सम्वत् ५३५ मा राज्योचित मान र राज-मोहर पायेका थिये। (४) श्याम-सिंहदेव इ ले पन्द्रह वर्ष सम्म राज्य गरे। इन्का पालामा ने. स. ५२: भाद्र शुदी द्वादशीका दिन नेपालमा ठूलो भूकम्प गयेको थियो।

# पूर्वकाल

## १२—मल्ल वंशीय नेपालका राजाहरूको बंशावली।

पुत्रहीन राजा श्यामसिंहदेवले राजा नान्यदेवका आक्रमण कालमा पराजित भई तिरहुत तिर भागेका राजा अभयमल्लका संतान जयभद्रमल्ल लाई आफ्नी पुत्री दी उत्तराधिकारी बनाएका थिए। यसता प्रकार नेपालमा पुनः मल्ल वंशको राज्य स्थापित भयो। राजा श्यामसिंह देवका मृत्यु पछि जयभद्रमल्ल नेपालका राजा भये। ने० स० ५२९ मा० नेपालमा ध्वंस भएका मन्दिरहरु को इन्ले पूनरोद्धार गरे। इन्ले पन्द्रह वर्ष सम्म बडो धर्म कर्मले राज काज चलायेका थिये। यिनै राजा जयभद्र का वंश मा ने० स० ५२९—८८८ सम्म अर्थात तीन सौ उनसठी वर्ष संयुक्त नेपाल तथा अंश भये पछि भादगाँव पाटन र कान्तिपुरको राज्याधिकार स्थिर रह्यो (२) नागमल्ल इन्ले चौदह वर्ष सम्म राज्य गरे (३) जयजगत मल्ल-इन्ले पन्द्रह वर्ष सम्म राज्य गरे। (४) नागेन्द्रमल्ल इन्ले ग्यारह वर्ष सम्म राज्य गरे। (५) उग्रमल्ल-इन्ले पन्द्रह वर्ष सम्म राज्य गरे। (६) अशोक मल्ल इन्ले विष्णुमती र रुद्रमती नदीका माँझमा श्वेतकाली र रक्तकाली की स्थापना गरी तेस स्थानलाई पूण्य भूमि काशीधामका अनुकरणमा उत्तर काशी किंवा काशीपूर का नाउँले प्रख्यात गरेका थिये। इन्ले पाटनाक टकुरी राजाहरु लाई पराजित गरी पाटनमा समेत आफ्नो

अधिकार गरेका थिये । (७) जयस्थितिमल्ल—इन्ले अपराधी माथी अर्थ दण्ड गर्नें व्यवस्था र राज्य को रीति थिति मिलाउने अनेक नयाँ ऐन बनाएका थिये । इनै का पालामा राजाका शव का साथ प्रजाजनले घाट जानेर शव को अग्नि संस्कार गर्नें वेला मा दीपक राग गाउने प्रथा चलेको थिओ । जयस्थिति मल्ल ले ने० स० ५४२ मा आर्य तिर्थ पारी श्री रामचन्द्र लवकुश र महात्मा गुरु गोरखनाथ को मूर्ति प्रतिष्ठित गराएर ललित पाटन मा कुम्भेश्वर उन्मत्त भैरव र अगम देवताहरुको स्थापना गरेका थिये । इन्ले आफ्ना धर्माचरणले प्रजाका पूर्ण श्रद्धा प्राप्तगरेका थिये । इन्ले पैतालिस वर्ष सम्म निष्कंटक राज्य गरे (८) यक्षमल्ल वा जयमल्ल—इन्ले जगत गुरु शंकाराचार्यको मतको प्रचार गरेका थिये र दक्षिण भारत बाट माहाराष्ट्रिय ब्राह्मण झिकाइ श्री पशुपतिनाथका पूजनको अधिकार दियेका थिये : तीनैका पाल देखि पशुपतिनाथका पूजारी महाराष्ट्रीय ब्राह्मण हुने गरेका छन। इनै राजा यक्षमल्लले धर्मपाल मीननाथ लोकेश्वरको मन्दिर बनाइ तेसमा सामान्त भद्र वोधीसत्व, पद्ममणी वोधीसत्व र अन्यान्य वोधीसत्वका साथ अनेक देवी-देवताहरुको मूर्ति प्रतिष्ठित गरेका थिए। इनैले यमला भन्ने स्थानका भग्न मन्दार बाट राजा जयदेव द्वितीय गुणकामले स्थापित गरेको लोकेश्वरको मूर्ति ल्यायेर संस्कार गरी कान्तिपूरमा स्थापित गरे। हिजो आज तिन्लाई यमलोकेश्वर भन्दछन्। इनैले सन् १४५३ मा० भादगाँउका चारैतिर पर्खाल बनाइ शहर मध्यमा दत्तात्रयको मन्दोर बनाएका थिये। इन्ले ने० स० ५९२ सन् १४७२ सम्म संयुक्त नेपालको राज्य गरेका थिये । यक्षमल्लका तीन पुत्र र एक कन्या थीइन । इन्ले आफ्ना जीवन काल मानै आफ्ना राज्य को चार भाग गरी जेठा रायमल्ललाइ भादगाँऊ, माहिला रणमल्ललाई वनेपा, र कान्छा रत्नमल्ललाई काठमांडु, तथा छोरी

धर्मवती लाई पाटनको राज्य दियेका थिये । पिताका शेष पछि तीन छोरा र छोरी धर्मवती ले आफ्ना आफ्ना अंशका राज्यको रजाँइ गरेका थिये।

## पाल्पाका सेन वंशी राजाहरूको वंशावली।

अब यहाँ इतिहास कालको क्रम मिलाउनलाई सेनवंशीय पाल्पा नरेश हरूको वर्णन गर्नु परेको छ । जुन वेला राजा हरिसिंह भादगाऊँमा आफ्नो अधिकार गरी पाटनका मंत्री तथा भारदारहरूको विद्रोहलाई दबाई आफ्ना अधिकारमा गरीरहेका थिए। ठीक त्यै वेला पश्चिम पाल्पा नरेश पाल वंश विजेता सेन वंशोद्भव मुकुन्दसेनको शक्ति निकै बढि रहेको थियो । तिनका "खस" "मगर" हरूका बहादुर सैन्य वरीपरीका राजाहरुलाई आतंकका कारण बनेका थिए तथा तिनी हरू क्रमशः पाल्पानरेशका प्रभावमा हुँदै गएका थिए । तिनूताका नेपाल (खाल्टो) राज्य, वरीपरीका राज्यहरुमा निकै समृद्धिशाली मानिएको। राजा मुकुन्दसेनका मनमा नेपालको विजयलालसा उत्पन्न भयो । त्यै अवसरमा पाटन राज्यको कुनै एक पाल्पाली सैनिक सुधन्वा मगरलाई पाटने हरूले मुकुन्द सेनको चर संझी कूटपिट गरीनिकालेका थिए। त्यसैले त्यो मानिस पाल्पा पुगी स्वर्णमयी नेपालको वैभवको प्रचार गर्न हिड्न लाग्यो । त्यो खबर राजा मुकुन्दसेनले पनि सुने । त्यस वखत तिन्को चिरसंचित अभिलाषा प्रज्वलित भएकोले निजले नेपाल विजय गर्न आफ्ना अजेय खस र मगरहरूको सैन्य लिएर पाटन पुग्दा भए। यस प्रकारले हठात् विशाल सैन्यका साथ मुकुन्दसेनले आफ्ना माथि आक्रमण गरेको देखी हरिसिंह देवले अगाडी बढी मुकुन्दसेनको सामना गरे, तर सफल भएनन् । विजयी पाल्पालीहरू चढदै पाटन भित्र पुगे तथा त्यहाँका अनेक मंदिर देवमूर्ति लाई समेत् विध्वंस गर्दै ठूलो लूटपाट मचाई देशवासी मा अकथनीय अत्याचार गरेका थिए । त्यसवेला मदोन्मत्त विजयी पाल्पाली सैनिकहरूका अत्याचारको प्रतिकार गर्ने कोही भएनन्

त्यसै बेला स्वयं दैवले त्यस् अत्याचारको प्रतिकार गर्न आँटे झैं नेपालका चारै तिर महामारी फैलिन थाल्यो। राजा मुकुन्दसेनका खस तथा मगर सैन्य प्रायः सबै रोगले ग्रसित भई धमाधम मर्न लागे। यस्ता अवस्थामा मुकुन्दसेन किंकर्तव्य विमूढ भई संन्यासी भेष धारण गरी आफ्नो जीवन बचाउन नेपाल बाट भागे। स्वदेश पाल्पा तिर जाँदा मुकुन्दसेनको मृत्यु नुवाकोटका देवीघाटमा भएको थियो। त्यसै बखत राजा मुकुन्दसेनले श्री मत्स्येन्द्रनाथका प्रतिमालाई सुवर्णहार अर्पण गरेका थिए। त्यो हार अद्यावधि प्रतिमामा छँदै छ। तिनले मत्स्येन्द्रनाथ मंदिरका संमुख राखिएको अर्नाको प्रतिमा आफ्ना राज्यको बुटौल भन्ने ठाउँमा पठाएका थिए। यसै युद्धमा आएका खस र मगरहरू मध्ये अनेक नेपाल देशमा बसे र नेपाली प्रजाजन भएका थिए।

राजा मुकुन्दसेनका आक्रमण कालमा नेपाली प्रजाले शत्रु भयले आफ्नो राशन चामल र मुलाहरू लाई भूमिमा गाडेर राख्ने गरेका थियो। पछि शत्रु भय बाट उन्मुक्त भएर नेपाली हरूले गाडेर राखेका त्यो चामल मुलाहरू झिकेका थिए। अनेक समय सम्म भूमिका रहेका ले त्यो चामल र मुलाहरूमा यउटा विचित्र स्वाद आएको थियो। त्यसैले पछि कृत्रिम रूपले चामल र मुलालाई गाडेर 'हकुवा" चामल र "सिन्की" मुला बनाउने चलन नेपालमा चलेको हो।

निःसंतान राजा मुकुन्दसेनका मृत्यु पछि निजका सगोत्री भाई श्री धर्मसेन पाल्पाधिपति भए। राज धर्मसेन र नेपाल नरेश हरिसिंहदेवको सम्बन्ध मैत्री पूर्ण थियो। राजा धर्मसेन आफ्नी माताका साथ तुलजा भवानी र श्री पशुपतिनाथको दर्शनार्थ नेपाल आएका थिए। तिनले नेपालका कुनै एक सद्वंशीय क्षत्रिय कन्याको पाणिग्रहण गरी पाल्पा लगेका थिए। राजा धर्मसेनका दुई छोरा राजसेन र अभयसेन नामका थिए। कुमार अभयसेन अति लम्पट तथा विषयी भए पनि दाजूका पूर्णप्रेमपात्र थिए। राजा धर्मसेनका मृत्यु पछि राजसेन श्रीतुराजसेनका

भाँऊले प्रसिद्ध भई पाल्पाका सिंहासनमा बसे। इनका दुई छोरा प्रेमराज र क्षेमराज भन्ने थिए। एक दिन अकस्मात् कुमार अभयसेनको मृत्यु भयो। भ्रातृप्रेमी राजा ऋतुराजसेन अतीव दुःखित भए। यसै बीचमा युवराज प्रेमराजसेनको पनि मृत्यु भयो। एकै पटक भाई तथा जेठा छोराका मृत्यूले ऋतुराजसेनका मनमा वैराग्य उत्पन्न भयो। एकादस तिनि आफ्ना कान्छा छोरा क्षेमराजलाई लिएर तीर्थाटनका निमित्त निस्कदा भए। यस्ता प्रकार राजा ऋतुराजको त्यो यात्रीदल अनेक तीर्थ हरू गर्दै हरिद्वार बाट कुरुक्षेत्र पुगेको थियो। तिन्ताक हिन्दुस्तानमा तैमूरलंगका सेनाले ठूलो उत्पात मचाएको थियो। कुरुक्षेत्रका नजिकैमा तैमुरी सैन्यको कुनै एक जत्था सित निज ऋतुराजसेनका दलको अकस्मात् भेट भयो। लुटेरा तैमूरी सैन्यले अर्थ लोभवश त्यस दल माथी आक्रमण गऱ्यो। त्यस हुलमा सन् १३४६ मा अनेक यात्रीहरूका साथ ऋतुराजसेन को मृत्यु भएको थियो। युवराज क्षेमराजसेन ज्यान बचाइ भागेर मुश्किल साथ पाल्पा पुग्दा भए। पुत्रका साथ राजा ऋतुराजसेन तीर्थाटनलाई निस्के पछि युवराज क्षेमराजसेन पाल्पा न फर्के सम्म पाल्पा राज्यको रक्षाको अहिभारा मंत्रीहरू माथा थियो। त्यस अवस्थामा लोभ वश नियंत्रण शून्य बेईमान मंत्रीहरूले नेपालका वर्तमान कँवरखलक राणा मुख्तियारहरू सरि, स्वयं राजा तुल्य भई जम्मै धन रत्न आफ्ना घरमा ओसारी राजकोष लाई रिक्त गराई सकेका थिए। राज्यको त्यस्तो दुरावस्था देखि धैर्यका साथ क्षेमराजसेनले कूटनीतिले आफ्ना सत्तोपहारी बेइमान मंत्रीदलको दमन गरी पुनः ऐश्वर्यका साथ पैतृक सिंहासन लाई प्राप्त गरे। इनका पछि इनका छोरा वीर श्रेष्ठ चन्द्रभक्तसेनले राज्यभार पाए। इनले मकवानपुर, भिरकोट, गरहूँकोट आदि इलाकालाई विजय गर्ने प्रयत्न गरे तर सफल भएनन्। राजा चन्द्रभक्तसेन साधु स्वभाव तथा विद्वानहरूको आदर गर्दथे। इनका शेष पछि इनका पुत्र रुद्रसेन पाल्पा का राजा भए। रुद्रसेन अति स्त्रैण तथा लम्पट प्रकृतिका हुनाले विलासी

समस्त समय महलका सैंकड़ा सुन्दरी रमणिहरूका बीचमा बित्दथ्यो। इनका राजत्व कालमा गोरखाली हरू बराबर सतहुँ गह्रौंकोट धुरकोट मालकोट, आदि गरिएका पाल्पाली इलाका लाई दबाउदै गएका थिए। विषयाशक्त रुद्रराजसेनले त्यसको प्रतिकार गर्न सकेनन्। इनका दुई पुत्र मुकुन्दसेन द्वितीय र प्रेमराजसेन भन्ने थिए। पिताका जीविता-वस्थमा मुकुन्दसेन द्वितीयले रिसिङ्ग र राजपुर दुइ इलाका लाई विजय गरेको थियो। राजा रुद्रराजसेनका मृत्यु पछि मुकुन्दसेन द्वितीय पाल्पाका राज्यसिंहासनमा बसे। इनको सदाशयता, नीतिपरायणता तिनताका निकै प्रसिद्ध भएको थियो। सम्पूर्ण प्रजा इनलाई "मुनि महाराज" का नामले संबोधित गर्दथे। इनका ५ छोरा, पृथ्वीसेन, भृंगिसेन, लक्ष्मणसेन चन्द्रचूडसेन र रामप्रतापसेन नामका थिए। रामप्रतापसेन लाई कुनै र इतिहासज्ञहरू राजा मुकुन्दसेन द्वितीयका भाईका छोरा मान्दछन्। वृद्धावस्थामा मुकुन्दसेन द्वितीयले आफ्ना राज्य पाल्पा, तनहु, रिसिङ्ग मकवानपुर र राजपुर लाइ पाँच पुत्रहरूमा ५ भाग गरि बाँडेर आफुले वानप्रस्थाश्रम ग्रहण गरेका थिए। तिनले आफ्नो अन्तिम समय त्रिवेणी नामक स्थानमा बिताएका थिए। यस किसिमले राजा मुकुन्दसेन द्वितीय का छोरा हरू मध्ये जेठा पृथ्वीसेन पाल्पाका, मझिला भृंगिसेन तनहूका, माहिला लक्ष्मणसेन मकवानपुरका, ठाइला चन्द्रचूणसेन राजपुरका तथा कान्छा रामप्रतापसेन रिसिङ्गका स्वतंत्र राजा भएका थिए।

## पाल्पाका सेन वंशी राजाको वंशावली।

राजा मुकुन्दसेन द्वितीयका जेष्ठपुत्र राजा पृथ्वीसेनका पछि इनका छोरा फिरोजसेन पाल्पाका राजा भए। इनका पछि क्रमशः जगदीश्वर सेन भूपसेन, अहिवर्णसेन, गन्धर्वसेन, उदितसेन, मुकुन्दसेन र महादत्त-सेनहरूले गोरखपुर पर्यन्तको पाल्पा राज्यको शासन बड़ा योग्यता पूर्वक चलाएका थिए। महाराजा महादत्तसेनको नेपालका महाराजाधिराज रण

बहादुर शाह सित मैत्री हुँदा निजले चौबीसी राज्य विजयमा गोर्खाली हरूलाई मद्दत दिएका थिए। पछि अधर्मपूर्वक राजा महादत्तसेन लाई महाराजाधिराज रणबहादुर शाहले कैदी बनाई पाल्पाको पार्वत्य प्रदेश-लाई नेपाल साम्राज्यान्तर्गत गरेका हुन्। नेपाल राज्यान्तर्गत पाल्पा प्रदेशका प्रथम बडा हाकिम बीरवर अमरसिंह थापा भएका थिए। राजा महादत्तसेनका छोरा कुमार रत्नसेन गोर्खाली हरूबाट उम्की पाल्पा राज्यको तराई प्रदेशका "निचलौल" भन्ने स्थानमा आफ्नो राजधानी कायम गरी बृटिश भारतका जमींदार राजा भई बसे। राजा रत्नसेनका पछि छोरा लक्ष्मीसेन र अन्त्यमा अपुत्रक राजा रामदुर्लभसेनका मृत्यु पछि कुनै वारिस खडा न भएकाले निचलौलको त्यो भूभाग बृटिश भारत मा संमिलित भएकोले आज भारतीय संघका अधिकारमा छ।

## तनहूँ राज्यका सेन वंशी राजाहरूको वंशवाली

राजा मुकुन्दसेन द्वितीयका माहिला छोरा, भृंगिराजसेन पछि तिनका छोरा हम्मीरसेन तनहुँका राजा भए। इनले पिताका पालामा तराइको वर्तमान रामनगर राज्यको १५ तप्पाका प्रबन्धकार्य, र बेतिया राज्यको झगडाले गर्दा तराईमा बस्तु परेको थियो। त्यसैले तिनको स्वास्थ बिग्री सके को थियो ता पनि राज्यासन पाई योग्य मन्त्री रणभंजन थापाका सहायताले इन्ले शासनकार्य राम्ररी चलाएका थिए। यसै बीचमा राजा मुकुन्दसेन द्वितीयका कान्छा पुत्र रिसिङ्गका अपुत्रक राजा रामप्रतापसेना को मृत्यु भए पछि रिसिङ्ग राज्य पनि तनहुँमा संमिलित भएको थियो। त्यसै बेला बेतिया नरेशले तनहुँका तराईका इलाकामा पसि उपद्रव गर्न थाले। त्यस झगडामा पंच भएर स्वयं दिल्ली सम्राट् अकबर ले तनहुँ तथा बेतियाको सीमाना निर्धारित गरि दिएको थियो। अकबरशाहको त्यो फैसला समेत ... [illegible] ... तिनीहरूको बिवाद घट्ने स्थानमा बढ्दै गयेको थियो। त्यसै अवस्थामा राजा हम्मीरसेन निःसंतानि भइ मरेकाले

बेतिया राज्यले तनहूँका रामनगरको एघारह तप्पा दबाउदै गएका थिए। राजा हम्मीरसेनका मृत्यु पछि मुकुन्दसेन द्वितीयका ठाइला पुत्र राजपुर नरेश चन्द्रचूडसेनका वंशज, राजा अर्जुनसेनका कान्छा छोरा तुलासेन ले तनहूँको राज्यासन पाए। अपरिपक्कवयका तुलासेनले बेतिया नरेश ले तनहूँ राज्यको दबाएको भूभाग उकास्ने मौका पाएनन्। राजा तुलासेनका मृत्यु पछि निजका नाती दामोदरसेन (दामोदरसेनका पिता युवराज प्रतापसेनको मृत्यु आफ्ना पिता राजा तुलसेनका जीवितावस्थामा भई सकेको थियो) तनहूँ राज्यसिंहासनमा बसे। निजका भाई दयासेन ...राज्यका शासक भए। राजा दामोदर सेनका पालामा राजपुर नरेश ...नि:संतानी भएकाले त्यो राज्य तनहूँ राज्यमा संमिलित भयो। ...वेला पुनः राजपुर राज्यमा अधिकार गर्न बेतिया नरेशले निकै ...शक्तिको प्रयोग गरेका थिए। तर तनहूँ राजका तात्कालिक मंत्री तथा सेनापति दलमर्दन थापाका वीरताका संमुख बेतिया नरेशले अनेक ...हार मानी फर्कनु परेको थियो। दामोदरसेनका मृत्यु पछि इनका छोरा दिग्विजयसेन सन् १६७३ मा तनहूँका सिंहासनमा बसे। राजा दिग्विजय-सेन बुद्धिमान् विचारवान् तथा राजनीति कुशल व्यक्ति थिए। इनले दिल्लीश्वर औरंगजेबका समीप नौकुंजर हाती कस्तुरी चावल मह ...नजराना स्वरूप पठाई निज द्वारा राजा पदवीधारी हरिहरपुर (आधुनिक चम्पारन जिल्लाको ११ तप्पाको प्रबन्धक) को सनदपत्र ...का थिए। बुद्धि कौशल र शक्ति बलले राजा दिग्विजयसेनले बेतिया नरेशले दबाउदै लगेको आफ्नो समस्त भूभाग लाई पुनः आफ्नो अधिकारमा गरे। राजा दिग्विजयसेन पछि इनका पुत्र श्री कामराजसेन सन् १७१४ मा तनहूँका राजा भए। इनै राजा कामराजसेनकी छैन्हीका ...मा (आफ्ना मावलीमा) नेपालका प्रथम गोर्खाली महाराजाधिराज पृथ्वीनारायणशाहका पिता गोर्खानरेश महाराजा नरभूपाल शाहको जन्म

भएको थियो। राजा कामराज सेनले त्यस बेलाका दिल्लीश्वर फरुक्सियार लाई प्रसन्न गराई आफ्नो तराई प्रान्तको राज्यलाई १५ तप्पा सम्म पुऱ्याएका थिए। इनका पछि इनका पुत्र त्रिविक्रमसेन सन् १७४९ मा तनहूँ का राजा भए। इनका शासन कालमा दिल्लीका मोगल सम्राट्को शक्ति क्षीण हुँदै गएको थियो। तिन्ताक भारतमा अनेक शक्ति हरु आफ्ना २ राज्यविस्तारमा प्रयत्नवान् भई रहेका थिए। इनै ताक उत्तरीय पार्वत्य प्रदेशमा गोर्खालीहरुको गौरव सूर्य उत्तरोत्तर आफ्ना सर्वाङ्गीण कलालाई प्रस्फुटित गर्दै थियो। राजा त्रिविक्रमसेनले बंगालका पठान सेनापति द्वारा लखारिएका, आफ्ना वंशका चिर प्रतिद्वन्दी वेतिया नरेशलाई शरण दिएका थिए। सन् १७३४ मा इनको देहावसान भयो। पछि इनका पुत्र कुमारीदत्तसेन तनहूँका राजा भए। इनका कुमारि दत्तसेन, हरिकुमारदत्त, जानकीदत्त र कामेश्वरदत्त नामका ४ भाई छोरा थिए। राजा कुमारीदत्तका पालामा गोर्खातिले तनहूँ माथि आक्रमण गरे। त्यस युद्धमा राजा कुमारीदत्तले बडा वीरता पूर्वक गोर्खाली हरूको सामना गरी वीरगति पाए। राजा कुमारीदत्त सेनको मृत्यु भए पछि तनहूँ राज्य माथि गोर्खाली हरुको अधिकार हुन आयो। तनहूँको पतन पछि गोर्खाली हरु द्वारा विताडित राजकुमार हरिकुमारदत्त, जानकीदत्त, कामेश्वरदत्त, भागेर सोमेश्वर पर्वत वाट झरी सन् १७८२ मा चम्पारन जिल्लाका रामनगर भन्ने तनहूँ राज्यको तराई प्रान्तमा आएका थिए।

## रामनगर जमीन्दारी राज्य

नेपालराज्यका दक्षिण सीमा स्थित, ठोरीका पश्चिम दक्षिण, गोरखपुरका पूर्व, वेतिया राज्यका पश्चिमोत्तर भागमा वर्तमान रामनगर राज्य पर्दछ। यस राज्यको राजधानी प्रथम हरिहरपुर गढी. कोटवंजरिया पछि-सबुर्ना, शाल मुडिला ग्रामान्तर हरिहरपुर भन्ने स्थानमा पर्दछ।

…रोक सेन वंशीय राजकुमारहरू तनहूँ बाट भागी यहीं आई पगेका …सम्म चम्पारन जिल्लामा इष्ट इन्डिया कम्पनीको अधिकार भई …कम्पनी तिर बाट त्यसको बन्दोवस्त हुन लागेको थियो । त्यसै बन्दोवस्तीमा …की दत्त सेनले रामनगर राज्य हाम्रा पुर्खाहरूले बाहुबलले कमाएको हो, …को बन्दोवस्त हामीले पाउनु पर्छ भन्ने कोशीस पुऱ्याई रामनगर …लाई आफ्ना नाऊँमा दर्ता गराए । वंशपरंपरागतले राज्यको …विक अधिकारी जेठो दाज्यू हुने हुदाँ निजले आफ्नो त्यों अधिकार …दत्त कुमारसेन लाई दिए । यस्ता चालले तनहुँका सेन राजाहरुमा …प्रथम राजा भई हरिदत्त कुमार सेनले रामनगर राज्यको शिलान्यास …तहाँ आफ्नु बसाऔ गरे । इनले तनहुँ राज्यको १२ तप्पा तराई …जसलाई बेतिया राज्यले इष्ट इन्डिया कम्पनीका बंदवस्तीमा आफ्ना …मा दर्ता गराई सकेको थियो, फिर्ता गराउन ठूलो प्रयत्न गरे, तर …ता मिलेन । त्यसै तापले २० जून १८०५ मा इनको देहा- …न भयो ।

राजा हरिदत्त कुमार सेनका चार रानी २ तीन पुत्र थिए । जेठा …रा अनन्तप्रताप सेन बाबूका पालामा परलोक भइ सकेका हुँदा निजका …छोरा तेजप्रतापसेन रामनगरका राजा भए । कान्छा अमरप्रताप …दाज्यू सित रामनगरमा बसेका थिए ।

राजा तेजप्रताप सेन ज्यादै विलासी भएकाले इनको अधिकांश समय …विलासमा बित्थ्यो । इनका चार रानी तथा अनेक भित्रेनीहरू …। माहिली रानी तेजलक्ष्मीदेवी नेपालका महाराजाधिराज रण- …दुर शाहकी पुत्री थिईन् । पिताका जीवितावस्थामा श्रीतेजप्रताप सेन …मा बसेका वेलामा निजको विवाह भएको हो । पछि कुनै कारण …महाराजाधिराज रणबहादुर शाहले कुपित भई तेजप्रताप सेनको गुप्त …गर्ने चेष्टा गरेको थियो । त्यो कुरा थाहा पाई तेजप्रताप सेन भागेर …मनगर आए । श्रीतेजप्रताप सेन भागेर आए पनि रानी तेजलक्ष्मी

नेपालैमा थिइन्। तिनको मृत्यु नेपालमा भयो। रानी तेजलक्ष्मीका मृत्यु पछि निजको दाइजो भीखना ठोरीको ५१ गाऊँ राजा रणबहादुर साहले पुनः नेपाल राज्यमा मिलाए।

श्रीतेजप्रताप सेनले नेपालमा भएको आफ्नो बेइज्जति बिर्सेका थिएनन्। निजले राजा भए पछि अँग्रेज गोर्खा युद्धमा जनरल आक्टर-लोनीलाई ठूलो सहायता दिए तथा आफ्ना भाई अमरप्रताप सेनलाई अंग्रेजी सैन्यका साथ रणक्षेत्रमा पठाएका थिए। अस्तु।

पछि कुनै एक "लक्ष्मीदया" नामकी केटीका बाबत दुवै दाजु भाईमा मनोमालिन्य भयो र अमरप्रताप सेनले रामनगर छाडी रिसिंग गई बस्नु परेको थियो। माइका रीसले राजा तेजप्रताप सेनले सन् १८१० मा आफ्नो उत्तराधिकारी बनाई जेठी रानी श्रीतिलोत्तमादेवीलाई आफ्नो वारिस बनाए। यो कुरा विदित हुना साथ अमरप्रतापले त्यस बकसपत्र-लाई खारेज गराउने प्रयत्न गरेका थिए, तर सफल भएनन्।

अन्तमा सन् १८३२ मा राजा तेजप्रताप सेनको देहावसान भए पछि रानी तिलोत्तमादेवीले बकसपत्र बमोजिम राज्यलाई आफ्ना नाममा दर्ता गर्न चम्पारण कलेक्टरीमा दरखास्त दिइन्। अमरप्रताप सेनले पनि भ्रातृक्रमले रामनगरमा मेरो अधिकार छ भन्ने कलेक्टरीमा दरखास्त दिएका थिए। त्यस मुद्दामा कलेक्टरी र कमिश्नरी बाट रानी तिलोत्तमादेवीले जितापत्र पाएकाले मुद्दा पुनः देवानी सम्म पुग्यो तर अमरप्रतापले ठूलो जालसाजी गरी भाउज्युलाई भुल्याई सुलह गरी सन् १८३४ ई० मा रामनगरको राज्य पाएका थिए। इनका कुनै संतान न भएकाले इनका शेष पछि जेठी रानी श्री अमरराजलक्ष्मी देवी रामनगर की रानी भई सन् १८५० सम्म त्यहाँ को रजाई गरिन्। यसै बीचमा रानी अमरराजलक्ष्मी रामनगरेश्वरी भएको थाहा पाई राजा अमर-प्रताप तिरका सेन वंशीय नातादारहरूले कलेक्टरीमा दरखास्त दिई त्यस राज्यमा आफुलाई हकदार बनाउने प्रयत्न गरेका थिए। तिनीहरूको मुद्दा

न्हदा चल्दै रानी अमरराजलक्ष्मीको मृत्यु भयो। निजका मृत्युले गर्दा रामनगर राज्यलाई वेवारिस ठहराई त्यसको प्रबन्ध गर्न कम्पनी तिरबाट दुई मानिस नियुक्त गरेको थियो। पछि ता० २७ जुलाई १८४५ मा न्यायालय बाट अरुहरूको मुद्दा खारेज गरी प्रह्लाद सेनलाई रामनगर को अधिकार मिल्यो। रण मर्दन सेन पत्नी सजदाकका तर भिन्नेनी पुत्र हुँदा राज्य बाट ५००) महीना भत्ता पाउने भए। राजा तेजप्रताप सेनका रानी कान्तादेवीलाई पनि राज्य बाट केही भत्ता ठेकियो।

राजा प्रह्लादसेनका श्री लक्ष्मीकुमारी, श्री विंधवासिनी, श्री नर्मदा देवी नाउँका तीन रानी थिए। जेठी रानी लक्ष्मीकुमारी बाट श्री तेजबहादुर सेन, श्री यज्ञप्रताप सेन श्री मुकुन्दप्रताप सेन ३ पुत्र तथा श्री मानकुमारी र बोधकुमारी नामका २ छोरी थिए। ती पाँच सन्तान मध्ये बोधकुमारी वाहेक अरुहरूको बाल्यावस्थामानै मृत्यु भएको थियो। यस राजकुमारी बोधकुमारीको विवाह नेपालका महाराजाधिराज राजेन्द्र विक्रमशाहकी श्री ५ माहिला बडा महारानी राजलक्ष्मीदेवीका कनिष्ट पुत्र शाहजादा वीरेन्द्र विक्रमशाह सित बनारस आएका बखत भएको थियो। इनैका पुत्र शाहजादा मोहन विक्रम शाह हुन्।

राजा प्रह्लादसेन ता० १८ सेप्टेम्बर १८७१ का दिन श्री प्रयाग क्षेत्रमा मुक्त भए। आफ्ना मृत्युका पछि ता० ११ अगस्त १८७३ मा शाहजादा मोहन विक्रमशाहलाई आफ्नो उत्तराधिकारी बनाई एउटा वसियत नामा लेखि दिएका थिए। यो कुरा राजका मुख्तार लाला शिवदयाल सिंह बाहेक अरु कसैलाई थाहा थिएन।

राजा प्रह्लादसेनका देहान्त पछि सरकारले राज्यलाई प्रथम कोर्टस का अन्तर्गत गरेको थियो। तर रानीहरूका आवेदनले गर्दा एक वर्ष पछिमा रानी हरूका अधिकारमा राज्य परेको हुँदा शाहजादा मोहन विक्रमशाहले आफुलाई राज्यको वास्तविक वारिस हुँ भन्ने लिखित प्रमाण पर न देखा उन्जेल रानीहरू नै राज्यका मालिक थिए। पछि शाहजादा

मोहन विक्रम शाहले सन् १८८९ मा आफ्नो लिखित प्रमाण द्वारा राज्याधिकार प्राप्तगरी सन् १९३२ सम्म रामनगरको राज्य गरे। यो देखि पाल्पा, तनहूँ, राजपुर, मकवानपुर आदि राज्यका सेन वंशीय राजा हरूको चिन्हावशेष रामनगर राज्य पनि अन्तमा नेपाल शाहवंश एक शाखाका अधिकारमा आयो।

राजा मोहन विक्रमशाह उदारचित्त तथा विलासी प्रकृतिका मानिस थिए। इनका दरबारमा गुणी हरूको कदर गरिन्थ्यो। इनका चार रानी मध्ये जेठी राजकुमारीदेवी गोरखपुर कौशिक वंशीय ठाकुरकी पुत्री, माहिली रानी बालकुमारीदेवी नेपाल राज्यान्तर गत मल्लजी पर्वत श्री दुर्गदत्त शाहीकी कन्या, साहिली रानी गहौंकोट निवासी शक्ति खानकी पुत्री, तथा कान्छी रानी क्षेत्रकुमारीदेवी गहौंकोट राजाका पूर्णचन्द्र खानकी पुत्री थिइन्। चारै रानीहरूमा कान्छी रानी बाहेक अरु रानीहरूको मृत्यु राजा मोहन विक्रमशाहका जीवितावस्थामानै भइसके काले निःसन्तानी राजा मोहन विक्रमशाहले रानी क्षेत्रकुमारी लाई १९०२ मा विलगरी आफ्नो उत्तराधिकारी गराएका थिए। फेरि साल निजले राजा प्रिंस मोहन विक्रमशाह श्री राम राजा दत्तक गरि आफ्नो उत्तराधिकारी बनाई विल लेखि दिए। पछि कारण पुनः राजा मोहन विक्रमशाहको मत परिवर्तन भई निजले विल आफ्ना शेष पछि जीवनकाल सम्मको अधिकार रानी क्षेत्रकुमारी लाइनै लेखि दिएका थिए।

राजा मोहन विक्रमशाहका मृत्यु पछि रानी क्षेत्रकुमारीले पाउनाका निमित्त दरखास्त दिइन्। प्रिंस श्री राम राजा द्वारा उजूर गरिएको थियो ता पनि न्यायालय बाट रानी क्षेत्रकुमारीले अधिकार पाई २७ वर्ष सम्म रामनगरको रजाई गरियो। प्रिंस राम राजालाई क्षेत्रकुमारीदेवी पुत्रवत् तथा आफ्ना शेष पछि को उत्तराधिकारी मान्दथिन्। प्रिंस रामराजा पनि वर्षको धेरै समय रामनगरमा

सँगै राजमाताका साथ बिताउँदथे । तर पछि छुच्याहा चालीहरूका कुरामा लागी माता पुत्रको फाटो हुन थाल्यो । त्यही फाटोले गर्दा सन् १९२४ मा प्रिंस रामराजाले आफ्ना अधिकारका निमित्त न्यायालयमा उपस्थित हुनु पऱ्यो । मुद्दा ३।४ वर्ष सम्म चले पछि मोतिहारीका न्यायाधीशले प्रिंस रामराजालाई रामनगरको अधिकारी ठहराएको हुँदा रामनगर राज्य राजा साहेबको अधिकारमा आयो । तर साथ साथै रानी छत्रकुमारीदेवीले पटना हाईकोर्ट मा अपील गरिन् । त्यस बाट पनि हारेर प्रिवी कौंसिलमा अपील गरि मुद्दाका पैरवी लाई बेलायत सम्म पुगिन् । प्रिवी कौंसिल बाट रानी साहिबालाई राज्यको जीवन पर्यन्त प्रबन्धक मालिक हुने अधिकार प्राप्त भयो ।

राजमाताले जीवन पर्यन्त राज्याधिकार पाएर फर्केको थाहा पाउना साथ प्रिंस रामराजाले शान्ति पूर्वक राज्यको शासन राजमाताका अधिकारमा जान दिए । त्यस कुराले गर्दा रानी साहेबका हृदयमा प्रिंस रामराजाका प्रति अविवेक गर्ने इच्छा भएन । अन्तमा ता० ३१ जनवरी सन् १९३७ मा राजमाताको मृत्यु भयो ।

रानी छत्रकुमारीका मृत्यु पछि जिलाधीश द्वारा रामनगरको वारिस ठहरी प्रिंस रामराजा साहेब रामनगरको राजा भए । इनकी रानी श्री सीता महारानी नेपालका भूतपूर्व महा मन्त्री युद्ध सम्सेर जंग बहादुरकी ज्येष्ठपुत्री हुन् । इनैका गर्भबाट श्री शिव विक्रम शाह, श्री नारायण विक्रम शाह, श्री हरिविक्रम शाह, श्री मनमोहन विक्रम शाही नामक चार पुत्र तथा श्री ईश्वरी महारानी, श्री माधवी महारानी, श्री विजया महारानी नामकी तीन छोरीहरू छन् ।

श्री ५ रामराजा साहेबको देहावसान सन् १९४६ मा भयो तथा राज्य ५ भागमा विभाजित भई सीता महारानी तथा ४ पुत्र मा बराबर बाँडिएर उनी हरूकै अधिकारमा छ ।

## मकवानपुरको वंशावली

५ राजा मुकुन्द सेन द्वितीयका साहिला छोरा स्वतन्त्र मकवानपुर नरेश लक्ष्मणसेनका वंशज रामचन्द्र सेन पछि क्रमशः राघासेन, हरि भंजन सेन, महाकुमार सेन, मानिक सेन, हेमकर्ण सेन, दर्पदलन सेन, दाम्रद्रवण सेन, कुलदीप सेन, भूपवर्ण सेन, उदयप्रताप सेन, हरुले मकवानपुरको राज्य गरे। इनमा अन्तिम राजा ( गोरखाली राजा पृथ्वी नारायण शाह का जेठान ) दिग्बन्धन सेन गोरखालीहरु द्वारा पराजित भई वृटिश भारतमा झरी आए काले मकवान पुर नेपाल साम्राज्यान्तर्गत भएको हो।

## रिसिंगको वंशावली

राजा मुकुन्द सेन द्वितीयका कान्छा छोरा स्वतंत्र रिसिंगका राजा राम प्रताप सेन निःसंतानी भई मरेकाले रिसिंग राज्य राजा हम्मीरसेनका अधिकारमा गई तनहूँ राज्यमा संमिलित भयो। पछि राजा हम्मीरसेन का पनाती तथा राजा तुलासेनका नाती दयालु सेन, आफ्ना दाज्यु तालुक लिक तनहूँ नरेश दामोदर सेनका आज्ञाले, रिसिंग राज्य सिंहासनमा बसे। गोर्खाली हरुका विजय यात्रा सम्म इनै दयालुसेनका वंशधर हरुले क्रमले यहाँको रजाई गरेका थिए।

## राजपुरको वंशावली

राजा मुकुन्दसेन द्वितीयका ठाँईला छोरा स्वतंत्र राजपुर नरेश चन्द्र चूड सेन पछि क्रमशः अर्जुन सेन, सुल्तान सेन ( तनहूँ नरेश राजा हम्मीरसेन निःसंतानी भई मरेकाले इनै सुल्तानसेनका भाई तुलासेन

तनहूँका राजा भएका थिए ) सुल्तानसेन पछि मदनसेन तथा निजका पुत्र दरगाही सेन राजपुरका सिंहासनमा बसेका थिए । दरगाही सेन निःसंतानी हुँदा पछि राजपुर राज्य प.न तनहूँ राजमा संमिलित भएको थियो। अन्तमा गोर्खालीहरु द्वारा तनहूँ विजय भएमा राजपुर समेत गोर्खा राज्यमा मिल्न गयेको हो ।

# भादगाऊका मल्ल वंशीय राजाहरुको वंशावली

नेपाल तीन राज्यका अधिपति राजा यक्ष मल्लका जेठा ( १ ) छोरा राय मल्ल बाबुका शेष पछी भादगाऊका राजा भए। इन्का छोरा ( २ ) सुवर्णमल्लका राज्य कालमा नेपालमा अकाल परेको थियो। सुवर्णमल्ल ले स्वप्नामा नऊ दुर्गाले नृत्य गरेको देखी नव दुर्गाको नाच र ठिमिका उत्तर बुडे गाऊमा महालक्ष्मीको नाचको चलन चलाएका थिए। इन्का शेष पछि ( ३ प्राणमल्लले १५ वर्ष, ( ४ विश्वमल्लले १५ वर्ष भादगाऊको राज्य गरे। विश्वमल्लले काठमाण्डू नरेश बाट आज्ञा लिई पशुपतिनाथका चारै तिर चार नारायणको स्थापना गरेका थिए। इन्ले ताचायऊको दत्तात्रयको ३ तले मंदिर अनेक मठ तथा देवहरु बनाई त्यसको गुठी स्थापित गरेका थिए। पछि क्रमशः त्रैलोक्य मल्ल र जगज्योति मल्ल राजा भए। दुवैले ८५।१५ वर्ष राज्य गरे। भगवती तुलजा भवानी प्रत्यक्ष भै जगज्योति मल्ल संग पासा खेल्दथिन्। एक पटक राजाका मनमा कुभाव भएको देखि अलोप भएकी हुन्। जगज्योति मल्लले मेष संक्रान्ति का दिन आदि भैरवको रथयात्राको उत्सव चलाए। इनी पछि इन्का छोरा श्री नरेन्द्र मल्लले २१ वर्ष सम्म भादगाऊको राज्य गरे। पछि पुत्र जगत्प्रकाश मल्लले २१ वर्ष राज्य गरे। इन्ले ने० स० ७८२ मा विमला स्नेह मण्डप, ने० सं० ७८७ मा गरुडध्वज स्तम्भ र अरु पनि अनेक वकीर्तिस्तम्भहरु राखेका थिए।

इनैका पालामा भादगाऊका पालटोलमा दारसिंह र वासिंह भारो नाउँका दुइ सज्जनले भीमसेन देवको मंदिर बनाएका थिए। जगत्प्रकाश मल्लले नारान् चोकमा गरुडमूर्ति स्थापित गरी शिलापत्र पनी लेखेका छन्। इनका पुत्र जीतामित्र मल्लले ५१ वर्ष सम्म भादगाऊको राज्य चलाए। इन्ले ने० ८०२ सन् १६८२ मा एउटा ३ तले धर्मशाला बनाये र त्यसमा सुवर्णको महादेव मंदिर र नारायणको मंदिर बनाएका थिए। ने० स० ८०३ मा श्री दत्तात्रयको मंदिर पनी स्थापना गरेका थिए। इनका पुत्र भूपतीन्द्र मल्लले ३४ वर्ष राज्य गरे। इन्ले ५५ झ्याल भएको तथा त्यसमा काँच जडेको ९९ चोक भएको ठूलो दर्बार बनाएका थिए। मूल चोकमा सुवर्णको ढोका थियो र प्रत्येक चोकमा देवालय स्थापित गराएका थिए। अनेक चोकमा पोखरीहरु थिए र मलती चोकमा श्रीखण्ड चन्दनको झ्याल हालेको थियो। इन्ले आफ्ना पुत्र रणजीत मल्लका सहायताले ने० सं० ८३८ मा तीन तल्ले भैरवका मंदिरमा छाता चढाएका थिए तथा भैरव मंदिरका संमुख ईश्वरी को अत्यन्त सुन्दर तथा सब भन्दा ठूलो मंदिरको पनी निर्माण गराएका थिए। पिताका शेष पछि श्रीरणजीत मल्लले बडा योग्यता पूर्वक राज्य गरे। इन्ले ने० स० ८५७ मा अन्नपूर्णाका मंदिरमा एउटा बृहात् घंट अर्पण गरेका थिए। रणजीत मल्लका शासन कालमा तीन राज्यका राजा यक्षमल्लका संतान भादगाऊ, पाटन कान्तिपुरका राजाहरुमा वैमनश्यले घर गर्न लागी सकेको थियो। त्यसै कालमा गोर्खाका युवराज पृथ्वी नारायण शाह भादगाऊ हेर्ने आइ ३ वर्ष सम्म रणजीत मल्लका पाहुना भएका थिए। त्यसै वेला पृथ्वी नारायण शाह र राजा रणजीत मल्लका पुत्र वीरनरसिंहले मैत्री लगाएका थियो।

इनैका पालामा काठमाण्डू नरेश जयप्रकाश मल्लका भाई पाटन नरेश राज्य प्रकाश मल्लले पाटनका प्रधानहरुका षड्यंत्रले आँखो भई मर्नु पर्‍यो। त्यस पछि पाटन राज्य राजा रणजीत मल्लका आधिकार

मा आयो। त्यस् कुराले राजा रणजीत मल्ल संग राजा जयप्रकाश मल्लको शत्रुता भएको थियो। त्यसै शत्रुताका फल स्वरूप वर्ष दिन भित्रैमा राजा रणजित मल्लका हात आट राजा जयप्रकाश ले पाटन राज्य लाये। त्यसैका प्रतिशोधमा राजा रणजीत मल्लले नागाहरुका सहायता ले राजा जयप्रकाश मल्ल माथी आक्रमण गर्नें विचार गरे तथ राजा पृथ्वी नारायण शाह संग मदत मगी निज लाई काठमाण्डू माथि अधिकार गर्नें प्रेरणा दिन थालेका थिए। यसै बीचमा राजा रणजीत मल्लका भित्रेनी पुत्र भाइ वहाल्यहरुले भादगाऊ राज्यलोमले राजा रणजीत मल्लका एक मात्र पुत्र वीरनरसिंहको मारण यज्ञ कोट्याहुती द्वारा मृत्यु गराए पुत्र शोकाकुल राजा रणजीत मल्ल आफ्ना गृह-कलहले विमुढ़ भएका वेलामा राजा पृथ्वी नारायण शाहले क्रमशः नालाकोट, कीतिपुर, काठमाण्डू र पाटन माथी अधिकार गरेका थिए। अन्त्यमा पराजित भई काठमाण्डू नरेश जयप्रकाश, पाटन नरेश तेज नरसिंह भादगाऊ पुगे पछि दीर्घसूत्री राजा रणजीत मल्लको आँखा खुल्यो। इन्ले राजा पृथ्वी नारायण शाह लाइ भाँदगाऊ राज्य समर्पण गरि काशीवासका निहुले स्वदेश छाड्नु पर्‍यो।

## मल्ल वंशीय वनेपाका राजाहरुको वंशावली

राजा यक्ष मल्लका शेष पछि तिन्का महिला पुत्र रणमल्लले आफ्ना अंशको बनेपा राज्यासनलाई ग्रहण गरी २१ वर्ष राज्य गरे। तिन्ताक बनेपा राज्यको सामा पूव दूध कोशी, पच्छिम सांगा, उत्तर सगा चौक र दक्षिण मेदिनामल जंगल थियो। नि:संतानी राजा रणमल्लका मृत्यु पछि बनेपा राज्य भाँदगाऊ राज्यमा समिलित भयो।

## मल्लवंशीय कान्तिपुर वा काठमाण्डूका राजाहरूको वंशावली



राजा यक्षमल्लका मृत्यु पछि तिन्का कान्छा पुत्र रत्नमल्लले नील-

तारादेवीका ईष्टले आफ्ना भागको कान्तिपुरको राज्य बारह वैश्यठकुरीहरुलाई विष खुवाई अधिकारमा गरेका थिए। त्यस वखत कान्तिपुर राज्यको सीमा पूर्व बाघमति, पश्चिम नाग गंगा, उत्तर गोसाञी थान र दक्षिण पाटन राजको उत्तरीय सीमा पर्दथ्यो। इन्ले ने० सन् ६११ मा नुवाकोट बाट वैश्यठकुरीहरूको अन्त गर त्यसलाई आफ्ना राज्यमा मिलाए। इन्का राज्यकालमा काठमान्डू माथि "कुकु" थरीका भोटेहरूले आक्रमण गरेका थिए। त्यस आक्रमणमा देवग्रामवासी ४ जना तेहुँते बाहुनहरूले आफ्ना शिष्य पल्पा नरेशका सेनाका मदतले भोटेहरूलाई कान्तिपुर बाट भगाए। त्यसका प्रत्युपकारमा राजा रत्नमल्लले तेहुँते बाहुनहरूलाई ठूलो मानका साथ घर खेत विर्ता दिएका थिए। त्यसै वेला देखि कान्तिपुर दरबारमा तेहुँते बाहुनहरूको प्रवेश तथा प्रमुखता भएको थियो। राजा रत्नमल्लका पाला देखि नेपालमा काश्मिरी मुसलमानहरूको आवागमनको प्रारम्भ भयो। इन्का पालामा दक्षिण बाट षडङ्गन्यायज्ञता सोमशेखरानन्द नामका ब्राह्मणलाई पसुपतिको प्रधान पुजारी बनाएका थिए। इनैले दक्षिण कालिका सहित अष्ट मातृकाको मुर्ति स्थापित गरे। इनैले शिखगढी पहाडका चितलाङ्ग उपत्यकाको तामा खानि बाट झिकेका तामाले सर्व प्रथम पैसाको टक चलाएका थिए। इन्ले ने० स० ६२१ सन् १५०१ मा तुलजा भवानीको सातु देवल बनाए। राजा रत्नमल्लले कान्तिपुरमा ७१ वर्ष सम्म राज्य गरेका थिए। २ अमरमल्ल, इन्ले खोकना महाकालि, हलचोक, मानमञ्जु देवी पचलि भैरव, लुम्रीकालि, कनकेश्वरी, घंटेश्वरी, हर सिद्धि आदिका देवमंदिरहरूमा अनेक रकमका नाच किर्तनगर्ने प्रथा चलाए तथा कंकेश्वरी र लुछुम्मेलुको प्रेत चतुर्दशीका दिन रथयात्रा चलाएका थिए। इन्को राज्य पाटन बन्धे गाऊँ थेचो हरसिद्धि वागमति वा मत्स्येनपुर, खोकना, पाँगा, कीर्तिपुर, थानकोट, वलम्बु, सतल्ङ्गा, हलचोक, फुटम् धर्मस्थलि, तीखा, चपालिग्राम, चुकग्राम, लेलेग्राम, गोकर्ण, दैवपाटन, नन्दीग्राम, नमसाल,

मार्लाग्राम या मागल सम्म फैलिएको थियो। इन्ले ४७ वर्ष सम्म राज्य गरे। ३ सूर्यमल्ल, इन्ले भादगाऊँ नरेशका सहायताले पाटन माथी आक्रमण गरेर राजा शंकरदेवले स्थापित गरेको चाङ्गुनारायण र शंखु माथि अधिकार गरी शंखुमा ६ वर्ष सम्म वज्रयोगिनीको उपासना गरे र रथयात्रा चलाएका थिए। ४ नरेन्द्र मल्ल। ५ महेन्द्रमल्ल, इन्ले भारतका मुसलमान बादशाहका सेवामा हंस तथा बाज पक्षी चढाई आफ्ना नाऊँमा ६ मासा सम्म को चाँदिको मोहर चलाउने आज्ञा पाएका थिए। इनैका पालामा नेपालमा चाँदिको मोहर चलेकोले त्यस-लाई महेन्द्रमल्ली भन्दछन्। इन्ले आफ्ना दरबारका संमुख महिन्द्रेश्वरी को स्थापना, पसुपतिनाथको देवल र तुलजा भवानीको प्रतिष्ठा गराएका थिए। इन्ले जनसाधारणले ठूलो घर बनाउन हुन्छ भनी आज्ञा दिएका थिए। इनैको पालामा पुरंदर राजवंशीले नें० स० ६८३ सन् १५६६ मा पाटनको नारायणको मंदिर बनाए। महेन्द्रमल्लका दुई रानी पट्ट र भाई छोरा थिए। ६ जेठा सदाशिवमल्ल बाबूका मृत्यु पछि कान्तिपुरका राजा भए। इन्का पालामा गया वासी पण्डित जिवराज बाऊँआ ब्राह्मणले गयाजी तुल्य ठूलो महाबुद्धी देवालय बनाए तथा तिन्का छोरा डंडी भएर जयमुनि पण्डितले काशीबाट व्याकरण र सुदमार्गी शास्त्रहरू पढि फर्केर कान्तिपुरमा बौद्ध धर्मको प्रचार गरेका थिए। सदाशिवमल्ल अति लम्पट र स्वेच्छाचारि राजा थिए। इन्ले पर्व वार्ता वा जात्रा समारोहमा आउने अनगिनित सुन्दरी नवयौवना आइहरूको बलजफत सतित्व नष्ट गर्ने गरेका थिए। प्रजावर्गमा तिन्का यस दुष्कार्यले निकै अशंतोष बढेको थियो। अन्त्यमा एक दिन भंडारा तरफ जान लागेका बखत राजा सदाशिवमल्ललाई प्रजावर्गले घर संग कुटपिट गरी भादगाऊँ तिर लखारे। भादगाऊ नरेशले पनी तिन्लाई नीच बुझी झ्यालखानमा हालेका थिए। पछि कुनै प्रकार झ्यालखान बाट उम्का नेपाल भए। कान्तिपुर बाट सदाशिवमल्ल भागे

पछि प्रजावर्गले तिनका विमातृ भाइ ७ कान्छा शिवसिंहमल्ललाइ कान्तिपुरको राजा तुल्याए। इन्ले काशीवाट कुनै एक महाराष्ट्रीय ब्राह्मणलाई भिकाई तिन्लाई राजगुरु मानी अनेक देवालय हरूको स्थापना गरेका थिए। इनैका पालामा पूर्वज राजा यक्षमल्लकी छोरी धर्मावतीका वंशज निःसंतानि मरेकाले पाटन राज्य कान्तिपुर राज्यमा संमिलित भयो। इन्का लक्ष्मी नरसिंह र हरिहर सिंह मल्ल नाऊँ गरेका दुइ भाई छोरा थिए। कान्छा हरिहरसिंह मल्ल विशेष तेजस्वी हुनाले लक्ष्मीनरसिंह लाइ केहि टेरदैन थे। पिताका अनुपस्थितिमा एक दिन तिन्ले लक्ष्मीनरसिंह लाई दरवार वाट निकालि दिए। त्यसै कारण राजा शिवसिंहदेवले आफ्ना शेषैमा हरिहरसिंह मल्ललाई छुट्याइ पाटनको राज्य दिएका थिए। राजा शिवसिंहमल्ल की गंगावती नाऊँ गरेकी अति धर्मात्मा र बुद्धिमती रानी थिइन्। रानी गंगावतीले ने० सं ७१४ सन् १५९४ मा स्वयंभूनाथको देवलको जीर्णोद्धार गरेका थिइन्। तिनैले कान्तिपुर र बुढानीलकंठका माझमा वर्तमान कालको प्रसिद्ध रानीवन बगैचा लगाए कि थिइन्। ८ राजा लक्ष्मीनरसिंहमल्ल अत्यन्त विद्वान र १५।१६ भाषाका ज्ञाता थिए। इन्ले इन्द्रपुर नगर र जगन्नाथजीको स्थापना गरे। इन्ले ने० ७७४ माघ कृष्ण पंचमीका दिन आफुले रचना गरेको कालीका स्तोत्रलाई १५ भाषामा शीलापत्र-हरुमा लेखि देशका अनेक देवलहरूमा टास्न लगाएका थिए। इनैका पालामा कान्तिपुरको कुनै एक 'विसेत' भन्ने मानिषले एउटा साल वृक्षको मुढाले पुरा एउटा सत्तल बनाएको थियो। त्यसैले त्यस् दिन देखी कान्तिपुरको नाऊँ काष्ठमंडप वा काठमाण्डू परेको हो। आफ्नै सम्बन्धी पर्ने कुनै भीममल्ल नामका मानिष राजा लक्ष्मी नरसिंहका प्रधान काजी थिए। ति भीममल्लले आफ्ना युक्ति द्वारा तिब्बत लाई ( नेपाल ) काठमाण्डूको प्रभाव क्षेत्रमा ल्याइ तिब्बत ( भोट राज्य ) सँग संधि सम्बन्ध स्थापित गरेका थिए। त्यस संधि पत्र नियमले नेपाली हरूले तिब्बतमा-

भित्र व्यापार गर्ने अधिकार पाएका थिए। साथ साथ तिब्बत वासि त्रिवानी मर्ने नेपाली व्यापारी हरूको धनमाल जायदात नेपाल सरकार लानेछ भन्ने पनी गराएका थिए। यस्ता प्रकार को संधि गरी प्रचुर सुन चाँदि लिएर भीममल्ल नेपाल फर्केका थिए। नेपाल आएर भीममल्ल त काठमाण्डू राज्य विस्तारका निमित्त प्रयत्न गर्न प्रारम्भ गरे। दुष्ट चुक्ली हरूलाई भीममल्लको त्यस्तो चकचकिले पोल्न थालेको थियो। तिनी हरूले राजा लक्ष्मी नरसिंहमा भीममल्लको त्यो प्रयत्न आफै काठमाण्डूको राजा हुन गरी रहेका हुन् भन्ने पारे। त्यसै कारण लक्ष्मी-नरसिंह मल्लले निरपराधी काजी भीममल्ल लाई मृत्यूदंड दिए। भीममल्लकी धर्मपत्नी ले सती हुने बेलामाँ नेपाल दरबारमा कसैको पनि विवेक न रहोस" भन्ने श्राप दिएकी थिइन्। पछि रहस्य खुलेमा राजा लक्ष्मीनरसिंह लाई ठूलो पश्चात्ताप भयो। त्यसै का पीरले तिनी बौलाहा भएर भए। इनैका राज्य कालमा श्यामार्पा लामा नामका कुनै एक भोटे सज्जन ले ने० स० ७६० मा स्वयंभूनाथको गर्भ काष्ट फेरेको थियो तथा त्यहाँका मूर्ति हरूमा जप चढाएको थियो। ने० स० ७७७ भाद्र कृष्ण त्रयोदशीका दिन राजा लक्ष्मीनरसिंहको मृत्यु भयो। स० ७५६ सन् १६३९ मा बाबू बौलाहा भए पछि ६ प्रतापमल्लले काठमाण्डू मा ३६ वर्ष राज्य गरे। इनी विलासी तर गुणवान कवि तथा विद्वान राजा थिए। इनैले सानु मत्स्येन्द्रनाथको यात्रा चलाएका हुन्। इन्ले आफ्ना मुद्रा (टक) मा आफ्नो कवीन्द्र पदवी अंकित गराएका थिए। इन्का २ जना विवाहित तिहु तिनी रानी तथा हजारा भित्रेनी हरू थिए। इन्ले काशीबाट लम्बकर्ण भट्ट, तिहुतबाट नरसिंह ठाकुर नाउका विद्वान ब्राह्मण र स्वामि ज्ञानानन्द भन्ने परिव्राजक लाई काठमाण्डू झिकाएका थिए। पं० लम्बकर्ण भट्ट लो राजगुरूका मान पाई अनेक मन्दिर हरूको प्रतिष्ठा गरे। राजा प्रतापमल्लले हनुमानढोका दरबारको भन्डार चोक र लक्षमा को पोखरी बनाए। त्यस पोखरीमा ध्यानेश्वरको पुरानु

नारायणको मूर्तिल्याई स्थापना गराए। पछि त्यस पोखरीमा बुढा निलकंठ बाट कुलो खनि पानी ल्याएका थिए। त्यसैले बुढा निलकण्ठ भगवान बाट "अब उप्रान्त तिमी तथा तिम्रा उत्तराधिकारीहरूला मेरो दर्शन गरियो भने मृत्यु हुनेछ" भन्ने स्वप्ना मिल्यो। त्यसैले आज पर्यन्तका नेपालका राजाहरू बुढा निलकण्ठको दर्शन गर्न पाउदैनन्। इनैले भीमसेन भैरवको मूर्ति, नरसिंहको मूर्ति तथा अनेक पीठ तथा पीठहरूको स्तोत्र शिलापत्रहरूमा लेखाइ स्थापित गराएका थिए। शिम्भूको सिढि चढ्ने दुइ तिर आगम शास्त्र बमोजिमका दुइ मूर्ति पनी स्थापना गरेका थिए। इनैले पशुपतिनाथमा कोटिलिंग स्थापना गरे। आफ्ना दरवारका ढोकामा अनेक विघ्नबाधा हरुका शमनार्थ हनुमान्जी को मूर्ति पनी इनैले स्थापना गरेकाले त्यो ढोका हनुमान्ढोका को नाऊले प्रसिद्ध भएको छ इनैले श्लेष्मान्तक वन खनाउदा र ईश्वरीका यन्त्ररुप मूर्ति पाए र त्यस्का चारैतीर वार लगाई अनेक देव देवी भैरव नरसिंह हरुको मूर्ति स्थापना गरी ति ईश्वरीको नाऊ "गुह्येश्वरी कालिमहामाया" राखे। इनैले नारायणहिठीका नारायणको संमुख गरुण मूर्तिका स्थापना गरे का थिए। इन्ले पंचायन पचपात्र मच युक्त पशुपतिनाथ मा सुनको छत्र चढाए। इन्ले आफ्ना गुरु षोढान्यासी ज्ञानानन्द लाइ देवं पाटनमा वसाएका थिए। ज्ञानानन्दले आफ्ना घरमा "समूलमूर्ति उर्धामनाय" पूजा गरे गर्नै गरेका थिए। राजा प्रताप मल्लले षोडान्यासी ज्ञानानान्द स्वामिका उपदेश ले आफ्ना जीवन कालमा पाले संग आफ्ना चार जना छोरा हरु लाइ एक एक वर्ष का निमित्त राज्यासन दिएका थिए। बाबू का जीवनं काल को वर्ष दिने राज्य भोग गरेर जेठा पार्थ्येन्द्र मल्ल र माहिला नृपेन्द्रमल्ल कच्चा उमेरमा स्वर्ग भए नववयस्क दुई भाई छोरा का मृत्युले राजमाता निकै शोकाकुल भए कि थिइन्। राजा प्रताप मल्लले रानी को स्त्री शोक शांत गर्न काठमांडूमा यउटा सुरम्य पोखरी (वर्तमान रानी पोखरी) को निमाण गराए र अनेक मंदेर हरुको स्थापना गराए का थिए। रानी पोखरी भर को राजा प्रतापमल्ल को

साहिल तिन्की साध्वी रानीले स्थापित गराएकी हुन्। बाबूका पालाको वर्ष दिने राज्य कालमा साहिला पुत्र महिपतीन्द्र मल्लले ने० सं० ७८८ मा श्वेतभैरवका सम्मुख धर्मधातुमंडप माथी इन्द्रका वज्रको स्थापना गरे। कान्छा चक्रवर्तीन्द्रले बाबूका पालाको एक वर्षे राज्याधिकारमा तीर पाश अंकुश कमल र चामर अंकित आफ्नो मुद्रा (टक) चलायेका थिये। ने० सं० ०९ मा राजा प्रताप मल्लको देहान्त भयो। तिन्का मृत्यु पछि निजका साहिला पुत्र १० महिपतीन्द्र मल्ल वा भूपालेन्द्र मल्लले ७ वर्ष राज्य गरे। इन्ले श्वेत विनायकको जात्रा चलाये। ११ श्री भास्कर मल्लले १४ वर्षका उमेरका राज्य पाइ आठ वर्ष रजाइँ गरे। इन्ले किंडोल भन्ने स्थानमा यउटा धर्मशाला बनायेका थिये। इन्का २ जना विवाहिता रानी तथा दुई जना भित्रेनीहरु थिए। इनी सदा स्त्रीहरु का बीचमा रहन्थे। इन्का पालामा नेपालमा महामारीले ठूलो संघार उपस्थित गरेको थियो। तिन्ताक प्रत्येक दिन १५०-१७५ मानिष मरेका थिए। त्यो महामारी दुइ वर्ष सम्म रह्यो। अन्तमा त्यै महामारीले राजा भास्कर मल्लको समेत मृत्यु भये। पुत्रहीन राजा भास्कर मल्ल पछि तिन्की छोरीका छोरा जगज्जय मल्ल लाई राज्यासन दि चारै जना रानी भित्रेनीहरु सती भए। १० जगज्जयमल्लले राधाकृष्ण र महाविष्णुका मन्दिरको स्थापना गरे। इन्का पालामा काठमांडुमा अनिकाल परेको थियो। जगज्जयमल्लका पालामा गोरखेश्वर नरभूपाल शाहले नुवाकोट माथी निष्फल आक्रमण गरेका थिए। राजा जगज्जयमल्लका ५ भाई छोरा थिये। तिन्मध्ये जेठा राजेन्द्रप्रकाश मल्ल र माहिला जयप्रकाश मल्ल को जन्म बाबूले राज्य पाउनु भन्दा पहिले भएको र साहिला राज्य प्रकाश, काइँला नरेन्द्रप्रकाश र कान्छा चन्द्र प्रकाशमल्ल को जन्म राज्य पाये पछि भयेको थियो। ३० वर्ष राज्यगरि ने० ८५२ सन् १७३२ भाद्र महिनामा राजा जगज्जयप्रकाशको मृत्यु भयो। राजा जगज्जयप्रकाशका जेठा छोरा राजेन्द्र

प्रकाश र कान्छा चन्द्रप्रकाशको मृत्यु बाबूको शेषैमा भएकोले तिन्का मृत्यु पछि माहिला पुत्र १३ जयप्रकाशमल्ल काठमांडूका राजा भये। इनी विष्णुभक्त, शालिग्राममा श्रद्धा गर्ने र क्रूर स्वभावका राजा थिये। इन्ले कालिगंडकी किनार बाट हजारा शालिग्राम झिकाइ काठमांडूमा त्यस्का पूजनको प्रचार गरे र गुह्येश्वरी घाटको निर्माण गरायेका थिये। इन्का साहिला भाई राज्यप्रकाश पाटन नरेश, विष्णुमल्लका धर्मपुत्र भई तिन्का शेष पछि पाटनका राजा भएका थिए। पाटने प्रधानहरुका षडयंत्रले राज्यप्रकाशको मृत्यु भए पछि भाद गाऊँले राजा रणजीतमल्लले पाटन राज्यमा अधिकार गरे। त्यस्कुरा लाई लिएर राजा रणजीतमल्ल र राजा जयप्रकाशमल्लको वैषम्यता चल्न थालेको थियो। अन्तमा वर्ष दिन भित्रै पाटने प्रधानहरुका वल्ले राजा जयप्रकाशले राजा रणजीतमल्ल लाई पाटन राज्यच्यूत गरि त्यस माथी आफ्नु अधिकार कायम गरे। केहि दिन पछि पाटने ६ प्रधानहरुले तिन्सँग पनी पाटनको राज्याधिकार खोसे र लिए। तिनै ताक काठमांडूका काजीहरुले काहिला कुमार नरेन्द्रप्रकाश मल्ललाई देउ पाटन, चांगु, गोकर्ण, नन्दीग्रामको अधिपति बनाएका थिए। त्यस कुराले कुपित भइ राजा जयप्रकाशले ती काजी हरुलाई बन्दी गरि भाई नरेन्द्रप्रकाशलाइ भादगाऊँ तिर लघारे। जयप्रकाश की रानी दयावतीका सहयोगले तिनै बन्दि काजी हरुले मुक्त पाई राजा जयप्रकाश लाइ राजच्युत गरी पैल्हे युवराज ज्योतिप्रकाश मल्ललाई काठमांडूको राजा बनाए। राजच्युत राजा जयप्रकाश भागेर पाटन तिर लागे। त्यहाँ पाटने प्रधानहरुले वस्न सम्म न दिएकोले जयप्रकाशले गोदावरी तथा गोकर्ण हुँदै अन्तमा गुह्येश्वरीको शरण लिएका थिए। अन्तमा इनलाई गुह्येश्वरीका कुनै सिद्ध साधुले आशिर्वादका साथ देवीको तरवार दिएकोले जयप्रकाशले आफ्नो राज्यासन पुनः कायम गरेका थिए। त्यस किसिमले राज्यासन प्राप्त गरि जयप्रकाशले आफ्नी रानी र छोरा लाइ कैद गरि,

बागीहरूको दमन गरेका थिए। इन्का राज्यकाल ने० सं० ८८७ सन् १७६७ आसाढ शुक्ल प्रतिपदाका दिन काठमांडु मा २१ पटक भूकम्प भयो। त्यसै बेला काठमांडुमा माताको प्रकोप पनी फैलिएको थियो। त्यसै महामारीमा कैदि युवराज ज्योतिप्रकाशको मृत्यु भयो। ने० सं० ८८८ सन् १७६८ मा इन्द्रजात्राका दिन राजा पृथ्वीनारायण संग पराजित भइ भागेर राजा जयप्रकाश पाटन पछि भाँदगाऊ गएका थिए। भाँदगाऊ युद्धमा आहत भइ आर्य घाटमा इन्को मृत्यु भयो।

# मल्लवंशीय ललितपुर वा पाटनका राजा हरूको वंशावलि

राजा यक्षमल्लका शेष पछि निजकी छोरी श्री धर्मवती नाबूले दिएको अंशको पाटन राज्यकी अधीश्वरी भईन्। कालान्तरमा रानी धर्मवती का वंशजहरु निसंतानी भएका ले पाटन राज्य काठमांडु नरेश शिवसिंह मल्लका अधिकारमा गएको थियो। निजले आफ्ना कान्छा पुत्र तेजस्वी हरिहरसिंह मल्ल लाई पाटनको राज्य दिएकोले १ हरिहरसिंह पाटनका राजा भएका थिए। तिन्का मृत्यु पछि अत्यन्त ज्ञानी तथा धर्मात्मा पुत्र २ सिद्धि नरसिंह मल्लले राज्यासन पाए। इन्ले ७०४ ने० सं० मा ललितपुरको ठूलो दरबार बनाए। तिन्ले स्थापित गरेका अनेक कीर्तिहरु आज पर्यन्त पाटनमा वर्तमान छन्। ने० सं० ७४० मा निजले आफ्ना गुरु विश्वनाथ उपाध्यायका अनुमतिले तुलजा भवानीको पुनः प्रतिष्ठा गरेका थिए। ने० सं० ७५७ का फाल्गुन मासका पुनर्वसु- नक्षत्र र आयुष्मान योगमा इन्ले कोट्याहुती यज्ञ गरी श्री राधाकृष्णका मूर्तिको प्रतिष्ठा गरेका थिए। इन्को बौद्ध धर्ममा विशेष श्रद्धा भएको ले राज्यका ६८ महाल (बौद्ध मठ बिहार) हरुको पुनः निर्माण गराएका

थिए। जेष्ठवर्ण तङ्गवाल, धर्मकृति तन्त्र, मयूर वर्ण विष्णुच, वैश्रवन वर्ण ओकालि रुद्रवर्ण, हक्व, हिरण्यवर्ण, यशोधरा व्यूह, चक्र, शस्त्र, दत्त, यन्छू, नस्वाहा ज्योवाहा र धूमवाहा नामक वहाल हरु र निर्वाण-तत्वान्वेषी आत्राल ब्रह्मचारी हरूका निमित्त जम्बीवाहा आदि पाँच ओथ वहाल बनाएका थिए। त्यसै साल पौष मकर सक्रान्तिका उत्सवमा इन्ले हलुखाँवासी श्री जानकीनाथ चक्रवर्ती नामक विद्वान ब्राह्मण लाई अठारह पुराण दान गरे। ने० सं० ७७६ मा भयानक हुरि चलेर पाटनका अनेक मंदिर र घर हरू ध्वस्त भएका थिए। इन्ले आफ्ना अविरल प्रयत्नले त्यस्को पुनःनिर्माण गराए। इन्ले आफ्ना जीवनको अन्तिम समय मंदिर हरूको स्थापना, भूमिदान आदि सत्कर्ममा बिताएर ने० सं० ७७७ मा सन्यास ग्रहण गरेका थिए। नेपाल देशीय समस्त राजा हरूमा राजा सिद्धिनरसिंह मल्ल तुल्य श्रेष्ठ गुण युक्त अरु कोहि राजा भएनन्। प्रातःकालमा तिन्को नाऊ स्मरण गर्नाले मानिषको सबै पापको नाश हुन्छ। इनैका पालामा काठमांडू नरेश लक्ष्मीनरसिंह मल्ल का काजी भीममल्लका उद्योगले नेपाल र तिब्बतको वाणिज्य संघि भएको थियो। त्यस सन्धि द्वारा सुविधानुसार पाटने वाणिकहरूले पनी तिब्बतमा बेपार गर्न पाएका थिए।

ने० सं० ७७७ मा राजा सिद्धिनरसिंहले सन्यास लिए पछि निजका पुत्र (३) श्रीनिवास मल्ल, (मत्स्येन्द्रनाथका उत्सवका दिन) पाटन राज्यासनमा बसेका थिए। इन्ले र भाँदगाऊनरेश जगत्प्रकाश मल्लले कालिका पुराण र हरीवंश पुराण साक्षी राखी मित्रता गरेका थिए। त्यसैले दुवै राजाहरुले आफ्ना राज्यसीमालाई खुला राखेका थिए। पछि ने० स० ७८० मा अकारण राजा जगत्प्रकाश मल्लले पाटन राज्याधीन चाङ्गुनेरको छावनी मा आगो लगाइ अनेक मानिष मारी श जनालाई बंदी गरी भादगाऊँ लग्ने दुराग्रह गरेका थिए। त्यसैको प्रतिशोधमा राजा श्रीनिवास मल्लले काठमांडू नरेश प्रताप मल्लका सहा

आफ्नो भादगाउँ राज्याधीन बन्देगाउँ चरूपारख छावनी र चोरपुर प्रवेश गरी त्यस्का वरिपरिका गाउँहरूमा सात आठ दिन लूट गराएका थिए। अन्तमा भादगाउँ को राजा जगत्प्रकाश मल्लले यउटा हात्ती र अनेक धन रत्न दिएर श्रीनिवास मल्ल संग फेरि मित्रता गरेर इन्को क्रोध शान्त गरेर बाँचेका थिए।

राजा श्रीनिवास मल्लले ने० सं० ७८८ देखि ने० सं० ७९८ सम्म अनेक मन्दिरहरूको स्थापना र पुराना मन्दिरहरुको जीर्णोद्धार गरेका थिए। पाटनको भीमसेनको बृहद् मन्दिर र पाटनको तीनतले आगम देवताको मन्दिर इनैको पुण्य कृति हो। ने० सं० ८०१ मा इन्को मृत्यु भयो। इनका मन्त्री भागीरथ भैय्या र तिन्का भाई भागी भारोले तीनतले महादेवका मन्दिर बनाए।

पिताका मृत्यु पछि ४ योगनरेन्द्र मल्ल पाटनका राजा भए। इन्ले मणिमण्डप गाऊ को विशाल दरवारगृह बनाएका थिए। इन्ले आफ्ना एक मात्र छोराका मृत्युशोकले वैरागी भई राज्य त्याग गरे। उत्तराधिकारीहीन योगेन्द्र मल्लले राज्य त्याग गरे पछि पाटने प्रजाजनले काठमाडौंनरेश ५ महीपतीन्द्र मल्ललाई पाटनको राजा माने। महीपतीन्द्र मल्लका मृत्यु पछि निजका माहिला पुत्र ६ जययोगप्रकाश पाटनका राजा भए। राजा जययोग प्रकाशको मृत्यु ने० सं० ८४३ मा भए पछि योगनरेन्द्रकी पुत्री रुद्रमतिका छोरा ७ विष्णु मल्ल पाटनका राजा भए। इन्का पालामा पाटनमा अनावृष्टिले ठूलो अनिकाल परेको थियो। त्यसका शान्तिका निमित्त राजा विष्णु मल्लले अनेक पुरश्चरण तथा नाग पूजा गरेर कुपित देवतालाई शान्त गरेका थिए। निसंतानि राजा विष्णु मल्लले काठमांडू नरेशका साहिला पुत्र राज्य प्रकाश लाई धर्मपुत्र बनाएका थियो। त्यसै बखत देखि पाटन राज्यमा ६ प्रधानहरूको प्रधानता हुन थाल्यो। राजा विष्णु मल्लका मृत्यु पछि तिन्का धर्मपुत्र ८ राज्य प्रकाश पाटनका राजा भए। इनी लोभमा ... प्रकृतिका ...

विष्णुभक्त राजा थिए। त्यसैका फल स्वरूप पाटने प्रधानहरूका षडयंत्रले तिन्ले अंधो भै प्राण त्याग्नु पऱ्यो। राजा राज्यप्रकाशका मृत्यु पछि प्रधानहरूले भादगाऊं नरेश ९ रणजीत मल्ललाई पाटनको राजा तुल्याए। आफ्ना भाई राज्यप्रतापको अपमृत्यु र राजा रणजीत मल्लको पाटन माथीको अधिकारले राजा जयप्रकाश रणजीत मल्लका शत्रु भए। १० राजा जयप्रकाशले वर्ष दिन भित्रै पाटने प्रधानहरूका सहायताले राजा रणजीत मल्ल लाइ पाटन राज्य च्युत गराइ पाटन माथि आफ्नो अधिकार कायम गरे। त्यस्को दुइ वर्ष भित्रै पाटने प्रधानहरूले राजा जयप्रकाश मल्ल संग सम्बन्ध तोडी, विष्णुमल्लकी छोरी का छोरा ११ विश्वजीत मल्ल लाई पाटनको राजा बनाए। इन्ले पनि चार वर्ष सम्म पाटनको राज्य गरी प्रधानहरूका षडयंत्रले मर्नु पऱ्यो।

त्यस पछि पाटने प्रधानहरूले राजा पृथ्वी नारायण संग तिनका भाई १२ दल मर्दन शाहलाई मागेर ल्याई पाटनको राजा बनाए। शाहवंशका स्वतन्त्रताभिमानी दलमर्दनशाह पाटने प्रधानहरूका कठपुतलि राजा भएनन्। तसर्थ निजले पनी पुग न पुग ४ वर्ष राज्य गरी चक्रवर्ती प्रधानहरूका षडयंत्रले पाटन राज्यासनलाई त्याग्नु पऱ्यो। दलमर्दन शाहलाई पदच्युत गरे पछि पाटने प्रधानहरूले विश्वजीत वंशका १३ तेजनरसिंह मल्ललाई पाटनको थापना राजा बनाए। राजा तेजनरसिंह मल्लले ३ वर्ष राज्य गरे पछि ने० स० ८८८ मा काठमाण्डूनरेश जय-प्रकाश मल्लका मतमा लागी भादगाऊँ तिर भागेर अन्तमा पृथ्वी नारायण शाह बाट कैदि भई लक्ष्मिपुर किल्लमा जन्म बिताउनु परेको थियो। विश्वासघाती पाटने प्रधानहरू पृथ्वी नारायणशाहका आज्ञाले काटिए पछि पाटन राज्य गोरखा साम्राज्यमा संमिलित भएको थियो।

## गोरखा राज्यवंश पुरखावलि र राज्य स्थापना।

अयोध्यापति सूर्यकुलचुडामणि मर्यादापुरुषोत्तम महाराजाधिराज भगवान् रामचन्द्रका जेष्ठ पुत्र महाराजाधिराज कुशचन्द्रका वंशज कुँ

एक पुरुष अयोध्या बाट विक्रमीय तृतीय शताब्दिमा सौराष्ट्र ( गुजरात ) का वल्लभिपुरमा गएका थिए। फेरि शताब्दिका मध्य भागमा इरान सम्राट् नौशेर वाले गुजरातमा चढाइ गरेको ले वल्लभीपुरको पतन भए पछि मेवाड तरफ आएर त्यहाँ का आदि निवासी भिल्लहरुलाई पराजित गरि त्यहीं आफ्नो राज्य कायम गरेको थियो भन्ने कुरा मेवाडका इतिहास ख्यातनामा ( वंशावली ) मा लेखिएको छ। त्यसै वंशमा शीलादित्य, बप्पारावल आदि महान वीर र धर्म रक्षक र राणा सांगा, राणा प्रताप जस्ता स्वाभिमानी स्वतंत्रताप्रेमी राजाहरु भएका थिए। तिनीहरुको निर्मल चरित्र प्रायः पृथ्वी भरिका भाषामा सविस्तार प्रकाशित भइ सकेको छ। जुन् बखत यस आर्यावर्तमा यवनहरुको विजयदुन्दुभि बजी रहेको थियो, समग्र भारतको राजस्व हरण गर्ने चेष्टामा यवन सैन्य वाहिनीले एक एक गरि सबै तरफ आक्रमणको वज्र गिराउदै बहुधा राजपूतकन्या-हरुलाई आफ्नू बेगम तुल्याउदै धर्म कर्म ध्वंस पार्दै गएका थिए, त्यस्ता संकटमय कालमा दुर्दान्त यवनहरूका शक्तिको विरोध गरि मुठि भरीका वीर राजपूत सैन्यका सहयोगले अगाध समुन्द्रको भेल जस्तो यवनवाहिनी संग बराबर लडिभिडि प्राणाहुति दिई आफ्ना पद्मिनी जस्ता अनेक स्त्रीरत्नलाई जिहुँदै चितामा प्रवेश गराई महाराणाहरुले हिन्दु गौरवस्तम्भलाई खडा राखेका थिए।

इनै शिशौदिया कुलका महाराणा उदयपुर वंसको यउटा शाखा हाम्रा गोरखा ( गोरक्ष ) अधीश्वर वर्तमान नेपालका महाराजाधिराजहरू हुनाले नेपाली जनतालाई आफ्ना प्रतिपालक र वास्तविक स्वामीको वंशपरिचय तथा कार्यकलापहरूको ज्ञान होस् तथा पूर्वकालका आफ्ना प्रातः स्मरणीय राजाहरूले गरेका पराक्रम, साहस र वीरत्व प्रजावात्सल्यता आदि कुराहरू यथार्थ रूपले अवगत भई आफ्ना अधिराजका प्रति भक्ति तथा प्रेम दृढ हवस् भन्ना खातिर यो इतिहास लेखिएको हो।

उपरोक्त उदयपुर राज्यका चित्तौड ( राजाधानी ) गढमा अमरमा

वीर प्रजापालक श्री ऋषीराज नामका राजा भएका थिए। पछि क्रमशः शिव, श्रीमद्, श्रीतिलश्याम, गोवर्धन, हरि, निधि, भास्कर, नील, अभय नागजाल र देव नामका १२ भट्टारक राजा पछि अयुत, ब्रह्म, परब्रह्म, कनकब्रह्म, यशोब्रह्म गरि औदुम्बर राणा सत्रौं पुस्ताका राजा भए। तिन्का पाला देखि राजकुलको पदवी राव लेखिन थाल्यो। त्यस् पछि महारक, वीर, विक्रमादित्य, जिल्ल, अजिल्ल, अटल, तुथा, विमीकी, हरि, ब्रह्म, वखान, मनोरथ, जय, जयत्र, भोज र अनन्त गरी ३२ पुस्ता भए। यस्ता हिसावले ऋषिराज राणाका तेत्तिसौं पुस्तामा भूपतिराव राणा नामका राजा भए। इन्का जेठा पुत्र उदयब्रम राव राणा, माहिला फतहसिंह राव राणा र कान्छा मन्मथसिंह राव राणा नाऊँका तीन छोरा थिए। सम्वत् १३६० मा चित्तौडगढ माथि दिल्ली सम्राट अल्लाउद्दीन खिलजिले आक्रमण गर्‍यो। स्वाभिमानी राजा भूपति राव राणा र निजका माहिला पुत्र फतहसिंह रावराणाले वीरता पूर्वक शत्रुको सामना गरि वीर गति पाए. राजपूताना महान् इतिहास कार स्वर्गीय गौरीशंकर हीराचन्द्र ओझाले "अलाउद्दीन खिलजिले चित्तौडगढ मा अधिकार गरे पछि मेवाड राजवंशको यउटा शाखा उत्तरीय हिमालय तिर गए र त्यसै वंशशाखामा वर्तमान नेपालेश्वर श्री ५ महाराजाधिराज भएका हुन् तथा दक्षिण गएको वंशशाखावाट हिन्दुधर्मरक्षक महाराष्ट्र छत्रपति महाराजा शिवाजीको जन्म भएको थियो" भन्ने कुरा आफ्ना "राजपुताना का इतिहास" मा लेखेका छन्। "भारतमा अंग्रेजीराज्य" नामको महान ऐतिहासिक ग्रन्थ लेखक डाक्टर सुन्दरलालजीले पनी चाँद नाउँका मासिक पत्रका मारवाडी अंक मा उदयपुर राज्यवंश वर्ष मा "अपराजित स्वतन्त्र नेपालका महाराजाधिराजहरू उदयपुरे महाराणा वंशको दोह वंशिसन्ध" भनी गौरवका साथ स्विकार गरेका छन्।

चित्तौडको पतन भए पछि जेठा उदयब्रम शाहले उदयपुरलाई वसाई आफ्नो राजधानी बनाए र कान्छा मन्मथसिंह राव राणा उज्ज

...स तिर गएका थिए । श्री मन्मथसिंह राव राणाका ब्रह्मणीका राव ...गा र भूपालराव राणा नामक दुई भाइ छोरा भए । दुवै भाइमा कुनै ...कारणले मनोमालिन्य भएकोले भूपालराव राणाले उज्जयन छाडी उत्त- ...र पर्वतको बाटो लिए । तिनले सब भन्दा पहिले पाल्पा देखि चार- ...कोश उत्तर गडकी तिर स्थित रिढि सरघा हुँदै अन्त्यमा भीरकोटान्तर्गत ...सतहुँ स्थानमा पुगी त्यहाँका अनाथ राजालाइ पदच्युत गरी त्यस ...राज्यमा आफ्नो राज्य कायम गरेका थिए । तिन्ताक सम्म त्यस स्थान ...मा राजाका प्रति "खान" शब्दको प्रयोग मर्यादा पूर्ण मानिने चलन ...हुँदा भूपाल राव राणाका सन्तानले आफ्ना नाउँका साथ खान् शब्द ...लगाउँथेका थिए । भूपालराव राणाका दुई भाई छोरा थिए । जेठा ...खांच्या खान् राणाले ढार मगरात विजय गर्दै गर्हौं सथन भीरकोट आदिको ...राज्य कायम गरे । कान्छा मिचा खान राणाले काठमाडूका पश्चिम ...नुवाकोट भन्ने स्थानमा आफ्ना अधिकार स्थापित गरी राज्य ...जमाए (भूपालराव राणाका दुवै छोराहरू आफ्ना नाउँले प्रख्यात ...नभई जेठा र कान्छा अर्थात् स्थानीय शब्दमा जेठा लाइ खांचा र ...कान्छालाइ मिचाले सम्बोधन गर्ने हुँदा त्यसै नाउले प्रसिद्ध भएकाले ...वंशावलीकारले पनि त्यसै नाउँको प्रयोग गरेका छन् ) मिचा ...खान् राणाका तीन भाई छोरा मध्ये जेठा भक्तिखान् बाबूका शेष पछि ...नुवाकोटका राजा भए । माहिला श्री वत्सखान राणाले सतहुँ विजय ...गरी त्यस राज्यमा आफ्नो राज्य कायम गरे । कान्छा सर्वखान राणाका ...पाँचौ पुस्तामा कुललाइ शोभित गर्ने कुलमंडनखान राणा नाउँका ...अति पराक्रमी र साहसी राजा भए । इनले कालो निकटवर्ती कास्की ...राज्यका अनार्य राजालाइ पराजित गरि कास्कीलाइ आफ्ना अधिपत्य ...मा ल्याएका थिए । इनैले तात्कालिक दिल्ली नरेशलाइ प्रसन्न गरि ...'शाह' पदवी प्राप्त गरे देखि गोरखेश्वर नेपालाधिपतिहरूको पदवी "शाह" ...रहँदै आयो । वंशको पुरानु खान पदवी भीरकोट गर्हौं कोट, पल्लानुवाकोट

सतहूँ आदिका शाहवंशका पुर्खाहरूका राजवंशमा व्यवहार हुन्थ्यो। राजा कुलमण्डन शाहका ७ भाई छोरा थिए।

राजा कुलमंडन शाहका पालामा लम्जुङ् राज्यमा कुनै राजा रहेनछ। त्यस बेला त्यहाँका शेषान्तर नामका अनार्यहरूका उपद्रवले लम्जुङेहरू पीडित भः रहेका थिए। त्यसै कारण तिनीहरुले प्रार्थना गरी राजा कुलमंडन शाहका माहिला छोरा कालू शाहलाइ मागेर लम्जुङ् को राजा बनाएका थिए। केहि दिन राज्य गरे पछि शेषान्तरहरुका छलले लम्जुङ् नरेश कालूशाह मारिए। लम्जुङेहरुले सम्मति गरी फेरी राजा कुलमडनशाह संग अर्को यउटा राजपुत्र पाऊँ भनी प्रार्थना गरे। पुत्र शोकाकुल राजा कुलमंडन शाहले लम्जुङेहरूको प्रार्थना सुनी "मैले मेरा छोरा हरु तिमी हरुलाई मराउन भनी जन्माएको होइन" भन्ने जवाफ दिए। त्यस्का उत्तरमा लम्जुङे हरुले एक पटक शेषान्तरहरुका छलले त्यस्तो भयो, अब उप्रान्त हामीहरूले त्यस्तो हुन दिने छैनौं भनी विन्ति चढाए। लम्जुङेहरुको आग्रह हार्न न सकि कुलमण्डन शाहले "मेरा जेठा छोरा वाहेक जस् लाइ मन पराउछौ राती चोरेर लगे जस्तो गरी लग" भन्ने हुकुम दिए। आज्ञा बमोजिम लम्जुङे हरुले राजपुत्र सुतेका ठाऊँमा गइ हेरदा, कान्छा राजपुत्रको सिहान माथी सरेको देखि, माथी सिहान सर्ने वालख भाग्यमानी हुन्छन्, भन्ने विचार भइ राता रात तिनीहरुले कान्छा राजपुत्र यशोब्रह्मशाहलाई लम्जुङ् पुऱ्याइ, त्यहाँको राजा बनाए।

राजा यशोब्रह्मशाह की श्री वसन्तावती भन्ने सर्वलक्षणले युक्त पतिव्रता रानी थिइन्। तिन्का गर्भबाट जेठा नरहरि शाह र कान्छा द्रव्य शाह जन्मेका थिए। राजा यशोब्रह्म शाहका मृत्यु पछि जेठा नरहरि शाह लम्जुङ् राज्यका राजा भए। कान्छा द्रव्य शाहले आफ्ना बाहुबलले गोरखा राज्य हस्तगत गरी त्यहाँ आफ्नो राज्य कायम गरेका थिए। मेवाडाधिपति राजा भूपराज राणा देखी राणा द्रव्यशाह सम्म चवालिसौं पुस्ता हुन्छ।

# खान वंशीय पल्लो नुवाकोटका राजा हरूको वंशावलि

आफ्नो पूर्व देश चित्तौडगढ छाडी उत्तर प्रान्त तिर आएर भूपाल राव राणाले खिलम सम्म राज्याधिकार गरेको र त्यहाँ देखी आफ्ना पद्धी खान् लेखने गरेको तथा राजा भूपालराव राणाका कान्छा छोरा राणा मिचाखानले पश्चीम पल्लो नुवाकोटमा अधिकार गरेको कुरा माथि लेखिएकोछ। त्यस पछि वंशानुक्रमिक रूपले १२ पुस्ता सम्म खान वंशीय राजा हरूले पल्लोनुवाकोटको रजाँई गरे। १ राजा मिचाखान राणा २मगिराजखान राणा ३कनक खान राणा ४ भूपति खान राणा ५विरजाखान राणा ६तिलक खान राणा ७ वाजु खान राणा ८नवराज खान राणा ९ रुद्र खान राणा १० इन्द्रभूपाल खान राण ११ श्रीन्द्र खान राणा १२ मणि खान राणा हरु राजा भएका थिए। पछि राजा पृथ्वीनारायण शाहका विजयभिमानमा इनीहरुको पराजय भएर पल्लो नुवाकोट गोर्खा राज्यान्तर्गत भयो।

## खान वंशीय सतहुँका राजाहरुको वंशावली

पल्लो नुवाकोट नरेश मिचा खान राणाका छोरा १ श्री वत्स खान राणाले सतहुँ राज्य विजय गरी आफ्ना अधिकारमा ल्याए। इन्का मृत्यु पछि जेठा छोरा २ अयुतवम खान राणा र तिन्का शेष पछि उत्तराधिकार क्रमशः ३ महिपत खान राणा ४ लेजु खान राणा ५ चामु खान राणा ६ तुला खान राणा ७ बहादुर खान राणा ८ चेत्र खान राणा ९ पृथ्वीपती-खान राणा १० देवादल खान राणा ११ चामुण्ड खान राणा र १२ दीर्घनारायण खान राणा गरी १२ पुस्ता सम्म गरे। अन्तमा वि० स०

१ ५७ मा महाराजाधिराज रण बहादुरशाह द्वारा पराजित भइ सतहूँ राज्य पनी नेपाल राज्यान्तर्गत भयो ।

## शाहवंशीय लम्जुङ्का राजाहरूको वंशावली

पल्लो नुवाकोट नरेश मिचा खान राणाका कान्छा छोरा राजा सर्वे खानका पनातीपुत्र काश्कीपति राजा कुलमण्डन शाहका माहिला पुत्र १ कालु शाह लम्बुङ का राजा भएका थिए । तिनी शेषान्तरहरू बाट मारिबे पछि तिनका कान्छा भाइ २ यशोब्रह्मशाह लम्जुङ्गाधिपति भए । राजा यशोब्रह्मशाहका देहावसान पछि निजका जेठा छोरा ३ नरहरी शाहले लम्जुङ को राज्यासन पाए । त्यस पछि उत्तराधिकार क्रमले ४ चूडामणि शाह ५ अचन्द्र शाह ६ नरेन्द्रशाह ७ नरराज शाह ७ केशरि शाह ९ बादल शाह १० रत्नभुर शाह ११ वंमशाह १२ रिपुमर्दन शाह १३ वीर मर्दन शाह इत्यले लम्जुङ को राज्य गरे । लम्जुङ नरेश रिपुमर्दन शाह र गोरखेश्वर पृथ्वीनारायण शाहका पाला सम्म दुवै राज्यमा अनेक पटक युद्ध परेको थियो । अन्तमा महाराजाधिराज रणबहादुशाह द्वारा पराजित भएर लम्जुङ्का अन्तिम राजा वीर मर्दन शाह तनहूँ तिर भागेका थिए । पछि रणबहादुर शाहका विजयाभियानमा परास्त भइ मुगलान तिर भागेका तनहूँ नरेशका साथ वीर मर्दन शाहले पनि मुगलान पसी रामनगर राज्यमा आफ्नो जीवन बिताएका थिए ।

## शाहवंशीय गोरखाका राजाहरूको वंशावली

पल्लो नुवाँकोट नरेश मिचा खान राणाका कान्छा छोरा राजा सर्वे खान राणाका पनातीपुत्र काश्कीपति कुलमंडनशाहका कनिष्ठ कुमार लम्जुङ नरेश राजा यशोब्रह्मशाहका कान्छा छोरा द्रव्यशाहले आफ्ना

बाहुबल द्वारा गोरखा राज्य हस्तगत गरेको कुरा माथि लेखिएकै छ। राजा द्रव्यशाहले गोर्खा राज्य माथि अधिकार गरे पछि हामीहरूको जातीय वा देशीय नाऊ गोरखाली भन्ने प्रसिद्ध भएको हो।

गोरखालीहरूका ईष्ट देव महात्मा गोरखनाथ बाट बाल्यावस्थामा राजा द्रव्यशाहले प्रतापी राजा हुने, चौथा पुस्ताका वंशधरले वंशोन्नत गरि देशमा रीति तिथि चलाउने र दसौं पुस्ताका तानले समस्त पर्वत्य प्रदेशको अधिराजा हुने वरदान पाएका थिए। त्यस वरदानको कुराले जेठा नरहरिशाह छँदा छँदै कान्छा द्रव्यशाह कसरी राजा हुन्छ भन्ने कुराले राजा यशोब्रह्मशाह लाई निकै चिन्तित तुल्याएको थियो। त्यसैले गर्दा निजले आफ्ना शेषैमा दुवै भाई छोरालाई छुट्याइ, जेठा नरहरिशाह लाई लुनका मांडाको काम र कान्छा द्रव्यशाहलाइ राजीमास कोटको स्थानमा राखने बंदोवस्त मिलाएका थिए। त्यति गर्दा पनि गुरुवचनले भातृविरोध हुन्छ कि भन्ने संकाले निजको चित्त बुझेको थिएन। तिनै ताक खिलु निवासी विद्वान ज्योतषी पं० नारायण अर्ज्याल लम्जुङ्मा आएका थिए। राजा यशोब्रह्मशाहले निज ज्योतिषिलाइ डाकि आफ्ना दुवै पुत्र हरूको चिन्हा देखाए। चिन्हा हेरि ज्योतिषिजीले "जेठा छोरा ले बाबूको गद्दी मा बस्ने र कान्छा छोरा ले नया देश जय गरि त्यहाँको राज्य गर्ने राम्रो ग्रह परेको छ" भनी भनेका थिए। त्यस कुराले राजा यशोब्रह्मशाहको केहि चित्त बुझेको थियो।

त्यस्का केहि दिन पछि पं० नारायण अर्ज्याल गोरखा राज्यमा पुगे। त्यस वेला गोरखाका मतवालि खडका राजाले राजाले खान हुने चीड रक्सी, तागा धारीहरूले समेत खानु पर्छ भनी राज्यमा ठूलो उपद्रव खडा गरेको थियो। निज ज्योतिषीजीलाई आफ्ना शिष्य गणेश पाण्डे बाट सबै कुरा थाहा भयो। ज्योतिषीजीले त्यै औसरमा अत्याचारी खडका राजाको अन्त गरि द्रव्यशाहलाई गोरखाको राजा बनाउने विचार गरि गणेश पाण्डे संग सल्लाह गरे। सल्लाह मिले पछि गोरखाका भागिरथ

पंथ, सर्वेश्वर खँदाल, जनार्दन भुसाल, केशव बोहरा आदि तागाधारी प्रजा दल र मुरलि खवास र गंगा राम राना आदिका मास्की राना हरूको दल लाई मतमा मिलाई नारायण अर्ज्यालले द्रव्यसाहलाई गोरखा झिकाए। द्रव्यशाहको पहिलो अभिषेक तल्लो कोटमा भयो। त्यहीं बाट साका १४८१ सन् १५५९ मा भाद्रकृष्ण अष्टमि बुधवारका दिन रोहिणी नक्षत्रका शुभ मुहूर्तमा द्रव्यशाहले 'दहागौंडा' मार्ग बाट गोरखा माथि आक्रमण गरे। युद्धमा खड्का राजा द्रव्यशाहका हातले काटिए पछि शत्रुले आत्म समर्पण गरे। विजयोपरान्त नारायण अर्ज्यालले मधुर संगीत ध्वनिका बीच द्रव्यशाहको राज्याभिषेक गरे। राजा द्रव्य शाह बाट त्यसै वर्षका महाष्टमीका दिन नारायण अर्ज्याल संग दिक्षा मंत्र ग्रहण गरी निज लाइ वंसानुक्रमिक राजगुरु पद वक्सिया। पन्थ खदाल पाण्डे भुसाल हरुले पनी वंसानुक्रमिक गुरु पुरोहित मान पाए। बोहरा खवास तथा रानाहरूको पनी वंसानुक्रमिक ६ थरका मान्यता मानिए को थियो।

यस किसिमले द्रव्यशाहले गोरखा राज्य पाएको हुँदा निजका दाजु लम्जुङे राजा नरहरि शाहलाई ठूलो डाहा हुन थाल्यो। त्यस किसिम ले आफ्ना वंशमा विरोध हुन लागेको देखि दुवै भाइ को विधवा राज-माता बसन्तावतीले चेपे नदीमा आफ्ना स्तनको दूध खसाई त्यस स्थान लाइ लम्जुङ र गोरखाको साँध गराइन्। त्यस्ले गर्दा राजमाताको जीवन पर्यन्त दुवै भाईले चेपे नदीको आफ्नू साँध लाई नाघने साहस गरेका थिएनन्।

त्यस प्रकारले गृहकलह शान्त भए पछि राजा द्रव्यशाहले राज्य विस्तार गर्ने मौका पाए। राज्यका रक्षाका निमित्त पहिले तिन्ले वरी-परीका डाँडाहरुमा आफ्नो अधिकार गरेका थिए। निजले क्रमशः सिहानचोक, अर्जारगढ, दरौंदी, गुरुंगथोक लाई विजय गरी गोर्खाराज्यशक्तिलाई शक्तिशाली तुल्याए। तेसका केहि दिन पछि

शिवा राजमाताको देहावसान भयो । राजमाताको देहान्त पछि लम्जुङ्गे
हरूको शत्रुता प्रकट हुन थाल्यो । लम्जुङ् नरेश नरहरिशाहको धम
ल पत्याइ द्रव्यशाहले आमाको श्राद्ध दाजुका साथ एकैस्थानमा गर्ने
गरेका थिए । नरहरि शाहले श्राद्धकार्य सिद्धिए पछी द्रव्यशाहलाई मार्ने
षड्यंत्र मिलाएका रहेछन् । त्यो कुरा लम्जुङ्मा रहेका आफ्नी धाईबाट
थाहा पाई दिसा फिर्ने निहुले द्रव्यशाह आफ्ना सीमानामा पुगे । तेस
पछि लम्जुङ् हरूले गोर्खालीहरू माथी अनेक पटक आक्रमण गरे । गोर
खाली हरूले लम्जुङ्गे हरुका प्रत्येक आक्रमण विफल पारेका थिए । अन्तमा
सिरांदी र गुरुङथोकका युद्धमा गोर्खालीहरु द्वारा नराम्रा तरहले पराजित
भई केहि काललाई लम्जुङ्गेहरु शान्त भए । यस प्रकार ११ वर्ष सम्म
राज्य गरी शाह वंशका प्रथम गोरखेश्वर द्रव्यशाहले सन् १५७० मा
आफ्नो शरीर त्याग गरे । मेवाडाधिपति ऋषि राज राणा देखि द्रव्यशाह
सम्म ४४ सौं पुश्ता हुन्छ ।

१—राजा द्रव्यशाहका मृत्यु पछी २ राजा पुरन्दरशाहले शाके
१४०२ सन् १४७० देखि ३५ वर्ष सम्म राज्य गरेका थिए । तिन्का
देहावसान पछी ३ छत्र शाहले शाके १५२७ सन् १६०१ मा राज्यासन
मा बसी ७ मैन्हा सम्म राज्य गरे । पुत्रहीन छत्रशाहका मृत्यु पछी तिन्का
भाई ४ राजा रामशाह शा० के० १५२८ सन् १६०६ मा गोरखेश्वर
भएका थिए । इन्ले २७ वर्ष सम्म बडा योग्यता पूर्वक राज्य चलाये ।
इनी धार्मिक, यशस्वी, साहसी दृढ प्रतिज्ञ र प्रजा हितैषी राजा थिए ।
इन्ले रीदा भन्ने तीर्थ स्थानमा तपस्या तथा गहलकोटमा पुरश्चरण
सिद्धिलाई यज्ञ गरी, निज कालिन पहाडी राजाहरूमा प्रतापी जुमला नरेश
र पर्वतेश्वर लाई समेत आफ्ना प्रभावापन्न गराएका थिए । इनैका पाला
देखि "महाराजाधिराज" का सँगसँगै नेपाल राज्य वंशका बर्तमान
प्रशस्ती "स्वस्ति श्रीगिरिराजचक्रचूडामणिनरनारायतेत्यादि
विविधविरुदावलीविराजमानमानोनतश्रीमतश्री महाराजाधिराज

श्रीमत् लेख्ने चलन चलेको हो । इनका पालामा फेरि लमजुङ्गेहरूले मन्टो उठाएका थिए। तर भिरकोट युद्धमा पराजित भई पुनः लमजुङ्गे हरू शान्त भए. श्री राम शाहले आफ्ना विजयाभियानमा थुमता पर्ने राजा चाग्या सुरताननलाई मारी वर्षाक स्यार्ता र अठारह सय खोलाको राज्य. तिब्बत पट्टी त्रिशुली गंडकी किनारको केरुङ्, त्यहाँ बाट अझै चार कोस उत्तर माथी भोटे कोशीका दोबानको कुकुर घाट र रसुवा घाट. गोर्खाका दक्षिण पूर्व बुढी गण्डकी पारीको खरी ईलाका, तेस्का दक्षिण को मैथी ईलाका नुँवाकोट बाटो को चरङ्गे ईलाका, गोर्खा देखि पूर्व बुढी गंडकी र त्रिशुली गंगाका माझको भोटे डाकू रङ चैको राज्य र तेस्का माझको ईलाका, निभार चोक ईलाका, नेपालका बाटाको राग रोईदासवलेको धार्धाङ् ईलाका किर्केप इलाका हरूलाई गोरखा राज्य मा मिलाई तनहूँ राज्यका सेन राजालाई समेत वशमा गरेका थिए। यस प्रकार तिनले आफुले धारण गरेको महाराजाधिराज पदवी लाई सार्थक गरे । श्रीरामशाहले (१) बाँसका ढुंग्रा काठका आरी र चोयाका डालाले नाप जोख गर्ने पुरानु चलन उठाई, तेस ठाउँमा तामाको मानो पाथी मुरी चाँडी पल विसाली र धार्नी हरूको चलन चलाये (२ दशौ दश दरको रीनमा दस वर्ष पुगे मा साँऊ दोबर भये पछि जति पुगे वर्ष पछी तिरे पनि रीनिले साऊँ ब्याज गरी दोबर भन्दा बढता न तिर्ने, अन्नरीनमा नगद रीन बमोजिम तेबर भन्दा बढता न तिर्नू पर्ने ऐन बन्यो। (३) पनेरा कोल कुलमा पालानुसार पानी लिनु, तेसमा झगडा भयेमा गांउले पंचायतले हेर्नु, कचहरीले हेर्ने छैन भन्ने नियम रह्यो। (४) राज्यको समस्त भूमि राजाको हो, राजा बाट पायेको भूमि ब्राह्मणको हो, चौतरिया भाईखलकन्त राजाको अङ्गरक्षक सरी चारै वर्ग रहनु पर्ने र तिनीहरूको अनुमति न भई राजाले समेत कसैलाई बिर्ता न दिन सक्ने, काजीहरू निषपक्ष राजकाजको विन्ती चढाउने कार्य निर्धारित भयो । ... आये पाहुनहरूलाई बीर्ता दिंदा फकनी ... वा खोला

वा पैह्रो मित्र" भनी लेखिन्थ्यो। तेसले ब्रह्मणका विर्ता र रैकड जमीन-का साँधमा कचिंगल उठने हुँदा एती मुरीको एती खेत, एती खेतको एती पाखो, घडेरी आदि निर्धारित गरी पंचका सम्मुख चार किल्ला बाँधी साँध लाई दिने थिति बस्यो। (५) झगडाको सत्यासत्य बुझ्न शालीग्राम छोई बयान गराउने स्त्री जातिलाई बोक्सी भने पंच या कचहरीले बोक्सी ठहराए गाऊँ निकाला, न ठहराए भन्ने मानिसलाई पाँच रुपया जरिमाना र मुद्दा जित्ने अभिप्रायले हाकीमको चाकरी गर्ने मानिसलाई देश निकालाको थिति चलाए।

पन्थ, अर्ज्याल, खँदाल, पाँडे, बोहरा, राना हरू छ थरका मानिस छनाए। चौतरीया काजी सरदार मध्ये कसैले अन्याय अरीतिले बखेडा हाल्न खोजेमा यो छ थरले खबरदारी राख्नु भन्ने भएको थियो। राजवंशबाट वंश परम्परालाई गादाको सोझो गरे सम्म ६ थरलाई सम्मानका साथ सदनपत्र दिएको थियो।

मृत्युदंडका विषयमा जिउ सम्बन्धी कसूर गरे चौतरीया सगोत्री दाजु-भाइलाई देश निकाला; ब्राह्मण, सन्यासी, वैरागी र भाटलाई मुडेर निर्वासन; काजी प्राईमिनिस्टर लगायत इतर पदाधिकारी वा इतर जातिले कसूर गरेको छ भने तेसलाई प्राणदंड दिने व्यवस्था गरियो। गो संरक्षण रक्षार्थ गोचर भूमि छाडने, यात्री वा भरियाहरूको सुविस्ताका लागी बाटोमा गाछी लाउने उर्दी गरियो र तेस्को अमान्य गर्ने र बनका रक्षा निमित्त गाछी काटने मानीसलाई ५) रुपियाँ जरिमाना हुने ऐन भयो।

गहना लाउने अधिकारमा राजपरिवारले पाउ सम्म सुवर्ण लगाउने भई चौतरिया सगोत्रीहरूका परिवारले वक्साई पाउ सम्म लाउने, ब्राह्मण तथा काजी खलकले पाउमा सुन न लाउन पाउने बन्देज गरियो। गणपति ब्रह्मा होतृ र आचार्यको काम अर्ज्याल खँदाल र भट्टराईले गर्ने। बयाले अर्ज्याललाई होतृकर्म, विहारे अर्ज्याललाई आचार्यकर्म,

भट्टराईलाई गणपति तथा खँदाललाई ब्रह्माको कर्म गर्ने अधिकार मिल्यो। पाँडेहरुले पुरोहिती कर्म पाये।

राजा रामशाहका मृत्यु पछि शाके १५५५ सन् १६३२ मा राज्यासन प्राप्त गरी ५ डम्बर शाहले नौ वर्ष राज्य गरे। यिनका पुत्र ६ कृष्णशाह शाके १५६५ सन् १६४२ मा राजा भई दश वर्ष राज्य गरे। यिन्का पुत्र ७ रुद्र शाहले शाके १५७० मा सिंहासनमा बसी सोह्र वर्ष सम्म राज्य गरे। रुद्रशाहका पुत्र ८ पृथ्वीपति शाहले शाके १५९१ देखि ४७ वर्ष सम्म राज्य गरेका थिये।

राजा पृथ्वीपति शाहका अनेक छोराहरु थिये। जेठा वीरभद्रशाह पिताको शेषैमा गर्भवती पत्नी छाडी स्वर्ग भये। पतिका मृत्युकालमा गर्भिणी युवराज्ञी आफ्ना माइत तनहूँमा थिइन्। युवराज वीरभद्रशाह-का मृत्युले राजा पृथ्वीपति शाहलाई आफ्ना उत्तराधिकारीका चिन्ताले घेरेको थियो माहिला कुमार दलशाह काना हुनाले राज्यको काम न चल्ने र साहिला उद्योतशाह योग्य भये पनि वंशानुक्रमले तिनलाई रोक्दथ्यो। यस्तो विषम अवस्था देखेर कान्छा कुमार चन्द्ररूपशाहले "बुवा! यस कुरामा हजुरले फिक्री गर्ने काम छैन। राज्यको उत्तराधिकारी जन्मी सकेको छ। दाजु वीरभद्रशाह छँदै, भाउजु गर्भिणी भई माइत पाल्नु भयेका थियो। तहीं हाम्रो उत्तराधिकारी पुत्र नरभूपालशाह पैदा भयेको छ" भन्ने बिन्ती चढाये। कान्छा कुमार चन्द्ररूपशाहको कुरा सुनेर राजा पृथ्वीपति शाहलाई बहुतै खुशी भयो। उन्ले तो नरभूपालशाहलाई झिकाउन तुरन्त तनहूँ तिर मानिस खटाई पठाये। यस किसीमले गोर्खाबाट मानिस गयेर पनि तनहूँ नरेशले नरभूपालशाह-लाई पठाएनन्। तनहूँका राजाको मन्साय नरभूपालशाहका आडमा गोर्खा राज्यलाई हस्तगत गर्ने थियो। त्यो सब बुझी बुद्धिमान् कुमार चन्द्ररूपशाहले स्वयं तनहूँ गई दरबारकी धाईलाई मिलाई नरभूपाल शाहलाई धुमे कपडाको पोको भित्र हाली उठायेर गोर्खा पुऱ्याये। नरभू

पृथ्वीपतिशाह गोर्खा पुगे पछी उत्तराधिकारका निमित्त उठेको संशय मेटियो। राजा पृथ्वीपतिशाहका देहावसान पछी नरभूपालशाह गोर्खा राज्यासनमा वसे।

राजा नरभूपालशाहका राजत्वकालमा नेपालका तीन राज्य काठमाण्डू भादगाऊ र पाटनका मल्ल राजाहरूमा आपुसी विरोध भै सकेको थियो। उनले सन् १७३८ मा नुवाकोट माथि आक्रमण गरेका थिए। त्यस आक्रमणमा काठमाण्डू नरेश जगत्जयमल्ल द्वारा पराजित भइ नरभूपालशाहले फर्कनु परेको थियो। सन् १७४२ मा राजा नरभूपाल-शाहको देहावसान भयो।

राजा नरभूपालशाहका दुइ रानी थिए। जान्छा बडा महारानी श्री कौशल्यादेवीका सात मैन्हे गर्भबाट प्रबलप्रतापी पृथ्वीनारायण शाहको जन्म भएको थियो। महारानी कौशल्यादेवीले एक दिन स्वप्नामा सूर्य-नारायणलाइ निलेको देखिछन्। त्यसै दिन तिन्ले गर्भधारण गरि तिन्का सातौं मैन्हा मा पृथ्वीनारायण शाह पैदा भए। देवलोकका सूर्य-नारायण पृथ्वीमा अवतरित भएकाले निजको नाऊ पृथ्वीनारायण राखिएको हो।

युवराज पृथ्वीनारायणशाहको उमेर ६ वर्षको भए पछि एकदिन आफ्ना दर्‍या लखन थापा लाइ छली तिनी गुरु गोरखनाथका गुफा नेर खेल्दै पुगेछन्। त्यसै वेला गुफावाट गुरु गोरखनाथ प्रकट भइ पृथ्वी-नारायणशाहलाइ प्रसाद ल्यौ भनि हात थाप्ने आज्ञा दियेछन्। गुरुका आज्ञानुसार कुमारले हात थापेमा गुरुले आफ्ना मुखको दहि उकेलि पृथ्वीनारायणशाहलाइ खाऊ भन्ने आदेश गरेछन्। बालक पृथ्वीनारायणलाई आफ्ना इष्ट कुलगुरुको ज्ञान न भयेकोले नजलेर यो गुरुप्रसादलाइ घीन मानी फ्याँकि दिएछन्। फ्याँकेको त्यो दहि तिन्का गोडामा खसेको थियो। त्यो देखि गुरुले "वत्स! तैंले यो प्रसाद खाएको भए, तेरो वाक्सिद्धि हुने थियो र तैंले हुकुम दियेको देश अनायास तेरा राज्यमा सामिल हुने थियो। तेसै। न खाइ यो प्रसाद तेरा गोडामा खसेकोले तैंले आफ्नो पाउ

जुन देशमाथि राख्नेछस् तेस्मा तेरो अधिकार हुनेछ" भन्ने आशीर्वाद दियेर अलोप हुनु भयो

युवराज पृथ्वीनारायणशाहको प्रथम विवाह मकवानपुर नरेश हेमकर्ण सेनकी पुत्री स्वर्गमाया देवी सँग भयेको थियो। विवाहका वर्ष दिन पछी महारानीलाइ विदा गराउन युवराज पृथ्वीनारायणशाह मकवानपुर गएका थिए। राजा हेमकर्ण सेनले अझ एक वर्ष हामी छोरी विदा गर्दैनौ भन्ने समाचार पठाए। त्यो समाचार लिएर आउने जेठा कटुवालले पृथ्वीनारायणशाहका सम्मुख जुत्ता न फुकालि त्यों कुरा विन्ति चढाएको थियो। कुलरीत्यानुसार राजाका सम्मुख जुत्ता न फुकालि आउने कटुवाललाइ गोरखाका स्वाभिमानी भारदारहरूले त्यहिं दुइ टुक्रा तुल्याये। त्यसै कुराले मकवानपुरेहरू सँग गोरखालीहरूको शत्रुता प्रारम्भ भएको हो। महारानीलाइ विदा न गराइ युवराज पृथ्वीनारायण शाह गोरखा फर्केका थिये।

ससुराली देशमा पाहुना भइ गयेका बखतमा गोरखा राज्य भन्दा चौबर ठुलो राज्य मकवानपुरका राजाका काजी जस्ता पदाधिकारीले गोरखाका युवराजका संमुख जुत्ता न खोलि उभिएकोले स्वाभिमानी राजभक्त गोरखा भारदारहरुले आफ्ना राजाको अपमान गरेको ठानी अपमान गर्नें लाई काटेर आफ्नो प्राण सकटमा हाल्न कत्ति द्विविधा मानेनन्। त्यस ठाऊँमा सम्भवतः सरदार रामकृष्ण कँवर पनी हुनन्। तिनै रामकृष्ण कँवरका संतान कँवर खलकका राणा ठेकेदार मालिकका पंजापत्रले बहाल भएका भृत्यवर्ग मुख्तियारहरुले आफ्ना स्वामीका सम्मुख जुत्ता लगाएर जानू ता के तिनका साथ बराबरीको दर्जा गरि बस्न मात्र हैन कि आज आफ्ना अन्नदाता पुस्तौंका प्रतिपालकका सम्मुख रिवाल्वर सोभयाइ मालिकका दरबारको समेत खानातलासी लिएको कार्यले कँवर खलका राणाहरुले पुस्ता दर पुस्ता देखी खाह आएको नुनको कति सोभो गरेका छन् प्रत्यक्ष देखिएको छ।

# वर्तमान काल

## आधुनिक नेपाल राज्यका शिशोदिया वंशोद्भव शाह-हरूको राज्यविस्तार तथा कार्यकलाप।

## राजा पृथ्वीनारायण शाह।

पिता नरभूपालशाहका देहावसान पछि सम्वत् १७९८ साका १६६४ मा प्रातः स्मरणीय पुरुषसिंह तेरह वर्षीय नवयुवकपृ थ्वीनारायण शाहले पैतृक राज्यासनलाई शुशोभित गरे। तिन्का सूरप्रताप, दलमर्दन, कीर्तिमहोदय, दलपति र दलजित नाउँका अनेक भाई थिये। ती राजपुत्र-हरूमा आफ्ना पूर्वज रामलक्ष्मण र वप्पारावल राणामाँगा तुल्य भ्रातृस्नेह र वसाभिमान पूर्णमात्रामा थियो। सबै भाई सूर साहसी र उदारचित्तका थिये। राजा द्रव्य शाहका गोरखाराज्यविजयका सहायक पछि मंत्री गणेशपाण्डेका संतान कालूपाण्डे पृथ्वी नरायण शाहका प्रधान मंत्री र सेनापति थिए। तिन्ताक प्रधान मंत्रीलाई मुख्तियार भन्दथे। कालूपाण्डे को मुख्तियारी कार्यमा जात्ति को योग्यता थियो रणकौशलमा तिनि उत्तिकै सूर थिए।

ईस्विका अठारौं शताब्दीका माझमा लार्ड क्लाइवले सुस्त सुस्त बंगाल-मा गोडा फिजाई भारतमा अंग्रेजी साम्राज्यको जग वसालि रहेका वेलामा बंगालका उत्तर हिमालयका सुविस्तृत कक्ष ( अंश ) मा राजा पृथ्वी नारायण शाहबाट एउटा साम्राज्य स्थापनाको बीजारोपण भइ रहेको थियो। त्यस वेला नेपाल खाल्टो ( दून ) मा तीन शक्तिशाली राज्य भादगाँउ पाटन र काठमाण्डू नामका थिये। ती तीनै राज्यमा सूर्यवंशी मल्ल राजपुत क्रमशः रणजित मल्ल, तेजनरसिंह मल्ल र

जयप्रकाश मल्लको रजाजी थियो। सं० १७९३ सन् १७३७ का प्रारम्भमा ती राजाहरुमा निकै विरोध चली रहेको थियो। नेपालका राजाहरूको आपसी फूटले गोरखाका पहाडी राज्यका राजा पृथ्वीनारायणशाहलाई नेपाल विजयको आकांक्षा उत्पन्न भयो। त्यसै बेला भादगाँउ नरेश रणजित मल्लबाट उत्साह पायेर निजले नुँवाकोट माथि आक्रमण गरेका थिये। आफ्ना पहिला आक्रमणमा नुवाकोट संम पुगेर पनि पृथ्वीनारायणशाहले फर्कनु परेको कुरा मध्यकालका इतिहासमा लेखेकै छ।

पृथ्वीनारायणशाहले नुँवाकोटका प्रथम युद्धमा विफल भयेर आफ्ना कमजोरी माथि विचार गरे। तिन्ले पहिले छिमेकका प्रतिद्वन्दी लम्जुंग आदिका पहाडी राजाहरु सँगको आफ्नो मैत्री सम्बन्धलाई दृढ गराए। पछि अस्त्र शस्त्र संग्रहलाई स्वयं भारत झरी नेपाल देशका निमित्ति सर्वथा नवीन समयोचित बन्दूक आदि अस्त्रशस्त्रहरु जम्मा गरि फर्के। त्यस किसमले आफ्नो सामरिक शक्ति बलियो तुल्याई सन् १७४४ सम्वत् १८०० का भाद्र महिनामा तिन्ले दोश्रा पटक नुँवाकोट माथि आक्रमण गरे। त्यस युद्धमा पृथ्वीनारायणशाहले काठमांडू सैन्य सेनापति काशीराम थापाको सामना गर्नु पऱ्या। पहिला युद्धमा काशीराम थापाले गोरखालीहरूको दाँत गर्न सके पनी पछिल्ला युद्धमा तिन्ले गोरखालीहरूको समुखबाट हटमु पऱ्यो। तिरहुते वाहुनहरुले काशीराम थापाको त्यस पराजयलाई, तिन्को बेइमानी भनी जयप्रकाशमा कुरा लगाएका थिए। त्यस् कुराले जयप्रकाश मल्लले श्रावणिका दिन गौराघाटमा सन्ध्या गर्न बसेका काशीरामको हत्या गराए। त्यस पछि जयप्रकाशमल्ल आफै यउटा ठूलो सैन्य लि नुँवाकोट रणक्षेत्रमा आयेका थिए। निरपराध काशीराम थापा मारियेकोले तिन्का भाई परशुराम थापा र काठमण्डूका अनेक भारदारहरू राजा पृथ्वीनाराण तिर मिले। परशुराम थापाहरूका सहायताले गोरखालीहरुले राजा जयप्रकाशलाई ठूलो पराजय दिए। तथा नुँवाकोट र बेलकोट माथि आफ्नो अधिकार कायम गरे। त्यसै बेला ३२

थना तेहूंतेहरूको घर खेत अफत भई तिनीहरूले काठमाण्डू छाड्नु पर्‍यो।

सं० १८०२ सन् १७४६ सम्म गोरखालीहरुबाट पराजित भई किंकर्तव्य विमुढ भएका राजा जयप्रकाशमल्लले आफ्नै रानी काजी र पाटने प्रधानहरूका षड्यंत्रले राज्यच्युत हुनु पर्‍यो। जयप्रकाशमल्ल की रानीले आफ्नु ८ महीने पुत्रलाई राज्यासनमा बसाइ केहि काल राज्य चलाइन्। राजा जयप्रकाशले भागेर पाटन, गोकर्ण अन्तमा गुह्येश्वरीको शरण लिए। सन् १७५० मा कुनै एक सिद्ध साधुबाट तरवार पायेर तिनका आर्शीर्वादले तिन्ले पुनः राज्यासन फर्काएका थिए। त्यस बेला सम्म गोरखालीहरू काठमाण्डू सम्म भिन्दै आइसकेका थिए। त्यसै निमित्त राज्यसन पाउना साथ राजा जयप्रकाशले पुनः युद्धयात्रा गर्नु पर्‍यो। नुवाकोट नेर जयप्रकाशको दलले गोरखालीहरुको सामना गरे। युद्धमा सफलता गोरखालीहरूले पाए। दहचोक, लक्ष्मीडाँडा, देउरालि, चुनदेवी, दोलखा शहरमा तिनीहरूको अधिकार भयो। समकक्षी पुराना वैरी गोरखालीहरूले देश विदेश जितेको डाहालें बाइसे चौबिसे का सहायताले लम्जुंगेहरुले गोरखा माथि आक्रमण गरे। त्यो खबर पाई कीर्तिमहोदयशाह र कालूपाण्डेलाई गोर्खेश्वरले गोरखा पठाएको थियो। सिहान चोकमा दुवै थरिको युद्ध पर्‍यो। युद्धमा पराजित भई लम्जुंगेहरू भागे। शत्रुलाई भगाइ गोरखालीहरु नुवाकोट फर्के।

लम्जुंगे हरु बाट निश्चिन्त भई राजा पृथ्वीनारायणशाहले कीर्तिपुर तिर कदम बढाये। भजंगल भने ठाउँमा तिन्को डेरा पर्‍यो। राजा जयप्रकाशका मदतलाई आएको सर्दार शक्तिवल्लभको भारतीय सेना पनी किर्तिपुरमा थियो। त्यस सेनाका सहायताले जयप्रकाशमल्लले गोरखालीहरुको सामना गरे। भजंगलका युद्धभूमिमा कालूपाण्डेले वीरगति पाए। स्वयं राजा पृथ्वीनारायण शाहले रणक्षेत्र छाडी भाग्नु परेको थियो। परामर्शदाता मित्र आफ्ना महामंत्री कालूपाण्डे-

को निधन घटनाले राजा पृथ्वीनारायणशाहको हृदयलाई व्यथित गरायो। श्री कालूपाण्डेका निमित्त राजा नितान्त अनुतप्त भए। विचक्षण विज्ञ पहुदर्शी र शूर कालूपाण्डे राजाका स्वर्गीय पिताका बेला देखिनै अमात्य कार्य गर्दै आएका थिए। तिनी जत्तिका सुयोग्य उत्तिकै प्रभुभक्त र राजकुलका हितकांक्षी थिए। तसर्थ कालूपाण्डेका निधनले राजा पृथ्वीनारायणशाहले सुबुद्धि संम्पन्न, बहुदर्शी, उदारचेता, उपदेशक, अनुरक्त मित्र एवं प्रधान सहायक लाई गुमाए। कालुपाण्डे पछि मुख्तियार वंशराज पाण्डे मनोनीत भएका थिए।

त्यस प्रकार कीर्तिपुर युद्धमा पराजित भए पनि पृथ्वीनारायणशाहले साहस छाडेनन्। निजको अपरिमित कष्टकर युद्ध द्वारा सम्वत् १८१७ सन् १७६१ मा कीर्तिपुर वरीपरीका डाँडाहरूमा अधिकार गरे। ती डाँडाहरु शिवपुरी, पलाञ्चोक, कोम्रेकोट चौकट र कविलासपुर हुन्।

पूर्व दोलखा सम्मको र वाइसे चौबिसे राजाहरुलाई पराजित गरि मकवानपुर सम्म गोरखालीहरूको विजय भएकोले मकवानपुर नरेश दिग्वन्धन सेन सशंकित भए। तिन्को पृथ्वीनारायणसंग मनोमालिन्य पुरानु थियो। पृथ्वीनारायणशाहका प्रभाव विस्तारले सशंकित भएका राजा दिग्वन्धन सेन राजा जयप्रकाशका मदतलाई तत्पर भए। त्यो कुरा पृथ्वीनारायणशाहमा अविदित रहेन। तिन्ले काठमाण्डू विजयका पहिले मकवानपुरको थान्को लाउन उचित बुझी मकवानपुर माथि यात्रा गरे। त्यस युद्धमा कितिमहोदयशाह र दलपतिशाहका अधीन वंशराजपाण्डे र काजी कहरसिंह वस्नेतको सेना गएको थियो। केही दिनका युद्ध पछि सम्वत् १८१८ सन् १७६२ का भाद्र महिनामा मकवानपुर पतन भयो। राजा दिग्वन्धन समातिए र बन्दी गरिए। तिन्का अमात्य कनकसिंह वानिया भागेर बंगालका नवावका आरमेनियन सेनापति गुर्गनखाँका शरण लागे। त्यस युद्धविजयमा मकवानपुरको तुले सञ्च प्रचुर गोलिगठ्ठा,

बन्दूकहरू, र खरखजाना समेत, हरिहरपुर गढ़ मथिको तिमाल ग्राम र सिन्धुलिगढ़ि सम्म गोरखालीहरुको अधिकार भयो।

यता कनकसिंह वानिया गोरखालीहरूका विरुद्ध गुर्गेन खाँलाई उक्साइ रहेका थिए।

तिनताक अंग्रेजहरूका प्रभाव वृद्धिले बंगालका नवाब मीर काशिम स्वाधीन भइ रहेका थिए। त्यस अवस्थामा कुनै नयाँ राज्य अधिकार गर्न पाए नवाबको गौरव स्थिर हुने देखि, गुरगेनखाँ गोरखालीहरूका विरुद्ध युद्धलाई तयार भए। सम्वत् १८१९ सन् १७६३ मा स्वयं मोरकासिमले वेतिया सम्म आइ ६०००० सैन्य दलका साथ गुरगेनखाँलाइ मकवानपुर पठाएका थिए। त्यसका जवाबमा काजी वशराज पाण्डे सरदार केहरसिंह नाहरसिंह र रामकृष्ण कँवरका अधीनस्थ गोरखा सैन्य मकवानपुर आएका थिए। तापलाखर र पुरानू मकवानपुर तिर बाट गोरखालीहरूले नवाबी सेना माथि हमला गरे। पहाडी युद्धकला न जान्ने मुस्लिम सैन्यले ठूलो फजियत उठाइ भाग्नु पर्‍यो। भगोडा नवाबी सैन्यको हजारौं बन्दूक र अरु सामान हात लगाइ गोरखालीहरू नुवाकोट फर्के।

नुवाकोटमा राजा पृथ्वीनारायण शाह त्यस युद्धको फलाफल हेरि बसेका थिए। त्यसै बेला लंजुंगेहरूले गोरखा माथि आक्रमण गरेको समाचार नुवाकोट पुग्यो। त्यसका दमनार्थ ससैन्य सूरप्रताप शाह कितिचन्द्र शाह गोरखा पुगे। त्यस पाला लम्जुङ्गेहरु मर्स्याङ्दी खोला तरि पुवाकोट, क्याउलि, भीरकोट, देउरालि सम्म बढि सकेका थिए। सन् १७६३ मा लकाङ्गनेर गोरखालीहरुले लम्जुंगेहरुलाइ ठूलो पराजय दिइ भगाए।

एकातिर मकवानपुर अधिकारका साथ बंगालका नवाबलाइ पराजित गरि दोश्रातिर लम्जुंगे प्रभृति पहाडी राजाहरुका दमन गरेर सम्वत् १८२० सन् १७६४ का आश्विन महिनामा राजा पृथ्वीनारायण शाहले

किर्तिपुर मार्था पुनः आक्रमण गरे। गोरखालीहरुको त्यो आक्रमण विकट थियो, ता पनी किर्तिपुरेहरुले तिनी हरुलाई डाँडामा उक्लन दिएनन्। त्यस युद्धमा सूरप्रताप शाहको देब्रे आँखा फुटेको थियो। वर्ष दिनका युद्ध पछि सम्वत् १८२२ सन् १७६५ मा किर्तिपुरे हरुले आत्मसमर्पण गरे। भाइ सूरप्रताप शाहको आँखा फुटेका रिसले नगर प्रवेश गरि, पृथ्वीनारायण शाहले कीर्तिपुरेहरुको नाक, कान कटाउन लगाएका थिए। काटिएका नाक कानहरु सत्रह धार्नि भएका थिए भन्ने कुरा फादर गेसिपिले आफ्ना नेपाल मिशन नाउका सूचिपत्रमा प्रकाशित गरेका थिए। कीर्तिपुर पतनले काठमाण्डू गोरखालीहरुका घेरामा पर्दै गएको बुझि राजा जयप्रकाशले इस्ट इन्डिया कम्पनी संग मदत मागी पठाए। तिन्का सहायताका निमित्त सम्वत १८२२ सन् १७६५ का अक्टूवर मैन्हामा कप्तान किनलोक नेपाल तिर हिंडेका थिए। अंग्रेजी सैन्य जनकपुरबाट कमला नदी तिरैतीर सिंधूलि गढिको तल माढ़ी सम्म पुगेका थिए। अंग्रेजी सेना नपुग्दै काजी वंश राज पाण्डेका साथ गोरखा सैन्य त्यस तिर पुगी रु केको र दुमजा र ढुंग्रे बाससा शत्रुको बाटो छेकि बसेको थियो। सिन्धुलि गढि मार्था चढी सकेका अंगरेजी सैन्य माथि गोरखालीहरुले आक्रमण गरे। विपरीत जलवायुले पीडित भइ रहेका अंग्रेजी सेनाले त्यस आक्रमणलाइ सहन सकेन। युद्धमा अंग्रेजी सेना विध्वंस भयो र केवल किनलोक मात्र भागेर बांच्न सकेका थिए।

बनेपाका ३ कोश दक्षिणपूर्वको चौकोट र धुलिखेल गाउँलाई गोरखालीहरु ६ महिना देखि घेरी बसेका थिए। त्यस स्थानको रक्षा डग्रहधर महेन्द्र शाह र तिन्का भाइ नरसिंह शाहले वीरता पूर्वक गरेका थियो। कप्तान किनलोकको पराजय पछि स्वयं राजा पृथ्वीनारायण शाह पुगे पछि पनी पन्द्रह दिन सम्म युद्ध हुँदै रह्यो। अन्तमा सोह्रौं दिन एउटा गोरखा सैनिकले पछिल्तिरबाट बर्छा हानि महेन्द्रलाइ धराशायी

पुऱ्याए। त्यसै दिन नरसिंह राइ पनि रणक्षेत्रमा घायल भइ लोटेका थिए। सेनापतिहरुलाइ रणभूमिमा लोटेको देखि चौकोटे सेनाले आत्मसमर्पण गऱ्यो। होस पाएर महेन्द्रसिंहले वीरगति पाएको र युद्धस्थललाइ शत्रुशून्य देखि नरसिंह राइ प्यूठाना तिर भागे। त्यस युद्ध विजयमा चौकोटे, बनेपा, नाला, खलप, साँगा आदि स्थानमा गोरखेश्वरको अधिकार भयो। राजा पृथ्वीनारायण शाहले वीर शत्रु महेन्द्र राइको ठूलो प्रशंसा गरेर तिन्का जहान बच्चाहरुले दुःख न पाउन् भनि तिनीहरुका निर्मित्ति उचित भत्ता दिने व्यवस्था गरेका थिए।

अंग्रेजी सैन्यलाइ पराजित र काठमाण्डू सम्मका भूमाग माथी अधिकार भये पछि राजा पृथ्वीनारायण शाहको काठमांडू राज्य विजयमा केही बाधा रहेन। त्यसै बीचमा जयप्रकाशबाट अपमानित भएका काठमांडूका अनेक भारदारहरु र ३२ जना तेन्हूंतेहरु राजा पृथ्वीनारायण तिर मिल्न आयेका थिए।

सम्वत १८२५ सन् १७६८ ने० स० ८८८ भाद्र शुक्ल अनन्त चतुर्दशी रविवार ता० २९ दिसम्बरका दिन दुइ तिरबाट काठमांडू माथि गोरखालीहरुको आक्रमण भयो। त्यस् दिन हनुमानढोका दरबारमा इन्द्रयात्राको रथोत्सव थियो। पहिले सेनापति तुलारामको सेनाले काठमांडू भित्र प्रवेश गऱ्यो। काठमाण्डूसेनाका सहायताले राजा जयप्रकाश मल्लले केही बेर तिन्को सामना गरे। अन्तमा गोरखालीहरुको दवावले तिन्ले पछि हटि तलेजुका मन्दिर भित्र भाग्नु पऱ्यो। गोरखालीहरु पनी तिन्को पछा गर्दै तलेजुका मंदिर सम्म पुगे। त्यस किसिमले गोरखालीहरुले पिछा गर्दै आएको देखि तिनी तलेजुका पाछलूतिरबाट पाटन तिर भागेका थिए। तिन्ले भाग्नु भन्दा पहिले तलेजुका भण्डारभरी बारुद राखी दिएका थिए। राजा जयप्रकाश मल्ललाईं समात्न मन्दिर भित्र पसि दिएका तुलाराम पाण्डे र तिन्का साथ हरुले बारुद भड्कें मर्नु पऱ्यो।

अर्को तिरबाट हनुमानढोका सम्म स्वयं पृथ्वीनारायण शाह पुगेका थिए। काठमाण्डू राज्यको शून्य सिंहासन त्यहिं राखिएको थियो। पृथ्वीनारायण शाहले त्यस राज्यसिंहासनलाइ ग्रहण गरि, इन्द्रयात्राको बाँकी रहेको विधि पूर्ण गर्ने आज्ञा दिए। कुमारीहरुले उत्सवको प्रसाद तिन्लाई दिए। गैह्र गोरखाली सरदार र नेपाली प्रजाजनले पृथ्वीनारायण शाहलाई सलामी चढाए। स्वामीभक्त तुलाराम पाण्डेका मृत्युले पृथ्वीनारायण शाह ज्यादै दुखी भए।

यस प्रकार राजा जयप्रकाश भागे पछि, काठमाण्डूमा पृथ्वीनारायण-शाहको अधिकार भएको थियो। काठमाण्डूबाट भागेर जयप्रकाश मल्ल पाटन पुगे पछि राजा तेजनरसिंहलाई पनी गोरखालीहरुको भय हुन थाल्यो। त्यस बेला राजा तेजनरसिंहको पतन चाहने पाटन राज्य लोगो ६ प्रधानहरु मनमनै खूब प्रसन्न भए। प्रकटमा तिनीहरूले भाँदगाँउ नरेशको सहायता ली संमिलित मोर्चा गरे मात्र गोरखालीहरुलाइ विजय गर्न सकिन्छ भन्ने सल्लाह दिन थाले। पाटने प्रधानहरुको त्यस सल्लाह-लाई उपयुक्त बुझी राजा जयप्रकाश र राजा तेजनरसिंह भादगाँउ तिर लागे। आफनो इच्छा अनायास सफल भएकोले प्रसन्नता पूर्वक प्रधान-हरुले राजा पृथ्वीनारायण शाहलाई पाटन ल्याउने प्रयत्न गर्न थाले।

आफना भाई दलनर्दन शाहको अघिको अपमान पृथ्वीनारायणशाहले बिर्सेका थिएनन्। तिन्ले प्रकट रूपमा पाटने प्रधानहरुका दूतको सम्मान गरि भोला पल्ट टेकुदोभान भन्ने ठाऊँमा भेट गर्नेछु भनी आज्ञा दि पठाए। गोरखा सैन्यवाहिनीका साथ भोलिपल्ट राजा पृथ्वीनारायण शाह टेकुदोभानमा पुगे। त्यहाँ ता छ प्रधानहरु पहिले देखि हाजिर थिए। पृथ्वीनारायणशाहले ती छ प्रधानहरुलाई देखना साथ बंदी गरे। तिनमध्ये एक जाना उम्केर मुग्लान भागेको थियो। बाँकी ५ जना प्रधानहरुले मृत्युदंण्ड पाए। त्यती गरी सिंदूरयात्रा गर्दै सदा समर विजयी पृथ्वी-नारायण शाहले पाटन नगरमा प्रवेश गरे। यस प्रकार काठमाण्डू

अधिकार भयेका सात दिन मित्र पाटन माथि पनि गोरखेश्वरको अधिकार भयो।

पाटनबाट भागेका राजा तेजनरसिंह र राजा जयप्रकाशमल्ल भादगाउँ पुगेका थिए। त्यहाँ पुगी तिनीहरूले राजा रणजित मल्ललाई गोरखालीहरूका विरुद्ध उचाल्न थाले। आफ्ना एकमात्र पुत्र वीर नरसिंहको अपमृत्यु र भित्रेनीपुत्र सात वाहालले भाईहरूबाट सशंकित रहने बुढा रणजित मल्लले तिनीहरुका कुरामा केही निश्चय गरेका थियेनन्। तिनलाई आफुले गरिएका अधिका उपकारभारले राजा पृथ्वीनारायणबाट आफु माथि केहि हस्तक्षेप होला भन्ने थिएन।

उत्तराधिकारीहीन राजा रणजितमल्लका भित्रेनीपुत्र सात वाहालेहरु भादगाउँको राज्यासनका इच्छुक थिए। त्यस किसिमले राज्यच्युत भई आएका सगोत्री दाजूभाई राजा जयप्रकाश मल्ल र राजा तेजनरसिंह मल्लआई देखि तिनीहरुको त्यो आशा हराँउदै गएको थियो। त्यस निमित्त राज्यलोभी सात वाहालेहरुले भित्र भित्र राजा पृथ्वीनारायण सँग सम्पर्क स्थापित गरे। त्यस्तो सुअवसर राजा पृथ्वीनारायण शाह पो किन चुकाउँथे। निजले सन् १७७१ सम्वत १८ ७ कार्तिक शुक्ल एकादशीका दिन भादगाउँ माथि आक्रमण गरे। सात वाहालेहरु पनि शहर बाहिर आई युद्ध गर्न थाले। तिनीहरूको सैन्य पूर्वनिर्देशानुसार केहि बेर लडा भाग्न थाल्यो। वाहालेहरूको सेना भागे पछि पृथ्वीनारायणशाहले नगरमा प्रवेश गरे। भ्रममा भूलीरहेका राजा रणजितमल्लको बल्ल आँखा खुल्यो। त्यस बेला तिनले व्यर्थ चिन्तामा समय न गुमाई ससैन्य दरबार बाहिर निस्कि गोरखालीहरुको सामना गरे। दरबार नेर दुबै थरिको घनघोर युद्ध परेको थियो। गोरखालीहरू बढेर दरबार घेर्दै गएका थिए। अन्तमा तिनीहरुको आक्रमण सहन न सक्कि भाँदगाँउले सैन्य भाग्न थाल्यो। भाँदगाउका राजा रणजित मल्ल पनी भागेर दरबार भित्र पसे। त्यस बेला राजा जयप्रकाश बाहिर निस्की ३।४ घडि सम्म गोरखालीहरू-

लाई रोकेका थिए। अन्तमा तिन्लो पनी तिघ्रामा गोली लागी मैदान छाड्नु पर्‍यो। त्यस पछि फेरि भाँदगाउलेहरुले मुहडा लिन सकेनन् दरवारको स्वर्णद्वार तोडि गोरखालीहरू भित्र पसे। पराजित मल्ल-राजाहरू दरवार भित्र घेरिएर बन्दि भए। सूर्यवंशी शिशौदिया कुल-भूषण राजा पृथ्वीनारायण शाहबाट पराजित राजाहरुको राजोचित संमानमा क्यै कमि गरिएको थिएन। त्यसका केहि दिन पछि घायल राजा जयप्रकाशमल्लको मृत्यु आर्यघाटमा भयो। मृत्युकालमा तिनले पृथ्वी-नारायणशाहमा 'एक जोर खराउ, चमर र छातः' पाउने प्रार्थना गरे। राजा पृथ्वीनारायण शाहले ती वस्तु राजा जयप्रकाश लाई दिई "मेरा नातिका रूपमा हजुरको इच्छा पूर्ण होला" भन्ने आज्ञा भएको थियो। जयप्रकाशले पनि "पशुपतिनाथमा चाँदीको जलहरी चढाउने मानिस मेरो अंशको हो" भन्ने बुझ्नु भनि भविष्यवाणी गरेका थिए। पछि आफ्ना शासनकालमा राजा रणबहादुरशाहले पशुपतिनाथमा चाँदीको जलहरी चढाएका थिए। त्यसैले तिनीलाई राजा जयप्रकाशको अवतार हुन् भनि त्यस समयका नेपालीहरू भन्थे भनि किंवदन्ति चलेको छ।

राजा रणजीतमल्ल सँग को आफ्नू पुरानो सम्बन्ध विचार गरी राजा पृथ्वीनारायणशाहले निजलाई पूर्ववत् राज्य गर्न प्रार्थना गरे। वृद्ध राजा रणजीतमल्ल आफ्ना आफस्त जनका विश्वासघातले संसारविरक्त भइसकेका थिए। तिनले आफ्नो शेष जीवन काशीवासमा विताउने इच्छा प्रकट गरे। राजा पृथ्वीनारायण शाहबाट तिनका इच्छानुरूप काशीवास-को प्रबन्ध गरियो। स्वदेश त्याग्ने वेलामा सात बाहालेहरू द्वारा भएको आफ्ना पुत्रको अपमृत्युको कुरा भनि, तिनीहरूबाट पृथ्वीनारा-यण शाहलाई सचेत बस्ने उपदेश दिएका थिए। निजले नेपाल छाडी चन्द्रागिरि पुगेर नेपाल फर्की आफ्ना मित्रेनीपुत्र सात बाहालेहरु लाई "घृणापात्र र आजन्म चाण्डाल तुल्य भगन्ते जीवन विताउनु परोस्" भन्ने श्राप दिएका थिए। बाहालेहरूले आफ्ना कर्मानुरूपको सजाय

गए। राजा पृथ्वीनारायणबाट तिनीहरुका सर्वस्व गरी नाक कान काटी भिखारी बनाई छाडेको थियो।

राजा तेजनरसिंह मल्ल आजन्म लक्ष्मीपुर दरबारमा नजरबंद गरिए। तिनको मृत्यु तहीँ भएको थियो।

यस किसिमले नेपाल खाल्टाका ठूला तीनै राज्यहरु भादगाऊँ, पाटन र काठमाण्डूहरुमा सदा समर विजयी गोरखेश्वरको अधिकार कायम भयो। पछि पृथ्वीनारायण शाहले गोर्खा राज्यासनलाइ झिकाइ काठमाण्डूलाइ आफ्नो राजधानि बनाए। तिन्ले आफ्ना पालामा हनुमान् ढोका दरबारका सम्मुख ६ तल्ले वसन्तपुर दरबार, रुद्रमति नदिको साँघु र काठमाण्डूको धर्मशाला बनाएका थिए। उनैका पालामा रामकृष्ण कँवरले पशुपतिको सडकमा ढुंगा छगाएका थिए।

राजा पृथ्वीनारायण शाहले पहिले एकीभूत नेपालका तिनै राज्य र गोर्खा राज्यको भूमिको नापी गरी समस्त भूमिको आय ५२ लाख निश्चित गराए। पहिले रञ्जक घरमा हात राखेर अग्नि प्रयोग गर्नुपर्ने बन्दूकको चलन थियो। त्यस्का स्थानमा पृथ्वीनारायण शाहले पथरकला बन्दूक निर्माण गराए। नेपाल विजयको एक वर्ष पछि युवराज सिंहप्रताप शाहको जन्म भयो। त्यस्का सात वर्ष पछि मुकुन्दसेन द्वितीय की पुत्री सँग युवराज सिंहप्रताप शाहको विवाह भएको थियो।

नवविजित राज्य र प्रदेशहरुको शासनाधिकार बलियो तुल्याइ गोरखेश्वर राजा पृथ्वीनारायणको विजयाभियान पूर्व तथा पश्चिमका इलाकाहरुमा हुन थाल्यो। काजी वंशराज पाण्डे, सरदार केहरसिंह बस्नेत, प्रभृति वीरश्रेष्ठ सेनापतिहरुका नेतृत्वमा गोरखालीहरुले क्रमशः पूर्व र पश्चिमका इलाकाहरूलाइ गोर्खा साम्राज्यमा सम्मिलित गरे। चौबिसि राज्य, कृष्णागंडकीलाइ दक्षिणबाट तरि, सप्त गण्डकीप्रदेश पर्नेका रिसिङ्, घिरिङ्, भीरकोट, सतहूँ, पयूँ, धुवाकोट, अरुणा

नदी तिरको किरात प्रदेश माथि विजय गर्दै सेनवंशीहरूको उदयपुरगढ़, अरूण, तमोर आदि स्थान र लिम्बुवान प्रदेशमाथि अधिकार गरे। सम्वत् १८२८ सन् १७७२ मा सदा समर विजयी गोरखेश्वर पृथ्वी-नारायण शाहको राज्यविस्तार सिक्किम राज्यको सीमा सम्म पुगेको थियो।

यस किसिमले अनेक देश प्रदेश विजय गरि, गोरखालीहरूको विजयाकांक्षा उद्भङ्ग गराइ, गोरखा साम्राज्यको जग वसालि ३२ वर्ष सम्म सिंहविक्रमले राज्यासन ग्रहण गरि, सन् १७७४ सम्वत् १८३० मा गंडाकी किनारका मोहन तीर्थका पवित्र क्षेत्रमा प्रबल प्रतापी गोरखे-श्वर पृथ्वीनारायण शाहले आफ्नु इहलोक समाप्त गरे।

भूपति पृथ्वीनारायण शाह सपरिवार मृगयालाइ नुवाकोट गढ़को नगीचको अरण्यमा सवारी भएको थियो। त्यहाँ प्रतिदिन विविध रकमका मृगहरूको संहार गरेर एक मास काल बितेको थियो। एक दिन राजा अश्वपिठ्युँमा आरोहण गरि मृगयालाई वनमा पसेका थिए। त्यहि बीचमा वनभित्रबाट सहसा एउटा भीषण बाघ बाहिर निस्कि राजाको सम्मुख भयो। राजा कहिल्यै पनी गोली वा बाण वा अन्य कुनै किसमको क्षेपणीय अस्त्रले बाघलाइ निधन गर्दैन थे तथा सम्मुख समरमा आफ्ना हातको पाश द्वारा सुयोग्य प्रतिद्वन्दीको निधन साधन गर्ने तिन्को अभ्यास थियो। तसर्थ बाघलाइ देखना साथ अश्वपिठ्युँबाट ओर्लेर तरवार र पाश हातमा लिइ अग्रेसर भइ बाघका शरीरमा आघात गरे। बाघ पनि लक्ष्य गरि राजा उपर आइ पर्‍यो तथा तिनलाइ सांघातिक रूपले आहत गर्दो भयो। तत्क्षण साथमा रहेका अनुचरहरुले बाघको संहार गरे। तर राजा पृथ्वीनारायण शाहको पनी मृत्यु भयो। साध्वी महा-रानीले सहमरण गरि सती भइन्। आफ्ना पूज्य आदर्श दम्पतीको स्मृतिमा राजा सिंहप्रताप शाहबाट त्यस ठाउँमा त्रिपुरेश्वर महादेवको स्थापना गरि एउटा धर्मशालाको निर्माण गराएका थिए।

# राजा सिंह प्रताप शाह ।

राजा पृथ्वीनारायण शाहका सिंह प्रताप शाह वा प्रतापसिंह शाह र बहादुर शाह नामका दुइ भाई छोरा थिए । पिता का देहावसान पछि शाहजादा सिंह प्रताप शाहले नेपाल राज्य सिंहासनलाई ग्रहण गरे । तिनी महान् पिताका योग्य पुत्र थिए । तिनले शक्तिशाली मोरंग नरेश कर्णसिंहलाइ परास्त गरि मोरगं राज्यलाइ गोर्खा साम्राज्यमा मिलाएका थिए । तिन्ताकको मोरंग राज्यको सीमा सिक्किम राज्य सम्म फैलिएको थियो । राजा सिंह प्रतापशाहले मोरंग माथि १७ पटक आक्रमण गर्नु परेको थियो । तिन्का सत्रह पटकको आक्रमणलाइ मोरंग नरेशले आफ्ना मित्रले देवातकरपोकरका सहायताले विफल तुल्याइ सत्राजित भन्ने प्रसिद्धि पाएका थिए । अन्तमा अठाह्रौं पटकका गोरखाली आक्रमणमा चैनपुर युद्धस्थलमा देवात करपोकर मारिए पछि मोरंग नरेश कर्णसिंह जंगल तिर भागेका थिए । सिंह प्रताप शाहको सिक्किम राज्यलाई आत्मसात गर्नें विचार थियो । तिन्ले आफ्नो समस्त जीवन मोरंग युद्धमा विताउनु परेकोले तिन्को त्यो आकांक्षा पूर्ण हुन सकेन । सन् १७८ सम्वत् १८३४ मा राजा सिंह प्रताप शाह स्वर्ग भए ।

# राजा रणबहादुर शाह ।

राजा सिंह प्रताप शाह स्वर्ग भए पछि बालख शाहजादा रणबहादुर शाहले नेपालराज्यासनलाइ ग्रहण गरे । रणबहादुर शाहका बाल्यकालमा देवर बहादुर शाहका मंत्रणाले विधवा राजमाता राजेन्द्र लक्ष्मी देवीले राज्यकाज चलाएकी थिइन् । कुमार बहादुर शाहका प्रबन्धमा नेपालको शक्ति तथा यश दिनोदिन बढ्न थाल्यो ।

तिन्ले वाइसे चौविसे पहाडी राज्यलाइ विजित गरी नेपाल राज्य... अनेक राज्यलाइ विजित गरि नेपाल राज्य को सीमा बढाएका थिए । इन्का शौर्य र वाहुवलले पूर्व मेचि र पश्चिम गढवाल सम्मका राजाहरुको मुटु काँप्दथ्यो । त्यस किसिमले कुमार बहादुर शाहले सन् १७८२ सम्ममा नेपाललाइ एउटा प्रभावशाली राज्य तुल्याइ सकेको थियो। भाउज्यू विधवा राजमातालाइ देवर बहादुर शाहको त्यो प्रभावविस्तारले तिनी स्वयं नेपालेश्वर हुन्छन् कि भन्ने शंकाले घेर्न थाल्यो । अन्तमा राजमाताको त्यै शंकाले उग्र रुप लिंदा त्यसैले गर्दा वहादुर शाहले नेपाल छाडी ४ वर्ष सम्म बेतिया बस्नु परेको पनी थियो । सम्वंत १८४२ सन् १७८६ मा राजमाताको... भए पछि मात्र तिनी फेरी नेपाल फर्के ।

त्यस वेला नवयुवक राजा रण बहादुर शाहले शासनाधिकार आफ्ना वाहुलिमा लि सकेको थियो। नेपालका इतिहास भरिका... वीर राजा हरुमा इनी सर्वश्रेष्ठ थिए । इन्का विनय, दया, दाक्षिण्य, ... वीर्य, देवब्राह्मणभक्ति र उच्चाकांक्षा आदि अनेक गुणहरुले प्रजा वर्गको निकै आशा बढेको थियो । कुमार वहादुरशाह नेपाल फर्के पछि राजा रणबहादुर शाहले तिन्को सलाहलाई मान्यता दिन थाले । बहादुर शाहका मन्त्रणाले त्यसै वेला राजमाताका आज्ञानुवर्ती वंसराज ... मारिएका थिए । युवराज रणवहादुरको साहस सर्वदृढता र बहादुर शाहको अनुभवि नीतिपटुता र धैर्यताका सहयोगले नेपाल दरबारमा एउटा अलौकिक शक्तिको प्रादुर्भाव भयो । बहादुर शाहले आफ्ना पुर्खा वाहसे चौविसे विजयमा बाँकि रहेका राज्यहरु माथि अधिकार ... ध्येयका पूर्तिमा मन लगाए । नया किसिमलें सैन्यको संगठन भई तिन्को शिक्षाको प्रबन्ध हुन थाल्यो । तिन्ताक गोरखा सैन्यवाहिनीका सेनापति प्रसिद्ध वीर दामोदर पाण्डे थिए । इनी महाराजाधिराज पृथ्वी नारायण शाहका प्रसिद्ध मंत्री र सेनापति काजु पाण्डेका नाति थिए ।

तिन्ताक पर्वते राज्यहरुमा पाल्पा शक्तिशाली राज्य थियो। त्यहाँ का राजा महादत्तसेन पराक्रमी तर साधु र सोझा प्रकृतिका थिए। वाइसे चौबिसे राज्य तिनै पाल्पा नरेशका मैत्री तथा आस्वासनले गोरखाली रु बाट निर्धक्क थिए। कूटनीतिज्ञ वहादुर शाहलाइ त्यो कुरा थाहा थियो। तिन्ले विजित राज्यको आधा अंश दिने लोभ दिखाए। पाल्पा नरेशलाइ आफु तिर मिलाए। पाल्पा नरेश मिल्ले पछि वाइसे चौविसेराज्य माथि गोरखालीहरुले आक्रमण गरे। पाल्पा राज्यका विश्वासघातले क्रमशः लम्जुङ समेत वाइसे-चौविसे राजाहरु पराजित भए। गोरखालीहरुका त्यस विजय यात्रामा स्वाभिमानी पहाड़ी राजाहरु मध्ये अनेकले आत्मोत्सर्ग गरे। आफ्नो नाम मात्रको अस्तित्व कायम राखी नाँउका वाइसे चौवीसे राजा अरू पनी नेपालमा यत्र तत्र पाइन्छन्। यस किसिमले सम्वत् १८४२ (१७८६) सम्ममा नेपालका स्वतंत्र वाइसे चौविसेका राजाहरुको अन्त भयो। प्रतिज्ञा अनुसार विजित राज्य मध्येको गुल्मि, कांची र अर्घा राज्य पाल्पालाइ दिइयो। सम्वत् १८४३ सन् १७८७ सम्मका आफ्ना विजययात्रामा सरदार स्वरूप सिंह र तिन्का साथी वीर गोरखालीहरुले तनहूँ राज्य-का साथ समस्त किरात प्रदेश र सोमेश्वर पर्यन्त सदा समर विजयी गोरखेश्वरको विजयपताका फहराइएको थियो।

नेपालका प्रायः समस्त राज हरुलाई अधिकारमा ल्याइ गोरखालीहरुको नजर वरी पराका राज्य माथी घुम्न थाल्यो। रणवहादुरशाहले स्वर्गीय राजा सिंह प्रतापशाहको अन्तिम लक्ष्य सिक्किम माथी आक्रमण गर्ने विचार स्थिर गरे। सम्वत् १८४५ सन् १७८८ मा अठारह हजार गोरखा सैन्यले सिक्किम माथी आक्रमण गर्‍यो। सिक्किम राज्य भुटान, बंगाल र नेपालका विचको बौद्धधर्मावलम्बी राजाको राज्य हो। त्यहाँका मानिषहरुमा तिब्बतका लामा धर्मको ठुलो प्रभाव छ। सिक्किमको जनसंख्या हिजो आज एक लाख पचिस हजारको छ। यहाँ नेपाली लेप्चा तथा भोटेहरू साथसंगै मिलेर वसेका छन्। हिजो आज संख्याका

अनुपातले नेपालीहरुको संख्या ७० प्रतिशतको छ। नेपालीहरुको या संख्या, नेपाल युद्ध पछि सिक्किम राज्य बृटिस भारतका अधीन भए पछि बढ्न थाली, भएको हो।

गोरखालीहरुका त्यस आक्रमणमा सिक्किम राज्य टिक्न सकेन। अलग्का-लका युद्ध पछि त्यसका दक्षिण पश्चिमको भूभाग गोरखालीहरुका अधीन भयो। युद्ध कालमा सिक्किम नरेशले तिब्बतका तासीलामा सँग मद्दत प्रार्थना गरेका थिये। तासीलामा त्यस बेला चीनदेशमा गएका हुँदा तिब्बतबाट मदत न आएकोले सिक्किमले संधि गर्नु नै पर्‍यो। सिक्किम विजय गरि विजयोन्मत्त गोरखालीहरू तिब्बत भीत्र समेत पसि उपद्रव गर्न थाले। तिब्बतीयहरुले त्यसको विरोध तथा नेपाल दरबारलाई त्यसको प्रबन्ध गर्न लेखि पठाए। नेपालसरकारले त्यस कुरांमा कानै दिएन। त्यस कुराले क्रोधित भएका तिब्बतीयहरुले तिब्बतमा बस्ने नेपाली हाकिम-को हत्या र त्यहाँका व्यापारीहरुको धन माल खोसेका थिए। त्यो समा-चार नेपाल पुगेमा राजा रणबहादुर शाहका क्रोधको पारावार रहेन। भाइ भारदारहरुका संमतिले निजले तिब्बतयुद्धको घोषणा गरे।

तिब्बतलाई जन साधारणहरू लामाको देश पनि भन्दछन। लामाको अर्थ ल० म०व० अर्थात् ब्रह्मावर्त्तको अपभ्रंस हो। भारत नेपाल र तिब्बत को सम्बन्ध प्रागैतिहासिक काल देखि चलि आएको छ। तिब्बतमा पौराणिक कालमा "न्यात्रिसेनयो" नाउँका नेपालबाट गएका आर्य राजपुत्र को राज्य थियो। बौद्धधम तिब्बतमा नेपालबाट गएको हो। तिब्बतीय-हरू आफुलाई आफ्नी दयाकी देवता इष्टदेवी चै तेरेजीका संतान हौं भनि भन्दछन्। तिब्बतको राजनैतिक इतिहास सातौं शताब्दि देखि पाइन्छ। त्यस कालमा तिब्बत बौद्धधर्मको गढ थियो। तत्कालीन तिब्बतीय सम्राट स्लोङ सान्-गम्पोले तिब्बत राज्यलाई चीनी तुर्किस्तान सम्म फैलाएका थिए। इनकी रानी नेपाल नरेश जयदेवकी पुत्री भृकुटी थिइन्।

श्रोंसङ्गुटोका अनुग्रहले सम्राट्ले बौद्धधर्म स्वीकार गरी त्यसलाई राज्यधर्म बनाएका थिए। तिनैताक धर्मपाल र असीतभिक्षु नाउँका भारतीय श्रमणहरू नेपालबाट बौद्धधर्म प्रचारलाई तिब्बत पुगेका थिए। तिब्बतका बौद्ध मूर्तिमा भारतका ९ औँ र १० सौं शताब्दिका कलाको स्पष्ट प्रभाव देखिन्छ। तिब्बतको वर्तमान लामाधर्मको स्थापनाका पूर्व ४७० वर्ष सम्म बौद्ध धर्मले तिब्बतीयहरूलाई प्रभावित गरेको थियो। लामाधर्म बौद्धधर्म विरोधी कुनै स्वतंत्र धर्म हैन। यो तिब्बतका बानधर्म, जैन श्रमणधर्म, तंत्रवाद र बौद्धधर्मका समन्वयले बनेको हो। चीनको प्रथम मंगोल सम्राट् कुबलाइ खाँले लामाधर्म स्वीकार गरेको थियो। तिन्ले तिब्बत स्थित शाक्य विहारका दलाइलामालाई तिब्बतको धर्माधिकारी र शासक बनाएका थिए। त्यसै बेला देखि तिब्बतमा दलाइलामाको राज्याधिकार चलिआएको छ। दलाइलामालाई तिब्बतीयहरू ईश्वरावतार सम्झन्छन्। दलाइलामा स्वर्ग भए पछि तिब्बतीय भूभागमा त्य मुहूर्त वा क्षणमा जन्मेको बालकलाई दलाइ लामाका सिंहासनमा राख्छन्। दलाइलामाले शरीर त्यागना साथ तिन्को आत्मा नवा शरीरमा प्रवेश गर्दछ भंने तिब्बतीयहरूको विश्वास छ। दलाइलामा सर्वदा गरिब कुलबाट लिइन्छन्। वर्तमान दलाइलामाको उमेर १२ वर्षको छ तथा तिब्बतका १५ औं लामा हुन्।

तिब्बतीय जनतामा लामाधर्मका भिक्षुहरूको प्रभाव छ। तिब्बतको प्रत्येक मानिष, प्रायः प्रत्येक घरको एउटा मानिष लामा हुन्छ। घरबाट गएका ती लामाहरूको जनतामा प्रभाव परेको देखिन्छ। ती भिक्षुहरू बहाल (विहार व मठ) मा बस्छन् र सात्विक जीवन यापन गर्दछन्। तिनीहरू कर्गपुर, तर्गपुर तथा अन्य लामा धर्मग्रन्थको अध्ययन गर्दछन्। जनताबाट प्राप्त भएका भिक्षाबाट तिनीहरूको भरण पोषण हुन्छ। लामा बहालहरू भारतका प्राचीन 'नालन्द' 'जंगदल' 'विक्रमशील' विद्यालय जस्ता शिक्षा एवं संस्कृतिका केन्द्र हुन्। स्थल

किसिमका बहालहरुको संख्या तिब्बत मा ३००० छ। ड्रेपुंग बहाल सब भन्दा ठूलो बहाल हो। त्यो ल्हासाबाट २।। कोश टाढा पर्दछ। त्यस बहालका भित्ताहरूमा धर्म विषयक र मनोरम दृष्यहरुका चित्र अंकित छन्। त्यसमा कला कल्पना र भावनाका संमिश्रणको स्पष्ट झलक पाइन्छ। तिब्बतीयहरू ज्यादै सरल र भावुक हुन्छन्।

तिब्बतको शासनसूत्र लामाहरु र सरदारहरूका हातमा छ। शासन-व्यवस्थामा तिब्बताधीश दलाइलामाको शक्ति अपरिमेय हुन्छ तर शासन-कार्य दलाइ लामाका महामंत्री तासी लामा गर्दछन्। तासीलामा अनन्त प्रकाश भगवान् बुद्धका अवतार मानिन्छन्। तासीलामालाइ परामर्श दिन चार मानिसको मंत्रीमंडल बनेको छ। त्यसलाई "कशाग" भन्दछन्। त्यस कशागका तिन सदस्य सरदारहरु र तिन्को हाकिम एक सदस्य लामा हुन्छ। तिब्बतका सरकारी महकमाहरुमा आधा लामाहरु र आधा पूर्वकालीन सरदार वंशजहरु लिइन्छन। मंत्रीमडलका सदस्यहरु ल्हासाका ड्रेपुंग सेरा र गन्देत बहालहरुका प्रभावानुसार व्यवहार गर्दछन्। तिब्बतको क्षेत्रफल ४६ लाख ३३ हजार वर्ग मीलको छ। त्यहाँको जनसंख्या पुग न पुग आठ लाखको छ।

त्यस बेला सम्म अनेक युद्धहरुका खर्च ले नेपालको राज्यकोष प्रायः शून्य भइ रहेको थियो। तिब्बत युद्धव्ययका लागी रणबहादुरशाहले राजकीय भूमि बन्धक राखी द्रव्य संग्रह गर्नु परेको थियो। सम्वत १८४६ सन् १७९० मा सरदार बमशाहका नेतृत्वमा गोरखा सैन्यदल तिब्बत तिर रमाना भएको थियो। दुवै राज्यको सीमाना रसुवान नदी तटमा तिब्बती र गोरखालीहरूको सामना भयो। त्यस स्थानका सामान्य युद्धमा गोरखालीहरूले सफलता पाए। तिब्बतीय सैन्यले भागेर केरुमा आश्रय लिनु पर्‍यो। सरदार बमशाहले तिब्बतीयहरुको केरु सम्म पिछा गरे। त्यहाँ दश दिन युद्ध भयो र तिब्बतीयहरु पुनः पराजित भइ ब्रह्मपुत्रका उत्तरमा शिविरमा पुगे। गोरखालीहरु पनि

[illegible]का पाइला माथि पाइला राखी दिगर्चा सम्म पुगेका थिए। दिगर्चा तिब्बतको प्रधान तथा मुख्य गढ थियो। त्यस ठाउमा केहि दिन घनघोर युद्ध भयो। अन्तमा दिगर्चालाइ खालि गरि तिब्बतीयहरु त्सांपु पारि ल्हासाको शरण लिए। गोरखालीहरुले दिगर्चामा डेरा गरी तिब्बत युद्धमा लूटेका अमूल्य वस्तु सुन चाँदीहरू नेपाल पठाएका थिए।

सरदार वमशाहले केहि दिन दिगर्चा वसी त्यहाँ रहनाले हानी सिवाय लाभ देखेनन्। हिमालयका तीव्र तुषारपातले गोरखालीहरू पीडित तथा निहत हुन थाले। खाने लाउने चीज कपडाको अभाव हुन थाल्यो। गोरखालीहरुले नगर प्रवेश गरेका वखत समस्त ग्रामवासीहरू त्सांपु पारी ल्हासा गइ सकेका थिए। त्यस वेला दिगर्चा किंवाँ गोरखालीहरुका अधिकारको तिब्बतीय भूभाग मरुभूमि तुल्य भइ रहेको थियो। त्यो सब कुरा सविस्तार सर्दार वमशाहले नेपालमा लेखि पठाए। तिब्बत तिरको त्यस्तो अवस्थाको विचार गरि राजा रणवहादुर शाहले तिनलाइ संधि गरि फर्कने आदेश दिए। तिब्बतीयहरू त्यस बेला स्वयं संधिलाइ लालायित थिए। त्यसै वेलामा वमशाह तिरवाट संधिको प्रस्ताव उपस्थित भयो। त्यस संधि प्रस्तावलाइ तिब्बतीयहरुले सहर्ष स्वीकार गरे। तल लेलिएको सन्धिशर्तमा सन्धि भयो।

१–तिब्बतले वर्षेनी नेपाल सरकारलाइ दशहजार रुपैया कर (सिरो) तिर्नेछ।

२–हियालय दुवै राज्यको सीमाना मानिनेछ।

३–ल्हासामा गोरखा दरवारको एउटा हाकिम राखिनेछ।

४–गोरखा सरकारले ल्हासामा व्यापारलाइ ३२ कोठी राख्नेछ।

५–तिब्बत सरकारले ती कोठीहरुबाट कुनै किसिमको भंसार लिने छैन।

६—तिब्बतवासी गोरखालीहरुको सबै मुद्दा गोरखाली हाकिमले हेर्नेछन्। तिब्बत सरकारले त्यस माथि हस्तक्षेप गर्न पाउने छैनन्।

यस् किसिमले सन्धि भए पछि सदा समरविजयी गोरखेश्वरको सेना नेपाल फर्क्यो।

गोरखा सैन्यदल फर्के पछि तासीलामा तिब्बत पुगेका थिए। तिब्बत पुगी निजले गोरखालीहरुको आक्रमण र सन्धि सम्मको यावत् कुरा थाह पाए। निजले भए भरको यावत् कुरा चीन सम्राटमा लेखेर मदतका निमित्त प्रार्थना गरेका थिए। चीन सम्राट्ले तासीलामाको पत्र पाइ नेपाल सरकारलाइ तिब्बत युद्धको कैफियत र तिब्बतमा लूटेका सामानहरू फर्काउने आदेश पठाएका थिए। चीन सम्राट्का त्यस पत्रको नेपाल सरकारले जवाब सम्म दिएन। त्यस् कुराले कुपित भएर चीन सरकारले नेपाल माथि आक्रमण गरे। सन् १७९२ सम्वत १८४८ मा जनरल फु-कंग उनका नेतृत्वमा सत्तरी हजार चिनियाँ सैन्य नेपाल आएको थियो। त्यस्का जवाबमा जनरल दामोदर पाण्डेका नेतृत्वमा गोरखा सैन्यवाहिनी पनी अगाडी बढेको थियो।

जनरल दामोदर पाण्डेले चोकदेव भन्ने स्थानमा गोरखालीहरुको डेरा गराए। तिन्का आदेशानुसार ससैन्य श्रीकृष्णशाह चालेङ्गवारी र काजी कीर्तिमान वस्नेतले गेर्खुटारमा अड्डा दिए।

यस प्रकार युद्धार्थ आफ्ना नाकाहरुको प्रबन्ध मिलाइ दामोदर पाण्डेले शत्रुपक्षका शक्तिको अनुसंधान गर्न थाले। अनुसंधानमा चीन सेनाका विशाल आयोजनको प्रत्येक कुराको पत्ता मिल्यो। मुट्ठी भरि गोरखाली सैन्यले विशाल समुद्रका भेल जस्तो चीन वाहिनीको सामना गर्नु दुष्कर थियो। त्यस कारण दामोदर पाण्डेले कूटचक्रको आयोजना गरे। निजले नेपालेश्वरमा आफ्ना त्यस आयोजनको कुरा लेखि कुनै विकट ठाउँमा जहाँ आफ्ना केहि सेना द्वारा चीनियाँहरुलाई नष्ट गर्न सकिन्छ

त्यसर युद्धमा तिनीहरुको हानि गर्न सके मात्र मैत्रिपूर्ण संधि हुन सक्छ अन्यथा चीनियाँ सैन्यका सम्मुख हामी टिक्न सक्ने छैनौं भनी विन्ति पठाएका थिए। त्यसका जवाबमा राजा रणबहादूरशाह तिरबाट "जसरी हुन्छ सन्धि गर" भन्ने आदेश आएको थियो। नेपाल दरबारको आदेशपत्र पाइ दामोदर पाण्डे। ४ जना काजीहरुका साथ रणजित पाण्डेलाइ जनरल फु-कंग-उन का समीप सन्धिचर्चा मिलाउन पठाए। चीनियाँ सैन्य वसेका त्यस ठाउमा पानीको ठूलो अभाव थियो। नेपाली काजीहरुले सन्धिप्रस्ताव ली पुग्ना साथ चिनीयाँ काजी तुंथाङ्ग र धुरिनाले "पानी भएको राम्रो स्थानमा हाम्रो वस्ने ठीक गर अनि सन्धिको कुरा हुनेछ" भनी भनेका थिए। नेपाली काजीहरुले घरै यावत् कुरा दामोदर पाण्डेमा बिन्ति चढाये। निजले यावत् कुरा सुनी रामदास पन्त र मणिराम लामालाइ चिनियाँ सैन्यलाइ भुलाइ छिटो मीरको ठाउँ चोकदेवको पारी दूधे थुममा पुर्याउने आज्ञा दिए। आज्ञानुसार एकातिरबाट गेर्खुटारको अग्लो स्थानमा पुर्याउने तिनहुँले संकोटको बाटो गरि चिनियाँहरुलाइ रामदास पन्तले चोकदेव पुर्याए। अर्कातिर मणिराम लामाले त्यै किसिमबाट चिनियाँहरुलाइ दूधे थुममा पुर्याएका थिए।

त्यस किसिमले चीनियां सैन्य भार पैह्रो पूर्ण विकट स्थानमा पुगे पछि अंकुष्णशाह र कीर्तिमान वस्नेतका सैन्यले आक्रमण गर्यो। नेपालीहरूको त्यो आकस्मिक मारले चीनियां लस्कर पछिल्तिर हट्यो। भाग्न लागेको आफ्नो सेनालाइ चीनियाँ जनरलले वेत्रावती नदी तर्ने आज्ञा दिये। पैह्राले खुट्टा अड्याउन न सक्ने ठाउँमा नेपालीहरुका हतियारले घाइते भइ रहेका चिनीयाँ सैनिकहरुलाइ आफ्ना हाकिमको कुरामा कान दिने मौका थिएन। त्यस किसिमले आफ्नो आज्ञा अमान्य भयेको देखि फु-कग-उनले आफ्नो सैन्यका पछाडि तोप सोझ्याए। तिनीहरुलाइ वेत्रावतीका पुलमा आर्कन गर

लगाये। जनरल दामोदर पाण्डे गोरखाली सैन्यका साथ वेत्रावती पारि बसेका थिए। बलपूर्वक अघि लिएको चीनियाँ सैन्य पुलका माँझमा पुग्ना साथ गोरखालीहरुले हतियार वर्षाउन थाले। भयंकर भीरको साँघुरो बाटो पछिल्तिरबाट आफ्ना साथिहरुले घचेटिएका र अगाडी गोरखालीहरुका हतियारले घाइते भइ रहेका चीनियाँ फौजको त्यस बेला विचित्र अवस्था थियो। त्यसै बेला अकस्मात् मानिसको दबाब परि वेत्रावतीको पुल समेत भाँचियो। त्यसले गर्दा चीनियाँहरुले पाउनु सम्मको फजियत पाए। अनेक चीनियाँ सैनिक गोरखालीहरुका अस्त्रका शिकार भए। कति आफ्नै मानिषहरुबाट कुल्चिइ मरे। धेरैले भीरबाट हामफालि वेत्रावती नदीमा जलसमाधि लिएका थिए।

शत्रू सेनाको भयंकर नाश भएका बखत बुद्धिमान् दामोदरपाण्डेले जनरल फु-कँग-उनका समीप संधिको प्रस्ताव पुऱ्याए। आफ्ना फौजको वेहिसाब हानि भइ रहेको देखि तिनले संधिप्रस्ताव मजूर गर्नु पऱ्यो। दुवै सेनापतिहरुका स्विकृतिले युद्ध स्थगित र संधि भयो। संधि अनुसार तिब्बत सरकारले नेपाल संग भएको संधि लई मान्नु पऱ्यो। नेपाल सरकारले तिब्बतीय भूभागबाट आफ्नो अधिकार छाडे। त्यसै संधि द्वारा चीन सम्राट्का सन्मानका निमित्ति प्रत्येक पाँच वर्षमा चीनि सम्राट्का सेवामा सौगात पठाउने कुरा पनी नेपाल सरकारले स्वीकार गऱ्यो। यस किसिमले आफ्ना साहसिक नीतिबाट वीरश्रेष्ठ दामोदर पाण्डेले विशाल चीनी सैन्यका आफतबाट देशको रक्षा गरे। संधि भए पछि सदा समरविजयी गोरखेश्वरको सैन्य नेपाल फर्क्यो।

यस किसिमले सर्वैतरका युद्ध विग्रहमा सफल भई उन्नत हुँदै गएको नेपालको भारतीय राजनीतिक रंगमंचमा स्थान भई सकेको थियो। चीनसँग नेपालको सन्धि भएका कुराले सन् १७९२ सम्वत् १८४९ का १ मार्चका दिन भारतीय बृटिष गवर्नर जनरल लार्ड कार्नवालिसले नेपाल सरकार सँग मित्रताको सन्धि गर्ने प्रस्ताव

रहे। त्यस कार्यका निमित्त सम्वत १८५० सन् ७९४ मा राजदूत कप्तान कार्क पेट्रिक नेपाल आएका थिए।

राज्य, राज्याधिकार तथा यशका वृद्धका साथ रणबहादुर शाहको घमण्ड पनि बढ्न थाल्यो। चारैतिरका सफलताका समाचारले तिन्मा अभिमानको प्रवेश भयो। सन् १७९५ मा राज्यका नापीको कुरा लिएर बहादुरशाह सँग तिन्को मतभेद भयो। शत्रु र मित्र सबैका हुन्छन्। कुमार बहादुरशाहका प्रभाव विस्तारले पोलिने मानिसहरूको कमि थिएन। औसर पाएर ती छुल्याहाहरुले रणबहादुर शाहको कान फुक्न लागे। रणबहादुरशाहले पनी बहादुरशाहको त्यस दिन सम्मको सबै उपकारलाइ बिर्सि तिन्लाई बन्दि गरी भयाल्खानमा हाले। कुमार बहादुरशाह बन्दि भए पछि दामोदरपाण्डे नेपालका प्रधान मन्त्री भएका थिए।

राजा रणबहादुर शाहका सुशासनमा नेपालवासीहरू परमानन्द तथा सुख-स्वच्छन्दताले काल बिताइ रहेका थिये। तर जगतको सुख क्षणिक हुँदो रहेछ। दैवात् त्यसै बेला भएको अर्को दुर्घटनाले नेपालवासीको उन्नतिमा कुठारपात मात्र हैन कि देशलाइ भीषण विपत्तिमा पनि डुब्यायो।

एक दिन राजा रणबहादुर शाह देवादिदेव पशुपतिको दर्शनलाइ पुगेका थिए। त्यसै बखत एउटा अलौकिक सुन्दरी नवविवाहिता मैथिल ब्राह्मणकन्या पनी दर्शनलाइ आएकी रहिछन्। तिनी माथि राजा रणबहादुर शाहको नजर पर्‍यो। तिनी आसक्त भइ बौलाहा जस्तै भएका थिए। ब्राह्मणकन्या, उसमाथी विवाहिता। तिन्लाइ अपहरण गरे प्रजामा असन्तोष उठ्नै भयले त्यस बेला तिनि चुपचाप दरबार फर्केका थिए।

राजाधिराज पृथ्वीनारायण शाहका नुवाकोट युद्धभूमिका सहायक रहेको परशुराम थापाका सन्तान गोर्खानिवासी अमरबहादुर थापाका छोरा

भीमसेन थापा तिन्ताक रणबहादुर शाहका विस्वस्त पारिषद भइ रहेका थिए। राजा रणबहादुर शाहले तिन सँग मैथिल सुन्दरीको यावत् कुरा भनि, जस्ता किसिमले हुन्छ तिनलाइ ल्याइ दिने आग्रह गर्न थाले। त्यस घृणित कुराबाट भीमसेन थापाले राजाको मन फर्काउने धेरै प्रयत्न गरेको थियो। अन्तमा राजाको अनुरक्ति र विमुढता देखेर निजले त्यो प्रस्ताव लिइ मैथिल सुन्दरीका घर भादगाऊँ जानु पऱ्यो। निजले भादगाउँ पुगेर युवतिका पिता सँग सबै कुरा विस्तार गरे। मैथिल सुन्दरीले त्यो सबै कुरा थाहा पाइ पहिले ता त्यस्को विरोध गरेकी थिइन्। पछि प्रबल राजाज्ञाका भयले तिन्को त्यो विरोध टिक्न सकेन। निजले राजालाइ वरण गर्नें कुरामा तीन टा सर्त राखी त्यो शर्त स्वीकार हुन्छ भने राजरानी हुन्छु भनी आफ्नो स्वीकारोक्ति दिएकी थिएन् —

१—राजाले पहिलेका रानी छोरालाइ अन्यत्र राख्नु पर्नेछ।

२—राजाले फेरि कुनै अन्य स्त्रीसँग सम्पर्क राख्ने छैन भन्ने बाचा गर्नु पर्नेछ।

३—मेरा गर्भबाट जन्मेको पुत्र राजाको उत्तराधिकारी हुन्छ भन्ने घोषित गर्नु पर्नेछ।

कामान्ध रणबहादुर शाहले आफ्नू स्वभाविक चरित्र असाधारण गुणग्राम र विवेक बुद्धि माथी जलाञ्जलि दिई मैथिल सुन्दरीका सबै प्रस्तावलाइ स्वीकार गरे। पहिला शर्त अनुसार गुल्मी राजकन्या बडा महारानी त्रिपुर सुन्दरी देवी, युवराज रणोद्दीपशाह र अन्य रानी छोरा समेत दरबार बाहिरिए। त्यस पछि मैथिल सुन्दरीले सिन्दुर यात्रा गर्दै दरबारमा प्रवेश गरिन्।

यस् प्रकार विवाहिता ब्राह्मण कन्याले पट (बडा) महारानीको पद पाएको र दरबार पसेकोले भाइ भारादारहरुमा ठूलो असन्तोष उठेको थियो। तापनी त्यस बेला मनल राज हजुर र शर्मका सम्मुख विरोध

तैं करैगै साहस भएन । दुइ वर्ष पछि तिनै मैथिल महारानी का गर्भ-बाट पुत्रको जन्म भयो ।

तेन्हुँते महारानी गर्भिणी भएका सँगसँगै वसन्तपुर चौतरिया की महारानी पनी गर्भवती भएकी थिइन् । तेन्हुँते महारानीका कुमार जन्मको केहि दिन पूर्व निज चौतरीनीसाहेबले पुत्र पाइन् । विकृत मस्तिष्कका राजा रणबहादूर शाहले आफ्ना वचन अनुसार ती तेन्हुँते महारानीका कुमारलाई नेपाल राज्यासनको उत्तराधिकारी अवश्य बनाउने थए र त्यसले वंशरक्त दूषित हुने थियो । त्यसैले राजवंशका विशुद्धताको रक्षा गर्न गैह्र भाई चौतरियाहरूले मतो गरि वसन्तपुरका चौतरिया शिशु साह तेन्हुँते महारानी सुत्केरी भए पछि सद्यः पैदा भएको कुमारलाइ स्नान गराउन स्नानागारमा लगी साटेर चौतरिया शिशुलाइ तेन्हुँते महारानीका पलँगमा सुताएको थियो । तेन्हुँते महारानी कुमार वसन्तपुर चौतरिया सन्तान मानिए । यस किसिमले नेपालाधिराजवंशको विशुद्धता कायम रह्यो । त्यो कुरा राजा रणबहादूरशाहले पत्तै पाएनन् । यो कुरा श्री ५ भूपतीन्द्र विक्रमशाहकी पत्नी श्री त्रिपुरादेवी ( श्री ५ ... शाहबका मुमा ) ले धिराज वंसकी साहिली सुढिनीले मलाई ... हो भनी स्वयं लेखक सँग भनेको थियो । चौतरिया शिशु तेन्हुँते महारानीपुत्र गरिएका कुमारको नाऊँ गीर्वाण युद्ध विक्रमशाह ... ।

यो कुरा नेपालका गैह्र पुराना भारदारहरूलाइ विदित थियो । ... राणावंश प्रवर्तक जंगबहादुरले ठेकेदारि मुखितयारि हात ... पछि धिराजवंसलाइ कलंकित गरि नचो देखाउने अभिप्रायले ... भारदारहरूका साटो फाटो भएको ऐतिहासिक कुरा लाइ दबाएका हुन् ।

पुत्र जन्मका दुइ वर्ष पछि मैथिलमहारानी विफर रोगले बिरामि ... भइन् । प्रेयसी रानीका मृत्युले राजा बौलाहा जस्ता भए । ... शेष पछि भारदार कि प्रजावर्गले प्रेयसी रानीपुत्र ...

र्णयुद्ध शाहलाइ राज्यासन दिदैनन् कि भन्ने शंकाले बौलाहा रणबहादुरले आफ्ना बडा महारानी पुत्र रणोद्दिपशाह र अनेक सगोत्रिहरुलाइ अति निर्ममतापूर्वक हत्या गराए। त्यसै बखत बंदी कुमार बहादुरशाहको पनी हत्या भयो। बौलाहा राजाले त्यस्तो मनगरि गरेको देखि राज परिवार, भाइ भारदार र प्रजाजन तिन्का विरुद्ध संगठन गर्न थाले।

संगठित जनशक्तिबाट सन् १८०० सम्वत १८५६ मा पागल रणबहादुर शाह राज्यच्यूत गरिए र शिशु गीर्वाणयुद्धशाह नेपालाधिराज मानिए। राजमाता त्रिपुरसुन्दरीदेवी शिशु राजा गीर्वाणयुद्ध शाहकी अभिभाविका भइन्। तिन्ले पनी वीरवर दामोदर पाण्डेलाइ नेपालामात्य बहाल गरिन्। पदच्युत राजा रणबहादुर शाहलाइ नुवाकोटमा राखियो। केहि काल पछि राजा रणबहादुरशाह भागेर काशी पुगेका थिए। काशीमा तिन्ले निर्गुणानन्दका नाउँमः स्वामीभेष लि ४ वर्ष बिताएका थिए।

शिशुराजा गीर्वाण युद्ध शाहका प्रथम राज्यकाल सम्वत १८५७ सन् १८०१ मा अंग्रेजहरु संग नेपालको व्यापारिक संधि भयो। सम्वत १८५८ सन् १८०२ मा कप्तान डब्लू० हि० नाक्स राजदूत भई नेपाल आएका थिए। स्वतन्त्रताभिमानी नेपाली जनताले तिन्लाई वर्ष दिन नेपाल भित्र प्रवेश गर्न सम्म दिएनन्। वर्ष दिन पछि नाक्सले नेपाल पस्न पाए र पनि नेपालीहरू बाट विशेष सुविधा न पाउनाले फर्कनु परेको थियो। सम्वत १८६० सन् १८०४ मा लार्ड वेलेजूलिले त्यस् निरर्थक संधिलाई तोडी दिए।

काशी बसेका राजा रणबहादुर शाहको संन्यासभेष एउटा आडंबर मात्र थियो। तिनि नेपालराज्यासनलाई पुनः हात लगाउने औसर हेरि बसेका थिए। भीमसेन थापा त्येस बेला तिन्का साथ थिए। सम्वत १८६० सन् १८०४ का प्रारम्भमा लार्ड वेलेजुलि बाट प्रोत्साहित भई रणबहादुरशाह नेपाल फर्के। तिन्लाई नेपाल फर्कन्दा पं० रंगनाथ उपाध्याय

[वै]डेल र तिन्का भारतीय चेलाहरुले मानिषका डाकले नेपाल पुऱ्याएका [फ]िर काठमाण्डू भित्र पसि सके पछि दामोदरपाण्डे रणबहादुर शाह-[ला]ई रोक्न खडेका थिए। नेपाली सैन्यले रणबहादुर शाहलाई देखि पुराना राजा हुन् भनी चिन्हेर दामोदर पाण्डेका आज्ञाको उलंघन [ग]र्‍यो. त्यसै सैन्यका मद्दतले आफ्ना विरोधिहरुलाई बंदि गरि निर्विघ्न [रण]बहादुर शाह दरबारमा पुगे। तिन्ले शिशुराजा गीर्वाण युद्ध लाई [नु]वाकोट पठाई पुन: राज्यासन ग्रहण गरेका थिए। दामोदरपाण्डे प्रभृति [वि]रोधीहरूले प्राणदण्ड पाए। राजा रणबहादुरशाहले दामोदरपाण्डे [प]छि भीमसेन थापालाई नेपालीमात्य बहाल गरे। भीमसेन थापा राष्ट्र-[कल्]याणाभिलाषी र कर्मपरायण मंत्री थिए। तिन्ले पदग्रहण गरि आफ्नू [म]हत्वपूर्ण समय राष्ट्र निर्माण र प्रजाका सुख संवृद्धमा लाउने नीति [ग्र]हण गरेको थियो। त्यसैले तिन्ले राजाको कृपापात्र र प्रजाको श्रद्धा आर्जन गरि आफ्नो प्रतिभाको परिचय दिने औसर पाएका थिए।

स्वाभिमानी मराठाहरुका आत्मविप्लवले त्यस वेला भारतवर्षको जस्तो [अ]वस्था भएको थियो, यदि अति कूटपटु, धूर्त तथा राष्ट्रीय भावना पूर्ण [अं]ग्रेज प्रतिद्वंद्वी न भएको भए निश्चय नै नेपालेश्वर दिल्लीश्वर हुन [स]के थिए। नेपालीहरुको विजयाभियान भारतिय भूभाग माथि दगुनं [स]कि सकेको थियो, तिनताक भारतीय कुनै सेना वा सेनापतिहरूका [तु]लनामा नेपालको सुशिक्षित रणदक्ष सेना र सुनिपुण वीर सेनापतिहरू [क]सै हरूमा कमति थिएनन्। प्रबलतर प्रतिद्वन्द्वी भए पनी एक पटक [प]रीक्षा गर्न गोरखालीहरूले बाँकि राखेनन्।

"विजय प्राप्त गरेका गोरखालीहरू झन सुरिदै गये। अब तिनी [ल]ाई तिरहुत र बंगाल लगायत सतलजको समथल भूमिमा आँखा [ल]ाउने कुरा नेपाल दरबारका प्रगति बाट बिलकुल स्पष्ट बुझिन थाल्यो। [उ]नीहरू मौका पाउनी साथ समथल भूमिमा हमला गरी रहन्थे भन्ने

कुरा 'मलस् हिस्ट्री आफ वृटिश इन्डिया वाइ विलसन भोलूम ८ पेज ७मा " लेखेको छ।

नेपालको पश्चिमि सीमा र लाहोर राज्यका माझमा गढ़वाल नामको राज्य पर्दथ्यो। त्यसको राज्य विस्तार कुमाउ गढ़वाल तथा कोट कागडा सम्म फैलिएको थियो। त्यहाँका राजा संसारचन्द्र थिए। तिन्ताक नेपाल का पश्चिम विभागका हाकिम भीमसेन थापाका भाई नयनसिंह थापा थिए। तिनी उदार चित्तका कार्य कुशल व्यक्ति थिए। सीमानाको झगडा बढ़ेको कुराले तिन्ले गढ़वाल माथि आक्रमण गर्नु पऱ्यो। गोरखालीहरूले गढ़वाल भित्र प्रवेश गरेपछि राजा संसार चन्द्रका मुकुटले टाँउ छाडेको थियो। तिन्ले आफ्ना निरपराधिताको उल्लेख गरी नेपालेश्वरमा संधिको आवेदन पत्र पठाए। साथ-साथ आफ्ना राज्यको केही अंश र नेपालेश्वर संग आफ्नी एकमात्र कन्याको विवाह गरि दिने प्रस्ताव समेत पठाएका थिए। राज्य लोलुप मन्त्री वर्गले त्यस कुरामा कानै दिएन। विचक्षण दूरदर्शी प्रधानामात्य भीमसेन थापालाई पनि बुद्धि भ्रम भयो। नेपाल नरेश संग अपुत्रक राजा संसारचन्द्रकी कन्याको विवाह भएको भए तिन्का मृत्यु पछि त्यो राज्य बिना प्रयास नेपालमा मिल्ने थियो भन्ने सानु कुरामा विचार गर्न सकेनन्।

गढ़वाल राज्यमा प्रवेश गरेका गोरखालीहरूको सालकागडा दुर्गमा गढ़वालीहरूले सामने की गिरे। त्यस युद्धमा पराजित गढ़वालीहरू कांटकागडा दुर्गतिर भागे गढ़वाल सेनापति विक्तिसिंह सालकागडा रणभूमिमा मारिए। विजयोल्लासका साथ हात्ती माथि चढ़ि विजयी गोरखा सेनापति नयनसिंह थापाले नगर प्रवेश गरे। तिन्ले नगर तोरणद्वारका निकट पुग्ना साथ नजिकैका दुइतले घरका झ्यालबाट सहसा बन्दूकको आवाज सुनियो। शब्दका साथ यौटा गोली सनसनाउदै आएर नयनसिंह का छातीमा पसेको थियो। नयनसिंह बिचेत भई हात्ती बाट भूमिमा लोटे। गोरखालीसेनामा ठूलो कोलाहल भयो। त्यै बेला फेरि त्यै झ्याल

बन्दुकको आवाज सुनियो । शब्दका साथ अर्को गोलि आई उपसेनापति दलवम शाहका दाहिनु तिघ्रालाई भेदेको थियो । दलवम शाह पनी निश्चेत भई भूमिमा लोटे । त्यस्तो कायरता पूर्ण कार्य कस्ले गऱ्यो भन्ने कुरामा गोरखा सैनिकहरूले त्यस घरमा प्रवेश गरी अपूर्व दृश्य देखे सम्मुख रणमत्त रूपले हातमा बन्दुक लिई एउटी कोमलाङ्गी वीररमणी उभिरहेकी थिइन् । गोरखालीहरूले तिन्का निकट पुग्ना साथ तिन्ले बन्दुक दाग्न थालिन् । गोलि खाई ३।४ जना गोरखालीहरू भूमिमा लडे । तर अनेक विजयोन्मत्त सैनिकहरूका सामुने एउटी अवलाको काहाँसम्म जोर पुग्दथ्यो । अन्तमा रमणीले बन्दिनी हुनु पऱ्यो ।

नयनसिंहले चेतना पाएर त्यो अद्भुत विवरण सुनि रमणीलाई तुरुन्त ल्याउन आज्ञा दिए । आज्ञाबमोजिम बन्दिनी हाजिर गरिइन् । बन्दिनी हुँदा पनी रमणीका मुहारमा साहस तथा प्रतिहिंसाको भाव प्रकट हुन्थ्यो । रमणीको त्यो अपूर्व रूप देखि विस्मय साथ नयनसिंहले सोधे-"सुन्दरि ! तिमि को हौ ? तथा किन अकारण हामी माथि तिमीले गोली चलाएकी हौ ? जवाबमा रमणीले भनिन्—"म रणक्षेत्रमा वीरगति पाउने गढवाली सेनापति कीर्तिसिंहकी सहधर्मिणी हूं । मलाई तिमीहरू माथि गोली हान्ने यथेष्ट हक छ । मैले स्वामिहन्तालाई मारि त्यस हत्याको बदला लिन खोजेकि हूँ । अब म निश्चिन्त चित्तले स्वामीको सहगमन गर्न चाहन्छू । समरक्षेत्रमा जीवन दिन न पाएकोले मलाई ठूलो विस्मत छ । अब तिमीले तुरुन्त मेरो प्राणदण्डको आज्ञा दी आफ्नो कर्त्तव्य पूरा गर" । रमणीको त्यो कुरा सुनी प्रतीहिंसाग्रग्र दलवम पाण्डेले नयनसिंह संग भने-- 'स्वामिन् ! यस पापीयसीलाई तुरन्त प्राणदण्ड दी दिनुहोस् ।" तर वीर नयनसिंहको चित्त त्यतिको संकुचित थिएन । तिन्का उदार चित्तमा प्रतिहिंसाका ठाँउमा रमणीका प्रति श्रद्धा भक्ति र सम्मान बढ्दै गएको थियो । निजले रमणीको प्रशंसा गरी भने—

"वीरवाले ! तिमि यथार्थमा पतिपरायणा हौ । हामी माथि गोली हानि तिमिले आफ्नो कर्तव्य पालन गरेकी हौ । म तिम्रा प्रति खूब संतुष्ट छु र तिमिलाई नेपाल पठाउन चाहन्छु । तिमिले नेपालमा आफ्नु जीवन आनन्द पूर्वक बिताउन पाउने छौ । मेरो अनुरोधले नेपालेश्वरबाट तिमीलाई प्रसस्त भत्ता बक्सिनेछ । सेनापति नयनसिंहका त्यस प्रस्तावलाई अस्वीकार गरि रमणीले भनिन्—"सेनापति ! म तिम्रा आचरण देखि तिम्रो शौर्य वीर्य र उदारचित्तको प्रशंसा गर्दछु । तर तिम्रो प्रस्तावमा सम्मत हुन सक्दिन । स्वामीका विरहमा म अब एक पल बाच्न चाहन्न । यदि मेरा प्रति तिमिलाई प्रसन्नता छ भने मेरो अन्त गराई उपकार गर । स्वर्गमा स्वामीले मेरो अपेक्षा गरि बक्सियेको छ । म त्यहिं जान चाहन्छु । तिमिले मेरो प्राणनाश गर्दैनौ भने म आत्महत्या गर्नु परे गरि मर्न तैयार छु । मेरो कर्तव्य सिद्धि सकेको छ ।

रमणीका प्रति तिन्ले भनेको कुराले नयनसिंहको श्रद्धा भन् बढ्दै गयो । तिन्ले रमणीलाई अनेक किसमले बुझाई त्यस क्रूर विचारलाई त्याग्ने अनुरोध गरे । पतिव्रता रमणीले कुनै प्रकारले पनि आफ्नो विचार बदलिनन् । अन्तमा नयनसिंहले भने—' सत श्रेष्ठ ! यदि तिम्रो प्रण प्राणत्याग गर्ने नै छ भने तिमिले स्वामीका साथ सहमरण गर्नु उचित होला ।" नयनसिंहको त्यो करा सुनी अत्यन्त प्रसन्न भई रमणीले भनिन्—'वीरवर ! मेरा अन्तस्करणको वासना पनी त्यही थियो ।" नयनसिंहले कीर्तिसिंहको शव खोज्न तुरन्त मानिष पठाए । चिताकर्म र दान ध्यानादि अनुष्ठानहरुमा चाहिने द्रव्य समेत रमणीलाई दिन आदेश गरे । भोलिपल्ट कीर्तिसिंहकी सती पत्नीले पतिका साथ चिताप्रवेश गरि आफ्नो अन्त गरिन् । केही काल पछि आफ्नू महानताको परिचय दिएर सेनापति नयनसिंहले पनी प्राण त्याग गरे । सेनापति नयनसिंहका मृत्यु पछि निजका भाई जनरल अमरसिंह थापा पश्चिम विभागका हाकिम भएर आए । तिनी शौर्य वीर्य रणकौशल र साहसमा दाजू भन्दा कमती

थिएनन् । पदग्रहण गर्ना साथ तिन्ले युद्धारम्भ गरि कोटकागडा माथि चढाई गरे । गोरखालीहरूले कोटकागडा माथि आक्रमण गरेको सुनी राजा संसारचन्द्र भागी पंजाब पुगेका थिये । गढवालनरेशका मदतलाई पंजाबाधीश रणजितसिंहको सिख सेना कोटकांगडामा आएको थियो । दुवै भारतीय वीर जाति सिख र गोरखालीहरुको कोटकागडामा छ महिना युद्ध पऱ्यो । त्यस ठाँउका युद्धमा गोरखालीहरुले पछि हट्नु पऱ्यो र सालकगडा दुर्गमा फर्कनु पऱ्यो । सालकागडामा पनी सिख र गोरखालीहरूले छ महिना युद्ध गरे । सिखवाहिनीले सालकागडा युद्धमा गोरखालीहरुका खुकुरिको चमत्कार देखे । विजय कसैले पाएको न देखि रणजितसिंहले आफ्मा मध्यस्थतामा संधि गराए । संधि अनुसार अल्मोडा कुमाऊँ र सालकागडा सम्मको पुगनपुग एक सय कोसको विशाल प्रदेश नेपालेश्वरका अधान भै नेपालराज्यको अंग मानियो । "श्री रणबहादुर शाहका शासन कालमा गोरखालीहरू सुदुर पश्चिम सम्मका पहाडी राजाहरुलाई परास्त गर्दै आफ्नु प्रसार बढाउदै गएका र सतजल सम्म पुगेर नदीलाई समेत तरी राजपूत राजा मांड र कोटाजलाई विजय गरेका थिए । गोरखालीहरुले आफ्ना त्यस विजयका प्रतिद्वन्द्वित्वमा पंजाब नरेश रणजितसिंहलाई समेत उछिनेका थिए" भन्ने कुरा मिल्सहिस्ट्री आफ् वृटीस इन्डिया को पेज आठमा लेखेको छ ।

यस् किसिमले हिमालयकक्षमा तिन्ताक सम्म केवल पाल्पा राज्य स्वतंत्र बाँचेको थियो । पहाडीराज्यहरूमा प्रतिद्वंदीशून्य भएका नेपालेश्वरको त्यस्मा नजर गड्नु स्वाभाविक थियो । सालकागडा तिरबाट निश्चित भई राजा रणबहादुरले पाल्पा दखल गर्ने विचार लिए । तर त्यस् दिन सम्मको मर्चा सम्बन्धका विचारले तिन्ले पाल्पा माथी प्रत्यक्ष आक्रमण गर्ने साहस गरेनन् । पाल्पा दखलका निमित्त कूटचक्रको आयोजन हुन थाल्यो । त्यस चक्रका सूत्रधार श्री भीमसेन थापा थिए ।

नेपाल... मिलाउन पनि कुरा मिलाई, भीमसेन थापा पाल्पा दरबार-

मा हाजिर भए। "अत्यावश्यक कुरा परि नेपालनरेशबाट हजूरलाई डाकि बक्सेको छ" भन्ने समाचार पाल्पानरेशमा विन्ती गरियो निष्कपट पाल्पाराजले मित्र नेपालनरेशका महामंत्रीको त्यो कुरा पत्याएर नेपालतिरको यात्रा गरे। पूर्वव्यवस्थानुसार नेपाल पुग्ना साथ पाल्पानरेश बन्दी गरिए। पाल्पा नरेश बन्दी भएको खबर पाउना साथ भीमसेन थापाले पाल्पा माथि अधिकार जमाए। पाल्पा राजपुत्र भागेर रामनगर तिर लागे। त्यस किसिमले पाल्पा राज्य पनि नेपालाधीन भएको थियो। इनै ताक नेपालमा स्वर्णमुद्रा चलेको हो।

यस किसिमले त्यस वेला सम्म पूर्व भोट पश्चिम काश्मिर उत्तर दिगर्चा र दक्षिण अवध राज सीमा सम्म नेपालेश्वरको एकाधिपत्य भई नेपाल राज्यले साम्राज्यको रूप लि सकेको थियो।

पाल्पा राज्य दखल भए पछि रणबहादुर शाहको उन्मादले फेरि जोड पकन थाल्यो। तिन्को अहंभाव तथा गोत्रपीडक प्रकृति फेरी प्रकट भयो। एक दिन राजा रणबहादुर शाह मुखारि गरी बसेका थिए। त्यसै स्थानमा निजका विमातृभाई (सिंहप्रताप शाहका नेवार्नी रानी पट्टका छोरा) शेरबहादुर शाह आई पुगे। तिन्लाई देखना साथ उन्माद पूर्ण हाँसो हासेर "सबैको ता थान्को लाग्ने, तँ यौटा बाँचेका छस्, तेरो पनि थान्को लाउनु पर्ने भएको छ" भन्ने रणबहादूरले हुकुम गरे। राजा रणबहादुर शाहका त्यस कुराले, तिन्ले पहिले गरेका उन्मादपूर्ण गोत्रहत्यादि घोरतर कार्य लाई सम्झि शेरबहादुर शाह झसङ्ग भए। राजा रणबहादुर शाहले भनेका त्यो कुरा सत्य नै हो भन्ने भई "हो थान्को लाउनु नै उचित हो" भनी शेरबहादुर शाहले (सम्वत् १८६३ सन् १८०७ मा) आफ्ना खुकुरीका चोटले हतभागी रणबहादुर शाहको मुँडा फोरी प्राणनाश गरे। त्यसै ठाँऊमा भ्रातृघाती तथा राजहन्ता शेरबहादुरको गर्धन पनी रणबहादुर शाहका अंगरक्षक बालनरसिंह कँवरले छुट्याएका थिए।

# राजा गीर्वाण युद्ध वीर विक्रम शाह ।

राजा रणबहादुर शाह स्वर्ग भए पछि सम्वत १८६३ सन् १८०७ मा युवराज गीर्वाण युद्ध शाह नेपाल राज्यासनमा विराजमान भए। त्स वेला सम्म चारै तिर फैलिएको विस्तृत नेपालले साम्राज्यको रूप लि सकेको थियो भन्ने कुरा माथि नै लेखिएको छ। त्यसै वेला विदेशी आक्रमणक हुण र शकहरूबाट भारतवर्षको रक्षा गर्ने, देश र धर्मका रक्षक विक्रमादित्य, शालिवाहन, चन्द्रगुप्त, पुष्यमित्र, समुद्र-गुप्त, यशोवर्धन सरि आर्य परंपरागत चलन अनुसार नेपालका शाह वंश-का राजा गीर्वाण युद्ध शाहले नेपालको त्यस गौरव मय कालका स्मृतिमा चक्रवर्तीन्द्र पदपूरख "वीर विक्रम" पदवी लाई आफ्ना नाऊंका साथ अलंकृत गरेका थिए।

भारतका राजनैतिक संकष्ट कालमा हर्षवर्धन र पुलकेसिनले, आफ्ने वरपर्मा प्रतिद्वन्द्वीहरूको दमन गरेर, आफ्ना साम्राज्यको राम्रो व्यवस्था गरेर, राष्ट्रको जस्तो सेवा गरेका थिए, त्यस्का निमित्त आज प्रत्येक भार-तीय तिनीहरूको कृतज्ञ छ। अवश्य हर्ष वा पुलकेसिनका ती प्रतिद्वन्द्वी हरू पनी भारतीयहरूका पूर्वज थिए। ठिक त्यै रितले देशमाथि आई रहेको संकटलाई देखेर अनेक साना साना राज्यमा बाँडिएका आफ्ना वरपर्मा प्रतिद्वन्द्वीहरुलाई दबाएर गोरखेश्वर प्रतापी शाहवंशका राजा-हरूले राष्ट्रको राजनैतिक विचारलाई दृढ र नेपाली जनताका जीवनलाई प्रगतिशील बनाउने समयोपयोगी कार्य गरे। अवश्य भारतका सीमा सँग जोडिएको पाल्पा, तनहूँ र मकवानपुरका सेन वंशीय राजा र काठमाण्डु, पाटन र भाँदगाऊंका मल्ल राजाहरू, जस्को गोरखाका शाह वंश राजाहरूले अस्तित्व मेटाएका थिए, ति पनी हाम्रै श्रद्धेय पूर्वज थिए। तर भारतमा फैलि रहेको अंग्रेजी प्रभूत्व कालमा शाह वंशले नेपालको संगठन न गरेको भए आज संसारमा नेपालको अस्तित्व सम्म देखिने थिएन। आधि

लेखिएका सेन वा मल्ल राजाहरू अवधका नवाब र पछी अंग्रेज-हरुका मांण्डलिक राजाका रूपमा परिणित हुँदै गएका थिए। यो कुरातिनी-हरुले अवधका नवाबलाई तिर्ने राजकर र पछि अंग्रेजी कालमा कलकत्ता कमसिरिएटमा बुझाउने राजकरले स्पष्ट हुन्छ। भारतवर्षका विशाल तथा संगठित मराटा मण्डल साम्राज्यकिंवा मैसूर साम्राज्यको प्रचण्ड शक्तिपूर्ण टिपु सुल्तानहरूले अंग्रेजी शक्तिका संमुख आफ्नु अस्तित्व कायम राखन सकेनन् भने नेपालका साना साना राजाहरुले अंग्रेजी शक्तिका सन्मुख आफ्नु रक्षा गर्नु असम्भव थियो भन्ने कुरा इतिहासका पाठक-हरुले राम्ररि बुझ्न सक्नु हुन्छ। त्यसै निमित्त भारतीयहरुले पूर्वकालका मगध, आन्ध्र, आन्ध्रभृत्य, राष्ट्रकूट, भोज र पांड्य आदि राज्यका स्थापना-मा गर्व गरे सरि हामी प्रत्येक नेपालीले शाहवंशको उदय र संगठित नेपाली राज्यका स्थापनामा गर्व गर्नु र त्यस्का जातीय गौरव र अभिमान माथि विचार गरि शाहवंशका प्रति पूर्ण श्रद्धा तथा प्रेम प्रकट गर्नु पर्दछ। चक्रवर्तीन्द्रपद पूर्ण "वीर विक्रम" पदवी धारण गरि हिन्दु धर्म संस्कृतिका रक्षक राजा गीर्वाण युद्ध वीर विक्रम शाह बाट "गीर्वाण रत्नावली" नाऊँको धर्मग्रन्थ लेखिएको थियो।

राजा गीर्वाण युद्ध वीर विक्रमशाह बाट त्यस वर्षका पजनीमा महामन्त्री भीमसेन थापालाइ जनरल पदवीका साथ श्री ३ लेखने अधिकार दि नेपालको प्रधान मन्त्रीका पदमा वहाल गरे। (हाम्रा आर्यरित्यानुसार श्री ६ गुरुलाइ, श्री ५ राजा लाइ, श्री ४ शत्रूलाइ, श्री ३ मित्रलाइ, श्री २ स्त्रीलाइ तथा श्री १ पुत्रलाइ लेखने चलन छ। त्यसै अनुसार नेपालेश्वर महाराजा-धिराज लाइ श्री ५ र दुनियाँ बाट भएका मन्त्रीहरुलाइ श्री ३ लेखने चलन देखि चलेको हो।

इनैका पालामा स्वर्गीय रणबहादुर शाहका हत्यामा सलाह दिने दोषमा वृद्ध बन्दी पाल्पानरेश महादत्त सेन काटिए तथा राजहन्ता, आत्मघाती शेरबहादुरका मृत्यु कारक बाल नरसिंह कुँवरले "काजी"

मान पाएको थियो । सम्वत् १८६४ सन् १८०८ मा नेपालमा ठूलो भैंचालो गएको थियो । त्यस्ले गर्दा ज्यादै मानिषको मृत्यु र नेपालका अनेक महल मन्दिरहरु ध्वंस भएका थिए ।

राजा पृथ्वीनारायण शाहका पाला देखि राजा रणबहादुर शाहका पाला सम्ममा गोरखा साम्राज्यमा सम्मिलित भएका राज्यका प्रदेशहरु, त्यस बेला सम्म विश्रृंखल र असभ्य अवस्थामा थिए । राजा गिर्वाण युद्ध शाहका पालामा युद्धविग्रहबाट निश्चिन्त भएका बेलामा भीमसेन थापाका यत्नले उन्नति र सुश्रृङ्खल स्थापित भइ नेपाल प्रकृत प्रभावशाली हुँदै गयो । नूतन गठित गोरखा जातिको पराक्रम र प्रभाव वृद्धि गर्नामा भीमसेन थापाले विशेष मन लगाए । नेपालमा त्यस बेला सम्म सैनिक संगठनको व्यवस्था किंवा सैनिकसिविरको स्थापना भएको थि न । सर्वप्रथम तिन्ले व्यवस्थित सेनाको संगठन गरि सैनिक सिविरको स्थापना गरेका थिए । अनि सैनिक शिक्षाको प्रबंध गरि तिन्का दरमाहको स्थायी सुविधालाइ जागीर भूमि निर्धारित गरेका थिए । सैनिकहरुको पदमर्यादा सूचक हीरा जुहार सुन चाँदिका पेंचर चाँदतोडाहरु बनाएका थिए । त्यसै बेला देखि नेपालका महामंत्री लाइ तीन चाँद युक्त पगरी निर्धारित भएको हो । उत्तम कमान बन्दुक र अन्यान्य युद्धास्त्र गोलि बारुदका निर्माणलाइ ठमेल टोल हरुमा कारखाना स्थापित गरिए । निर्दिष्ट सैन्य बाहेक गोरखाजातिको समरशिक्षाका निमित्त अनिर्दिष्ट सेनाप्रणालीको चलन पनी तिनैले चलाएका हुन् । यस किसिमले सुशिक्षित र उत्तम अस्त्रशस्त्रले सज्जित भएका गोरखालीहरु त्यस बेलाका कुनै भारतीय सैनिकहरु भन्दा न्यून रहेनन् ।

जंगी विभागको समुचित प्रबन्ध गरि भीमसेन थापाले निजामति (राजस्व र शासन विषय) को पनी अनेक सुधार गरेका थिए । राज्यमा प्रदेश र जिल्लाहरुको विभाजन र प्रत्येक जिल्लाका विभागहरुको शासन तथा राजकर असूल गर्ने नयाँ पदहरुको सृजना गरेकी

पदहरुमा योग्य कर्मचारीहरुको नियुक्ति गरेका थिए। न्याय निमार्
लाइ न्यायालयको स्थापना भयो। राज्यका पर्वत र जंगलको भूमिहरुमा
आवादिलाइ स्थायी व्यवस्थाको बन्दोबस्त गरियो। तराइ प्रदेशमा
जंगली काठहरुका बिक्रीलाइ अनेक स्थानहरुमा कोठीहरु राखिए। राज्यको
शोभा र प्रजाजनका सुख सुविधालाइ देश भरिमा सडक तथा सांघुर
बनेको थियो। जावत आवतका सुविधालाइ घोडा गाडिको चलन पनि
तिनैका पालामा भएको थियो। नेपाल काठमांडूको धरहरा र स्तम्भहरु
तिनै भीमसेन थापाका कीर्ति हुन्। इनले पशुपतिनाथका मन्दिरमा
सुन र चाँदिको ढोका लगाएका थिए।

भीमसेन थापाका नेतृत्वमा जंगलमय नेपाल केहि कालमा शक्तिपूर्ण
र सुन्दर राज्यका रूपमा परिणत भयो। गोरखाजातिको शौर्य, वीर्य,
साहस र उद्योग सर्वोच्च राजकर्मचारी लगायत सामान्य प्रजाजनका हृदय-
मा प्रतिपालित भएको देखिन थाल्यो। त्यस प्रकार उद्योगी र उत्साही
भएका गोरखालीहरु स्वभावत: राज्यलोलुप भइ उठे। हिमालयराज-
चक्रचूडामणि सदा समरविजयी नेपालेश्वरको दृष्टि तुहिनगिरिपार-
स्थित भारतवर्ष तिर घुम्न थाल्यो।

नव-प्रबुद्ध युद्ध प्रेमी महत्वाकांक्षी गोरखालीहरुले आफ्ना राज्यका
दक्षिण तिरको मुहुडा गरि अनायास गोरखपुर तिरको अवधका करद जिमिदार
भगवान लालहरुका समस्त भूभाग माथि अधिकार गरे। त्यो भूभाग अघि
पाल्पा राज्यका अधीन थियो। नेपालले पाल्पा राज्य माथि अधिकार
गरेर पाल्पाको पहाडी अंशलाइ नेपालमा मिलाए पछि, तराइका त्यो
भूभागमा अवधका नवावको अधिकार भएको र पछि नवावले त्यसका
शासनाधिकार (सम्वत १८५८ सन् १८०२ मा) इष्ट इण्डिया कम्पनीलाइ
दिएको थियो। त्यस वेला सम्म अंग्रेजहरुले भारतीय साम्राज्य
स्थापनामा आफ्ना प्रबल प्रतिद्वन्द्वी मराठा वा भारतीय नरेशहरुलाइ
पराजित गरि सकेको थियो। त्यस अवस्थामा नया खडा भएको

प्रतिद्वन्द्वी गोरखलीहरुको विजयलाइ तिनीहरु किन सहन गर्थे । भारतमा अंग्रेजी उपनिवेशका निमित्त हिमालयका घाटिहरु अनुकूल हुँदा देहरादून गढवाल र कुमाऊँका प्रदेशहरुमा अंग्रेजहरुको आँखा पहिलै गडेको थियो । त्यस बेला सम्म ती प्रदेशहरुमा प्रबलप्रतापी गोरखेश्वरको अधिकार थियो । अंग्रेजहरुले ती प्रदेशहरु हडप्ने निहुँ खोजेको बखतमा गोरखालीहरुको गोरखपुर तिरको विजयले अंग्रेजहरुका निमित्त झन् सजिलो तुल्यायो । त्यो कुरा लिएर अंग्रेजहरुले गोरखा सरकार संग लेखापढि गर्न थाले । दुवै सरकारले नया नया जितेका आफ्न राज्यसीमाको त्यस बेला सम्म स्थायी निपटारा गरेका थिएनन् । तिन्ताक सम्म सीमाको कुराको विवाद खडा भएमा दुवै सरकारले संयुक्त भारदारको कमिसन वा पञ्चायतबाट निपटाउने गरेका थिए । "त्यस किसिमका पंचायतमा अंग्रेजहरूको नै लाभ हुन्थ्यो । आफ्ना इच्छित स्थानका प्राप्तिका निमित्त अंग्रेजहरुले पहिले पनी अनेक पटक् कचिंगल उठाइ फरेबी गर्दै न जान्ने गोरखालीपंचहरूबाट आफ्ना मनोनुकूल फैसला गराउने गरेका थिए" भन्ने कुरा प्रिंसेपले आफ्ना इतिहासमा लेखेको छ ।

त्यस पटकका झगडाका फैसलाका लागी पनी पच छानिएका थिए । अंग्रेजी पंचका नेता मेजर ब्रेडसा र गोरखाली पंचका नेता सुब्बा कृष्णानन्द थिए । त्यस पटक अंग्रेज पंचहरु फैसलाका ठाउमा झगडाको निहुँ चाहन्थे । सम्वत् १८७० सन् १८१४ फाल्गुनमा अंग्रेज पंच ब्रेडसाले नेपाली पंचका साथ अशिष्ट व्यवहार गरि पञ्चायत भङ्ग गरे । इष्ट इण्डिया कम्पनी सरकारका गवरनर जनरल मार्कुइस हेस्टिंगको त्यहि इच्छा थियो । हेस्टिंगले नेपाल सरकारलाइ त्यो विवादग्रस्त भूमि छाड्न एउटा कडा पत्र लेखि पठाए । साथ साथ नेपाल सरकारले २५ दिन भित्र त्यो भूभाग छाडदैन भने कम्पनी सरकारको सैन्यबलले त्यसमा कब्जा गर्नू भनि गोरखपुरका जिलाधीशलाइ आदेश पनी पठाएका थिए ।

अंग्रेजहरुले त्यस पल्ट झगडा बढाउन खोजेको हो भन्ने नेपाल

सरकारले बुझ्न बाँकि रहेन। नवप्रबुद्ध रणकांक्षी वीर गोरखालीहरुले आफ्ना सदा समरविजयी नेपालेश्वरका प्रतापले त्यस दिन सम्म पराजय वा पराभवको अनुभव गरेका थिएनन्! तसथ निहुँ खोजि आइ लाग्ने प्रतिद्वन्द्वीको रणनिमंत्रणलाइ स्वीकार गरि तिनिहरुले अत्यन्त शिष्ट भाषामा हेस्टिङ्गका अशिष्ट पत्रको उत्तर दिए। नेपाल सरकारका त्यस पत्रमा पनी मित्रता कायम राख्ने इच्छा प्रकट गरेको थियो।

यता २६ सौं दिन पुग्ना साथ गोरखपुरका जिलाधीशले कम्पनी सरकारको ३ पल्टन सेना पठाइ उक्त भूभाग माथि कब्जा गरि, त्यहाँ आफ्ना थानाहरु कायम गरे। त्यति गरि अंग्रेजी सेना फर्क्यो। सम्वत १८७० सन् १८१४ का ९ मइका दिन गोरखालीहरुले त्यस इलाकामा पुन: कब्जा गरे। हेस्टिङ्गको लडाञीको तयारि त्यस बेला सम्म पूर्ण भएको थिएन। नेपाल युद्धलाइ चाहिने धनका निमित्त हेस्टिंगले अवधका नवाब संग बलपूर्वक अढाइ करोड रुपया असुल गरे। यस प्रकार धन जनको बन्दोवस्त गरि सम्वत् १८७० सन् १८१४ का १९ मइका दिन मार्ग महिनामा लखनौवाट नेपालका विरुद्ध युद्धघोषणा भयो। विशालभारतका अधिपति भइ सकेका अंग्रेजहरुको समस्त ऐश्वर्य, वीरता, बुद्धिबल, बाहुबल, अस्त्रबल र धूर्तता नेपालका विरुद्ध उभिएको थियो। त्यस्का सम्मुख नेपाल राज्य धेरै सानु थियो ता पनी आफ्नो असाधारण वीरता, अतुल साहसले स्वदेश र स्वाधीनका निमित्त गोरखालीहरु अग्रसर भए। पञ्जाब प्रान्तको सतलज नदी देखि बिहार प्रान्तको कौशिका नदी सम्मको ३०० कोसको विस्तृत सरहदमा युद्धको चंचलता देखिन थाल्यो।

अंग्रेज सैन्य ५ तरफबाट आधुनिक युद्धास्त्रले सज्जित भए तीस हजार सैनिक र सयकडौं तोपका साथ नेपाल माथि आक्रमण गर्न बढेको थियो।

अंग्रेजी सेनाको पहिलो दल कर्नल आक्टरलोनिका अधीन लुधि-

…ा तिर सतलज किनारका पहाडिहरुबाट वढ़न प्रस्तुत भयो। त्यस …मा ६ हजार भारतीय पैदल सैनिक र तोपका साथ तोपखानाका सिपाही- …हरु पनि थिए।

दोश्रोदल जनरल जिलेस्पिका मातहत भइ सहारनपुर तिरबाट …देहरादून, गढ़वाल, श्रीनगर टेहरी र नाहन तिर हमला गर्न तयार …थियो। त्यस्मा १००० गोरा र २५७० भारतीय सैन्य थिए।

तेश्रोदल—मेजर जनरल उडका नेतृत्वमा बनारस तिर बाट गोरख- …पुर तिर जम्मा भइ बुटौल मार्गबाट पाल्पा हान्ने विचारले …थियो। त्यस्मा १००० हजार गोरा र ३००० भारतीय …सिपाही थिए।

चौथो तथा मुख्यदल – मेजर जनरल मारलेका तत्वावधानमा मुर्सि- …दाबादमा जम्मा भई वागमति र गंडकीका माँझका मार्ग बाट काठमांडू …मा आक्रमण गर्ने घातमा थियो। त्यस्मा जुग न पुग १००८ गोरा …र ३००० भारतीय सैनिक थिए।

पाँचौदल – मेजर लेटरका अध्यक्षतामा पूर्व कौशिका पारीका …नेपालको करद राज्य सिक्किमलाइ फोरि नेपालका पूर्वि जिल्लामा आक्रमण …गर्ने विचारमा थियो। त्यस्मा २००० भारतीय र अलिकति गोरा …सैनिक थिए।

त्यसका जवाबमा जनरल अमरसिंह थापा, जनरल उजीरसिंह थापा आदि सेनापतिहरुका नेतृत्वमा १२००० को सीमित सैन्य र पुराना …किसिमको अस्त्र-शस्त्र लिएर गोरखालीहरू पनी अगाडी बढ़ेका थिए।

——:o:——

# प्रथम–समर

## कलङ्गाको रणक्षेत्र

युद्ध घोषणा भन्दा पहिले जनरल जिलेस्पीको सेनाले सीमाना भित्र प्रवेश गरेको थियो। त्यस बेला नहान र देहरादूनको भूभाग नेपाल राज्यान्तर्गत थियो। नेपालका पश्चिमी विभागका हाकिम प्रसिद्ध साङ्-कांगडा विजेता जनरल अमरसिंह थापा त्यस बेला युद्धसंचालनार्थ नाहन आइ बसेका थिए। कप्तान बलभद्रसिंह कँवर केवल ५०० साथीहरूका साथ देहरादूनको रक्षाका निमित्त खटिएका थिए। जनरल जिलेस्पिको आउने खबर पाइ बलभद्रसिंहले फुर्ति साथ देहरादूनका डेढ कोस उत्तर "नालापानी" का अग्लो डाँडोमा कलंगा नाऊँको एउटा सानु गढि खडा गराए। तिन्ले पहाडका ढुंगाहरू र जंगलका मुढाहरुका सहायताले गढिको परखाल तयार पारेका थिए।

सम्वत १८७० ता० २४ अक्टूबर सन् १८१४ का दिन जिलेस्पिको सेनाको ठूलो भाग कर्नल मान्रिका अधीन देहरादूनमा पुग्यो। जिलेस्पि स्वयं सहारनपुरमा बसेका थिए। अग्रेजहरुलाइ त्यस ठाऊँ सम्म पुग्न नेपाली करद राज्य खिर्राका राजा बहादुरसिंहका छोरा राणा जीवन-सिंहले ठूलो मदत गरेको थियो। युद्ध घोषणाका ८ दिन पहिले भएको त्यस आक्रमणमा बलभद्रसिंहले आफु भन्दा आठ दोवर र अधिक शस्त्रास्त्र भएको अंग्रेजी सेनाको नाऊँ मात्रको गढिबाट जस्तो बहादुरीले मुकावला गरे त्यो संसारका इतिहासमा सदा स्मरणीय रहने छ।

कलंगा दुर्गमा ५०० सैनिक बाहेक सय जना स्त्री बच्चा पनि थिए। अंग्रेजहरुको युद्ध घोषणाका पूर्व गरिएका बेइमानी पूर्ण आक्रमणले गोरखलीहरुले आफ्ना जहान बच्चालाई हटाउन सकेका थिएनन् वा

देश पाएनन्। अंग्रेज कर्णललाइ त्यस नाऊँ मात्रको क्षुद्र किल्ला भित्र रहेका अल्प मानिषहरुका भरले बलभद्रसिंहले विशाल अंग्रेजी सेनाको सामना गर्ने साहस गर्नँ छैनन् भन्ने पूर्णविश्वास थियो। आफ्ना त्यस विश्वासले गर्दा तिनले ता २० का रात्रिमा बलभद्रसिंहका समीप किल्ला समर्पण गर भन्ने पत्र पठाएका थिए। त्यसका जवाफमा वीर बलभद्रसिंहले अंग्रेजी दूतका सन्मुख त्यो पत्र च्याति अंगेजी सेनालाइ युद्धको निमंत्रण पठाएका थिए।

ता. २५ अक्टूबरका दिन व्याहनै देखि मार्वाले नाला पानी बेसीका चारै तिर तोप सोभ्याएर गढ़ी माथि गोला वर्षाउन थाले। गढि भित्रबाट पनि गोरखालीहरुको जवाबि गोल गोला तथा बाण वर्सन थालेको थियो। त्यस किसमिले डटेर गोरखालीहरुले युद्ध प्रारम्भ गरेको देखि मार्वाले जनरल जिलेस्पिलाई बोलाए। ता. २६ अक्टूबरका दिन जिलेस्पि पनी नाला पानी पुगे। तिन्ले तीन दिन सम्म कलंगा गढिका आक्रमणको तयारि गरे। चौथा दिन गढिका चारै तिरबाट अंगेजी सेनाले आक्रमण गर्‍यो। कर्णल कारपेन्टर, कप्तान फास्ट, मेजर कैलि र कप्तान कैम्पवेल चार तिरका युद्धसञ्चालक थिए। पाँचौ दल मेजर लडलेका अधीन पछिल्तिर आवश्यकताका लागी सुरक्षित राखिएको थियो।

त्यस किसमले गढि माथो भएको गोलावारीले बलभद्रसिंहका ५०० बहादुर साथि मध्ये अनेकले वीरगति पाए। गढिमाथीबाट वर्षेका गोला गोलि र बाणहरुले अंग्रेजको संहार गर्नमा पनी कसर गरेको थिएन। त्यस रणक्षेत्रमा गढिका परखालमा उभिएका वीराङ्गना गोरखारमणी हरुले ढुंगा खसाएर अंग्रेजी सेनाको नाश गरेको कुरा इतिहासकार प्रिन्सेपले पनी स्वीकार गरेका छन्।

अंग्रेजी सेनाले अनेक पटक गढि सम्म पुग्ने प्रयत्न गर्‍यो। तर तिनीहरुले गोरखालीका शस्त्र प्रहारले मनु किंवा भागेर फर्कनु परेको थियो। त्यस युद्धमा हजारौँ अंग्रेजी सैनिक तथा अनेक अफिसरहरु

मारिए। आफ्ना वारवारका पराजयले चिढेका जिलेस्पिले तीन कम्पनी गोरा सैन्यका साथ गढि तरफ मार्च गरे। ठीक त्यै बेला जिलेस्पि माथि उग्ररूपले गोला र गोलि वर्षन थाल्यो। त्यस प्रहारले मानापमानको विचार छाडी कायर गोराहरू भाग्न थाले। जनरल जिलेस्पि आफ्नै त्यै अभियानमा गोरखालीहरुका गोलिका शिकार भएका थिए।

"कलंगा दुर्गका फाटकमा गोरखालीहरुले आफ्नो तोप सोझ्याएको थियो। त्यस तोपका अग्निवर्षाका सन्मुख अंग्रेजहरुको अगाडी सर्ने साहस हुदैनथ्यो। गोरखलीहरुका गोली र तीक्ष्ण वाणले पनी अंग्रेजहरुको ठूलो ध्वंत गरेको थियो। त्यस किसिमले अद्भुत पराक्रम द्वारा गोरखालीहरूले अंग्रेजी सैन्यको सातो पुत्लो लिएका थिए" भन्ने कुरा इतिहासकार विलियम्सले स्वीकार गरेका छन्।

जनरल जिलिस्पि मरे पछि कर्णेल मावी त्यस दलका स्थानापन्न नायक भए। तिन्ले अंग्रेजी सेनाको त्यस घेरालाई तोडि पछि हटि अर्को घेरा बनाएका थिए। हेस्टिंगलाई थप सेना पठाउनका निमित्त चिठि पत्र समेत पठाएको थियो। एक महीना भित्रै दिल्लीवाट अनेक तोप समेत थप अंग्रेजी सैन्य देहरादून पुगेको थियो। नयाँ पल्टन आए पछि ता० २५ नवेम्बर का दिन अंग्रेजहरुले फेरि कलंगा माथि आक्रमण गरे। अंग्रेजहरुको त्यो आक्रमण पनी विफल भयो। तिनीहरूले युद्धमा पराजित भई भाग्नु परेको थियो। त्यस पछि अंग्रेजहरुको फेरी गढि माथी आक्रमण गर्ने साहस भएन। तिनीहरुले अरु पछि हटि गढि माथी अविश्रान्त गोला वर्षाउने नीति ग्रहण गरे।

यस्ता प्रकार अत्यन्त बहादुरीले प्रबल दुश्मनलाई पराजय माथि पराजय दि रहेका गोरखालीहरू माथी स्वयं दैव विपरीत भए। एक दिन अकस्मात् गढिमा आउने पानी रोकियो। गढि माथी बेसीका मुनी पहाडी कुलावाट पानी जाने गरेको रहेछ। पराजित भई हतोत्साह भएका अंग्रेजहरुलाई त्यस कुलाको पत्ता लाग्यो। कुलाको पत्ता लागे पछि

तिनीहरूले त्यसमा अधिकार गरी, कुलोलाई थुनी दिएका थिए। कुलाको पानी थुनिनाले गढिमा बसेका गोरखालीहरुको अवस्था अत्यन्त करुणाजनक भयो। जर्जर भई सकेको गढि, शत्रुका तोपको अविश्रान्त अग्निवर्षा, आफ्ना घाइते साथिहरूको वेदना युक्त कराइ, एक एक थोपा पानीका निमित्त स्त्री बालबच्चाहरूले ओइल्याएको टुल्टुलि हेर्न पर्नु र गढिका तलघेरा गरि बसेका असंख्य शत्रु, संम्भवतः शत्रु वा शत्रुका गोलाको त्रास बहादुर बलभद्रसिंह वा तिन्का बहादुर साथि हरुलाई चिन्ता थिएन तर तिनीहरू पानीका तिर्खाले विचैन थिए। यस्ता अवस्थामा प्यासै रहीं ती बहादुरहरूले ५ दिन सम्म युद्ध जारि राखेका थिए।

ता ३० नवेम्बरका दिन बिहानै देखि अंग्रेजी तोप र त्यसका जवाफमा गोरखालीहरूका हतियारहरूले काम गर्न थालेको थियो. त्यसै बखत एक्कासि गढिबाट हातयार खस्न बन्द भो र अचानक गढिको फाटक खुलेको थियो। अचिन्तनीय रूपले गढिको फाटक खुल्दा गोरखालीहरूले आत्मसमर्पण गर्न आँटे कि भन्ने अंग्रेजहरुलाई पर्न गियो। तर तिनीहरुको त्यो कल्पना भ्रान्त ठह्रियो। सम्भवतः त्यस बेला सम्म वीर बलभद्र वा तिन्का साथिहरूका मनमा शत्रुको अधीनता स्वीकार गर्ने विचार सम्म आएको होवैन। कलंगा गढिका ६०० जवामर्द मध्ये बाकी रहेका स्त्री बच्चा समेत सत्तरि जना मानिष तिर्खाले विचैन थिए। गढिको फाटक खुल्ना साथ, कांधमा बन्दुक राखेका, कम्मरमा खुकुरि भिरेका, हातमा नंगी तरवार लिएका, स्त्री बच्चाहरुलाई माझमा पारेका, टल्कने चाँदि बोहा झल्काएका, वीर गोरखालीहरुका त्यो दल बलभद्रसिंहका पछि पछि शान्ति र रवाफका साथ गढीबाट निस्केर तल्तिर ओर्लेहेका देखिए। बलभद्रसिंहको शरीर साझा, मुहुडा हँसिलो र चाल एक सच्चा सिपाहीको जस्तो थियो। यो के आश्चर्य हो भन्न अंग्रेजहरुले अनुमान गर्न न पाउँदै गोरखालीहरू अंग्रेजी सेनाका माझबाट बाटो काटि नाला-पानीका छुलोमा पुगे र पेट भरि कुलोको स्वच्छ पानी खाएर, गंभीरस्वरले

ललकारेर बलभद्रसिंहले भने "तिमिहरुले गढि जित्नु असम्भव थियो। तर अब म आफ्ना मनले गढिलाई छोड्छु" भन्दै आफ्ना साथिहरु समेत डाँडामा अर्को तिर चढि क्षणेकमा अंग्रेजी सेनाका दृष्टिबाट लुप्त भए।

अंग्रेजहरुले गढिमा कब्जा गरि प्रवेश गरेर स्त्री पुरुष र शिशुहरुका शव र टुटे फुटेका शस्त्रास्त्र बाहेक अरू केहि पाएनन्। "त्यस गढिका नगण्य रक्षकहरुले एक महिना सम्म पूरा एक डिविजन अंग्रेजी सेनालाई रोकेको थियो" भन्ने कुरा कप्तान ग्यांसिटाटले लेखेका छन्। "त्यस युद्धमा अंग्रेजी सेनाका जनरल जिलेस्पि समेत ३१ जना अफिसर र ७१८ सैनिकहरु यमलोक गएका थिए। गढिका रक्षाको त्यस किसिमले अन्त भयो। यो कार्य वीर भन्दा वीर जातिका इतिहासलाई अलकृत गर्ने हो। यस्तो बहादुरीका साथ त्यसको सम्पादन गरिएको थियो, जो प्रायः हाम्रा आफ्ना पराजयहरुको बेइज्जति पूर्ण लज्जाहरुलाई पखाल्न यथेष्ठछ" भन्ने उद्‌गार आर. सि. विलियम्सका हुन्। देहरादूनका रिचापानी नदीका तीरमा एउटा स्मारक अद्यावधि छँदै छ। त्यसमा "हाम्रा वीर शत्रु बलभद्रसिंह र तिनका बहादुर साथिहरूका स्मृतिमा संमानोपहार" भन्ने लेखिएको छ। शत्रुबाट समेत सम्मान पाउने ती वीरहरू धन्य हुन्। बलभद्रसिंह साथीरुका साथ कलिंगा गढिबाट निस्केर जैतगढका रक्षामा पुगेका थिए।

(यस् प्रकार अनेक रणक्षेत्रमा अंग्रेजहरुको नाश गर्ने, वीर बलभद्रसिंह कँवरले आफ्ना जन्मभूमिको स्वतन्त्रतालाइ अक्षुण्ण राख्ने प्रयत्नमा आफ्नो अद्‌भुत वीरत्वको परिचय दिएका थिए। नेपाल-अंग्रेज युद्ध अन्त भए पछि वीर बलभद्रलाइ पंजाब नरेश रणजितसिंहले आफ्ना सेनमा ठूलो सामरिक पद दिएका थिए। बलभद्रसिंहले सिख अफगानका नौशेराका युद्धमा सन् १८२३ मा वीरगति प्राप्त गरे। वीर बलभद्र नेपालेश्वर श्री ५ पृथ्वीनारायणका अङ्गरक्षक रामकृष्ण कँवरका भाइ जयकृष्ण कँवरका नाती हुन्।)

# जयथकको रणक्षेत्र ।

अंग्रेजहरुले पहिले गोरखालीहरुका वीरताको अनुमान गर्न सकेका थिएनन् । तिनीहरुले तोप र सैन्यबलले गोरखालीहरुलाइ मिच्न सक्ने छौं भन्ने धारणा गरेका थिए । तर रणक्षेत्रमा गोरखालीहरुका खुकुरीको तीखा धारको पानी हेरी अंग्रेजहरुलाइ चेत भयो । पछि तिनीहरुले आफ्नो "मुख्य अस्त्र" लामु थैलीका बलले देशद्रोहीहरुबाट आफ्नु काम चलाउने नीति ग्रहण गरे ।

कलङ्गागढीको अधिकार पछि कर्णल माविले कर्णल कारपेन्टरलाइ जमुना नदीका दाहिने तिर बढेर त्यस इलाकाका प्रजाजनलाइ रुपयाका लोभले फुटाउने आज्ञा दिएका थिए । "कर्णल कारपेन्टरका प्रयत्नले जौनसार इलाकाको प्रजाले विद्रोह गरेकोले गोरखालीहरुले वैराट दुर्गलाइ छाड्नु परेको थियो" भन्ने कुरा स्वयं विल्सनले स्वीकार गरेका छन् ।

त्यस बेला जनरल अमरसिंहथापाका पुत्र रणजोरसिंह नाहन राज्यका हाकिम थिए । कर्णल माविले नाहनका पुराना राज्यच्युत राजालाइ लिएर नाहनको राजधानी शिरमौर सम्म पुग्ने सफलता पाए । त्यस बेला स्वयं अमरसिंह थापा अर्कानगर ( टेहरि ) मा थिए । पदच्युत नाहन-नरेशले अंग्रेजहरु सँग मिलेको र माविले शिरमौर सम्म पुगेको समाचार तिनले तहीं पाए र रणजोरसिंहलाइ नाहन छाडी जयथक दुर्गका वरिपरीका डाँडाहरुलाइ घेरि बस्ने आज्ञा पठाए । आज्ञानुसार रणजोरसिंह जयथक पुगे र वीर बलभद्रसिंह सँग तिनको तहीं भेट भयो ।

कलंगा रणक्षेत्रमा मारिएका जनरल जिलेस्पिका ठाँउमा जनरल मार्टिण्ड नियुक्त भइ आएर जिलेस्पिका सैन्य को कमान लिएका थिए । तिनले त्यस कलंगा गढीमा अंग्रेजहरुको भएको दुर्गतिको बावत कुर

मुने। तसैले तिन्ले आफ्ना सेनाको दुइ भाग गरि मेजर लाडुलो र मेजर रिचर्डस्का अधीन दुई तिर बाट जयथक दुर्ग घेर्न पठाएका थिए। ता० २५ डिसेम्बर सन् १८ ५ मा स्वयं मार्टिएडले पनी १०००० सैन्य का साथ जयथक दुर्गमा आक्रमण गरे। तुरुन्तै गोरखालिहरु ले पनी अंग्रेजी आक्रमण को जवाब दिए। अल्पकाल का युद्धमा पराजित भई अंग्रेजी सैन्य भाग्न थाल्यो। रणक्षेत्रमा अनेक अंग्रेजहरु बंदि भए। मेजर लाडलोर र मेजर रिचर्डस ले भागेरे ज्यान जोगाए। अर्कोतिर काजी रणजितसिंह थापाले २०० गोरखाली हरुका मदत ले लेफ्टिनेएट यंगको २००० सैन्यलाइ परास्त गरे। त्यस किसिमले जनरल जिलेस्पिका अधिन हिडेको अंग्रेजी सेना बडा न राम्रा तरह ले पराजित तथा लांछित भएको थियो "त्यस पराजय पछि जनरल मार्टिएडले फेरि जयथक माथी आक्रमण गर्ने साहस गरेनन्।" भन्ने कुरा प्रोफेसर विल्सनले लेखेका छन्।

## जीतगढ़को रणक्षेत्र

गोरखपुरमा जम्मा भएको तेश्रो अंग्रेजी सैन्यदललाइ मेजर उडले दुई भागमा बांडे। पहिलो भाग पूर्व तिरबाट सरहदमा पसि राजधानि तिर अग्रसर भएको थियो। गोरखालीहरुले त्यस अंग्रेजी सैन्य दल लाइ अनेक स्थानमा बड़े नराम्ररी पराजीत गरे। अन्तमा तिनीहरुले भागेर मुम्लान पर्नु परेको थियो। जीतगढ़क्षेत्रका युद्धमा विमुख भइ भागे का अंग्रेजहरुलाइ हेस्टिङ्ग ले खारेज गर्नु परेको थियो।

स्वयं जनरल उड आफ्ना सेनाको दोश्रो भाग लिएर सीमानामा पसेका थिए। तिन्को मनसाय बुटौल तिरको जीतगढ़ किल्ला माथी आक्रमण गर्ने थियो। काजी उजीरसिंह थापा त्यसबेला जीतगढ़ किल्लाका रक्षक थिए। तिन्ले अंग्रेजी सेना लाइ निर्विरोध जीतगढ़का संमुखमा

सालवन सम्म आउन दिए । अँग्रेजी सैन्य ले सालवन पारि पुग्ना साथ गोरखालीहरुको तोप दग्न थाल्यो । त्यस ठाउमा अंग्रेजी सैन्य अन्दाजि आधा घंटा टिक्न सकेकोथियो । अन्तमा ५ आफिसर र १२८ सिपाहिमारिए पछि अंग्रेजहरुले पलायन गरें । त्यस घटनाका तीन महिना पछि जनरल उडले फेरिं बुटौल मार्था आक्रमण गरे । तर अल्पका युद्धमा पराजित भइ फेरी उड साहबले भागेर मुग्लान जानु पर्‍यो । "अवध राज्य सरहद देखि रङ्गपुर सम्म गोरखालीहरुले अंग्रेजहरुलाइ आफ्ना सिमानामा पल मात्र दिएनन कि तिनीहरु साहस का साथ अंग्रेजी सीमानामा पसी अंग्रेजहरुको गनु सम्म फजियत गर्दथे र अंग्रेजहरुले केहि गर्न सक्दैनथे । तिन्ताक भारतवर्ष भरिमा अंग्रेजहरुका पराजय को अनेक प्रकार को हल्ला प्रचलित भएको थियो ।" भन्नेकुरा प्रिंसिपले आफ्ना इतिहासमा लेखेको छ ।

## पर्साको रणक्षेत्र

आफ्ना सैन्यदलका साथ मकवानपुर तिर बाट भीछाखोरी र हेटौंडाको पहाडी बाटो गरी जनरल मारलि नेपाल ( खाल्टो ) हान्न हिंडेका थिए । तिनि पनि तराइ प्रदेश नाघी निर्विरोध पर्सा सम्म पुगे । पर्सा पुगेर तिन्ले आफ्ना सैन्यदलको दुई भाग गरे । पहिलो भागका कप्तान सिब्लि र दोस्रा भागका कप्तान ब्लेकनि अध्यक्ष बनाइएका थिए । त्यो दुवै दल पर्साका १०।१० कोशटाढा दायाँ बायाँ बस्न खटिएको थियो । त्यसवेला मकवानपुर गढिका रक्षक कार्जी रणवीरसिंह थापा थिए । बसराभका दिन बिहानि आधा रातमा तिन्ले छापा मारे । त्यस युद्धमा मारले को १००० सैन्य ध्वस्त भयो र गोरखालि हरुले तिन्को खजाना समेत लूटको थिए । कप्तान ब्लेकनि र डक्कन त्यस युद्धमा मारिए । सिबलिले कुनै प्रकार भागेर ज्यान बचाए । त्यस युद्धका भगोडा अँग्रेज हरुको हेस्टिंगजले ठूलो अपमान गरेका थिए । गोरखाली हरुको ... सिपाहिको वीरता

देखी कम्पनी ( अँग्रेजहरू ) का सिपाहीहरू गोरखालीहरुको थोडा लई लाग्न सक्तैनन् ।" भनी सर विलियस हंटरले भन्नु पर्‍यो ।"

## पश्चिमी रणक्षेत्र

कर्णेल आक्टरलोनिका मातहतको अँग्रेजी सैन्यको चौथो दल लुधियानामा गोरखालीहरुको गति विधि विचार गरि बसेको थियो । १८१४ वेशाखमन गोरखालिहरुको भएका विजय ले आक्टरलोनि मग्न हुन भइ सकेका थिए । सतजल नदिका देब्रे किनार देखि तीन वेग्ला वेग्लै पहाडी डाँडाहरुको पंक्तीको प्रारम्भ हुन्छ । ती तीनै डाँडाहरुमा गोरखालीहरुले नालागढ रामगढ र गढमठहुँ नाँउका तीनौटा किल्ला बनाएका थिए । किल्लाको माझको भाग र त्यसका पारीको भूभागमा नेपालका करद पञ्जाबकापहाडी राजाहरुको राज्य पर्दथ्यो । कर्णेल आक्टरलोनिले थैलीका प्रभावले तिनै पहाडी राजाहरुलाई मिलाइ ता ३१ अक्टोबरका दिन नेपाली सरहदमा प्रवेश गरे । त्यसबेला नालागढ तथा रामगढमा मुश्किलले ५०० गोरखालीहरु थिए । एक्कसी आक्रमण गरी आफ्ना ६००० सैन्यका मदतले आक्टरलोनिले त्यसमा अधिकार गरे । त्यहाँ बाट ता १३ नवम्बरका दिन तिना गढमलहुँ तिर रमाना भए । आफ्ना ३००० साथीहरुका साथ वीर अमरसिंह थापा गढमलहुमा आक्टरलोनिलाई पर्खि बसेका थिए । अँग्रेजी सैन्यले गढमलहूँ न पुग्दै गोरखालीहरुको प्रत्याक्रमण शुरू भयो । त्यस युद्धमा गर्दा बाट निस्की आफू भन्दा दोबर आक्टरलोनिको सेनालाई अमरसिंहले जस्तो सिकस्त दिएका थिए त्यो अपूर्वको थियो । पराजित भई स सैन्य भागेका आक्टरलोनी सरहद पार सम्म लघारिएका थिए । त्यस रणक्षेत्रमा पराजित अँग्रेजहरू सङ विजयी गोरखालीहरुले जस्तो उदारताको व्यवहार गरे त्यो भारतीयहरुका निम्ति गुण हो । "गोरखालीहरुले अँग्रेजहरुका मरेका मुर्दाहरुलाई रणक्षेत्र बाट हटे

गन र त्यसलाई गाडने समेत आज्ञा दिएका थिए।" भन्ने कुरा प्रिंसेपले स्वीकार गरेका छन्।

त्यस पराजय ले गर्दा नेपाल युद्धमा सफलता पाउने आशा आक्टर-लोनि लाइ रहेन। तिन्ले त्यो सब कुरा र थप मददका लागी हेस्टिंगलाई लेखि पठाए। दिल्ली बाट थप मदद न आए सम्म युद्ध स्थगित गरी नेपालका छद पञ्जाबी राजाहरुलाइ फोर्ने काममा आक्टरलोनीले विशेष ध्यान दिएका थिए। पहाडी राजाहरुमा सर्व प्रथम बेइमान हिन्दूरका (नालागढका) राजा रामशरणले आक्टरलोनिको सेना र रसदले मदत दिएका थिए। "त्यस बेला रामशरणको मदत अँग्रेज हरुका निमित्त बडो लाभदायक भयो। तिन्ले आफ्ना मानिषहरू द्वारा अँग्रेजी सैन्य लैजाने सुविधा हुने गरी, पञ्जान देखि नाहन सम्म सडक बनाई दिएका थिए।" भन्ने कुरा कनिं-घमले भनेका छन्। आक्टरलोनिको दोश्रा सहायक कुलांगार विजयपुर नरेश (अमरसिंह थापाका जेठान) भए। यता यो सब भई रहेका बेलामा दिल्ली बाट पठाएको थप मदत पनी आई पुगेको थियो।

यस प्रकार थप सेना र बेइमान पहाडी राजाहरुको सेनाका साथ ठूलो उत्साहले आक्टरलोनीले फेरी गढमहहुँ माथि आक्रमण गरे। बहादुर अमरसिंह थापाले पनी त्यस्को मुहतोड जवाफ दिन बाँकी राखेनन्। त्यस किसिमले पश्चिमं रणक्षेत्रको युद्ध नवेम्बर (सम्वत् १८७०' सन् १८१४ लगायत अप्रेल १८१५ सम्म पुरा ६ महिना जारि रह्यो। त्यस युद्ध कालमा आक्टरलोनिका प्रत्येक आक्रमणलाई अमरसिंहले विफल पारेका थिए। त्यत्तिलो न पुगेर निजले गढि बाट निस्केर आफ्ना विक्रमी आक्रमणले अंग्रेजहरुलाई मुग्लान सम्म धपाई फर्कने गरेका थिए। इतिहासकार प्रिंसेपजले ति सब युद्धहरुमा जनरल अमरसिंह थापा ले देखाएका बहादुरी र तिन्का रण कौशलको मुक्तकंठले प्रशंसा गरेको छ। पराजयहरुले व्याकुल भई आक्टरलोनिले अमरसिंह थापा लाई देशका विरुद्ध गर्ने प्रयत्नको प्रारम्भ गरे। आक्टरलोनिले अमरसिंह थापा लाई

गवर्नर जनरल हेस्टिंगले लेखेको दुआव, प्रान्तका उर्वरा प्रदेशको स्वामि महाराजा स्वीकार गरी भारतीय राजाहरू सरह इज्जत दिने कवोल पत्र समेत पठाएको थियो । मातृभूमिका यथार्थ वरपुत्र अमरसिंहले अँग्रेज दूतका सन्मुख हेस्टिंगको त्यस कवोलपत्रलाई च्यातेर लत्याई फालेका थिए । अवश्य तिन्हले अंग्रेजहरुको त्यो प्रस्ताव स्वीकार गरेको भए भारतका अन्य देशी राजाहरु सरी आज तिनी तथा तिन्का सन्तान हरू पनि यउटा स्वतंत्र राज्यका अधिपति देखिने थिए । नेपाल युद्धमा नेपाल विरुद्ध भएका नेपालका करद राज्य सिक्किम, टेहरि (गढवाल नाहन विजयपुर, खरि आदि अवधका तालुकेदारहरू र पंजाबका पहाडी राजा हरुको आज सम्मको अस्तित्व त्यसको प्रत्यक्ष प्रमाण छ । राष्ट्राभिमानी वीरात्मा अमरसिंह थापाको कार्यको वर्तमान स्वयंभू "महाराजा" वर्दी धारी नेपालका ठेकेदार मुखियारहरूका कृत्य संग तुलना गर्नुहोस ।

त्यस प्रकार शत्रुलाई बारम्बार पराजित गरेर पनी गोरखालीहरुले आफना सिमानाको रक्षाको मात्र विचार राखेका थिए । त्यस स्थानमा तिनीहरुले अँग्रेजी इलाकामा पसेर आक्रमण गरेका भए सम्भवतः अँग्रेज हरुलाई धरफोर्ने कार्यमा सफलता मिल्ने थिएन तथा नेपाल विभीषणहरुले तिनीहरूका सम्पर्कमा आउने अवसरनै पाउने थिएनन् ।

## देउथलको रणक्षेत्र

गढमलहूका दाहीने तरफ पहाडमा सूर्यगढ र देव्रेतिरका पहाडमा देउथल नाउको किल्ला पर्दथ्यो । सूर्यगढका रक्षाका निमित्त सरदार भक्तिथापा तैनाथ थिए । त्यस गाँढका देव्रे तिर रैलानाउको यौटा अरक्षित पहाड पर्दथ्यो । गढमलहू युद्धमा पराजित भएका आक्टरलोनिले अरक्षित रैला माथि अधिकार गर्ने विचार लिए । तिनले आफ्नो सम्पूर्ण सेनालाई चलाउन ... आफिसर हरू का अधीन ... बाईँतेर बाटआक्र

...ब गर्न पठाए । ता० १४ एप्रिलका दिन लेफ्टिनेंट फ्लेमिंगको सेनाले रैलामाथि अधिकार गर्‍यो । कर्णेल टाम्सन र मेजर लैटिको सेना पनि गमरोला खोलाका तिरैतीर देउथल नेर पुगेको थियो । त्यस ...रलगढवाट कप्तान सार्वस गढमलहू तरफ हिंडेका थिए । तर तिनि गोरखालीहरु द्वारा पराजित भइ मारिए । चौथा तिरवाट कप्तान वोयर गोरखालीहरु लाइ मिच्दै अगाडी बढेका थिए । यस किसिमले आक्टर-लोनीको ६००० सैन्यले ठूलो परिश्रमले रैला र देउथल माथि आफ्नो अधिकार कायम गर्न सकेको थियो ।

शत्रुका हातमा देउथल छाडी केहिं पछि हट्नु परे पनी सरदार भक्ति-थापाले लगत्तै १६ एप्रिलका दिन देउथल माथि आक्रमण गरें । युद्ध स्थलमा अंग्रेजी तोपका प्रहारले गोरखालीहरुको ठूलो क्षति भइ रहेको थियो। आफ्ना सैन्य दलको नाश भइ रहेको देखि गोरखालीहरु त पहिले अंग्रेजी तोप लाइ नै खोस्ने विचार गरें । अमानवीय त्यस विचार लाइ चरितार्थ गर्न मार्च गर्ने गोरखाली सेनाका अगाडि अगाडि हातको नाङ्गो तरवार नचाउदै भक्ती थापा तोपका मुहुड सम्म पुगेका थिए। संहारकारी त्यस लौह दैत्यका अग्नि वर्षाका सम्मुख हाडमांसुका मानिसको के पत्ता ? तै पनी प्रचण्ड वेगले बढेका गोरखालीहरुको पराक्रम देखि अंग्रेज सेनाले मुहुडा फर्काई सकेका थिए त्यसै वेला शत्रु पक्षको गोली तिघ्रामा लागी भक्तिथापा रणाङ्गनमा लोटे । सेनापति भक्ति लोटेको देखि गोरखालीहरुले पछि हट्नु पर्‍यो । साहसी भक्ति थापाले रणक्षेत्रमा लोटेको अंग्रेज सेनापति गार्डनरले देखेका थिए । उनले आफ्ना मानिसहरुलाइ त्यस जवाँमर्दलाइ उठूदै मेरा पास ल्याऊ भन्ने हुकुम दिए आफिसरका हुकुमले आठ दस जना गोराहरु भक्ति थापा लोटेका ठाँऊमा पुगे । सरदार भक्ति थापाले त्यस मरणा-सन्न अवस्थामा पनी ति गोराहरु माथि तरवार हान्न बाँकी राखेनन् । [illegible] त्यस अवस्थामा [illegible] जना गोरा [illegible] तिनिहरुको ज्यान

गयो। यस किसिमले मर्न लागेका वीर भक्ति थापाले मर्दा मर्दै पनि शत्रु सँग जुझ्न छाडेका थिएनन्। अन्तमा कायर गोराहरुका सङ्गिनका आघातले निजले वीरगती पाए। धन्य हुन् ती वीर जस्ले प्राणका धुकधुकि रहे सम्म पनि आफ्नो मातृभूमिका स्वतन्त्रताका गौरवका निमित्त आफ्नो वीरता प्रकाशित गरेका थिए।

## कुमाऊँ गढवालको रणक्षेत्र

सन् १८१४ का दिसेम्बर महिनामा हेस्टिंगका हुकुमले सेनासँग कर्णल गार्डनर र मेजर ह्रिपसि कुमाऊ गढवालि तिर रमाना भएका थिए। अंग्रेजी (इष्टइण्डियाकम्पनी) सरकारका व्यापारी एजेन्ट डाक्टर रथरफोर्ड पहिले देखि कुमाऊमा बसेका थिए। कर्णल गार्डनरका आज्ञाले तिनै डा० रथरफोर्डले अनेक गढवालि पण्डित् सिपाही र राज्यच्यूत कुमाऊ गढवालका राजाका सम्बन्धीहरुलाइ लामु थैलि बाँडेर आफ्ना तिर मिलाएका थिए। पछि गढ़वालमा बसेका हाकिम नमकहराम बमशाह समेत लोभ चक्रमा फसेर अंग्रेजहरु तिर मिले। त्यस प्रकार थैलीका प्रतापले अप्रैल १८१५ मा कुमाउ र गढ़वाल माथि विना रक्तपातको सरलतापूर्वक अंग्रेजहरुको अधिकार भएको थियो।

## पूर्वीय रणक्षेत्र

पूर्वतिरको पाचौं अंग्रेजी सैन्यदलका नायक मेजर लैटरले आफ्ना लामा थैलीका प्रभावले नेपालका करद सिक्किम राज्यका राजालाइ मिलाए। लैटरले सिक्किमनरेशका सहायताले मोरङ्ग प्रान्त माथि अनायास र विना रक्तपात कब्जा गरें।

यस प्रकार नेपाल साम्राज्यका दुई सर्वश्रेष्ठ उर्वरा प्रान्त कुमाऊँ गढ़वाल र मोरङ्गमाथि अंग्रेजहरुको अधिकार भयो। यो सबै युद्ध

विजयमा अंग्रेजहरुले आफ्ना लामा थैलीका प्रतारले र नेपालो विभीषणहरुका देश द्रोहीताले सफलता पाएका थिए। अन्यथा अंग्रेजहरुको पराजय निश्चित थियो। ) भन्ने कुरा प्रिंसेपले स्वीकार गरेका छन्।"

कूटचक्र द्वारा कुमाऊं गढ़वाल र मोरङ् प्रदेश माथि अधिकार भए पनि डेढ वर्षका युद्धकालमा शक्ति साहस र रणकौशलता हीन ठहरिएका र अन्य रणक्षेत्रहरुमा पराजित भएका अंग्रेजहरुलाइ युद्ध जारी राख्नु असम्भव प्रायः भइसकेको थियो। अंग्रेजहरु हतोत्साह भएर सन्धिका निमित्त स्वयं उत्सुक भइ रहेका थिए। "त्यस बेला दुर्दमनीय नेपाल सँग इष्टइण्डिया कम्पनी ( तत्कालिक अंग्रेजी सरकार ) को युद्ध प्रारम्भ भएको र पराजय तथा भएका क्षतिहरुले कम्पनी नै टुट्ने आशंका भएर लण्डन स्थित कम्पनीका संचालक हरुले ता० १३ अक्टूबर १८१६ मा हेस्टिंग लाइ, यदि नेपाल युद्धजारि रह्यो भने कम्पनीलाइ कसैले रुपैया पेश्गी अब न दिने भए र सदस्यताबाट पनी अलग हुने भएका छन्। स्वयं हामी कम्पनीका संचालकहरु नेपाल युद्धको जोरदार विरोध गर्दछौं लेखी पठाएका थिए—भन्ने कुरा मिल्स हिस्ट्री आफ इण्डिया मा लेखेको छ।

त्यस्ता बखतमा कुमाऊं, गढवाल र मोरङको पराजय र जयथकदुर्ग पतनको समाचार एकै पटक पुगेकोले नेपालको केन्द्रिय मन्त्र मण्डल आतंकित भयो। तिनीहरुले रणक्षेत्रमा जुझी रहेका वीर सेनानि अमरसिंह थापाको सलाहमा विचारै न गरि अंग्रेजहरुका समीप सन्धिप्रस्ताव पुऱ्याएका थिए। स्वयं सन्धिलाइ उत्सुक भइ रहेका कूटचक्री अंग्रेजहरुले नेपाल तरफबाट सन्धि प्रस्ताव उपस्थित भएको देखि गंभीरता धारण गरे। त्यो सन्धि प्रस्ताव नेपाल राज प्रतिनिधि भइ गजराज मिश्रले ... अंग्रेज राजप्रति... पठाएका थिए। ... जवाफमा ...

ताँध पोलिटिकल एजेन्ट मेजर ब्रेडसाले संधि प्रस्तावमा हेस्टिंगको तर्फ लेखेको शर्त तिन्लाइ लेखि पठाए।

१—समझौताका प्रथम शर्तले काइलूर, हिन्दूर, सिरमौर, नाहन, बसेहार, कोयन्थल, तागुल, जुबल, टेहरी, गढवाल र कालीनदिका पश्चिमको भूभाग नेपालले अंग्रेज हरुलाइ दिनु पर्थ्यो।

२—दोश्रो शर्तले—नेपाल पहाडका तलको समस्त तराइ प्रान्तलाइ समेत अंग्रेजहरुलाइ दिनु पर्थ्यो।

३—तेश्रो शर्तले—सिक्किम राजा सँग जितेका सबै भूभागलाइ सिक्किमका राजालाइ फर्काउनु पर्थ्यो।

४—चौथा शर्तले—काठमाण्डूमा सदलबल अंग्रेज रेसिडेंट राख्नु पर्थ्यो।

५—पाँचौ शर्तले अंग्रेजहरुको स्वीकृत न लि अन्य युरोपियन हरुलाई नेपाल जान किंवा नोकर राखन छैन भन्ने कबुल गर्नु पर्दथ्यो।

अंग्रेजहरुको त्यो घृणित अभिसन्धिपूर्ण सन्धि शर्तलाइ कुनै आत्माभिमानी राज्यले स्विकार गर्न शक्तैनथ्यो। नेपाल सरकार तिरबाट पुनः त्यस सन्धि शत माथि विचार गर्न लेखि पठाइएको थियो। तो व्यर्थ भयो। सन्धि चर्चाले युद्ध स्थगित भयेका कालमा पनी कूटल धूर्त हेस्टिंगले सरहदमा आफ्नू सैन्य शक्त बढाउने काम जारी राखेका थिए।

अंग्रेजहरुको शक्तिहीनता, व्याकुलता र युद्धस्थगित कालमा तिनी हरुले गरेका शक्तिसंग्रह कुशाग्रबुद्ध अमरसिंह थापामा छिपेको थिएन। नेपालबाट रसद र थप मदत पाएर युद्ध जारी राखन सके अंग्रेजहरु स्वयं घोप्टिने छन्, भन्न तिन्लाई पूर्ण विश्वास थियो: त्यस विषयको आद्योपान्त अवस्था बुझाइ तिन्ले नेपालमा अनेक पत्र समेत पठाएका थिए। अमरसिंहका ती आवेदनहरुमा केन्द्रिय मंत्रिमंडलले विचार नगरी इतफर्त संधि चर्चा चलायो। अन्तमा अंग्रेज इच्छित संधिको

विषयमा अमरसिंहले नेपालेश्वरका समीप मर्मस्पर्शि विन्तिपत्र चढाइ पठाए। त्यस पत्रका एक एक शब्द बाट स्वदेशाभिमानी अमरसिंहको साहस, आत्मविश्वास, बहादुरी, नीतिपटुताको परिचय पाइन्छ। डेढ सय वर्ष अघि लेखिएका ती पत्रहरूका प्रत्येक शब्दले वर्तमान कँवर सम्मका ठेकेदार मुखियारहरूको गाज पर्यन्तको देशद्रोहितापूर्ण कृत्य लाई राम्रो प्रकारा दिएको छ।

## जनरल अमरसिंह थापाका पत्र हरू:—

"अंग्रेजहरु माथि कुनै किसिमको विश्वास न गरि बक्सियोस। नेपालका सामन्त राज्य र भारदारहरु द्वारा षडयन्त्र गरी तिनीहरु द्वारा नेपाललाइ निर्बल गर्ने प्रयत्न गर्दै रहने छन्। स्थायी किसिमले काठमांडूमा रेजिडेंट राखने हुकूम बक्सोनूला भन न राम्रो हुनेछ। त्यस्ले गर्दा नेपाल माथि विस्तार र रक्षक सैन्य लादिनु तथा नेपालले पराधिन हुनु अनिवार्य छ। भरतपुरका राजा तथा टिपुसुल्तानहरूको कुन् दुर्दशा भयो। तसर्थ नेपालमा अंग्रेजहरूलाइ सुविधा दि सन्धि गर्नु भन्दा पुरुषोचित रूपले युद्ध गरि रहेमा देशको अधिक हित हुनेछ।"

'सेलापढि गरिदिएको जग्गा फेरि फर्काउन पाइने छैन। बलजफ्ती लिएको जग्गा बलजफ्ता फर्काउन हुन्छ। हाम्रो जात न भए सम्म यो सुलुह (संधि) गर्न हुँदैन। मैं त भनंका शर्तहरू त्यो बेला उनिहरू (अंग्रेजहरू) ले माने भने देख बढ्या हो। होइन भने परमेश्वरका दया र हजूरका पुण्य प्रतापले कनकाई देखि सतलज सम्म विस्तृत हाम्रा राज्यको रक्षा गर्ने मेरो अहिंभारा हुने छ। आफना चार महापुरुषहरू हरु असाधारण चेष्टा ले कमाएको राज्य म यसै छाड्नु सक्तिन।"

'अहिले म मेरो महाराजका नाउँमा मुलुक दिईर हारमानर काला लगाउन सक्दिन। लडाइँमा जीत भयो भने हामीले न भए पनि हाम्रा सन्तानले

मिलाउन शक्नौं। हार भयो भने वेईज्जती हुने शर्त मानी मेल गर्नु भन्दा मर्नु असल छ। हामी आफ्ना तरवारको भर गरौं र शत्रु सँग बहादूरी साथ लडाई गरी उस्लाई आफ्ना राज्य मित्र यस्तकर लावौं। हाम्रा सरकारको डर र प्रताप कस्तो छ भने बलभद्रले ६०० सिपाही सँग साँचो भुनु भने ५८० सिपाहीले तीन चार हजार सिपाही भएको अँग्रेजी सैन्यलाई हरायो। उस्का पल्टनमा पुरानु गोरख बरक पल्टनका के ह सिपाही थिए। इनका भरले डस्ले शत्रुका एक पल्टनको उछिचो पाऱ्यो र अर्को लाई निकै पातलो तुल्यायो। मेरा फौज पनी त्यस्तै छन्। ती पनी सबै शत्रु सँग लड्न जम्मज्माउदै छन्। सबै करद राजा राना र ठाकुरहरू शत्रु सँग मिली सके र म घेरामा परेको छु। तै पनी हामी लडाई गर्छौं र जित्ने छौं। वैसाख सम्म म लडाई जारी राख्न सक्दछु। चीन सम्राट बाट त्यस वेला सम्म मदत आउन सक्तछ। यदि हामीले आक्टरलोनीका विरुद्ध जय लाभ गर्‍यौं र जयथक दूर्गमा आत्मरक्षा गर्न सक्यौं भने पंजाब नरेश रणजितसिंह तथा लम्फोत्रको नवावले समेत हाम्रो मदत गर्ने छन्। तेति भए पछि अंग्रेजहरुको केहि भय हुंदैन। देशको शुभ हुने कुरामा दृष्टि राखी युद्ध जारी राख्नू नै उत्तम ठान्छु। यस पत्रका साथ स्वामी पठाएका बेहोराको पत्र चीन सम्राटमा पठाई सहायता मागी बक्सियोस, भन्ने पत्र नेपाल पेपर्सको पृ. ५५३ मा लेखेको छ।

'अरु केहि दिन आक्टलोनि लाई कुनै तरहले पनी रोकन सके हामीले आफ्नो अभिष्ट प्राप्त गर्नें छौं भन्ने नेपाल ( अमरसिंह ) लाई निश्चय थियो।"

त्यस कुरामा अमरसिंह से आफ्ना शक्तिको मात्रै भर गरेनन्। तिन्ले सहायताका निमित्त रणजितसिंह, सिंधिया, भरतपुर, मीर खाँ र पिंडारी हरू सँग पनी लेखापढी गरेका थिए। ती सबै पत्रहरू अँग्रेज हरुका हात लाग्या

"नेपालीहरुले अरु क्यै दिन युद्ध जारी राखे, तिनी हरुको उद्देश्य अवश्य सफल हुने थियो। नेपाल अँग्रेज युद्धको परिणाम हेरी अनेक भारतीय नरेशहरू अंग्रेजहरुका विरुद्ध युद्धको तयारी गर्न थालेका थिए।" भन्ने कुरा मिल्स हिस्ट्री आफ वृटिस इन्डियामा लेखेको छ।

"जुन किसिमले भए पनी अँग्रेजहरू नेपाल बाट टाटै राख्नुन् भनी अमरसिंहले गम्भीरता पूर्वक नेपाल माथी जोर दिएको कुरामा अमरसिंहको सलाह बुद्धिमत्ता पूर्ण थिएन् भनी भन्ने साहस कसैले गर्न सक्छ।" भनी नेपाल युद्धका सैकडा वर्ष पछी त्यसको सिंहावलोकन गरेर अंग्रेज कर्णल ए. डब्लू सेक्सपियरले आक्टूवर १९१२ का युनाइटेड सर्भिस जनरलमा लखि निराग्रणी अमरसिंह थापाका सौजन्यता, उदारता वुद्धिमता र साहसको मुक्तकण्ठले प्रशंसा र सराहना गरेका छन्। आफ्ना रक्तदानले देशको लाज बचाउन मात्र होइन कि सदाका लागी शत्रुहरुका हृदयमा आफ्ना जातिको आतंक चिरथाई गरि सैकडा वर्षपछि समेत शत्रू वा शत्रू जाति बाट प्रशंसा पाउने अमरसिंह थापा तथा तिनका वीर साथीहरु धन्य हुन्। देशलाई नपुंसक बनाउने कृतघ्न कवरखलकका अनेक मुखियाहरू जस्ले आफ्ना जीवन कालमा आफ्ना कल्पित र झूठा विरुदावलीका साथ विशाल-विशाल सालिक थपना गराएका ठाउँमा आफ्ना वीराग्रणी पुर्खा हरुको यउटा सानु स्मृति वा तिन्को नाउँ समेत राख्ने प्रयाजन सम्झेनन्।

# द्वितीय—समर

नेपाल सरकारले आफ्ना वीर सेनापतिको योग्य सलाह लाई मान्यता दियो। भारदारीका छलफल पछि नेपालले त्यस संधि शर्त लाई अस्विकार गर्‍यो। स्थगित भएका सात महिना पछि पुनः युद्धारम्भ भयो। अति शक्तिहीन भई अँग्रेज [illegible] स्वयं संधि लाई उत्सुक भइरहेका

थिए। त्यस्ता बेलामा केन्द्रिय मंत्रीमंडलको आतुरताले संधि वार्ता उपस्थित भएको थियो। त्यस संधि चर्चा कालमा ७ महिना युद्ध स्थगित भएका बखत हेस्टिङ्सले सरहदमा थप सैन्य जम्मा गरी सकेका थिए। हेस्टिङ्सले दोश्रा पटक युद्धारम्भ हुना साथ आक्टरलोनी लाई मिछाखोरी (अम्रलेख गंज) बाट पसी नेपाल हान्ने आदेश दिए। हेस्टिङ्सका आज्ञानुसार आक्टरलोनिको सैन्य भीछाखोरी मार्गबाट अगाडि बढेको थियो। अँग्रेजी सैन्यले त्यस मार्ग बाट नेपाल पुग्न सक्नु साह्रै कठिन थियो। तर देशका दुर्भाग्यले अफिम को व्यापार गर्ने कुनै बेइमान बनियाँ ले आक्टरलोनिलाई अरक्षित बालुवाटारको बाटो बताई दियो। त्यो मार्गलाई गुप्त र विकट छ भन्ने हुंदा नेपाल सरकारले त्यसमा उचित बिचार राखेको थिएन। बालुवाटारका त्यै अरक्षित मार्ग बाट निर्विरोध आक्टरलोनि मकवानपुर पुगेका थिए। सन् १८१६ फेब्रुअरि ता. २७ का दिन शेखरक्षेत्र माथि आक्टरलोनिको अधिकार भयो। आक्टरलोनिका शेखरक्षेत्र पुगेको समाचार सुनी रणवीरसिंह त्यहाँ आई आक्टरलोनिको समाना गरे। युद्धमा पराजित भई आक्टरलोनिले पिठ्यूँ फर्काइ सकेका थिए। त्यसै बखत अँग्रेजहरुको थप सेना आई पुगेकोले गोरखाली हरुको त्यो विजय पराजयमा परिणित भयो। ठीक त्यै बेला भगवानपुर तिरको अंग्रेजी सैन्य पनी हरीहरपुरगढी सम्म पुगी सकेको थियो। हरिहरपुर गढिमा गोरखालीहरुले ठूलो प्रयत्न गरे। दुर्भाग्य, सफलता अँग्रेजहरुले पाए।

यस प्रकार दोश्रा पटकको त्यो युद्ध दुई महिना सम्म जारि थियो। त्यस परिस्थितिमा युद्ध जारि राख्नु भीमसेनथापाले उपयोग ठहराएनन्। निजले पं० गजराज मिश्र द्वारा सम मैत्रिपूर्ण संधि भएमा नेपाल सरकार संधि गर्न प्रस्तुत छ भनी लेखि पटाए। त्यसैका आधार मा संधि हुने निश्चय भयो। सम्वत् १८७२ ता. ४ मार्च १९१६ का दिन नेपाल दरबार को सहि छाप भएको संधिपत्र सर्वाज आक्टरलोनिलाई

भए। बृटिश सरकार तिर बाट संधि पत्र लिएर रेजीडेंट गार्डनर नेपाल पुगेका थिए नेपालका प्रथम रेजिडेंट पनी तिनै भए।

सन्धि अनुसार सरयू नदी पर्यन्तको भूभाग माथि अंग्रेजहरूको अधिकार भयो। अंग्रेजहरूले बुटौल सम्म अधिकार गरेका भूभाग माथि नेपालको अधिकार माने। यस किसिमले नेपालले कुमाऊ गढ़वाल देखि सतलज नदि सम्मको भूभाग तथा सिक्किम राज्यको भूभाग बाट वंचित हुनु परेको थियो। उपरोक्त सन्धिलाइ सुगौलिको सन्धि भन्दछन्।

त्यस सन्धिलाइ रोक्न तथा कर्णेल आक्टरलोनिको सामना गर्न जनरल अमरसिंह थापा हानीदै काठमाण्डू पुगेका थिए। ति काठमांडू न पुग्दै सन्धिपत्रमा दुवै सरकारको सहि छाप भई सकेको थियो। त्यस्ता प्रकारले भएको सन्धि र सन्धिशर्तका नियमले तिनको आत्माभिमानमा ठूलै चोट पुऱ्यायो। भइ सकेका कुरामा क्यै बोल्न उचित न ठहराए पनि तिनले आजीवन रेजीडेन्टको मुख हेरेनन्। "आफ्नी प्रिय मातृभूमिमा कुइरे लाइ, त्यो स्वयं कुनै देशको सम्राट किन न हवस् देखे भने काटि दिनेछु।" भन्ने तिनको प्रतिज्ञा थियो।

राजा गीर्वाण युद्ध वीर विक्रम बाट युद्धान्त भए पछि जनरल अमरसिंह थापालाइ नेपालको सेनापतीको पदमान बक्सिएको थियो। "अमरसिंह थापाले युद्ध उप्रान्त पनी अंग्रेजहरुका विरुद्ध चीन सम्राट, भारतीय राजाहरु तथा रणजितसिंह, सिंधिया, भरतपुरनरेशहरू संग लेखा पढ़ गर्न छोडेका थिएनन् तथा बाचुंजेल आफ्ना प्रयत्नमा ढिलाइ गरेका थिएनन्"— भनी मिल्स हिस्ट्री आफ बृटिस इण्डियामा लेखेको छ। नेपाल सरकार बाट अमरसिंहको पूर्वकृत प्रतिज्ञा रक्षाका निमित्त तिनलाइ रिसल्ला बक्सीएको थियो। त्यस रिसल्लाको काम रेजीडेन्टलाइ अमरसिंहका सम्मुख न पर्न दिने थियो। त्यसै दिन देखि नेपालका कम्याण्डर-इन-चिफहरुलाइ पनि रिसल्ला मिल्ने चलन चलेको हो।

युद्धान्त भएका त्यसै वर्ष नेपालमा ठेउला र बिफरको महामारी

उठ्यो। त्यस महामारीले काठमाण्डू, पाटन, भाँदगाऊका जनसंख्याको ठूलो नाश भयो। त्यसै महामारीले सम्वत १८७२ सन् १८१६ ता० २० नवम्बरका दिन राजाधिराज गीर्वाणयुद्ध वीर विक्रम शाह स्वर्गे भए। पिताका शेष पछि ३ वर्षे शिशु युवराज राजेन्द्र वीर विक्रमशाहले नेपालराज्यासन लाइ गृहण गरें।

## राजा राजेन्द्र वीर विक्रम शाह।

महात्मा भीमसेनको दूरदर्शिता, वीराग्रणि अमरसिंहको पराक्रमले नेपाल देश धूर्त अङ्ग्रेजहरूका जालवाट वाँचेको थियो। वेलेज्लीद्वारा प्रचलित "रक्षक सेना" वा 'सहायक सन्धि" को मर्म भीमसेन थापाले खूब बुझेको थियो। त्यस सहायक सन्धि जालमा भारतीय राजाहरूले फँसेको तिन्ले देखेका थिए। त्यस वखत समग्र भारतमा टिपुसुल्तान किंवा भीमसेन नै त्यस्ता पूरुष थिए, जस्ले अंग्रेजहरूका मनोभावलाइ बुझेको थियो। त्यसैले भीमसेन थपाले नेपाला मात्र रहे सम्म नेपालमा अङ्ग्रेजहरूको क्यै चलेको पनी हो। नेपाल दरबारमा भइ रहने षड्यन्त्रहरु न भइ दिएको भए, निश्चनै तिन्ले नेपालको रूप अर्कों नै गराउने थिए। दरवारमा भइ रहने षड्यन्त्रहरूमा अङ्ग्रेज रेजिडेन्टको पूरा सम्बन्ध रहन्थ्यो। दरबारमा भइ रहने सडयंत्रको उठन र त्यस्को संचालन गर्ने काय नै नेपालका प्रत्येक रेजिडेंटको ध्येय थियो।

हेस्टिङ्गले भारतमा प्रभाव विस्तार गर्न न पाउदै तिक्ष्णचेता भीमसेन थापाले चीन सरकार संस संघि गरेका थिए। अँग्रेजहरुले भारतवर्षका अन्य सघर्ष मा फसेका प्रत्येक मौकामा तिन्ले भारतीय भूभागको क्यैन क्यै भाग आफ्ना राज्यमा मिलाउदै गएका थिए। अँग्रेजहरु मराठा युद्धमा फँसेका वखत तिन्ले गपति र गंडक नदीका माझको प्रदेश माथि कब्जा गरे। मौकाले गर्दा [illegible] संधि गर्नु परे पनी तिन्ले

अँग्रेजहरुलाइ आफ्नो तथा देशको मुख्य शत्रु बुझेका थिए। तिन्ले अंग्रेजी दुतावासलाइ पूर्णतया होचो औज्ञोमय स्थानमा बनाउनलाएका थिए। संधि पछि अँग्रेजहरुले गोरखालीहरुलाई आफ्ना उपयोगमा ल्याउन खोजेका थिए। तर स्वाभिमानी भीमसेन थापाले मृत्यु पर्यन्त अंग्रेजहरुको त्यो इच्छा पूर्ण हुन दिएनन्। तिनी आफ्नो जीवनलाइ हाम्रो तुल्य हास्यास्पद र कलंकित बनाउन चाहन्थे। नेपालका वर्तमान ठिकेदार मुख्तियारहरु तुल्य आफ्नो जीवनका तुच्छ सुखका निमित्त तिन्ले आफ्नो पवित्र आत्मा लाइ विदेशी शत्रुहरूका हातमा बेचेको थिएन। बरु तेस्थानमा तिनी आफ्नो जिवनलाइ आर्यगौरवका रक्षार्थ कठिन भन्दा कठिन आपत्ति हरुको सामनागर्न कटिवद्ध थिए।

शिशु राजा राजेन्द्रका पालामा पनी विधवा राजमाताका आज्ञाले भीमसेन थापा नेपालामात्य बहाल भए। सन् १८२३।२४ सम्वत् १८८० मा नेपालमा ठूलो भैचालो गयो। त्यस वेला नेपाल १७ हप्ता थर्केको थियो।

अँग्रेजयुद्ध शान्त भए पछि भीमसेन थापाले आफ्नो समस्त समय देशको संवृद्धि तथा शक्ति बढ़ाउनमा लगाए। नेपालका संवृद्धिका साथ राजा राजेन्द्र पनी क्रमसः बढ्दै आएका थिए। सम्वत् १८८० सन् १८२४ मा तिन्को विवाह गोरखपुर का सदवंशीय राजपूत कन्या-हरु संग भयो। सम्वत् १८८५ सन् १८२९ का ५ अक्टूबरका दिन जेठा बडा महारानी साम्राज्यलक्ष्मीदेवीका गर्भबाट युवराज सुरेन्द्र वीर विक्रमशाह पैदा भए। सम्वत् १८८८ सन् १८३२ मा विधवा राजमाता त्रिपुरसुन्दरीदेवीको देहावसान भयो। सम्वत् १८९० सन् १८३३-३४ का भाद्र महिनामा नेपालमा फेरी ४ पटक भैचालो गयो। त्यस भैचालोमा चौथा पटकको भैचालो ज्यादै प्रबल थियो। त्यस्को धक्काले देशका अनेक स्थान, देवल र घरहरू ध्वस्त भएका थिए। त्यस्मा

६००।७०० मानीस घाइते र ३००।४०० मानीसको मृत्यू समेत भएको थियो।

राजमाताका मृत्यु पछि अनियंत्रित राजप्रासादमा भईरहने षड्यंत्र-हरुले भीमसेन थापालाई निकै पिरेको थियो। त्यसै ताक सम्वत १८८१ सन् १८३३ मा राजेन्द्र वीर विक्रमशाहले शासनाधिकार आफ्ना हातमा लिए। राजेन्द्रकि बडा माहारानी साम्राज्यलक्ष्मीदेवी अंग्रेजहरुकी कट्टर विरोधिनी थिइन्। नेपालमा अंग्रेज रेजिडेंटको रहनु तिनी फुटेका आँखाले पनी हेर्न चाहन्नथिइन्। अंग्रेजहरु सँग भएको सम्वत १८७२ सन् १८१५ को संधिलाइ तिनी देशको कलंक तथा त्यसको कर्ता मानेर भीमसेनथापा संग चिढेकि थिइन्। बडा माहारानीलाई दामोदर पाण्डे पुत्र रणजंगपाण्डेले रिझाएको थियो। त्यसैले तिनी पाण्डे खलक मा नेपालामात्य पद दिन चाहन्थिन्। तिनले थापा खलकको भए नभएको कुरा राजेन्द्रना लाउन थालेकि थिइन्। जेठा महारानीका आग्रहले सम्वत १८९० सन् १८३४ का पजनीमा प्रधान मंत्रीका पदका स्थानमा भीमसेन थापाको नाउँ थिएन। पछि राजगुरु रंगनाथ उपाध्यायका मद्दतबेगले राजा राजेन्द्रले भीमसेन थापा लाइ नै नेपालामात्य पदमा बहाल गरेका थिए।

सन् १८३३ मा भारतवर्ष माथी रुसले आक्रमण गर्दछ भनी हल्ला फैलिएको थियो। त्यस मौकामा आफ्नु पुरानु नीति अनुसार भीमसेन थापाले त्यसरि देशको हित हुन्छ भन्ने विचार गरेका थिए। अंग्रेज हरुलाई भारतवर्ष बाट निकाल्ने विषयमा पंजाब नरेश रणजीतसिंह संग तिनको पत्र व्यवहार हुन थाल्यो। त्यस मौकामा तिनले ४०।५० हजार सैन्य समेत जम्मा गरेका थिए। तिनै ताक नेपालामात्य पदलोभी भीमसेनका भाई रणवीरसिंह थापा समेत तिनका विरोधि भए। त्यसताक महारानि मात्र तिनी महाराजा राजेन्द्रको निकै चाकरी गर्न थाले। महाराज राजेन्द्र पनी रणवीरसिंह थापा तिर ढल्कदै गएका थिए। रणवीरसिंह

जेठा महारानीको समेत अनुग्रह प्राप्त गरे। महारानी तिरबाट राजा राजेन्द्रमा रणवीरसिंह लाइ नेपालामात्य गराउने प्रेरणा हुन थाल्यो। अन्तमा राजेन्द्रले पनी भीमसेन थापा लाईं पदच्यूत गर्नें निश्चय गरे। तर निरपराधी वृद्ध मंत्री लाईं एक्कासि निकाल्नाले प्रजाले विरोध गर्दछन् कि भन्ने डर थियो। तसर्थ सम्वत् १८९० सन् १८३४ का अन्तिम भागमा तिन्लाईं राजदूत वनाईं कलकत्ता पठाइयो। त्यसै सालमा नेपाल-मा भयंकर हुरी चलेकाले बारुदखानामा आगो लागेको थियो। त्यसै आँधीले सयकडौं मानिसहरू मरे तथा रेजिडेंसी पनी ध्वस्त भएको थियो।

सम्वत् १८९२ सन् १९३६ मा भीमसेन थापाका भाईं सालकाँगडा विजेता नयनसिंह थापाका पुत्र माथवरसिंह थापा राजदूत भइ कलकत्ता गए। माथवरसिंह कलकत्ता पुगे पछि भीमसेन थापा नेपाल फर्केका थिए। त्यसै बखत जेठा महारानीका शिशू कान्छा कुमारको मृत्यु सन् १८३७ का २४ जुलाइका दिन भयो। भीमसेन थापा माथि त्यस राजपुत्र लाइ विष ख्वाइ मारे भन्ने पाण्डेहरूले दोषारोप लगाएका थिए। त्यहै दोषारोपमा निजले वंदी समेत हुनु पर्‍यो। रणजंगपाण्डेले मृतक राजपुत्रको चिकित्सक लाईं मर्णान्तक कष्ट दि "भीमसेन थापाले राजकुमारलाईं विष ख्वाएको हो" भन्न लगाएका थिए। त्यस्लो पछि विरोधि साक्षी दिन न सक्नोस भनी तिन्ले त्यस वैद्यलाईं कुटेर मारे। त्यसै अपराधमा एकदेव वैद्य मुडिएर देश निकाला भए तथा भाजुमान वैद्य भाचाकोसीमा काटिएका थिए। त्यस प्रकार कुटिल षडयंत्र द्वारा दाजुलाईं वंदी गराउन समर्थ भएका रणवीरसिंह-लाईं त्यस भ्रातृद्रोहले केहि लाभ भएन। रणवीरसिंहका त्यस कार्यले उल्टो विरोधि पाण्डेहरुको भाग्य खुल्यो। भीमसेन वंदी भए पछि केही काललाइ रणजंगपाण्डे नेपालका प्रधानमंत्री भए। तर तिन्ले [illegible] खारेज हुन परेको थियो।

त्यस पछि महारानी र चौतरिया फतेहजंगशाहका आग्रहले राजगुरु पं० रंगनाथ उपाध्याय प्रधानमंत्री बनाइए। पं० रङ्गनाथ पौडेलले पदग्रहण गर्ने साथ भीमसेनथापालाइ मुक्ति मिल्यों। आफ्ना भइसकेका अपमान तथा कष्टहरुलाइ सम्झी भीमसेन थापाले राजकाजबाट अवकाश ग्रहण गरे। तिनैताक कलकत्ता बाट नेपाल राजदूतको पद त्याग गरी माथवरसिंह लाहोर दरबारका जागिरे भएका थिए। "माथवरसिंहले सन् १८३८ मा सतलज नदीलाइ तरी लाहोर राज्यमा प्रवेश गरेका थिए। लाहोर दरबारले संमानका साथ अविलंब निजलाइ आफ्ना सैन्यको हाईकमान्डको जनरेलीपद दिएका थिए। त्यस कुराले भयभीत भइ नेपालदरबार तथा अंग्रेज सरकारले माथवरहिं लाइ लाहोर दरबारको नागिर छाडि दिएमा १२०००) बाह्र हजार रुपया वार्षिक भत्ता दिने प्रलोभन दिएको थियो। अंग्रेजहरुको त्यस् प्रस्तावलाइ माथवरसिंहले अस्विकार गरे" भन्ने कुरा कनिंघमले आफ्ना "सिख ईतिहास" मा लेखेको छ। तिन्ताक भारतीय राज्यहरुका राजनीतिमा जहाँ स्वदेशको कुरो पर भई स्वग्रामका मानीसको विश्वास गरिन्नथ्यो, त्यस्ता बेलामा अफगानिस्तान जस्ता पराक्रांत मुस्लीम राष्ट्रलाई परांगमुख गर्न सक्ने सिख नरेश रणजीतसिंह बाट पंजाब जस्ता सबल राष्ट्रको सर्वोच्च सामरीक पदमा प्रतिष्ठित हुनु योग्य तथा अतुलबलशाली माथवरसिंहका योग्य नै थियो।

धन्य हुनु तिनी जस्ले आफ्ना पुरुषार्थ बलले अन्तरं जातीय राज्यको सर्वोच पद प्रप्त गरे। तथा धन्य हो, तिन्को त्यो कार्य, जहाँ शत्रूले दिएको १२०००) वार्षिक भत्ताका लोभमा फंसी स्वदेश हुँदै आफ्नो छिमेक राज्यपद बाट विमुख हुने इच्छा सम्म गरेनन्। त्यस ठाउँमा आफ्नो क्षुद्र स्वार्थ बश आफ्ना स्वदेशलाई शत्रू प्रभावमा पार्ने तथा देशलाइ सर्वहारा तुल्याउने कँवरखलकका राणा ठेकेदार मुखिया हरुको कार्यहरुमा बिचार गर्नोस।

पं० रंगनाथ उपाध्याय पुग न पुग दुइ वर्ष मूलकामात्य का पदमा

बहालरहें। तिर्जा प्रथा तथा त्यस्लेभएको अव्यवस्थाले निजले सैनिक हरुलाइ जागिरको भूभागका स्थानमा राज्यकोष बाट नगद दरमाह दिने प्रथा चलाएका थिए। पाण्डेहरुले त्यस नगदी दरमाहको कुरा लिएर पल्टनमा आन्दोलन खडा गराए। त्यस आन्दोलनका नेता "थापा हेलका जेठा बा" नाउका मानिष थिए। अन्तमा पल्टनका त्यस आन्दोलनले विद्रोहको रूप लियो। विद्रोही पल्टनले एक दिन इन्द्रचोक स्थित पं० रङ्गनाथजी को घर लाइ लुटेर त्यस्मा आगोसमेत लगाएर त्यस्लाई मार्न पारें। रंगनाथ त्यस वेला गुह्येश्वरामा होम गरी रहेका थिए। त्यहीं बाट भागेर तिन्ले आफ्नो ज्यान जोगाएका थिए। विप्लवी पल्टन लाई फतेहजंगशाह कि चौतार्नीले कुनै प्रकार शान्त गराइन्।

त्यस पछि राजा रानीलाइ रिझाइ सम्वत १८६५ सन् १८३९ मा फेरि रणजंगपाण्डेले नेपालको मुख्तियारी पाए। रणजंगपाण्डेले अख्तियार हुना साथ भीमसेन थापालाई फेरी बन्दी हुनु पर्‍यो। त्यस पटक तिन्लाई अन्धारपूर्ण कालकोठरीमा थुनेको थियो। भीमसेन थापा बन्दी पर पछि थापा खलक माथी आपत्तिको पहाड खस्यो। तिन्ताक थापा खलकको जागीर पद मान खोसिनु अत्यन्त सानु कुरो थियो। भीमसेन थापाको विषमुद्दाले पनी चर्कोरूप लियो। त्यसैका फलस्वरूप पशुत्वको पराकाष्ठामय कार्य, भीमसेन थापाकि धर्मपत्नीले निर्वस्त्रा भइ काठमाण्डु का टोलबाटामा निस्कनु परेको थियो। त्यसै कुराका ग्लानिले हतभागी भीमसेन थापाले आफ्ना त्यस कालकोठरीका झ्यालको सिसा फोरी तेसै सिसाले आफ्नु गर्धन रेटे। पूर्णताले आघात न पर्दा तिन्को मृत्यु हुन सकेन। त्यस्ता किसिमले बिना अन्न जल वा दवा शुश्रूषाका ९ दिन सम्म त्यस नर्क तुल्य कालकोठरीमा भीमसेन थापाले ठूलो यंत्रणा सहनु परेको थियो। अन्तमा नेपाल निर्माता महात्मा भीमसेनथापाले ता० २९ जुलाई १८३९ का दिन आफ्नु नस्वरदेह त्याग गरे। नीचाशय शत्रुहरुले तिन्का शवलाइ गुद्ध र कागहरूको आहारा बनाइ अस्तुहरूलाइ

त्यसै खोलाका किनारामा फ्याकेर जन्यन्य रितले आफ्नो पैल्हेको वैर सावेका थिए। लेखनी कुन्ठित हुन्छ, मनुष्यता कम्पायमान हुन्छ। आश्चर्य छ माता वसुंधराले र नेपाली जनताले त्यो दृश्य कसरी हेर्न सके। महात्मा भीमसेन थापाका शरीर संग गरिएका अत्याचारका प्रतिफलमा नै सम्भवतः नेपाल नरेश देश र जनताले १०४ वर्ष सम्म को यो दानवीय चक्रमा पिसिनु परेको ता हैन। जस्का आखाँका क्रूर दृष्टिमा अनेक राजाहरु निस्तेज भए, जुन आखाँका रक्तवर्णले दुर्दान्त अंग्रेजहरु समेत भयभीत रहन्थे, तिनै आखाँ आफ्ना देशवासीहरुका कृतघ्नताले त्यसूता ववरोचित रूपले बन्द हुनु पर्‍यो।

२५ वर्ष सम्म अहोरात्र नेपालको उत्थान र अभ्यूदयका लागी परिश्रमशील भीमसेन थापाले त्यस्का पुरस्कारमा त्यस्तो अपमृत्यु पाए। अगाडी नै भनेको छ कि राजा पृथ्वीनारायणशाहपछि भीमसेन थापा का जोडाको अरुकुनै मानीस नेपालमा पैदा भएनन्। नेपालमा आज पर्यन्त तिनै असाधारण धि-शक्तिसम्पन्न महामंत्रीले चलाएको व्यवस्था अपरिवर्तित रूपले चलो रहेको छ।

भीमसेन थापाका मृत्यु पछि फेरि थापाखलक माथि अत्याचार हुन थाल्यो। यहाँ सम्म कि सात पुस्ता सम्म थापा खलकले नेपालराज्यमा जगीर पाउने छैन भन्ने उर्दी समेत भएको थियो। त्यस बेला सम्म जनरल अमरसिंह थापा, जनरल उजीरसिंह थापा प्रभृति स्वर्ग भइ सकेका थिए। भातृद्रोही रणवीरसिंह पनी काशी निर्वासित भइ मरि सकेका थिए। भीमसेन थापाका मृत्यु कालमा थापाखलकमा माथवरसिंह बाहेक अरु क्वै बाँचेका थिएनन्। माथवरसिंहले लाहोरमा आफ्ना महान पिताको आत्महत्या र थापा खलकको दुर्दशाको समाचार सुने। अंग्रेजहरु आफ्ना एकमात्र कंटक भीमसेन थापाको मृत्यु र थापा खलकका पतनले निकै प्रसन्न भएका थिए।

भीमसेन थापाका मृत्यू पछि सम्वत १८९९ सन् १८४३ सम्म राज्यकाजमा निकै अव्यवस्था रह्यो। दरबारको ताकाताक हानाहानले विचित्र रूप लिई रहेको थियो। त्यसै बीचमा बडा महारानी साम्राज्य-लक्ष्मीदेवीले अंग्रेज हिमायती कान्छा महारानी राज्यलक्ष्मीदेवीको हत्या गर्ने विफल आयोजन गरेकि थिइन्। बडा महारानीका आदेशले रणजंग पाण्डेले अंग्रेजहरू माथि आक्रमण गर्ने आयोजना बनाए। तिनले सेनामा भर्ती हुनसक्ने कती मानीस नेपालमा छन् भन्ने बुझ्न जन-गणना समेत गराएका थिए। त्यस् जनगणनाले नेपालमा युद्ध गर्न सक्ने चार लाख मानिष छन्, भन्ने थाहाभएको थियो। रणजंगपाण्डेले तिनीहरुको संगठन गर्न प्रारम्भ गरे। त्यसै बाक तिन्ले नेपालमा असल असल हतियार हरु पनी तयार गर्न लगाए। अन्दाजी पौने दुइ लाख धार्नी बारुद पनी तयार गर्न लगाए। ब्राह्मणहरुद्वारा पहाड र तराइका कुना कुना सम्म बृटिश राज्यको अन्त हुने बेला आइ पुग्यो भन्ने भविष्य वाणी समेत फिजाएको थियो। त्यती भए पछी निजले नेपाली सेनाहरु भारतवर्ष तरफ खटाइ पठाएका थिए। आक्रमणलाइ अग्रसर भएको गोरखाली सैन्यले भारत भूमिमा कदम राखी चम्पारण जिल्लाको ९१ गाऊं माथि कब्जा गर्‍यो। "चार साढे चार कोश लामो र साढे बाह्र कोश चौडा भूभाग बृटिश प्रभूत्व बाट अलग भएको थियो।" भन्ने कुरा लेफ्टिनेंट निकोलसले लेखेका छन्। नेपालीहरुले त्यस हिसिमले भारत सीमा भित्र प्रवेश गरेको प्रतिद्वन्दि शून्य अंग्रेजहरु चिन्ता गरिरहन्थे। गर्वनर जनरल अकलेन्डले गोरखलीहरुलाइ रोक्न युद्धा-हरू सेना चम्पारण तिर पठाएको थिए।

यता आफ्ना पल्टनमा धन पठाउने कुराले बडामहारानी लाई निकै चिन्तित गरेको थियो। निजले आफ्ना सेनामा पैसाको अभावको कारण रेजिडेंट नै जिम्मेवार हो भनी रेजिडेंटका विरुद्ध निकै प्रचार गरेकि थिइन्। हठात् एक दिन सैनिक हरुले विद्रोह गरे र बृटिश रेजिडेन्सी माथि आक्रमण

गरे। त्यस बेला राजा राजेन्द्र विक्रमले बुद्धि पुऱ्याएर रेजिडेंसी बाट विद्रोहि नेपाली सैनिकहरुलाइ बुझाइ फर्काउन सकेका थिए।

विद्रोहि नेपालि सेनाले अंग्रेज रेजिडेंट वा अंग्रेजहरुका विरुद्ध आफ्नो जो उद्‌गार प्रकट गरेका थिए, वास्तवमा त्यो तत्कालिक वीर नेपाली हृदयको उद्‌गार थियो। तिनीहरुले एक स्वरले "रेजिडेंसी ध्वस्त गर्न पाऊँ" भनी महाराजा राजेन्द्रमा विन्ती गरेका।; वेहोराले तत्कालिन नेपालीहरूको देशाभिमान, राजभक्ति, र अंग्रेजहरुका प्रति तिन्को घृणा तथा प्रतिहिंसाभाव कत्तिको हद रहेछ त्यो स्पस्टतया बुझ्न सकिन्छ।

"प्रभो कम्पनी सरकार महान् छ, सो साँचो हो। तर के नेपाली ज्वाँसा हरु आफुजु झम्टन आँटेको बयान कत्रो ठूलो छ, त्यस्को विचार गर्छुन् र उनिहरु अवश्य मुर्दा भर्न पाउछन्। युद्धका निमित्त धनको आवश्यकता छैन, कारण युद्ध नै अभावको पुर्ति गर्नें छ। धनका निम्ती हामी लखनौ वा पटना लुटौला, तर सब भन्दा पहिले हामीले हाम्रो गतिविधि हेरी पहिले नै बन्दबस्त मिलाउने अँग्रेज दूत लाइ निकाल्नु पर्दछ। कसैलाइ पत्तै न दि आक्रमण गर्नें मौका ताक्नै पर्दछ, त्यो मौका चाडै नै आउदछ। आइ सकेको छ। हुकुम पाएमा हामीले राजदूतावास ध्वस्त पार्नें छौ। हामी चाँडैनै गंगानदि लाइ सरकारका राज्यको सीमा दुल्याउने छौ। अंग्रेज जस्तो कि उनिहरु भन्दछन्, सरकारका मित्र हुन तथा शान्ति चाहन्छन्, भने किन सरकारको आधा राज्य दबाउछन्। उनीहरु कुमाऊ र सिक्कम राज्य सरकारमा फिर्ता चढाउन, ती दुवै राज्य सरकारका हुन, ती फिर्ता मार्गी बक्सियोस्। उनीहरु अस्वीकार गर्दछन् भने अंग्रेज राजदूतलाइ निकाली बक्सियोस्। हामी युद्ध गर्दछौं-"भन्ने कुरो पर्सिवल लंडनले आफ्नो "नेपाल" नामक इतिहासमा लेखेको छ।"

सम्वत १८९६ सन् १८३९ का आरम्भ कालमा ल.ऊं आकलैंड

नेपाल युद्ध स्वीकार गरेको खरीता नेपाल पुगेको थियो। तर नेपालका तत्कालिक रेजिडेंट होज्सनका अविरल प्रयत्नले त्यो युद्ध रोकिएर शान्ति भएको थियो।

त्यस घटना पछि राजा राजेन्द्रले रणजंगपाण्डेलाइ पदच्युत गरी चौतरिया फतेहजंगशाह लाइ नेपालामात्य बनाए। अंग्रेज विरोधिनी बड़ा महारानी राजा राजेन्द्रलाइ अंग्रेजहरुका, विरुद्ध सदा उत्तेजना दिंदै रहन्थिन्। तर राजा राजेन्द्रले त्यसमा कानै दिएका थिएनन्। अकरमण्य राजा राजेन्द्रका व्यवहार ले विरक्तभइ जेठामहारानी काशी जान भनी नेपालबाट निस्के कि थिइन्। स्त्रैण राजा राजेन्द्र पनी महारानीलाइ फर्काउन, न फर्के स्वयं पनी काशी जान शहर बाहिर आएका थिए। तिनीहरुले अंग्रेज गर्वनर जनरल बाट भारत प्रवेशको अनुमतिपत्र न पाएको ले पुनः काठमांडू फर्कनु परेको थियो।

त्यस कुराका क्यै दिन पछि जेठा महारानी राजाराजेन्द्र वीरविक्रमशाह लाइ आफ्ना शिशुपुत्र सुरेन्द्र विक्रमका हकमा राज्याधिकार बक्सने आग्रह गर्न थालिन। कट्टर अंग्रेज शत्रु जेठा महारानी को इच्छा आफ्ना बालक पुत्रका अभीभावक रूपले शासनाधिकार पाएमा अंग्रेजहरु संग एक पटक बल परिक्षा गर्ने थियो। त्यस कुरालाई राजा राजेन्द्र विक्रमशाहले स्वीकार गरेनन्। विफल मनोरथा जेठा महारानीले फेरा काशी जाने प्रयत्नमा काठमाण्डू त्याग गरी तराइ सम्म पुगेकि थिइन्। तराइमा १८९९ सन् १८४२ मा तिनको मृत्यु भयो। मरणकाल सम्म तिनको कल्पना कल्पना रणजीतसिंह पुत्र दलीपसिंह, अफगानिस्तान र भारतीय राजाहरुका संगठन गरि अंग्रेजी राज्यको अन्त गर्नु थियो। त्यसबेला लार्ड एलेनबरा भारतका गवर्नर जनरल थिए।

जेठा महारानीका मृत्यु पछि विलासी राजा राजेन्द्र कान्छा महारानी राज्यलक्ष्मीमा अनुरक्त भए। राजका गैह भारदार बल्दो आगो ताप्ने पक्षका हुनाले क्रमशः कान्छा महारानीको प्रभाव बढ्दै गएको थियो।

जेठा महारानी पुत्र युवराज सुरेन्द्र विक्रमशाह र शाहजादा उपेन्द्र विक्रमशाह दरबारमा उपेक्षित हुन थाले। उपेक्षित भएका युवराज सुरेन्द्र विक्रमशाहको रीस दुनियाँका ऊपर पोखिन्थ्यो। युवराजको त्यसै पीरले पछि उडंडताको रूप लिइ जनतालाइ व्याकुल गराउन थाल्यो। कान्छा महारानी त युवराजको उडंडता पूर्ण कार्यले त्रसित भएका दुनियाँ को सहानुभूति आफ्ना तिर आकर्षित गराइन्। त्यसैले कान्छा महारानीले महाराजा राजेन्द्र बाट नेपालराज्यको प्रतिनिधि सासनाधिकार आफ्ना पक्षमा गराउन तल लेखेको लिखित घोषणा गराउने सफलता पाइन।

"नेपाली प्रजाजनमा यो कुरा विदित होस् कि आज देखि तिमिहरु सबैले श्रीमती महारानी राज्यलक्ष्मीदेवीलाइ नेपाल राज्य कि मालिकिनी संझी उनै को हुकुम मान्नू। यस कुरामा खुशी साथ मेरो मंजूरी छ। म आफ्ना मनोमान राजिखुशी संग श्रीमतीलाइ राज्याधिकार सुम्पन्छु। अब उप्रान्त म समेत श्रीमति को सम्मति र भने विरुद्ध काम गर्ने छैन, यसमा मेरो सफत छ, तथा आज उप्रान्त तिमिहरुले युवराज सुरेन्द्र विक्रम को आज्ञा मान्नू पर्दैन, कसैलें मानेको ठहऱ्यो भने उसलाइ श्रीमतिका हुकुम बमोजिम डण्ड हुने छ। आजका मिति देखि निम्न लिखित सबै काम श्रीमतिका तर्फ बाट हुने छ।

१—राज परिवार बाहेक समस्त प्रजाका उपरको कारावास, अङ्ग छेदन, देशनिर्वासन, प्राणदंड, पदच्यूतिको आज्ञा।

२—राज कर्मचारी नियुक्त गर्नु, पदच्यूत गर्नु, उनका स्थान र पदवीको परिवर्तन गर्नु।

३—चीन तिब्बत र बृटेनियाका विदेशी शक्तिहरु संग मामला गर्नु र विदेशि राष्ट्र संग मौकानुसार परि आउने संधि विग्रहहरु पर्ना श्रीमति मजकूर कै आज्ञा बमोजिम हुने छ।

त्यस प्रकार राजदंड र राजशक्ति प्राप्त गरी कान्छा महारानी

मनमा पाप खेल्न थाल्यो। तिन्ले आफ्नो त्यो पाप पूर्ण मनोकामना पूर्ण गर्ने निश्चय गरिन्। तिन्को त्यो गर्हित मनोकामना युवराज सुरेन्द्र र शाहजादा उपेन्द्रलाइ मारी किंवा धपाइ आफ्ना गर्भ जात पुत्र शाहजादा रणेन्द्रवीर विक्रमशाहलाइ नेपाल राज्यशासनको उत्तराधिकारी बनाउने थियो। हतभागी वंशविषवीज कान्छा महारानीका त्यसै मनोकामनारुपी विषवृक्षले आज युवराज सुरेन्द्र मात्र होइनकि समस्त राजपरिवार तथा देश नै आफ्ना अधिकारबाट च्यूत तथा पददलित भइ स्वार्थरुपी दानवका शरिरले थिचिएर कहाइ रहे को छ।

आमात्य चौतरिया फतेहजंगशाहका मंत्रित्व कालमा वंशानुक्रमिक जेठाराजपुत्र हुँदाहुदै अर्का राजपुत्रले उत्तराधिकार पाउने कुरा मानिने छ भन्ने थिएन। तसर्थ कान्छा महारानीको नजर लाहोर गइ बसेका माथवरसिंह माथि गया। आफ्ना अनुग्रहले विदेश बाट झिकाइ प्रधान मंत्रित्व, पद दिएमा, तिन्ले अवश्य मेरो कार्य गर्नेछन्, भन्ने महारानीलाइ विश्वास थियो। आफ्ना त्यसै विश्वासले तिन्ले माथवरसिंह लाइ नेपाल आउन लेखि पठाइन्। पिता भीमसेन थापाको अपमृत्यू र परिवारक माथि वज्रको आपतको कुरा सम्झेर माथवरसिंहले लाहोर छाडेनन्। यता महारानी बाट तुरुन्त आउन भनी धर्मवाचा भाखेको अर्को पत्र पनी पुग्यो। कान्छा महारानीको धर्मपत्र पाएर पनी माथवरसिंहले नेपाल आउने साहस गरेनन्। अन्तमा महारानीका आग्रहले तिन्ले मातृभूमि फर्कने लाभ लाइ रोकन सकेनन्। मातृभूमि भक्त वीर माथवरसिंहले पंजाब युद्धहरुमा आफ्ना बाहुबलले आर्जित गरेको कीर्ति र लाहोर राज्यका जागिरको विशाल भूभागलाइ लातमारी, जननी जन्मभूमिका सेवामा प्यारो नेपाल तिरको यात्रा गरें। आफ्ना त्यै मातृभूमि प्रेमले माथवरसिंह तथा तिन्का वंशजहरुले पनि भारतीय भूभाग मद्धेको एउटा स्वतंत्र राज्यको 'महाराजा' हुन वंचित रहे। माथवरसिंह थापाका

समकालिन लाहोर दरबारका जागिरदारहरुनै वर्तमानकालका काश्मिर, पटियाला, नाभा र कपूरथला आदिका स्वतंत्र महाराजाहरु हुन्।

माथवरसिंहले नेपाल तिरको यात्रा गरेता पनी एक्कासि नेपाल न पुग्नसकि तिनी गोरखपुर आइ वसेका थिए। त्यहाँ तिन्ले नेपालको समस्त शासनाधिकार कान्छा महारानीका हात परिसके को छ भन्ने राम्ररी बुझे पछि मात्र नेपालतिर कदम बढाएका थिए। यता माथवरसिंहले नेपाल पुग्न भएको विलम्बले महारानीका आज्ञाले निजलाइ लिन, आइ रहेका आफिसरहरु संग वाटामा माथवरसिंह का भेट भयो। तिनिहरुबाट सविस्तार हाल सुनेर चित्त बुझे पछि माथव सिंह सरासर नेपाल पुगेका थिए। सम्वत १८९९ सन् १८४३ का २५ दिसेम्बर का दिन माथवरसिंह थापा नेपालमात्य तथा सेनापति बहाल गरिए।

माथवरसिंह योग्य पिताका योग्य पुत्र थिए। तिन्ले प्रधानमन्त्री पद पाउना साथ राज्यका सुसाशन तिर ध्यान दिए। तिन्का सुविचार तथा योग्यता ले चाँडै नै राजा प्रजा दुवैका मनमा स्थान गर्‍यो। तो जातिका वीर र साहसी थिए, उत्तीकै सुविचारक पनी थिए। तिन्का सुविचार ले अर्थि प्रार्थि सवै संतुष्ट रहन्थे। सदालाप, देव-द्विज भक्ति, अतिथि सेवामा माथवरसिंह का जोडाको कोह भएन। इनै सब उदार गुणले संतुष्ट भइ प्रजाजनले तिन्लाइ 'कलाबहादूर' को संमान सूचक पदवी दिएको थियो।

आफ्ना चिरशत्रू थापावंशवीज महात्मा भिमसेन थापा पुत्र माथवरसिंहलाइ एक्कासी नेपालमा आइ नेपालको प्रधान मंत्रीत्व पाएको देखि तत्कालिक रेजिडेन्ट लौरेंस साहबका मुट्ठमावेथा हुन थालेको थियो।

माथवरसिंहले सब मन्दा पहिला आफ्नो वंश कलंक मेटन भीमसेन थापा माथी लगाइएको विष मुद्दाका विचारको प्रारम्भ गरे। भारदारी वैठकमा त्यस मुद्दाको निकै छल फल भएको थियो। अन्तमा भीमसेन थापालाइ पदच्यूत गराउन र शासनाधिकार हाल लगाउन पाण्डे खलक

ले त्यो षडयंत्र गरेको थियो, भन्ने प्रमाणित भयो। तिन्ताक रणवीरजङ्ग पाण्डे कुनै संक्रामक रोगले पीडित थिए। तिन्का करवीर पाण्डे र कुलराज पाण्डे नाऊका दुइ भाइकासाथ अरु चारजना पाण्डेहरुले प्राणदंड पाए। यावत पाण्डे खलकलाइ देश निकाला भयो। आफ्ना खलकको दुर्गति देखेर विरामी रणजंग पाण्डेले ओछ्यानमा प्राण त्यागे। यस किसिमले स्वर्गीय महात्मा भीमसिंह को कलंक मोचन भयो तथा नीचाशय शत्रुहरुले आफ्ना कृत्यको उपयुक्त फल भोगे। स्वर्गीय भीमसेनथापाले आफ्नु कलंक मोचन सुन्न न पाए पनी नेपाल वासीहरुले आफ्ना निरपराधी महामंत्रीको कलंक मोचन सुनेर सन्तोषको सांस फेरे।

माथवरसिंहका योग्यताले सम्पूर्ण प्रजाजन सन्तुष्ट भएका थिए। तिन्ले अल्प समय भित्रै राज्यको आराजकतामय अशान्त वातावरणलाइ नियंत्रित गर्दै ल्याएका थिए। राज्यभरिमा गौरवमय शक्ति तथा दृढताका भावको संचार हुन थालेको थियो। विश्रृंखल भइ रहेको राज्य व्यवस्था मिलाई दरबारमा भइ रहेने षडयंत्रहरुमा तिन्ले विशेष ध्यान दिएका थिए। महारानीका कार्य कलाप र युवराज सुरेन्द्र र शाहजादा उपेन्द्रको असाहायावस्था देखेर तिन्लाइ कान्छा महारानीको कुविचार बुझ्न बाँकी रहेको थिएन। त्यहि विचना महारानीले आफ्नो कलुषित विचार सम्पादन लाई माथवरसिंह लाइ इसारा गरिन्। "माथवरसिंह ले त्यो कार्य गर्नें छन्" भन्ने महारानी लाइ पूर्ण विश्वास थियो। तर माथवरसिंह क्षुद्रचेता पीशाच थिएनन्। तिन्ले आफ्नो मनको कुरो गुप्त राखी महारानीका त्यस षडयन्त्रलाइ विफल गर्नें निश्चय गरे। आफ्ना विचारानुकुल तिनी महाराज राजेन्द्र विक्रमशाह लाइ सुमन्त्रणा दिन थाले। राजा राजेन्द्रले पनी केहि दिन अरु कान्छा महारानीका हातमा शासनाधिकार रह्यो भने विप्लव हुंने प्रत्यक्ष देख्न थाले। आखिर सन् १८४४ का १३ डिसेम्बर का दिन तिन्ले महारानीको अधिकार खारेज गरि, त्यो अधिकार युवराज सुरेन्द्र विक्रमशाहलाइ सुम्पे। यस प्रकार राज्यका वास्त-

विक्रम अधिकारी लाइ राज्याधिकार दिलाएर माथवरसिंहको चित्त स्थिर भएको थियो। तर दुर्दिनले गर्दा तिनले आफ्ना त्यै राजकुलाचार प्रेमले ठूलो कष्ट उठाइ मर्नू समेत परेको हो।

आफुले अनुग्रह पूर्वक विदेशबाट झिकाएर नेपालामात्य बनाइएका माथवरसिंह ले आफ्नो आज्ञा अमान्य गरि, उल्टो आफैलाइ अधिकारच्युत गराएकोले कान्छा महारानी तिन्का विनाश कि इच्छुक भइन्। दुर्बुद्धि स्वार्थपरायणा स्त्री शक्तिलाइ कुनै कुरो असंभव छैन ता पनी छोटा बडा धनी गरीब सबै प्रजा माथवरसिंहका गुणमा मुग्ध र वशीभूत हुनाले तिन्का मृत्युको षडयत्र हुन थाल्यो।

प्रतिहिंसा व्यग्र कान्छा महारानीले माथवरसिंह हत्याका षडयंत्रमा गगनसिंह राजभंडारी नाऊका खवासलाइ आफ्ना चक्रमा मिलाएकि थिइन्। तिन्ले गगनसिंह लाई आफ्नु आलिंगन दान समेत दिएर तिन्लाइ माथवरसिंहको हत्या गर्न ऊत्तेजित गराईन्। त्यो कार्य सिद्ध भएमा तिनैलाइ नेपालामात्य पद समेत दिने बचन दिएकि थिइन्। क्षुद्रचेता गगनसिंह महारानीका प्रेममा मुग्ध र नेपालामात्य पदलोभले माथवरसिंहको हत्याका प्रयत्नमा लागे। दरबारका षडयंत्रकारी हरु मद्धे को गगनसिंहको दल अंग्रेज रेजिडेंटको मुखापेक्षि थियो। महारानी बाट माथवरसिंहका हत्यालाई प्रेरित भएका गगनसिंहलाइ तत्कालिक रेजिडेंट लौरेंसले पनि निकै उत्साहित गरेको थियो। माथवरसिंहको हत्या गर्नु सानो कुरो थिएन। तसर्थं तिन्ले छिद्रखोजी अवसरका ताकमा बस्नू पर्‍यो।

गगनसिंहका विजयराज नाऊका कुनै एक अज्ञात कुलशीलका कुमाइ वाहुन् पूजा कोठे थिए। तिन्को जंगबहादुर कँवर संग निकै घनिष्ठता थियो। गगनसिंहले आफ्ना पूजाकोठे विजयराजबाट जंगबहादुरको स्वभाव, व्यसन, दरिद्रता र धनलोलुपताको परिचय पाएको थियो। तिन्ले घरदार हीन ... आसमाँझ ... बसेका जंगबहादुरलाई

जनका लोभले मिलाएर माथवरसिंहका प्रत्येक गतिविधिको पता पाउन थाले। इनै जंगबहादुर कँवरले आफ्ना कृत्याकृत्य बाट के गरे गरेनन् त्यसको परिचय इतिहासको अगाडिको पृष्ठ दिने छ।

जंगबहादुर कँवर महात्मा भीमसेन थापाका भाई नयनसिंह थापाका भान्जाइ खस क्षत्री बालनरसिंह कँवरका महिला छोरा हुन्। कँवर, कनक खडका थरका खस क्षत्रीहरूको यउटा शाखा हो। "खस खसिया गौरसिया" भन्ने उखानानुकुल नेपालमा खसक्षत्रीलाइ ब्राह्मणविर्य बाट बनेकाले खस भनेको हो भन्ने किंवदन्ती चलेको छ। बालनरसिंह कँवरका पुरखाको घर इलाका सेङ्जा नुवाकोट पश्चिम चार नम्बर जिल्ला मीरकोट मौजे गरौकोटका ज्याग्दी खोला भन्ने गाँउमा थियो। जंगबहादुरका पूर्वा रामकृष्ण कवरका बाजे बाबू रतन कँवर एक कास्किगाउका मुखियाको चाकरी गरि आफ्ना जहान बच्चाको पालना गरि आएका थिए। राजा पृथ्वीनारायण शाहले नेपाल संगठन लाइ गरिएका युद्ध कालमा रामकृष्ण कँवर गोरखाली सेनामा सामान्य सैनिक रुपमा भर्ना भइ आफ्ना राजभक्ति तथा वीरता ले राजा पृथ्वीनारायण शाहका अंगरक्षक पद सम्ममा पुगीसर्दारी खानकी समेत पाएका थिए। इनै रामकृष्ण कँवरका छोरा रणजीत कँवर र तिन्का छोरा बालनरसिंह कँवर भए। बालनरसिंह कँवरका आठ भाइ छोरा मद्धे जेठीपत्नि तिरबाट भक्तवीर नाउँका एक छोरा र कान्छीपत्नी तिरबाट वीरनरसिंह वा जंगबहादुर, बमबहादुर, बद्रीनरसिंह, कृष्णबहादुर, रणो.पदिपसिंह, जगतसम्सेर र धीरसम्सेर नाउँ गरेका ७ भाइ छोरा थिए। जंगबहादुर कँवर को जन्म सम्वत् १८७३ सन् १८१७ का १८ तारिखका जनवरीका दिन् आफ्ना मावलि थाँक्षमा भएको थियो। पिताले तिन्को नाउ वीरनरसिंह राखेको थियो। तर माउवि घरमा सबैले तिन्लाइ जङ्गे नाँउले बोलाउने गरेकाले तिन्को प्रसिद्ध नाऊ जंगबहादुर परेको हो।" भन्ने कुरा जयबहादुर कँवरका भतिजाका नाती कृष्णबहादुर कँवरले लेखकलाइ भनेका हुन्।

"एक दिन जंगलमा खाजाखान दिएका भुटेको मकैका रापले जंगबहादूरले मकै थापेको टोपि पोलिएको थियोरे"—"कुनै एक दिन जंगलमा आफ्ना भेंडा बाख्रा चर्नं छाडि ढुंगामा पल्टेर निधाएका बखत जंगबहादूरलाई घामको छहारि गर्न यउटा नागले छत्र गरेको थियो रे" तथा "त्यसवा किसिमका अनहोनि कुरा देखि मालविघरका बुढा पुरानियाँहरुले बगेको भाग्य राजा हुने जस्तो पोछ" भन्ने भविष्य वाणी गरेका थिए रे।" भन्ने प्रचलित किंवदन्तिहरुबाट जंगबहादुरको बाल्यकाल आफ्ना मावलिमा भेडा वाख्रा चराइ वितेको थियो भन्ने प्रमाणित हुन्छ।

प्रधानामात्य भीमसेन थापाका निगाहले राजमान पाइ बालनरसिंह कँवर काजी र पाल्पाका हाकिम समेत भएका थिए। पछि पाण्डे खलक का षडयंत्रले थिचिएर थापाखलकको पतन भए पछि तिन्को पदमान खोसियेको थियो। पिताका मृत्यु पछि अशिक्षित जंगबहादुरले आफ्ना मामा पर्ने झागाझोले थापा काजीका घरमा हुक्के वृत्ति गरि पेट पालु परेको थियो। ( पछि जंगबहादुरका प्रधानामात्य कालमा तिनै झागा-झोले काजीले जंगबहादुरका हुक्कामा चिलम राख्न लागेका बखत जंग-बहादूर ले—"मामा यउटा त्यो दिन पनि थियो, जुन् दिन म यसै गरि हजुरलाई चिलम टक्राउथे न्हेन" भनि विद्रुप गरेका थिए। बुद्धिमान झागाझोले काजीले जंगबहादुरका त्यस विद्रुपलाई बुझ्न वेर लाएनन्, निजले तुरन्त काशी जाने इच्छा प्रकट गरि विदा भइ काशी पुगे पछि मात्र बाँचे कै रहेछु भन्ठानेका थिए )

तिन्ताक जंगबहादुर केहि पैसाका लागी नट तुल्य आफ्ना साहसको प्रदर्शन गर्न वाँकी राखेका थिएन। युवराज सुरेन्द्र विक्रमका उद्दंड प्रकृतिका मष्तिस्कमा रोजीन्दा कुनैन कुनै फितुर उपजदै रहन्थ्यो। तिन्ले आफ्ना फितुर हरुलाइ चरितार्थ गर्नें आज्ञा तथा त्यसकका सफलताका पुरस्कारमा केहि रुपया दिने गरेको थियो। त्यै पुरस्कार लोभले जंग-बहादुरले पहाडी निरुला खोलाका साँघुरा पुलमा घोड़ाका पिठ्य,

...तोलाका आधा बाटामा पुगी फर्कने हुकुम पाएर फर्कने साहस गरेका थिए। यसै प्रकार कुनै एक इनार भित्र हामफाल्ने हुकुममा तिनले बडो ...पूर्वक इनार भित्रका ढुंगाको आडमा आफ्नो ध्यान जोगाई इनारमा ...पुरस्कार हात लाएका थिए। एक पटक यौटा राजकीय मत्ता हात्ती मातिएर शहरमा ठूलो उपद्रव गर्न थालेको थियो। त्यस हात्ती ...लाई समात्ने मानीस लाई पुरस्कार दिइने घोषणा भएको थियो। त्यस पुरस्कारका लोभले जंगबहादुरले त्यस मत्ता हात्तीलाई समात्ने विचार ...। त्यो हात्ती नुपुरेश्वरका कुनै यउटा खेतालाका बाजुराको खेत चर्न ...नियतवेलामा पुग्दो रहेछ। जंगबहादुरले पनि त्यसै हाती पुग्ने ...मा खेतमा जाने मार्गका कुनै एक वृक्षमा चढी हात्तीलाई कुही बसे। ...हात्तीले आफ्ना समयमा त्यस मार्ग बाट जान लाग्दा फुर्ती साथ हात्तीका ...मा हामफाली आसन जमाई, तुरन्त आफ्नु पटुका फुकाली हात्तीको ...आँखा छोपेका थिए। प्रकृतिले हात्तीलाई विशाल शरीर र शक्ति ...पनी आँखाले लाचार पारेको छ। अंधो हाती सर्वत्र भय मात्रै ...। यस प्रकार जंगबहादुरले हात्तीलाइ बशमा गरे पछि, त्यो ...घोषणाको इनाम पाएका थिए। नेपालमा यस्ता किसिमका किंवदंती ...प्रचलितछन्। अवश्य जंगबहादुर यो कार्य साहस पूर्ण थियो।

...न भएका जंगबहादुरको बाल्यकाल देखिनै नीच गुंडाहरु ...संगत भइसकेको थियो। आफ्ना नीच साथीहरुका साथ तिनी दिन-...लाई, वेश्यालय वा जुवाखानमा लडि रहन्थे। आफ्ना त्यै ...बाट र वेश्याका लतले तिमी सदा कंगाली रही नीच साथीहरुका ...रहन्थे। एक दिन जंगबहादुर लाई जुवाकाखालमा कुनै पल्टने ...ले रुपया न तिरे बावत तिनलाइ मलमूत्रपूर्ण नालमा ...राखेको थियो। त्यस वेला जंगबहादुरको दुर्दशाले द्रवित भइ ...मा बस्न घमनारायणसाल्मीले त्यस जमादारको समस्त कर्जा

तिरे र जंगबहादुरको उद्धार गरेका थिए। त्यसै उपकारलाई सम्झी पछि आफ्ना आमात्यकालमा जंगबहादुर ले ति घमनारायणसाल्मीका छोराहरुलाई मान सम्पत्ति समेत दी साल्मीहरु को समेत पानी चलाएका थिए। त्यति हुँदाहुँदै पनी जंगबहादुरको दुर्व्यसनवृत्ति छुटेको थिएन। तिन्ले फेरि कुनै पोढे संग एघार सय दाम कर्जा ली, जाड जुवा र वेश्यामा उडाइ तिर्नु पर्छ भन्ने डरले भागो तराईमा जंगली हात्ती समातो बेची रुपया कमाउने आशा गरी काठमाण्डू छाडेका थिए। तिन्को त्यो दुस्साहस सफल भएन र तिन्ले काशी भाग्नु परेको थियो। काशी पुगेर पनी जंगबहादुरले भलामानीसको नौकरी किंवा संगत गर्न रुचाएनन्। तिन काशीका नामी गुंडा मिसिरजीका जुवाका अड्डाको दरवानी र जुवाडीहरुलाइ गाँजा मजेर खवाउने निकृष्टवृत्ति लिएका थिए। त्यसै काशी प्रवासका फलस्वरूप नेपालामात्य भए पछी जंगबहादुरले आफ्ना अन्नदाता मिसिरजी लाई परवानीपुर भन्ने मौजा विर्ता दिएका थिए।

तिनैताक एक दिन काशोका अन्य एक गुन्डा दल संग मिसिरजीका दलको झगडा पर्‍यो। जंगबहादुर आफ्ना अन्नदाता गुन्डा दलका साथ त्यस झगडामा सामिल थिए। त्यसै झगडामा जंगबहादुरका हात बाट अन्य गुन्डादलको यउटा मानीस काटिएको थियो। मानीस मारे बापत फांसी पाइन्छ भन्ने डरले तिनी फेरी नेपाल पर्सा तराइमा मुख लुकाइ बसेका थिए आफ्ना त्यस जंगलवास कालमा जङ्गबहादुरले तराइका खोचेमंचे भन्ने पानी नचल्ने शूद्रहरु कहाँ वसी लसगस समेत गरेका थिए। त्यसैले आफु प्राइमिनिष्टर भए पछि जंगबहादुरले ती खोचेमांचे हरुको पनी भोटे साल्मीहरुको पानी चलाए सरी पानी चलाएका थिए। ती खोचेमोचेहरुले पछी आफ्नो जातियपदवी राजवंशी बनाएको हो। संयोगले तनैताक माथवरसिंहल लाहोर बाट फर्कि नेपालामात्यको पदग्रहण गरेको थियो। मामा माथवरसिंहका निगाहले जंगबहादुरले पनि नेपाल फर्कन पाइ थापाथलिमा वांसगांस पाएर पल्टनमा सुबेदारीको मान पाएका थिए।

नेपालका वास्तविक अधिकारीका हातमा राज्याधिकार दिलाएर मात्रै माथवरसिंह चुप लागेनन् । तिनी दरबारमा भइरहने षडयंत्रहरुको दमन र ती षडयंत्रका उद्घाटक रेजिडेंटका कार्यहरुका प्रतिविधानका प्रयत्नमा लागे । तिन्ताक भारतवर्षमा अंग्रेजहरुका विरुद्ध दिनौदिन विद्रोह भावना बढ्दिरहेकोथियो । पंजाब नरेश दलीपसिंह तथा तिनका नवयुवक पुत्र नवनिहालसिंह त्यस विद्रोहमा प्रत्यक्ष भइ सकेका थिए । त्यस बेला अनेक अन्य भारतीय नरेशहरु पनी अवसरका प्रतिक्षामा थिए । त्यस्तो उपयुक्त वातावरण र अवसरमा महात्मा भीमसेनका उत्तराधिकारी पुत्र माथवरसिह पो किन चुक्तथें । निजले अंग्रेजहरुलाइ समाप्त गर्ने यउटा आयोजन बनाइ, पंजाब नरेश र अन्य भारतीय नरेशहरुसंग आफ्नोसम्पर्क बढाउने प्रयत्न गरेका थिए । त्यसका निमित्त तिनी अनेक पटक काशी आइ र पंजाबका तथा अन्यदूतहरु संग भेटघाट र कुराकानि गर्दथें । एक पटक ता मानिज जंगबहादूरलाइ पनी आफ्ना सँगै ल्याएका थिए । घरको बहाना गरि यापाथालिमा बस्ने, जंगबहादुरलाइ माथवरसिंहका प्रत्येक गतिविधिका कुरा विदित हुन थाँक रहेन्थ्यो । गगनसिंहका कृतदास जंगबहादुरलेत्यो सबै समाचार गगनसिंहमा पुऱ्याउने र अंग्रेज मुखापेक्षी गगनसिंहले जंगबहादुरबाट संग्रहित भएको यावत समाचार अंग्रेज रेजिडेंटका कर्णगोचर तुल्याउने गरेका थिए । यो कुरा संद्रेर पर्सिवललंडनले आफ्ना नेपाल गाँऊका पुस्तकमा दिएका छन् ।

भारतवर्षका तत्कालिक अंग्रेज विरोधि वातावरणमा माथवरसिंहका त्यस कार्यकलापले अग्रेजहरुलाइ निकै भयभीत तुल्यायो । रेजिडेंट लौरेन्सले देशद्रोही गगनसिंह र जंगबहादूर लाई जसरिहुन्छ, माथवरसिंहको अन्त गर्ने सलाह दिइ, धनको समेत सहायता दिएका थिए । यता स्त्रैण र अव्यवस्थित चित्तका महाराजा राजेन्द्र, जस्ले क्यै दिन अगाडी माथवरसिंहका योग्य सलाहले महारानीको शासनाधिकार खोसेको थियो, कान्छा महारानीले पुनः माथवरसिंहका अंग्रेज विरोधि प्रयत्नले हुने

अतिरंजित भयानक आपत आइ पर्ने लागेको छ, भन्ने कुरा सुनी राजा राजेन्द्रले माथवरसिंह लाइ शत्रु तुल्य मान्न केहि बेरै मानेनन्। यस किसिमले माथवरसिंह तिरबाट राजा राजेन्द्रको मन टुटाइ महारानीले तिन्का हत्याको अयोजन गरिन्। सम्वत १९०१ ता० १८ मइ सन् १८४५ का दिन रात्रीमा महारानी बेरामी भएको बहानाले माथवरसिंह दरबारमा बोलाइएका थिंए। सरलचित्तका निशंक माथवरसिंह एक्लै दरबार पुगे। दरबार भित्र महारानीका खोपिमा प्रवेश गरेका माथवरसिंहले आफ्नै अन्नले प्रतिपालित कृतघ्नि भानिज जंगबहादुरकँवरका हातबाट गोलिखाइ मर्नु पर्‍यो। माथवरसिंहको मृतदेह दरबारका झ्यालबाट सडकमा फालिएकोर हात्तीका गोडाना बाँधेर घिसार्दै पसुपति सम्म पुर्‍याइएको थियो। मातामह भीमसेनथापाका अनुग्रहले पदमान पाउने, घरस्वामी बालनरसिंहकँवरका पुत्र जंगबहादुरकँवरले मावल खलक वा मामाको पहिलेका सबै उपकारहरुमा जलांजलि दी त्यो घोर कृतघ्नता गरेका थिए।

यस प्रकार नेपाल गठयिता महात्मा भीमसेन थापाका सुयोग्य वंशधरले पनी विना अपराध जीवन अर्पण गर्नु पर्‍यो। तिन्का मृत्युले जनसाधारणले समेत तिन्को गुणग्राम संझि अपार विषादमा निमग्न भई विलाप गरेका थिए। वीर गोरखा जाति आफ्ना अमात्य माथवरसिंहका शौर्य वीर्य देखि निकै अनुरक्त भै सकेका थिए। तिन्का अत्याश्चर्यजनक साहसको यउटा प्रचलित कथा छ।

एक दिन सहसा पार्सवर्ती जंगलबाट निस्केर यउटा भयंकर बाघले नगर भित्र प्रवेश गर्‍यो। नेपाली सैनिकहरु तुरुन्त बन्दूकले त्यसको संहार गर्ने तत्पर भएका थिए। अतुलबलशाली माथवरसिंहले सैनिकहरुलाई बन्दूकको व्यवहार न गरि त्यस्लाई हातले समातेर संहार गर भन्ने आज्ञा दिए। आज्ञा हुना साथ चारैतिर बाट सैनिकहरुले त्यस बाघलाइ घेरेका थिए। तर त्यसका संमुख जान कसैको आट पुगेन। माथवरसिंह अश्व पिठ्यूमा बसी त्यो सबै हेरी रहेका थिए। आफ्ना मानीसहरुमा कसैले बाघको

सन्मुख जाने साहस न गरेको देखि, तिनी स्वयं घोडाबाट ओर्लेर निर्भय र दृढताका साथ कदम बढाइ बाघका सन्मुख पुगेका थिए। बाघले माथवरसिंहलाइ नगिचै आएको देखी गर्जनका साथ आक्रमण गऱ्यो। त्यसै बेला महावीर माथवरसिंहले बाघको गर्धन समाति त्यसलाइ भूमिमा पक्रेर र दक्षिण जंघाले त्यसको घाँटीलाइ दयाएका थिए। बाघले पनी आफ्नु पराक्रम प्रकट गर्नँ उद्योगमा केहि कसर राखेको थिएन। त्यसै बेला चारैतिर बाट सैनिकहरुले पुगी बाघको प्राणनाश गरे। यस घटनाको तस्वीर नेपालका अजायब घरमा राखिएको छ।

दुराकांक्षीहरुलाइ सत्असत्को विचार सम्म रहदो रहने छ। महात्मा भीमसेन थापा र तिन्का वीरश्रेष्ठ परिवारका प्रत्येक पुरुषवर्गले आफ्ना रक्त सिंचनले प्यारो नेपालको मुखोज्वलगरेको थियो। तर न-मकहराम नेपालीहरुका आँखाका सन्मुख तिनीहरुको त्यस्तो कायरता पूर्ण अन्त भयो। भीमसेनथापाले आफ्ना २८ वर्षका अविरल सेवाका पुरस्कारमा पाएको देशको लज्जा पूर्ण अपमृत्युको कुरा माथि लेखिएकै छ। तिन्का माहिला भाइ नयनसिंह थापाले साल्कोंगडा विजय भूमिमा वीरगति पाएको र साहिला काहिला कान्छा भाईहरु अमरसिंहथापा रणवीरसिंहथापा रणवीरसिंह तथा अमरसिंहका पुत्र रणजोरसिंहले अंग्रेज युद्धमा गरेको महान पराक्रमका पुरस्कारमा तिनीहरुको नाँऊ लिने सम्म नेपालमा कोहि रहेन। अन्तमा नयनसिंहका पुत्र तथा भीमसेनका धर्मपुत्र असाधारण वीर र असमान्य गुणले पूर्ण भएका माथवरसिंहले पनी अकालमा विना अपराध दुराकांक्षाका लोलजिह्वामा उदरस्थ हुनु पर्यो। मामाका हत्याका पुरस्कारमा जंगबहादुरकँवरले कर्णेली पद पाए। "अंग्रेजहरुले त्यस वेला सिखयुद्धका पहिले पंजाबमा गरेसरि नै नेपालमा अराजकता हत्या र साजिसहरुको बजार गरम पारि सकेका थिए।"– भन्ने कुरा डाक्टर सुन्दरलालले आफ्ना भारतमाअंग्रेजराज्य नामक पुस्तकका तेश्रो भागमा लेखेका छन्। माथवरसिंहका हत्याले रेजिडेंट लोरेंसका खुशीको पारावार रहेन।

वास्तवमा आफ्नू विशाल सेना र तिन चार करोड रुपया खर्च गरे मार्क्विस हेस्टिंगले र कर्णेल आक्टरलोनिले जुन कार्य गर्न सकेका थिएनन्, त्यो कार्य लौरेंसले देशद्रोहि जंगबहादुरका मदतले सरलताले सम्पादित गरें। त्यस बेला लौरेंसले जंगबहादुर सित प्रसन्न भइ—"जंगबहादुर बडो धूर्त युवक हो, विशेष गरि सैनिक कार्यमा निपुणछ र यति साना उमेरमा पनी कपट प्रबन्धमा पारंगत छ—भनी मनेका थिए' सम्बत् १६०४ सन् १८४६ मा सर हेनरी लौरेंसले नेपाल छाडे पछि मिस्टर कालब्रिन नेपालका रेजिडेंट भइ नेपाल आएका थिए।

माथवरसिंहका मृत्युले आफ्नु कार्य सिद्ध सम्झने महारानी, आफ्ना प्रेमपात्र गगनसिंहका सहयोगले पुनः शासन कार्य हात लगाउने चेष्टा गर्न थालिन्। महाराजा राजेन्द्र विक्रमलाइ भने महारानीको त्यो कार्य कत्ति मन परेको थिएन्। तिन्ले आफना भारदारि बैठक मा "कुनै एक पुरुषकाहातमा प्रधानामात्यको शासन कार्य दिंदा, अनेक कुराको हानि भएकोले, आज उप्रान्त त्यस पदलाइ खारेज गरि, समस्त शासनाधिकार शक्ति स्वयं म आफ्ना हातमा राख्द छु, अब देखि मेरा सिवाय कसैले कसैको हुकुम मान्नु पर्दैन" भन्ने घोषणा गरे। महाराजा राजेन्द्रले केहि दिन सम्म राजकाजमा निकै उत्साह पनि देखाए तर अव्यवस्थित चित्तका राजेन्द्रको त्यो उत्साह धेरै दिन टिकेन। शासन कार्यमा पुनः शिथिलता आउन थाल्यो। अन्तमा तिन्ले आफ्नो त्यो अहिभारा चौतरिया फतेजंग शाहलाइ दिने इच्छा गरे। त्यस वेला सम्म माथवरसिंह थापाका मृत्यु पछि लघारिएका पांडे खलकका मानीसहरु एक एक गरी नेपाल फर्किसकेका थिए।

महाराजा राजेन्द्र वीर विक्रमशाह बाट चौतरिया फतेजंगशाहलाइ प्रधानामात्य पद दिने इच्छा गरेको देखि गगनसिंह पनि महारानीका भीभों गर्न थाले। राजकाजमा त्यस ताकाताकले फेरि अव्यवस्था हुन थाल्यो। तसर्थ गेह भारदारहरुका सभामा प्रधान मन्त्रिको चुनावका लागि

निकै छलफल भयो। छलफल पछि कुनै एक व्यक्ति लाइ प्रधानमंत्री न बनाइ चार काजीहरु बाट राजकाज चलाउने निश्चय भयो। त्यसै अनुसार चौतरिया फतेहजंगशाह, अहिमान राना, गगनसिंह खवास र तिनका सहायक जंगबहादुर कँवर जनरल पदले विभुषित भइ चार काजी नियुक्त भए। मंत्रीमंडलमा गगनसिंह र जंगबहादुरको प्रवेश एक मात्र कान्छा महारानी का इच्छा र शक्तिले भएको थियो। आफ्ना इच्छा अनुसारको व्यवस्थाले कान्छा महारानी अत्यन्त प्रसन्न थिइन्। त्यस पछि तिन्लाइ गगनसिंह बाट आफ्नो उद्देश्यका सफलतामा केहि सन्देह रहेन।

माथवरसिंह हत्या पछि सं० १९०० सन् १८४४ का शेष कालमा पंजाब दरवारले अंग्रेजहरुका विरुद्ध युद्ध घोषणा गरें। त्यस युद्ध घोषणा पछि सिखहरु संग भएको अंग्रेजहरुको युद्धलाइनै प्रथम सिख युद्ध भन्दछन्। माथवरसिंहका भइरहेका पत्र व्यवहारका फलस्वरुप अंग्रेजहरु माथि आक्रमण गरे पछि पंजाबसरकारले नेपालसरकार संग मदत मागी पठायो। दुर्भाग्यले त्यस वेला सम्म माथवरसिंहथापा स्वर्ग भइसकेका थिए।

हनुमानढोकादरबारमा गैह्र भाई भारदारहरुका सन्मुख त्यस कुराको छलफल हुन थाल्यो। चौतरिया फतेहजंगशाह, जनरल अहिमानराना अबो दलभंजन पाण्डे अंग्रेजहरुका विरुद्ध पंजाब सरकारलाइ मदत दिने पक्षका थिए। अंग्रेज मुखापेक्षि गगनसिंह र जंगबहादुरकँवरले अंग्रेजहरुको मदत गर्ने प्रस्ताव गरें। कान्छा महारानीले पनि आफ्ना अनुचर गगनसिंह र जंगबहादुरका प्रस्तावको अनुमोदन गरिन्। स्त्रैण राजेन्द्र विक्रम महारानीको मुख हेर्न थालेका थिए। तर त्यस वेला सम्म नेपालमा स्वतन्त्रताभिमानी वीर भारदारहरुको कमी थिएन। राजा रानी तथा दुइ जना काजीहरुले अंग्रेजहरुको सहायता गर्ने पक्ष लिएको देख्दा देख्दै पनी सबै भाई भारदारहरुले एक स्वरले पंजाबको मदत नगरे पनी मेच्छ अंग्रेजहरुको मदत कदापि गर्न हुन्न भन्ने कुरामा निकै जोर

गरे। अन्त्यमा त्यस युद्धमा नेपालले आफु तटस्थ रहने नीति निश्चय गर्‍यौं। "सिखहरुले दिल्ली पुगे पछि हामी मदत दिनैछौ।" भन्ने जवाफ पंजाबदरबारमा लेखि पठाइयों। अवश्य, त्यस बखत राजा-पृथ्वीनारायणशाह, वीराग्रणी दामोदरपाण्डे, महात्मा भीमसेन थापा, महानवीर अमरसिंह थापा, अंग्रेजद्रोहि महारानी साम्राज्यलक्ष्मीदेवी र कुशाग्रबुद्धि महाबली माथवरसिंहथापाका आत्माले आँसु बगाएका होलान्।

त्यस घटना पछि कान्छा महारानीका प्रभावले मंत्रीमंडलमा गगनसिंह र जंगबहादुरको प्रभाव बढ्दै गएको थियो। स्वयं राजा राजेन्द्र विक्रमशाहका कृपापात्र भए पनी, स्त्रैण राजा राजेन्द्रले महारानी का सन्मुख केहि बोल न सक्ने हुदाँ फतेहजंगशाह र अहिमानरानाको प्रभाव घट्तै गएको थियो। यस् किसिमले आफ्नो शक्ति बढेका वेलामा कान्छा महारानीले गगनसिंहलाइ युवराज सुरेन्द्र र शाहजादा उपेन्द्रका हत्या गर्न आदेश दिइन्। रानीका प्रेममा विमूढ नीचाशय गगनसिंहले पनी महारानी का त्यस हुकुमलाइ तामेल गर्न जंगबहादुरलाइ आज्ञा दिए। तिन्ताकसम्म धूर्तशिरोमणि जंगबहादुर स्वयं नेपालमात्य हुने स्वप्ना हेर्न लागेका थिए। सुरेन्द्र र उपेन्द्रको हत्या गर्न सफल भएमा कान्छा महारानी प्रिय गगनसिंहको प्रभाव सर्वोपरि हुन्थ्यो र जंगबहादुरले सदा तिन्को अनुचरनै भइ बस्तु पर्दथ्यो। त्यो कुरा धूर्तराज जंगबहादुर-लाइ किन रुचिकर हुन्थ्यो। तिन्ले आफ्नो त्यो दूराभिसंधि पूर्ण हुनमा बाँकी रहेका गगनसिंहको नै मृत्युको उपायको विचार गर्न लागे, त्यसै अनुरुप तिन्ले र तिन्का भाइहरुले यउटा पैसाचिक योजना तयार गरे। त्यस् योजनानुसार जंगबहादुरले युवराज र शाहजादामा कान्छा महारानीको आदेश र गगनसिंहले थालेको प्रयत्न आद्योपान्त वर्णन गरी, महारानी तथा गगनसिंहको अवैध सम्बन्धको कुरा समेत प्रकट गरेका थिए। त्यो समाचार पाउना साथ युवराज र शाहजादा सर्शंक भए तथा गगनसिंहका

प्राणनाशको मौका खोज्न थाले। महाराज राजेन्द्रमा कान्छा महारानीका अनाचारको कुरा विन्ति गरियो। त्यो कुरा सुनेर स्वयं महाराजले शाहजादा हरुलाई गगनसिंहको हत्या गर भन्ने आज्ञा दिए। चौतरिया फतेहजंगशाह, काजी दलभंजन पाण्डे र अहिमान राना पनी राजाज्ञाका बखत तहीं थिए। त्यस् प्रकार राजाज्ञा पाई युवराज सुरेन्द्रले त्यो कार्य जंगबहादुरलाइ सुम्पे। आफ्ना इच्छानुकूलको आज्ञा पाइ जंगबहादुरका प्रसन्नताको पारावार रहेन। तिन्ले आफ्ना त्यस दिन सम्मको कपट कार्यहरू अत्यन्त गुप्ति हिसाबले गरेका थिए। कान्छा महारानी, गगनसिंह र राजकुमारहरुका दुवै दलमा जंगबहादुर साँचिलो रहदै आएका थिए। गगनसिंह हत्याको राजाज्ञा पाएर तिन्ले आफु देखा न परि कार्यसिद्ध गर्ने व्यवस्था गरे, त्यस कार्यमा तिन्ले आफ्ना पुराना मित्र गगनसिंहका पुजा कोठे विजयराजको मदत पाएका थिए। सम्वत १९०२ सन् १८४६ सेटेम्बर १४ का दिन विजयराजका मदतले, आफ्ना घरका तेश्रातलाका पूजाकोठामा पूजागर्न बसेका गगनसिंहले 'लालझा" भन्ने गुन्डाका हातको गोली खाइ मर्नु पऱ्यो। यस प्रकारले जंगबहादुरले त्यो जघन्य हत्याकांड पनी सफलता पूर्वक समाप्त गरे। त्यस कृत्यमा जंगबहादुरको हात छ भन्ने शंकासम्म कसैले गर्न सकेनन्। गगनसिंह हत्याको समाचार जंगबहादुरले स्वयं कान्छा महारानीका कानमा पुऱ्याएको थियो। जे हवस्, गगनसिंह हत्याले माथवरसिंह हत्याको यत्किन्चित प्रतिशोध भयो।

एक्कासि आफ्नो विश्वासी कार्य सचिव गगनसिंहका हत्याले कान्छा महारानी मर्माहत, हतचेतन र प्रतिहिंसा व्यग्र भएकि थिइन्। त्यस् अवस्थामा तिन्ले अरु कसैलाइ विश्वासी न देखि जंगबहादुर लाइ नै आफ्नो मुख्य कार्य सचिव बनाइन्। दुराकांक्षि कूटकर्मा जंगबहादुरले पनी उचित अवसर देखेर महारानीमा आफ्नु पूर्ण भक्ति निवेदन गरेका थिए।

प्रियपार्षद शोकाकुला महारानीले संम्वत १९०२ सन् १८४६

सेप्टेम्बर १५ का दिन रात्रीमा नेपालका गैह भाइ भारदारहरुलाइ कोतमा हाजिर हुने हुकुम दिइन्। निरोह भाइ भारदारहरु निरस्त्र अवस्थामा कोतमा हाजिर भएका थिए। त्यसकाल रजनी चक्रको संचालन रेजिडेंसी वाट भइरहेको थियो।

गैह भाइ भारदार जम्मा भएका अन्तमा ७ भाइ जंगबहादुरहरु कोपमा पुगेका थिए। गुप्त रितले जंगबहादुरको ३ पलटनले कोतलाइ घेरी वसेको थियो।

महाराजा राजेन्द्रका संमुख गैह भाई भारदारहरुले गगनसिंह हत्याका अनुसंधानको छलफल गर्न थाले। त्यस छलफलमा हुन लागेका अवेरले असह्य भएकि क्रोधातुरा कान्छा महारानीले खोपीझ्याल वाट, अहिमान रानालाइ 'ब्रजकिशोरपाण्डे यस हत्याको दोषि हो, त्यसलाइ पक्र' भन्ने आज्ञादिइन्। अहिमानरानाले ब्रजकिशोरलाइ समातेर महारानीको हुकुम तामेल गरे। त्यसै वेला ब्रजकिशोरपाण्डेले महाराज राजेन्द्रविक्रमशाह तिर हेरि "म निरपराधी हूं" भनी कराए। वृजकिशोरपाण्डेको कुरा सुनी महाराजले-"ब्रजकिशोरलाइ छाडने र पछि तिन्को मुद्दा अदालतमा हेरि न्याय'नसाफ गर्नू" भन्ने आज्ञा दिए। हुकुम दिएर राजा राजेन्द्रको सवारी कोत वाहिर निस्केको थियो। चौतरिया फतेहजंगशाह पनी सवारीसाथ वाहिर आएका थिए। कान्छा महारानीको न राम्रो चालर कोतवाहिर जंगबहादुरको पल्टनलाइ देखि राजा राजेन्द्रशाह झस्के। निजले फतेहजंगलाइ कोत तर्फ फर्काएर आफु त्याँह रात्रीमा रेजिडेंसी तिर लागेका थिए। त्यस कालरजनीमा रेजिडेंसी पुगेका राजेन्द्रले रेजीडेंट कालविन संग भेट गर्न खबर पठाए। त्यस वेला सपारिषद रेजिडेंट आफ्ना षडयंत्रको विषवपनले नेपालभूमिमा रक्तप्लावित भएको र अंग्रेज प्रभावबृद्धिको सुख स्वप्न देख्नमा मग्न थिए। अर्धरात्रीमा राजा राजेन्द्र विक्रमले आएर पठाएको खवरले तिनले आफ्नो सुख स्वप्न चरितार्थ भएको बुझे। "हामी यूरोपवासीहरुले

रातीमा कुनै विदेशी संग भेट गर्ने नियम छैन, भोली सवारी होला" भनी त्यसवेला रेजिडेंटले राजेन्द्रविक्रमशाहलाइ फर्काइ दिए।

यता कोतमा आफ्नो हुकुम अमान्य गरि अहिमानरानाले ब्रज-किशोरपाण्डेलाइ छाडि दिएको देखि महारानीलाइ असह्य भएको थियो। महाराजा राजेन्द्रको सवारी वाहिरिए पछि तिनले जंगबहादुरलाइ ब्रजकिशोर समेत अहिमानरानालाइ काट्ने हुकुम दिइन्. त्यत्तीकैमा चौतरिया फतेहजंगशाहले कोतमा प्रवेश गरेर अहिमानरानालाइ आफ्नो पल्टन तुरन्त झिकाऊ भन्ने इसारा गरे।

त्यस किसिमले अमात्यलाइ तुरन्तै फर्केर आएको देखि चारै तिर सरुशालो हुन सक्ने जंगबहादुर अगाडी आए र महाराज राजेन्द्रको सवारी वाहि-रिए देखिको महारानीको क्रोध पूर्ण आज्ञा लगायत सबै कुरा विंति चढाए। त्यस पछि "गरिवप्रवर! यस वेला गगनसिंहका हत्याको कुराले निकै चर्को रूप लिएको छ। हजूर वाट यस्को क्यै उपाय भएन भने प्रतिहिंशा व्यग्र महारानी वाट आजके हुने हो भन्न सकिंदैन. मेरा विचार-ले ता महारानीका हुकुम वमोजिम अहिमानराना र ब्रजकिशोरपाण्डेलाइ कतल गरि, महारादीको क्रोध शान्त गरौं वा महारानीलाईनै बन्दिनि तुल्याए मात्र हामीहरुको रक्षा हुन सक्दछ; यस वाहेक मेरा बुद्धिले ता अर्को वाटो देखिरहेको छैन।" त्यस्का जवावमा "ब्रजकिशोरपाण्डेका वापत माहाराजको हुकुम मुताविक कार्य हुनु पर्दछ। अहिमानरानाले महाराजको हुकमु तामेल गरी उचितै गरेका छन्। रह्यो महारानीलाइ बन्दिनी गर्ने कुरा, त्यस्लाइ तिमी जत्तिको लरतरो बुझ्दौ, तेत्तिको छैन, मौकामा जस्तो परी आउनेछ गरिएलां" भन्दै फतेहजंग पटा-ङ्गिनिमा पुगे। फतेहजंगशाहलाइ देख्ना साथ क्रोध पूर्वक महारानीले— "ल्है फतेहजंग! गगनसिंहको हत्याकारीको पत्ता लाग्यो, भन कस्ले गगनसिंह मारेको हो।" भनी उर्लन थालिन्। त्यस्का उतरमा फतेह-जंगशाहले— "सरकार शान्त हुं वक्सियोस, यो हत्याकांड बढो जटिल-

ता मूलक छ। यस्मा अकस्मात केहि निर्णय गरेमा वास्तविक अपराधीका ठाँउ नीरपराधी फस्न सक्दछ। सरकारले यस मुद्दाको अहिभारा मेरा उपर छाडि वक्सियोस, मैले गगनसिंहका हत्याराको पता लगाइ चाँडै नै त्यसलाइ सरकारका संमुख हाजिर गर्ने छु।", भन्ने नम्रतापूर्वक विंति चढाए। तर क्रूरकर्मा महारानीको कुराले किन चित्त बुझ्दथ्यो। तिनी बौलाही तुल्य भइ एक मात्र "हत्यारो" लाइ सामुन्ने खडागर भनी उर्लिंदै थिइन्।

त्यसै बेला आफ्नो चार पल्टन कोतनेर आइ पुगेको समाचार पाइ अहिमानराना कोत वाहिर निस्कन थाले। त्यो कुरा थाहापाइ तथा फतेह जंगशाहको गतिविधि विचार गरि, आफ्नो जाल नष्ट र आफै त्यस जालमाँ फँस्न आटेको देखी जंगबहादुर कँवर निकै विचलित भएका थिए। तिनले अहिमानराना वाहिर जान लागेको कुरा महारानीमा विंती चढाए। महारानीले अहिमानरानालाइ तुरन्त गोली हान्ने आज्ञा दिइन्। महारानीका मुखवाट हुकुम झर्ना साथ कोतका ढोका सम्म पुगेका अहिमानराना, रणोदिपसिंहकँवरका खुकुरिले आहत भइ लडे। लड्दा लड्दै तिनले आफ्नो रक्तले मुछीएको हात भित्तामा बजारे र 'गगनसिंहको हत्यारो जंगवहादुर हो" भनी मुर्छित भएका थिए।

जंगवहादुरकँवर र तिन्का भाइले त्यस्तो असंभावित क्रूरकार्य गरेको देखि फतेहजंगले पनी "गगनसिंहको हत्याकारी जंगबहादुर नै हो" भनी महारानीका खोपि तिर पाइलो सारे। फतेहजंगले भनेको त्यो कुरा र तिनलाई महारानीका खोपि तिर हिंडेको देखि जंगवहादुरले "होइन यस कुरामा हजुरलाइ भ्रान्ति भएको हो" भन्दै संमुख आइ रोक्न खोजे। जंगबहादुरको कुरामा न लागी फतेहजंगशाहले भरयाङ्मा पाइलो चढाए। त्यसै बेला। जंगबहादुरको इसारा पाइ राममिहिर अधिकारीले गोली द्वारा फतेहजंगशाहलाइ कोतभूमिमा लडाएका थिए। फतेहजंगका साथ हिंडेका काजी दलभञ्जनपाण्डे पनी राममिहिरका गोलीका शिकार भए।

यस प्रकारले केही विवाद सम्म न भइ रक्तपात भएको निरपराधि

जनरल अहिमान राना, अमात्य चौतरिया फतेहजंगशाह र काजी दल-भञ्जनपाण्डे मारिएको देखेर समस्त भारदारहरु सशंकित भए। भारदार-हरुले जंगबहादुरको चक्र त्यतिपर सम्म पुगेको होला भन्ने विचारै सम्म गरेका थिएनन्। तिनीहरुले तुरन्त जंगबहादुरलाई समात्ने चेष्टा गरे। अौसर आइ पुगेको देखि जंगबहादुरले आफ्ना भाइहरुलाई आँखा सन्कार, तिनको इसारा हुना साथ सशस्त्र बमबहादुरकँवर र कृष्ण बहादुरकँवरहरु चौतरिया फतेहजंगशाहका छोरा खड्गविक्रमशाह माथि जाइलागे। निरस्त्र खड्गविक्रमले आफ्नु खुकुरी झिक्नैनपाउदै पछिल्तिर बाट कायर धीरसम्सेरले तिनको गर्धन छुट्याए। त्यसै वेला जंगबहा-दुरको तिनै पल्टनले कोतमा प्रवेश गर्‍यो। निरस्त्र, सैन्यले घेरिएका, भागन असमर्थ, निरपराधी वीर भारदारहरु चारैतिरबाट सैनिकहरुका हतियारले काटिन थाले। यह किसिमले एक घंटा भित्र पुग न पुग ४०० जना, जस्मा गोर्खाराज्य संस्थापक राजा द्रव्यशाहका नाभिय सहायक, गोर्खाराज्य प्रतापवर्धक राजा रामशाह बाट आफ्ना अतुल उत्सर्गले वंशानुक्रमिक राष्ट्रनायक पदमा प्रतिष्ठित भएका तथा नेपाल साम्राज्य संगठनकर्ता प्रातः स्मरणीय राजा पृथ्वीनारायणशाह, राजा सिंहप्रताप-शाह, शाहजादा बहादूरशाह र नेपाल साम्राज्य विस्तारक राजा रणबहा-दुरशाहहरुका पालादेखिका र गोर्खा अंग्रेज युद्धमा आफ्ना आत्मोत्सर्ग र बलिदानसे आफ्ना राष्ट्र प्रेमका परिचायक प्रसिद्ध र २०० वर्ष देखि देशको गौरव बढाउने शाह थलकका, पाण्डे थलकका, थापाथलकका, राना (मगर) थलकका, बस्नेतथलकका, बिष्टथलकका भंडारीथलकका यावत वीर भारदार-हरुको गर्धन एक एक गरी त्यस कालरजनीमा छुट्याइएको थियो। कोतपर्वका काण्डको जघन्य र नीचतापूर्ण द्वेश-द्रोही घटना संसारका इतिहासमा खोजेर पनि पाइने छैन। यसका सन्मुख संसारको कुनै पनी हत्याकाण्ड तुच्छ मानिने छन्, तथा ठा० रघुनाथसिंहका कथनानुसारः—"(अंग्रेज हरुका पालामा पंजाबमा भएको) जालियानवालाबागको हत्याकाण्ड

नगण्य नै मानिनेछ। किन भने; यहाँ (कोतमा) मानिसहरुलाई ( कचहरीर छलफल गर्नँ निऊँले निरस्त्र ) बोलाइ, षड्यंत्र गरेर, देशलाई अंग्रेज हरुका हातमा बेच्ची देशका ( भएभरका ) श्रेष्ठ वीर, नीतिज्ञ एवं सेनापति हरुको हत्या यस निमित्त गरिएको थियो कि हत्यारा ( जंगबहादूर तथा तिन्का कँवरखलकका राणा ) स्वयं ( अंग्रेजहरुको कमार्तनका पुरस्कारमा नेपालराज्यको सुल वैभव र लाभहरुको ऊपभोग गर्न पाउन्”।

त्यस विकट अर्ध रात्रिमा आततार्इ जंगबहादुरकँवर र तिन्का भाइ हरुले आफ्ना ससस्त्र सैन्यका सहायताले जघन्योत्तर इत्याकान्ड द्वारा निरस्त्रावस्थामा त्या गरिएका वीरश्रेष्ठ भाई भारदारहरुका निर्जीव शवलाई देखि पाषाणहृदया महारानीको चित्त शीतल भयो। उता त्यसै वेला राजा राजेन्द्र विक्रमशाह पनी रेजिडेंसी बाट फर्की अंग्रेजहरु माथि मुरमुरींदै कोत नेर आइ पुगेका थिए। कोतभित्रका आहत भारदारहरुको चित्कार र पुकार र कोतका मोहरि बाट बगेको रगतको खोलो भई हेरी डरले राजा राजेन्द्रले त्यो रात फतेहजंगशाहका घरमा गई विताए। यता पाषाण हृदया महारानीले युवराज सुरेन्द्र र शाहजादा उपेन्द्रलाई भोलाई कोतको त्यो दृष्य देखाउन जंगबहादुरलाई आज्ञा दिइन्। जंगबहादुरले आज्ञाको तुरन्त तामेल गरी दुवै राजपुत्रहरुलाइ कोतमा ल्याएका थिए।

विचरा ती निरीह राजकुमारहरुले रातभरी मुर्दाले घेरिए र कोतमा बस्नु पर्‍यो। कान्छा महारानीका मनसाय ति दुवै राजपुत्रहरुले कोतको त्यस भीषण दृश्यलाई हेरी, डराएर स्वेच्छाले पदत्याग गरी मुग्लान पसुन् भन्ने थियो। तर धूर्तराज जंगबहादुरलाई त्यो पनी स्वीकार थिइन। जंगबहादुरले नेपाल राज्यमंचमा प्रवेश गरेदेखि आमा छोराका त्यस कलले दुवै तिर सांचिलो हुँदै त्यहाँ सम्मको खेल खेलिसकेका थियो। त्यसै आमा छोराका कलहका आडमा ती अझै नेपालको चरम पतन चाहन्थे। तिन्ले त्यसै रात्रमा ती दूवै राजपुत्रहरुमा कान्छा महारानीको अभिसंधि प्रकट गरी आफुलाइ कुमार द्वयको दासानुदास प्रकट गरेको थिए। तथा दुवै

माइका रक्षाका निमित्त गुप्त हिंसावलो आफ्नो १ पलटन सेना पनि कोतमा छाडेको थियो ।

कोतका लोमहर्षक हत्याकांडका भोलिपल्ट १६ सेतेम्बरका दिन कान्छा महारानीले जंगबहादुरकँवरलाई नेपालामात्यका पदमा बहाल गरिन् । तत्काल जङ्गबहादुर सदलबल महाराज राजेन्द्रका हजूरमा रुपया राखन पुगे ।

कोतको यावत कुरा र जङ्गबहादुरले अमात्य पद पाएको कुरा महाराजा राजेन्द्रमा विदित भइ सकेको थियो । कायर राजेन्द्र विक्रमशाह महारानी द्वारा पदस्थ गरिएका जङ्गबहादुरलाई त्यस्तो रवाफका साथ सम्मुख रुपया राख्न आएको देखि क्रोधले रनथनिएका थिए । त्यति हुँदा पनि मतिमूढ कायर राजेन्द्रले रानीका त्यस कार्यको प्रतिवाद गर्न न सकी उल्टो आफै सरदार भवानीसिंहका साथ दरबार बाट निस्की पाटन तिर लागेका थिए । कोत पर्वका तेश्रा दिन ता० १८ सेटेम्बरमा महारानीले कवायतमा सामिल भएका गैह भाइ भारदारहरुका सन्मुख जङ्गबहादुरकँवरले नेपालामात्य पदमा बहाली भएको घोषणा गरिन् । त्यस किसिमले हत्या षडयंत्र विस्वासघात आदि घोरतर जघन्य कृत्य द्वारा नेपालमात्यको पद पाए पनि जङ्गबहादुरको दूराकान्छा पूर्णतः पुरा भएको थिएन्, क्या र ? त्यस पछि तिन्ले त्यस पद लाइ स्थायि तथा निरापद तुल्याउन अंग्रेज रेज्डिेंट सँग आफ्नो सम्पर्क खूब बढाएका थिए ।

पाटन तिर गएका महाराजा राजेन्द्र विक्रमको गतिविधि माथि नजर राख्न महारानीले आफ्ना गुप्तचर खटाए की थिइन् । महाराज राजेन्द्र तथा सरदार भवानी सहले महारानीका त्यस अनियंत्रत शासनको अन्त गर्नें सलाह स्थिर गरे । त्यो कुरा आफ्ना गुप्तचरहरू द्वारा महारानी लाई थाहा भयो । तिन्ले त्यो कुरा थाहा हुना साथ सुबेदार कलाघरलाई गुप्त रीतले सरदार भवानीसिंहको हत्या गरी तिन्को रगत चुहुदो टाउको ल्याउने आज्ञा दिइन् । सुबेदार कलाघरले रात्रीमा सुतेका भवानीसिंहको

गर्दन छुट्याई महारानीका सन्मुख हाजीर गरें । महारानीको त्यो लोम-हर्षक कार्य तथा रक्तपिपासालाई देखेर जङ्गबहादुरजस्ता क्रूरकर्मांको मुटुको पनी ठाउँ छोड़ेको थियो । महारानीको निरंकुश यस्तो शासन रहेमा कुनै दिन आफै माथि पनी आपत वज्रन्न बेरलाग्ने छैन भन्ने सम्झी तिले आफ्ना भाइ रणोदिपसिंहकँवरलाई पाटन पठाई महाराज राजेन्द्रको सवारी फिराएका थिए ।

चार महिना बिते पछि कान्छा महारानीले वित्रस्त चित्तले जङ्ग-बहादुरलाइ सौतापुत्रहरुको हत्या गर्नें हुकुम् दिइन् । कपटपटु जङ्ग-बहादुरको मनोभावना केही अर्कै थियो । आफ्ना चरम स्वार्थ सिद्धिका सन्मुख नरेस वा देशका स्वार्थको तिन्लाइ रतिभर विचार थिएन् तिन्ले युवराक सुरेन्द्रको हत्या भई शाहजादा रणेन्द्र वा प्रकारान्तरले कान्छा महारानीको राज्यासन परिष्कृत भएमा आफ्नो दूराकांक्षापूर्ण चरितार्थ होला भन्ने देखेका थिएनन् । यता यदि तिन्ले युवराज सुरेन्द्रको पाऊ समात्दछन् भने तिन्लाई भारदार र प्रजाजनको ठूलो अवलम्बन पाउने र त्यसै भारदार तथा प्रजाजनको त्यस अवलम्बन बलले तिनूले महारानी लाइ सहज हुंत्याउन सकिन्छ भन्ने विचार गरें कथिए । उता महारानीका अत्याचार पूर्ण कार्यकलापल गैह्र भाइ भारदारहरुको चित्त सदा सशंकित रहन थालेको थिया, उस्माथि मतिमूढ स्त्रैण राजा राजेन्द्रको अव्यवस्थित चालले तिनीहरुलाइ भयग्रस्त गराउदै गएको थियो। त्यस किर्सामले कान्छा महारानीलाई हीनवल भएको बुझी जंगबहादुर भित्र भित्र भाइभारदारहरु संग मुख मिलाउन थाले. तिन्ले महारानीको दुराज्ञालाइ प्रत्यक्षतः अस्विकार न गरे पनी त्यस्मा आलेटाले पनी गर्न थालेका थए । जंगबहादुरको त्यसकि समको आचरणले महारानी विमत र हतास भइन् । तर सहसा कुनै प्रकारको भाव प्रकट न गरी तिनी जंगबहादुरको समेत अन्त गर्नें आयोजन गर्न थालिन् । त्यस कार्यमा तिन्ले काजी वीरध्वज बस्नेत र कप्तान वजिरसिंहलाइ लगाएको

छिइन् त्यो आयोजनको गुप्त हाल युवराज सुरेन्द्रलाइ आफ्नो महारानी बाट थाहा भएकोले तिन्ले आफ्नो हितैषी संम्झी जंगबहादुरलाई सतर्क गरेका थिए।

अगि थपाथर्लीमा सिता टिपिबसेका जंगबहादुरकँवरले आफ्ना मित्र विजयराजका मदतले गगनसिंहका घरमा प्रवेश गरे पछि, यथेष्ट पुरस्कार पाउने गरेको थियो। त्यस कालमा पं० विजयराजको र तिनको घनिष्ठता झन् घनिष्ठोत्तर हुँदै गएको थियो। गगनसिंहका हत्यामा विजयराजको सक्रिय सहायताले जंगबहादुर तिनका निकै अनुगृहित भएका थिए। त्यसै कारण सममनोभाव भएका दुवै मित्रहरुले वागमतिमा पसि "आजन्म एकदोसरालाइ मदत दिने र एकदोसराले पाएको धन सम्पत्तिलाइ दुवैजनाले वाँडिचुँडी खाने" सपत लिएका थिए। गगनसिंहले कान्छा महारानीको एक्का भएका वेलामा, गगनसिंहका पूजाकोठे हुनाले विजयराजको पनि कान्छा महारानीका दरवारमा आवत जावत खुलेको थियो। राजदरवारमा हीनकुलशीलका अनेक केटी सुसारे रहन्छन्। तिन्ताक सम्म निष्ठावान नेपाल देशीय ब्राह्मण- हरुले हीनकुलजन्मा मानिसहरु बाट दक्षिणा ग्रहण गर्नु अधर्म सम्झन्थे। तसर्थ दरवारका त्यस्ता केटीकुमारीहरुले तत्कालिक वातावरणमा विदेशी मानिएका तथा आज्ञात कुल शीलका विजयराजलाई चौंडतेहारमा दान प्रदान दिने र गुरु मंत्र सुन्ने गरेका थिए। दरवारका तिनै चेलीकेटीहरुबाट विजयराजले दरवारमा भएका कुराहरु चाल पाउने गरेका थिए। आफ्ना त्यसै वाकिफकारीले तिन्ले अनेक पटक जंग- बहादुरलाइ ठूलो मदत दिएका थिए। त्यसै गरी भाँडाखालपर्वको आयो- जनको कुरा आफ्ना चेलीकेटीहरुबाट थाह पाएर विजयराजले पनि आफ्ना मित्र जंगबहादुरलाइ सावधान गरेका थिये।

त्यसका दुई दिन पछि काजी वीरध्वजबस्नेतले "आवश्यकीय

कार्यलाई महारानी वाट हुकुक भएको छ'' भनी दरवारमा जंगबहादुर लाई बोलाई पठाए। अगि अगि कान्छा महारानीका हुकुमले नेपालका वीर भारदारहरुलाई जस प्रकार स्वयं जंगबहादुरले कायरतापूर्ण जघन्य हत्याकांड द्वारा मारेकाटेका थिए, ठिक त्यै रितले बलिदानको वाखो सरी आफै लाई पनि दरवारमा बोलाइएकोले, मृत्यूलाई प्रत्यक्ष देखने जङ्गबहादुर मृतप्राय: भएका थिए। महारानीको आज्ञा सुन्ना साथ जंगबहादुरले युवराजका दरवारमा पुगी दुवै कुमारका पाउमा छाँद हाली रुन प्रारम्भ गरे। त्यसवेला सम्म महारानीका त्यस अनियंत्रित कार्यहरुले शाहजादा र भाईभारदारहरु आजीत भइसकेका थिए। जंगबहादुको कुरा लिएर युवराजका दरवारमा निकै छलफल भयो। भाईभारदारले महारानीका अनियंत्रित शाशनको अन्त गर्ने सलाह दिए। त्यै निश्चय अनुसार शाहजाद उपेन्द्रवीरविक्रमशाहले जंगबहादुरहरु सात भाइ र पुगनपुग एकसयजना सैनिकहरुका साथ महारानीका दरवार तिर प्रस्थान गरे। सम्वत १९०२ सन् १८४६ नवेम्बर २ का दिन दरवारका ढोकामा गुप्त रितले काजी वीरध्वज वस्नेत र कप्तान उजीरसिंह आफना १८ जना साथीहरुका साथ जंगबहादुरलाई पर्खि वसेका थिए। एक्कासि सदलबल शाहजादा उपेन्द्र विक्रमले त्यस ठाँउमा पुगी १७ जनाको गर्धन छुट्याए। कप्तान उजीरसिंह कुनै प्रकार ज्यान जोगाइ काशी भागेका थिए। दरवारढोका कांड वाट फुर्सत पाई शाहजादा उपेन्द्र दरवार भित्र पसे। तिनले एक्कासि महारानीका खोपीमा पुगी तिन्लाइ बन्दी गरे। सवै कार्य यति छिटो भयोकि महारानीले आफ्ना रक्षाका उपायको वीचार गर्ने सम्म मौका पाइनन्। त्यो काण्ड भँडारखालपर्वका नाँऊले प्रसिद्ध छ।

शाहजादा उपेन्द्रविक्रमले वन्दिनी महारानीका विचारका लागि गैह भारदार तथा समस्त सेनालाइ सामेल गरें। गैह भाइभारदार तथा सैनिकहरुका सामने महारानीको गुप्तप्रेम, स्वेच्छाचरिता र तिनद्वारा गरिएका हत्याकाण्डहरु सबै प्रमाणित गरिए। शाहजादा उपेन्द्रविक्रम

बाट सर्वं सम्मतिले महारानीलाई देश निकालाको सजाय सुनाइयो । तदनुसार नेपाल देश, नरेश र नेपाल भाग्यकिराहु महारानी राज्यलक्ष्मीदेवीले आफ्ना शाहजादा रणेन्द्र र शाहजादा विरेन्द्रका साथ काशीयात्रा गरिन् । युवराज सुरेन्द्रका हुकुमले महारानी तथा राजपुत्रहरुका भरणपोषणका निमित्त बाउन्न लाख रुपया बक्सीएको थियो । सन १८४६ ता० २३ नवेम्बरको दिन स्त्रीलम्पट राजा राजेन्द्रविक्रम पनि तीर्थ गर्नें निहुँले राज्यलक्ष्मीदेवीका फरियामा पसी काशी आएका थिए । त्यसै दिन देखि नेपालमा युवराज सुरेन्द्रको राजाज्ञा प्रचलित भयो ।

राजा राजेन्द्र काशी पुगे पछि एक एक गरी निर्वासित पाण्डे र चौतरियाहरु पनि काशी पुग्न लागे । निर्वासित भारदारहरुका मंत्रणा र राज्यलक्ष्मीदेवीका उत्तेजनाले राजा राजेन्द्र फेरी नेपालमा अधिकार गर्ने प्रयत्न गर्न थाले । सम्वत १९०३ सन् १८४७ एप्रिलमा नेपाललाइ प्रस्थान गरी राजेन्द्रविक्रम तराइका सुगौलि भन्ने स्थानमा पुगेका थिए ।

त्यहाँ बाट राजेन्द्रविक्रमशाहले दुइजना मानिसलाइ गुप्ति हिंसावले जंगबहादुरको हत्या गर्न पिस्तौल समेत दि काठमाण्डू पठाएका थिए । तिन्का हातमा नेपाली प्रजाजनका नाँऊमा थप्पा लाल मोहर युक्त पत्र पनी पठाएको थियो । त्यस पत्रमा:—

"श्री ५ महाराजाधिराज राजेन्द्रवीरविक्रमशाह बाट नेपालका यावत भारदार सेना र एक करोड़ छयानब्बे लाख प्रजाके रुका—मैले जंगबहादुरलाइ मार्न भनी आफ्ना दुईजना सैनिकलाई पठाएको छु । मैले पठाएका मानिसलाई मदत दिने मेरा प्रजाजनलाई मेरा तिरबाट त्यस्ले गरेका कार्यानुरूपको मान पद जागीर खिल्लत पाउनेछ । मेरा मानिसका काममा विघ्न गर्न खोज्ने मानीसलाई जीवित अग्निमा प्रवेश गर्नु पर्ने छ" भन्ने लेखेको थियो । नेपाल पुगेका ती दुवै मानिस ता० १२

मईका दिन समातिए र तिन्का खानातलासीमा राजा राजेन्द्रको त्यो लालमोहर भेटियो।

त्यो लालमोहर र राजा राजेन्द्रको नेपाल प्रवेश प्रयासले जंगबहादुरलाई निकै आतंकित गरायो। निजले त्यो लालमोहर युवराज सुरेन्द्रविक्रमलाई नजर गराएर सुरेन्द्रवाट भारदारी वैठकमा त्यस लालमोहरका कुरामा छलफल भएको थियो। भारदारीका छलफल उप्रान्त ३७० जना जंगी र निजामतीको गैह्र भाइभारदारहरुको सहि छाप भएको पत्र राजा राजेन्द्रका सेवामा पठाइएयो। त्यस पत्रको वेहोरा तल दिइन्छः—

"सर्कारले पाण्डेहरुका कुरामा लागी योग्य मंत्री भीमसेन थापाको हत्या पछि, थापाहरुका प्रेरणासे पाण्डे खलकको हत्या गराबक्स्यो। सर्कार कै प्रश्रय पाएर महारानी राज्यलक्ष्मीदेवीले महामंत्री माथवरसिंहको हत्या गराइन्। हजूरले राजकुल परंपरा र शास्त्र विरुद्ध देशको राज्याधिकार स्त्री जाति लाई दिएर कोतपर्व र भाँडारखाल पर्व गराइबक्सेको हो। आज पनि हजूरवाट पुनः अमात्य जंगबहादुरका हत्याको आदेश जारी भएको छ। माथि लेखिएका कारणहरुले आज सम्म हजूर जुनदेशको शासक होइ बक्सीन्थ्यो, त्यसलायक हजूर होइबक्सन्न भन्ने सावित भएकोछ। त्यस अर्थ देशका समस्त प्रजा गैह्र भारदारले देशको राजा सुरेन्द्रवीरविक्रमशाहलाइ वनाउने निश्चय गर्‍यौं। अब उप्रान्त हजूरले भारतवर्षमा रहने इच्छा गरे हजूरलाइ राजोचित संमान वहन गर्ने भत्ता दिने व्यवस्था गरिनेछ। होइन सर्कारले नेपाल आउने इच्छा गरिबक्सिन्छ भने त्यसमा पनी कुनै रोका हुने छैन। अवस्य सर्कार का संमानमा कुनै त्रुटी गरिने छैन त। पनी हजूरले पदच्युत महाराज सरह वस्नु पर्नेछ, इत्यादि।

यथा समय त्यो पत्र राजा राजेन्द्रवीरविक्रमशाहका वाहुलीमा पुग्यो।

पत्रले निजलाइ झन् उत्तेजित गराएकोले तिमी ससैन्य अलौ भन्ने नेपालका तराई मित्र पुगी डेरा गिराए। राजा राजेन्द्रले अलौमा पुगेको समाचार सुनी शाहजादा उपेन्द्रविक्रमशाह रणोदिपसिंहकँवरका साथ ४००० सेना लिई अलौ भन्ने ठाँउमा पुगेका थिए। शाहजादाले पिता राजेन्द्रशाहलाई विद्रोहीहरुको संगत छोडे ससंमान नेपाल पुऱ्याइने छ, भन्ने विंति चढाई पठाएका थिए। तर महाराजा राजेन्द्रले त्यस कुरामा ध्यान न दि बलप्रयोग द्वारा सदलबल नेपाल जाने प्रयत्न गर्न थाले। त्यस कारणले दुवै दलमा युद्ध प्रारम्भ भयो। सम्वत् १९०३ सन् १८४७ एप्रिल २८ का दिन गुरुप्रसाद चौतरिया र अनेक विद्रोहीहरु मारीए पछि तिनीहरुले पलायन गरें। महाराज राजेन्द्रविक्रमशाह नजरबन्द गरी नेपाल पठाईए। सम्वत १९०३ सन् १८४७ का १९ मईका दिन भईभारदारहरुका सम्मतिले राजा राजेन्द्र पदच्यूत भइ आजन्मलाई भादगाऊका किल्लामा नजरवंद गरिराखिए।

पाप धुरि वाट कराउँछ, भन्ने उखानमा विन्दुमात्र पनी असत्यता छैन। महात्मः भीमसेन थापा जस्ता महापुरुषका बाहू द्वारा संचालित नेपालको शक्ति पूर्ण राज्य कालका सार्वभौम सत्ता सम्पन्न सम्राट भएका राजेन्द्रविक्रमशाहले आफ्ना यौवन कालका १४ वर्षका राज्यकालमा देशमा जस्तो नाशकारी दृष्य उपस्थित गराए र देशको अवस्था जत्तिको गोलाचक्कर र दयनीय पारेको कुराहरु पाठकहरुले माथी पढ्नु भएकैछ। त्यसमाथि नेपाल गठयिता भीमसेनथापा जस्ता राष्ट्रभक्तले आफुले गरिएका महान सेवाहरुको कुन् प्रतिफल भोग्नु पऱ्यो त्यो र विरामणी थापा खलकको वंशवीज पर्यन्त बाँकी नराखी देशमा थापा खलकको अस्तित्व समेत विलुप्त भयो। यो सब भए तापनि होइनै स्त्रैण अव्यवस्थित चित्तका राजा राजेन्द्रका पालामा तथा तिनैले आफुले गरिएका महान पापका प्रतिफलमा आफ्ना राज्य कालको १४ वर्ष समेत बगरमा बगेर ढुंगा सरी बजारमा ठक्कर खाई बिताउनु परेको थियो। अन्तमा आफ्ना बुढेस

कालको ३४।३६ वर्ष पर्यन्त राज, सम्पत, मान, शक्ति, पुत्र, पौत्र, प्रपौत्र, हुदाँछँदै पनि वन्दी जीवन भोग्न परी छोरा र नातीहरुको मृत्यु सम्वाद सुनेर मर्नु परेको थियो। उता नेपाल देश शत्रु र वंशराहु रानी राज्यलक्ष्मीदेवीले पनि आफुले गरेका नारकीय हत्याहरु र कोतपर्व असो विनाशकारी कांड गराउने पापको तातताते प्रतिफल पाइन्। तिन्ले नेपाल जस्ता देश कि प्रवल सत्ता धारिणी स्वेच्छाचारी साम्राज्ञी पद बाट ठूलो लांछनाका साथ पदच्यूत भइ काशी निर्वासित हुनु पर्‍यो। काशीमा तिन्ले आफ्ना जेठा शाहजादाले मुद्दा गरेकोले बनारसको अदालतमा मुद्दा हारी अपदस्त भई ईश्वरीगंगीका महलबाट निस्केर, कान्छा शाहजादा विरेन्द्र वीरविक्रमका साथ मामुरगंजमा गई वस्नु परेको थियो। शाहजादा रणेन्द्रका एक जना छोरा तथा यौटी छोरी थिइन्। छोरा योगप्रतापले आफ्नो अन्तिम काल जोगि रुपमा बिताइ निसतानि मनु परेको थियो। छोरीको विवाह आवागढ राजकुमार संग भएको र अल्प दिनमा तिन्ले विधवा हुनु परेको थियो। ती राजपुत्रीले आवागढ राजकुमारका जीवित अवस्थामा मैले गर्भ धारण गरेको छु भनि हल्लाफिंजाई दस मैन्हा पछि अन्य कुल जन्मा कुनै बालखलाई आफ्नु पुत्र भनी प्रख्यात गरे कि थिइन्। त्यो कुमार पनी ११ वर्ष पुग्ना साथ कालकलवित भएको थियो। शाहजादा विरेन्द्र विक्रमको विवाह चम्पारण जिल्लाका रामनगर राज्यका अपुत्रक राजा प्रह्लादसेन कि पुत्री बोध कुमारी देवी सग भएको थियो। तिनै बोधकुमारीका गर्भबाट कुमार मोहनविक्रमशाह जन्मे र रामनगर राज्यका राजा भइ निसंतानी मरेका थिए। यस्ता किसिमले राजलक्ष्मीदेवी, जस्ले आफ्ना पुत्र रणेन्द्र र विरेन्द्रलाइ राजराजेश्वर बनाउने प्रयत्नमा समस्त नेपाललाई पतनका अतल गर्भमा डुबाएकि थिइन्, तिन्ले आफ्ना त्यसै पापका प्रतिफलमा शाहजादाहरु समेत नेपाल बाट निर्वासित भइ आएका २० वर्ष भित्रै निर्विज र निर्वंश हुनु पर्‍यो।

# राजा सुरेन्द्र वीर विक्रमशाह

पिता राजा राजेन्द्रवीरविक्रमशाहले पदच्युत भई बन्दी भएपछी सम्वत १९०२ सन् १८४७ का १२ मईका दिन सुरेन्द्रवीरविक्रमशाहले नेपालराज्यासनलाई अलंकृत गरे। तिन्ले पनि जङ्गबहादुरकँवरलाई त्यस वर्ष का पजनीमा नेपालामात्य पदमा बहाल गरेका थिए। त्यसबेला सम्म पुराना चलन अनुसार नेपालामात्यको प्रसस्ती "हिज्आनर श्रीमद् राजकुमार कुमारात्मज श्री ३ प्राइनिमिष्टर" लेखिन्थ्यो। त्यसै वर्ष १ दिसेम्बर का दिन नेपालका युवराज त्रैलोक्यवीरविक्रमशाहको जन्म भयो। इनै युवराज नेपालमा बलेटमहाराजका नाँउले प्रसिद्ध थिए।

बाल्यकाल देखिं षडयंत्र सोत्रमा बगी रहेका महाराज सुरेन्द्रले सिंहासनारुढ भइ सन्तोषको साँस फेरे र सौख्यभोगमा मन लगाए पछी जङ्गबहादुरले आफ्नु शक्ति दृढ गर्ने राम्रो मौका पाए। अब जङ्गबहादुर ले एकमात्र आफ्ना सहायक स्वामी शाहजादा उपेन्द्रविक्रम बाहेक अरु कसैको मान्यता मान्नू पर्ने थिएन। त्यति सम्म भए पछी जङ्गबहादुरले शाहजादा उपेन्द्रविक्रमशाहको कृपा पात्र र राज्यभक्त प्रजालाई सन्तुष्ट गराइ बिस्तार बिस्तार नेपाल माथि आफ्नो एकेश्वर शक्तिलाइ दृढ गर्ने जाल फैलाउन थाले।

यस किसिमले प्रधानमन्त्री पद प्राप्त गरेका दुइ वर्ष पछि जंगबहादुर कँवरले कोत तथा भंडारखाल हत्याकाण्डहरुबाट रिक्त भएका राज्यका सबै प्रधान प्रधान पदहरुमा क्रमशः आफ्ना भाइहरुलाई बहाल गराउन थाले। बमबहादुरकँवरलाई उपप्रधान मंत्री, बद्रीनरसिंहकँवरलाई सेनाध्यक्ष, कृष्णबहादुरकँवरलाई मुल्किबन्दोबस्तको हाकिमको काम दिएर, जगत्सम्सेर र धीरसम्सेर मिनिष्टर पदवीले बिभुषित भए, र सात भाइका वयस्क छोरा भतीजाहरु क्रमशः जनरल पदमा नियुक्त भएका थिए। राजगुरु प्राहित पदबाट पुराना बन्शानुक्रमिकरुपले

श्री ५ रामशाहका पाला देखि चलिआएको पुर्बिया ब्राह्मणहरु खारेज गरिए। त्यस स्थानमा बिजयराजपाण्डे तथा तिन्का खलकलाई नेपाल राज्यको वंशानुक्रमिक गुरु प्रोहिती पद मिल्यो। जंगबहादुरले आफ्नि वाघमतिमा पसेर "एक दोआले कमाएको धन सम्पति वाडीचुँडी खाने" भन्ने गरिएको आफ्नो कोरिया लाई पनी पुरा गरे। त्यसैले तिनीहरुलाई नेपालामात्य तुल्य जागिर मान भत्ता श्रीपेंच र अङ्गरक्षक स्वरुप एक पल्टन समेत वकसाएका थिए। आफ्ना भाई छोराहरुलाई राज्यका प्रत्येक मुख्य पदहरुमा बहाल गराई, महाराजाधिराजको व्यक्तिगत चाकरी र तिन्का नित्य कृत्य समयका (ददाखानादि प्रभृतिका) सेवा कार्य लाई स्वयं जंगबहादुरले आफैले गर्ने गरेका थिए। अवश्य गुरु प्रोहिति पदमा ब्राह्मणेत्तर जातिले अधिकार गर्ने कुनै व्यवस्था भएको भए जंगबहादुरकँवरहरुले त्यस पदलाइ पनी आफ्ना वंश ठेका परिधि भित्रनै राख्ने थिए, तर तेस्तोत न हुने भएकोले मात्र तिन्ले आफ्ना कृत्याकृत्यका साथी मित्र विजयराज पाण्डेका खलकमा त्यो पगरी बाँधेका हुन्। तिन्ताक सम्म नेपालको गुरु प्रोहिति पद पनी विशेष क्षमताशाली हुन्थ्यो। त्यस पदमा रहेका स्वाभिमानी देशीय ब्राह्मण मनिषिहरुले कँवरखलकको मनपरी नचल्न दिने र महाराजाधिराज संग तिनीहरुको प्रत्यक्ष सम्पर्क हुने हुँदा, महाराजाधिराजलाई नेपाली जनताका सम्पर्क वाट सर्वथा छुट्याउन लाइ, आफ्ना खलकबाट बाँचेको त्यस पदमा, तिन्ताक सम्म आफुलाई विदेशी तथा हीनवंशका सम्झने विजयराजपाण्डेका खलकलाइ राखी, तिन्लाइ प्रसन्न गर्न नेपालामात्य तुल्य आफ्ना बराबरीको दर्जा दिएका थिए। अवश्य पछि कँवर खलकका स्वयंभू सर्व शक्तिमान ठिकेदार मुखियारहरुले देशका अन्नदाता श्री ५ हरुको समेत गरिने प्रतिष्ठालाई अनावश्यक सम्झदै गएकाले गुरु प्रोहित हरुले पनी आफ्नो त्यो पदमान सन्मान गुमाई हिजोआज कँवरखलकका पिठ्ठूको काम गर्नु परिरहेको छ। आफ्ना प्रभाव या शक्तिमा "गुरुज्या को पल्टन ढिडो खाने लग्नेल" ... पनि कमाईखलकका

वर्तमान गुरु प्रोहितहरुले तालिमे, सुसारे, केटी, सुरा, सुन्दरी, नाटक, सिनेमा र ऐस भोगमा कँवरखलक सँगको आफ्ना परंपराको बराबरी लाई अक्षुण्ण राखेका छन् ।

यस किसिमले नेपालमा आफ्ना प्रधानमन्त्रित्वको बन्दोबस्त पक्का गरी निश्चित भएर सम्वत १९०६ सन् १८५० का १५ जनवरीका दिन जंगबहादुरले, आफ्ना स्वामी अंग्रेजहरुका नरेशको दर्शनलाई लन्डनको यात्रा गरे। राजप्रतिनिधिरुपले तिनलाई अंग्रेजहरुले नेपालको एम्बेसेडर मानेका थिए । त्यस इन्ग्लैन्ड यात्रामा जंगबहादुरका साथ तिनका भाई जगतसम्सेर र धीरसम्सेर समेत चालीस जना भारदार गएकाथिए। लंडनमा वृटिस कूटनीतिज्ञ र भारतेश्वरी इङ्गलेन्ड कि रानी विक्टोरियाले जंगबहादुरको ठूलो स्वागत तथा संमान प्रदर्शन गरे। त्यसै लंडन प्रवासकालमा जंगबहादुरले अंग्रेज महाप्रभूहरुमा आफ्नो खलकको नेपालका प्रधानामात्य पद पुष्टीको गुप्त लेखापढी समेत गरेका थिए। त्यसै लेखापढी द्वारा जंगबहादुर वा तिनका खलक विरोधिहरु-लाई भारतमा बन्दी गरी राख्ने सर्त समेत अंग्रेजहरुले स्वीकार गरेका थिए । स्वार्थलिप्सु जंगबहादुरकँवरको आफ्ना दूराकांक्षाको चूडान्त सफलताको तथा नेपालको स्वतन्त्रताको अन्त भएको त्यै दिन हो। यहि दिन अंग्रेज पादानुवन्दनबलले जंगबहादुरकवर वा कँवरखलकका राणाहरुको नेपालमा आज पर्यन्त चलिरहेको ठेक्का शासन प्रणालिको प्रादुर्भाव भएको हो तथा नेपालको परराष्ट्र विभाग माथी इन्गलेन्डका सेन्टजेम्स-कोर्टको नियंत्रण भएको हो । यसै दिन उप्रान्त नेपालका हुने कँवरखलकका प्राइमिनिष्टर पदको बहाली हुना साथ किनारमा सुनका पानीले बुट्टा भएको कागजमा महाराजाधिराज बाट, आजका मितीमा फलानालाई मैले बकस गरे भन्ने लेखी, तासका थैलीमा राखी त्यसलाइ बन्द गरी, लाहाको छापहरका साथ नत्थी गराई, अंग्रेज भ्यायसरायमा त्यसलाइ पठाउनु पर्ने प्रथा पनी चलाएको हो।

यस प्रकार आफ्ना स्वामी नेपालका धिराजबाट पंजाछाप सनदले बाहाल भएका तथा तेस्का बैधानिकताका प्रमाणमा अंग्रेजहरुमा पत्र लेखाई पठाई अंग्रेजी संगठनका भरले र छत्रछायामा आफ्ना प्राइमिनिष्ट्री को स्थायित्व गराए पछि कँवरखलकका हुने प्रत्येक मुख्तियारहरुले आफ्ना तेस पदलाई प्रजा र राजाका प्रति कुनै दायित्व न भएको ठान्न थालेका हुँन क्यार ! तेसै दिन देखि वयोजेष्ट मुख्तयारको मृत्यु भएपछि वा तेसलाई मारी काटी किम्वा धपाई आफ्ना खलकको बनाइएको रोल-क्रम वा रोल व्यतिक्रम गरी हुने नयाँ कंवरखलकका मुख्तियारहरुले पंजाछाप सनद लिन र अंग्रेजहरुलाई दखाउने तेस पत्रलाई लेख्न महाराजाधिराजले अस्वीकार गर्दा थिचोमिचो गर्नु, पिस्तौल सोझ्याउनु समेत गर्नैं गरेको छ । जंगवहादुरका मृत्यु पछि कँवरखलकका कुनै सदस्यलाई प्राइमिनिष्टर न हुन दिन तथा अंग्रेजहरुलाई लेखिने त्यो पत्र न लेखियोस भन्न सर्तक र प्रस्तुत रहेका वलंट महाराज त्रैलोक्यवीरविक्रमशाहलाई धीरसम्सेरले जंगवहादुरको मृत्य समयमा मुत्याई पत्थरघट्टा पठाए पछी मात्र पागल राजा सुरेन्द्रबाट रणोदीपसिंहका वाहालीमा पंजाछाप सनद र अंग्रेजहरुमा पठाउने पत्र लेखाउन सकेका थिए । आफ्ना वृद्ध र धर्मभीरु काका रणोदीपसिंहको हत्या तथा वंशको वतुलेआम गरी मुख्तियार हुने वीरशमसेरले महाराजाधिराज नावालिक पाएको र श्री पाँच माहिला राजमाताका अति प्रियपात्र हुँदा केहि अडचन उठाउनु परेको थिएन । देवशमसेरलाई आफ्ना प्रति भक्तिवान तथा तिन बाट देशमा सुधार हुने आशा भएकाले युवक धिराज पृथ्वीवीरविक्रमशाहले तिन्का पदवहालीमा पंजाछाप सनद र अंग्रेजलाई लेख्ने पत्र स्वेच्छाले लेखेको थियो । दाजु देवशमसेरलाई विश्वासघात गरी पाता फर्काई धपाउन समर्थ भएका चन्द्रशमसेरले आफ्ना पद-वाहालीका पंजाछाप सनद र अंग्रेजलाई पठाउने पत्र लेखाउन महाराजाधिराज लाई थिचोमिचो गरी पिस्तौलको नाल समेत सोझ्याउनु परेको

थिये। तेही क्रम चन्द्रशमसेर पछि भीमशमसेर युद्ध शमसेर र पद्म-शमसेर सम्म बराबर चली आएको थियो। वर्तमान महाराजाधिराजलाई थिचोमिचो गरी पंजाछाप गराई भएका वर्तमान मुख्तियार मोहनशम्सेर का पदवाहालीका वेलामा भारत बाट अंग्रेजहरु गई सकेकाले, अंग्रेज हरुलाई देखाउने त्यो पत्र लेखाउनु परेन। नयाँ नयाँ राज व्यवस्था गराउनुपर्ने र अन्तर्राष्ट्रीय घटनाहरुले व्यस्त रहेका भारतीय राजनीतिज्ञ तथा भारतीय राजदूतहरुलाई आफ्ना यही कथित "परम्पराको व्यवस्थाको" दुहाईमा भुलाई मोहनशम्सेरले आफुलाई सर्वतन्त्र शंभन लागेका छन क्यार?

राजा पृथ्वीनारायणशाहका मृत्यु काल सम्वत १४३० सन् १७७४ देखि सम्वत १८७० सन् १८१४ सम्मका ४० वर्ष भित्रका अल्प समयमा नेपाली जनताले आफ्नो सूर्यचन्द्र अंकित रक्ताभ पताका लिएर निस्की ... कच र त्यसका वरररिका, तिब्बत, सिक्किम आदि देश र तुहिन-गिरि पादस्थित कुमाउ, गढ्वाल, शालकागाडा र पंजावका ... राज्य र अवधका तालुकाहरु र गोरखपुर, सीवान गरि गंगा ... सम्म आफ्नो विजय वैजयन्ति फैलाई सकेको थियो। नेपाली-... त्यो विजयाभियान अपूर्वको थियो। सूर वीर नेपाली जनताको ... विजयको त्यो द्रुतता नेपाल भारत या एसियाका इतिहासको वेजोड ... हो। व्यवस्थित सेना सिविर न भएका, नगन्य राज्यका, मुठी ..., नेपाली जनताले केवल आफ्ना साहसका भरले तत्कालिन अंग्रेज, ...मान, चीनीयाँ, सिख, गढवाली शक्ति सङ टक्कर ली सदा समर ... नेपालेश्वरको गौरव स्थिर राखी आफ्नो राज्यक्षेत्र बढाउदै ... थिए। देश दुर्भाग्यले आफ्ना करद राज्य तथा कुलांगारहरुका ...घातले सम्वत १८७२ सन् १८१६ का अंग्रेजी युद्धमा आफ्नु ... भूभाग छाडी नेपालीहरुले संधि गर्नु परेको थिया, ता पनि राष्ट्रा-...मानी भीमसेन र वीराग्रणी अमरसिंहथापा प्रभृतिहरुले आफ्ना रक्तदानले ... गरेको नेपालको गौरवलाई आफु बाचुंजेल नष्ट हुनदिएनन्।

राजेन्द्र विक्रम नेपालको मतिमन्द राजा, जस्ले आफ्ना स्त्रैण तथा कायर स्वभावले नेपालमा अराजकता पूर्ण परिस्थिति पारी ल्याएको थियो, त्यस वेला पनी नेपालीहरुको राष्ट्रीय चेतना उक्तिकै उद्बुद्ध थियो, तथा स्वाभिमानी नेपालीहरुले अंग्रेजी साम्राज्य संग युद्धको चुनौति दिन बाँकी राखेका थिएनन् ।

त्यसै वेला देशको महानतम दुर्भाग्यले जंगबहादुरकँवरले नेपाली भई पवित्र नेपाल देशमा जन्म लिए ! जंगबहादुरकँवरको प्रादुर्भाव काल सन् १८४० देखि सन् १८५० सम्म नेपालमा घटेका रोमान्चकारी घटना-हरु पढेर कुन् चाँहो नेपालीका आँखा बाट आसूँ न चूहेको होला। त्यस वेला नेपालमा महारानी साम्राज्य लक्ष्मीदेवी, र अन्य पुराना काजी खलकहरु को र महारानी राज्यलक्ष्मीदेवी र नया काजी खलक गगन-सिह राजभंडारी खवास, जंगबहादुरकँवरहरुका दलको दुइ परस्पर विरोधी प्रवृत्तिहरुको ठूलो संघर्ष चलेको थियो । प्रथम वृत्तिले स्वार्थ त्याग र परोप-कारको पाठ पढाइ, व्यक्ति विशेषले राष्ट्रको सत्व केन्द्रित न गरी देशका गौरवको उत्कर्ष बढाउन र आफ्ना जाति लाई गौरवमय स्वतंत्रताको उपभोग गर्न पाउन भन्ने ध्येय बनाएको थियो, त्यस ठाउँमा दोश्रो वृत्ति स्वार्थ र राष्ट्रीय हित विरोधी आत्म उन्नतका तरफ बढेको थियो। जंगबहादुर अत्यन्त स्वार्थि नेपाल मात्य भए. इन्ले देशका शासनको बागडोर आफ्ना हातमा ल्याउन देशको गर्नु सम्म अनहित गरी देशका शत्रूहरुको वश्यता समेत स्वीकार गरेर नेपाल राष्ट्र र नेपालीहरुको राष्ट्रीयभावना लाई समुद्रका अतल जलमा डुबाए तथा पृथ्वीनारायणशाहका पाला देखि नेपाली जनताले कायम गरेको साम्राज्य, नेपालको स्वाधीनता, वीर तथा अजेय गोरखाजाति इ तिनैको घाँटी अँठ्याएका थिए ।

अंग्रेजहरुले आफ्ना प्रेरणाले जंगबहादुरलाइ मुखपारी षड्यन्त्र-चक्रहरुद्वारा नेपालमा अनेकानेक कुकृत्य गराई नेपालको संगठन र शक्ति लाई छिन्नभिन्न गराए पछि इच्छागरेका भए त्यसबेला तिनीहरुले

नेपालमा आफ्नो अधिकार कायम गर्न सक्के थिए। प्रात: स्मरणीय पृथ्वीनारायणशाह द्वारा प्रोत्साहित भएको र महात्मा भिमसेनथापाले संगठित गरिएको नेपाल छिन्नभिन्न भइसकेको थियो। देशद्रोहि जङ्गबहादुर कँवर द्वारा नेपालमा अंग्रेज विरोधी वीरात्माहरुको पनी एक एक गरी अन्त भई सकेको थियो। साथ साथ जंगबहादुर किंवा तिन्का खलकका उत्तराधिकारीहरु नेपालको स्वतन्त्रता र जनशक्ति लाई अंग्रेज प्रभूपादमा अर्पण गरी तिनीहरुको प्रसन्नता प्राप्त गर्नु र तिनीहरुले दिएका पदवीले आफु लाइ धन्य मान्न थालेका थिए। चारैतिर बाट अग्ला २ डाँडाँ र विशाल जंगलका परिधीले घेरीएर, संसार विचार आवागमन रुद्ध भएको देश र निरीह जनतालाइ संसारज्ञान सून्य पारी, तिन्को मानसिक पतन गराएर, जनताका सम्पर्क बाट छुत्याइएका पागल राजा सुरेन्द्र विक्रम र पछि हुने शिशु राजाहरुका बाल्यावस्थाको नमकहरामियतले नाजायज फायदा उठाइ, तिन्को सत्वअपहरण गरेर, प्रभू अंग्रेजहरुका भरले कँवरखलकले नेपाल माथि आफ्नो ठेकेदारी अधिकार कायम गर्न सकेको थियो। अंग्रेजहरुले पनी त्यस अवस्थामा नेपाल माथि आफ्नो प्रत्यक्ष अधिकार न गरि वीरनेपालीहरुलाइ नेपालद्रोहि आफ्ना ठेकेदार कँवरखलक द्वारा आवश्यकतामा भेडाबाखा झैं उपयोग गर्न पाएकोले, नेपालमा आफ्नु प्रत्यक्ष अधिकार न गर्नमानै श्रेय ठाने। अंग्रेजहरुका कमारा कँवरखलकका प्रत्येक मुख्तियारले पनी सन् १८५७ का भारतीय स्वतंत्रता संग्राम देखि लगायत भारतीय सत्याग्रहसंग्राम सम्म, भारतवर्षका विरुद्ध बारम्बार नेपाली सैन्यको उपयोग गर्न दिएर तथा स्वेताङ्ग महाप्रभुहरुका हुकुमले सुदूर युरोपका महायुद्धहरुमा वृटिस सैन्यकारुपले लाखौं निरीह नेपाली जनतालाइ मराएर बराबर आफ्ना मालिकहरुलाइ प्रसन्न राख्ने प्रयत्नमा कहिले केहि त्रुटी गरेनन्। त्यसै बखत सुरेन्द्रका राज्य पाएका दोश्रा वर्ष सिख र अंग्रेजहरुको दोश्रो युद्ध प्रारम्भ भएको थियो। अंग्रेज कृतदास जंगबहादुरले "त्यस पंजाबयुद्धमा हामी तपाईंको

मदत गर्न प्रस्तुत छौं" भन्ने कुरा अंग्रेजहरुलाइ लेखी आफ्ना दास स्वभावको परिचय दियेका थिए। त्यस्मा अंग्रेजहरुले मौखिक धन्यवाद समेत न दि जंगबहादुरका त्यस प्रस्तावलाइ अस्वीकार गरी पठाए।

सम्वत १९०७ सन् १८५१ का ६ फरवरीमा युरोपका लंडन, फ्रांस, स्विजरलैन्डको र भारतका रामेश्वर पुरी र काशीयात्रावाट फर्की जंगबहादुरले पूर्ववत नेपालामात्यको कार्य आफ्ना हातमा लिए। जंगबहादुरकासाथ वेलायत गएका करवीरक्षत्रीद्वारा लंडनमा जंगबहादुरले गरिएको मेच्छललना संसर्ग र अन्यान्य गरेको मेच्छाचारको कुराहरु नेपालमा फैलिन थाल्यो। त्यो कुरा शाहजादा उपेन्द्रविक्रममा पनि अवगत भयो। त्यस कुराले तिन्ले धर्मभ्रष्ट जंगबहादुरकँवरलाइ जातिच्यूत र पदच्यूत गर्ने विचार गरे। त्यस्कुरामा कुमार उपेन्द्र विक्रमका समर्थक जंगबहादुरका सहिला भाई बद्रिनरसिंहकँवर र तिन्का कान्छा चाचूतिरका भाइ जयबहादुरकँवरहरु पनी थिए।

त्यो कुरा थाहा पाएर जंगबहादुर भीत र व्याकुल हुदाँ भए। मेधावी शाहजादा उपेन्द्रविक्रमशाहको सामना गर्नु जंगबहादुरकँवरका शक्ति सीमाका बाहिरको कुरो थियो। जंगबहादुरलाई त्यस दिन सम्म उपेन्द्रको आज्ञाधिन भइ चल्नु पर्दथ्यो। त्यस वेला सम्म राजकुलपुरुषका सम्मुख अमात्यहरु मुंटो उठाउन सक्तनै थे। देश दुर्भाग्यले जंगबहादुरले आफ्नो त्यो खडगो पनी बडा सरलताले काटे। तिन्ले राजा सुरेन्द्रविक्रममा "शाहजादा उपेन्द्र विक्रम स्वयं नेपालेश्वर हुन खोजछन् र त्यस कार्यमा बद्री-नरसिंहकँवर र जयबहादुरकँवरहरु संमिलित छन्" भन्ने कुरा बनाइ, विन्ति चढाए। पागल राजा सुरेन्द्रले जंगबहादुरका त्यसकुरालाई पत्याई, तिनै जना-लाई बन्दी गर्ने हुकुम दि निर्वासनको आज्ञा दिए। त्यति भए पछि त्यसै दिन रात्रीमा नेपाली जनताले पत्तै न पाउने किसिमले शाहजादा उपेन्द्रलाई बन्दी गरी लैनसैन्यका मदतले रातारात भारतवर्ष तिर पठाइएको थियो। बद्रीनरसिंहकँवर र जयबहादुरकँवरले पनी तिनैका साथ

निर्वासित हुनु पऱ्यो। लंदनमा भएको गुप्त लेखापढी अनुसार अंग्रेजहरूले तिनीहरुलाइ एलाहाबाद किल्लामा बन्दी गरी राखे। नेपालका इतिहासमा नेपालराज्यवंशका सदस्यले अंग्रेजहरूको कैदी हुने यो प्रथम घटना हो। त्यस षडयंत्रका उद्‌घाटनमा जंगबहादुरकँवरका माहिला भाइ बमबहादुरकँवर तिनका मुख्य सहायक थिए।

सन् १८५९ मा जयबहादुर कँवरको मृत्यु एलाहाबादका किल्लामा भयो। त्यस पछि शाहजादा उपेन्द्र विक्रमशाह र बद्रीनरसिंहकँवर नेपाल फर्कन पाए। बद्रीनरसिंह लाई पाल्पाको बडा हाकिमपद मिलेको थियो। महाराजा सुरेन्द्र व ट वक्स्याई, जंगबहादुरले राजकोष बाट शाहजादा उपेन्द्रविक्रमशाहलाइ डेढ लाख रुपया भत्ता दिने निश्चय गरेको थियो। तर स्वाभिमानी शाहजादाले त्यस भत्तालाई स्वीकार गरेनन्। तिन्ले आफ्नो अन्तिम जीवन योगी सरी बिताएका थिए।

यस प्रकार शाहजादा उपेन्द्रविक्रमशाहहरुलाइ आफ्ना पथ बाट हटाइ आफुले विलायतमा गरेका कुकृत्यलाइ प्रकाश गर्ने करवीर पाँडेलाइ चांडालद्वारा कुत्सित रुपले अपमानित गरी काट्न लगाएर उसको रक्त द्वारा जंगबहादुरले आफ्नो कलंक ढाक्ने प्रयत्न गरेका थिए।

आफ्नो अन्तिम कंटक शाहजादा उपेन्द्रविक्रमलाई हटाउन समर्थ भएका जंगबहादुरकँवरको अब कस्ले प्रतिरोध गर्न सक्थ्यो। श्री ५ नेपालेश्वर पागल राजा सुरेन्द्रविक्रमशाहका उन्मादपूर्ण कार्यलाई उत्तेजना दिँदै र तिन्का सौख्य र वासनामय जीवनलाइ उद्‌बुद्ध गराँउदै पालमा जंगबहादुरले केहि त्रुटि राखेका थिएनन्। साथ २ परम्परा देखि चलिआएको महाराजाधिराजको व्यक्तिगत चाकरी र तिन्का नित्यकृत्यका सेवामा पनी तिन्ले रत्ति भर न्यूनता ल्याएका थिएनन्। पूर्व रिवाजानुसार स्वयं जंगबहादुर ब्याहन खोपिमा हाजिर भइ, राजा सुरेन्द्रको जागा गराउंथे, जागा गराइ मुखारी सम्पन्न भए पछि आफ्ना पिठ्युँ मा बोकी राजालाइ गद्दी बैठक सम्म पुर्‍याउंथे, गद्दी बैठकमा गर्नु पर्ने

राजकीय कार्यहरु साधेर कार्यक्रमको हुकुम गराँउथे। त्यसपछि महाराजविराजको ज्यूनारमा आफै चखुवा भई ज्यूनार गराए पछि राजालाइ खोपिमा पुऱ्याएर अनि राजाको पूराको अन्न प्रसादस्वरुपले खाएर थापाथलि फर्कने गरेका थिए।

यस प्रकार सौख्य र वासनामय निर्विघ्न जीवन विताउन पाएका पागल राजा सुरेन्द्रले जंगबहादुर कँवर माथी पूर्णतः विश्वासगरी तिन्लाइ स्वामीभक्त सेवक संम्झेको थियो। अन्तमा तिन्ले जंगबहादुरले साधेर गर्नें गरेका कार्यलाई समेत झंझट बुझी त्यसकार्यलाई समेत जंगबहादुरले स्वयमेव गर्नें आदेश दिएका थिए। त्यो आज्ञा शाहजादा उपेन्द्रविक्रमशाह रहुन्ज्याल मौखिक मात्र थियो, साथसाथ त्यसवेला सम्म श्री ५ महाराजाधिराजका इच्छाले प्रत्येक सालका पजनीमा प्राइमिनिष्टर लगायत समस्त राजकर्मचारीहरुको वहाली या खारेजी हुने गरेको थियो।

आतङ्क पूर्ण कार्यले जंगबहादुरले आफ्नो कलंक वार्ता दवाए पछि कुनै कालमा कसैले वंशमा दोष न लगाउन सकोस भन्ने विचारले आफ्नो उपजाति पदवि कँवरका साथ राणा भन्ने उच्च क्षत्रियोचित उपाधि श्री ५ वाट वक्साई यौटा नवीन वंशको क्रम चलाए। यस प्रकार कँवरखलकका राणाहरुले आफ्नो जातीय थरलाइ चार पटक फेर्दै गएका थिए। इनीहरुले पहिलेको आफ्नू खडका थरलाइ छाडी कंवर र कँवर पछी कुँवर लेख्ने गरी अन्तमा राणा लेख्न प्रारम्भ गरेका हुन्। जंगबहादुर र तिन्का ६ भाइले आफ्ना जिवन काल पर्यन्त आफ्ना नाँउका साथ कुँवर राणालेख्ने गरेको थियो। पछि कुँवरराणा वंशका ६ भाइ सन्तानहरुको कत्लेआम गरी मुख्तियारी हात लगाउने वीरशम्सेरका पाला देखि तिनीहरुका नाँउका साथको कुँवर शब्द विलुप्त भएको हो।

नयनसिंहथापा कि पुत्रीका छोरा जंगबहादूर स्वयं बगाले थापा थरका खस क्षत्रीका नाती हुन्। जंगबहादुरका कान्छा भाई धीरशम्सेरको विवाह

...वस्नेत थरका खसक्षत्री कि छोरी, गोत्रे थापा कान्छा देवानकि छोरी र लहुरेखत्री टंडनकी छोरीहरू संग भएको थियो। तिन्का तिनै ...हरूमा वस्नेत छोरी गर्भवाट वीरसम्सेर प्रभृ व, कान्छा देवान कि छोरी वाट खड्ग, देव. चन्द्र र भीमशम्सेरहरू र लाहुरे टंडन खत्री कि छोरी तिरवाट युद्धशम्सेरहरू पैदा भएका हुन्। जंगबहादुरका साँहला ...बद्रानरसिंहका छोरा भैरवनरसिंहले आफ्नो छोरी गगनसिंह राज-...भण्डारी-खवासका छोरा उत्तरध्वजराजभंडारीलाई दिएको थियो। ...कुरावाट राणा भनाउदा कँवर थरका जंगबहादुर तथा तिन्का उत्तरा-धिकारीहरू पूर्णतः खसक्षत्री हुन् भन्ने प्रत्यक्ष छ। जंगबहादुरले लंडनमा म्लेच्छ संसर्गका कलंकमोचनमा निर्वासित गरिएका आफ्ना कान्छा ...छोरा जयबहादुरकँवरका सन्तान तथा रामकृष्णकँवरका भाइ ...कृष्णकंवरका नाती, गोर्खा अंग्रेज युद्धका वीर वलभद्रकँवरका संतान र ...हरूको पुर्खौली ज्याग्दीखोलाका कँवरहरु अझै पनि आफुलाई ...क्षत्री भन्दछन् भने नेपालका समस्त कँवरहरु खसखत्री भई बाल-...सिंहकँवरका संतानले मात्र नेपाल नरेशवाट राणा पदवी पाउँदैमा उदय-...राणाशाखाको हुने प्रयत्नले तिनीहरू कै मूर्खताको परिचय पाइन्छ। छैन ...त्यस कँवर खलकका होईनौ भनी भन्दछन् भने इतिहास वंशावली ...छाडि दिए पनि स्वयं युद्धशम्सेरले आफ्ना राज्यारोहणका ...उत्सवमा आफुलाई—"हामीहरु कँवर सन्तान भएकाले हामीले कँवर-...पान विचार राख्नु पर्दछ" भनी हुकुम भएको छ भनी त्यस् सालका ...विशेषाङ्कमा पत्र-सम्पादक प्रेमराजजीले लेख्नु ...छ। यस किसिमले राणा पदवीको व्यवहार गरी राज्यशक्तिहात लगाए ...कँवरखलकका राणाहरुले ठकुरीहरुमा गरेको वैवाहिक सम्बन्धहरु ...मिच्याँईले गरेका हो। यस किसिमवाट जंगबहादुर पछि ...अनेक कँवर खलकका ठिकेदार मुखितयारले आफ्ना आफ्ना पालामा

आफ्ना छोरा र छोरीहरुको विवाह धिराज शाहजादा वा साहेबज्यूहरुका शाहजादा वा शाहजादी सँग गर्न थालेका हुन्। सब भन्दा पहिले आफ्नु जातीय पदवीमा राणा शब्द जोरेर जंगबहादुरले क्षत्रीय प्रधान कुठुराज कन्या र चौतरिया गुरुप्रसादशाह कि कन्या शाहजादी हरण्यगर्भा-देवी सँग बलात विवाह गरे। आफ्ना जेठा पुत्र जगतजंग र माहिला पुत्र जीतजंगको विवाह राजा सुरेन्द्र कि जेठा र माहिला राजपुत्री सँग गराए। साथ साथ राजा सुरेन्द्र पुत्र युवराज त्रैलोक्यवीरविक्रमशाह सँग आफ्नो ३ जना कन्याको कन्यादान गरी भारतवर्षमा उच्च क्षत्रिय वंशोद्भव हुने चेष्टा गरेका थिए।

कँवर खलकका राणा पदवी प्रवर्तक जंगबहादुरको शक्ति घूर्णान्तमा पुगेको समय पनि त्यहि हो। एकला, नेपालीजनताका सम्पर्क बाट सर्वथा छुट्याइएका उहि माथि विकृत मस्तिष्कका राजा सुरेन्द्रबाट आफ्ना जन्मभरीका प्राइमिनिष्टर पदको पंजापत्र गराई जंगबहादुरले संसारमा कहि कतै न भएको अनौठो महामन्त्रिपदमा भाइ रोलक्रमको पद्धति (आफु सातै भाइले धर्मपत्र गरी) नेपालमा लादेको बखत पनी त्यहिँ हो।

यति हुँदाहुँदै पनि प्राइमिनिष्टरको अदलीबदली गर्ने अधिकार र प्राइ-मिनिष्टर बाहेकका जनरल कर्णलको बहाली पदमान दिने अधिकार महाराजा-धिराजमा थियो तथा छदैछ। यसैले नेपालका हुने प्रत्येक ठेकेदार मुखियारले आफ्ना नोकरीका बहालीमा महाराजाधिराजको पंजापत्र सनद लिनु पर्दैछ। त्यसै दिन उप्रान्त नेपालमा प्राइमिष्टिरको पजनि वा बहाली जीवनमा एक पटक र प्राइमिनिष्टर मुनिका सबै राजकर्मचारीहरुको प्रत्येक वर्ष पजनी भई थमौती र खारेजी हुने चलन भएको छ। तेसै दिन देखि नेपाल नरेशको लालमोहर पनि राजा सुरेन्द्रविक्रमबाट जंगबहादुरले राख्न भनी पाएको हो।

जंगबहादुरका पदग्रहणका पैल्हे पुरानु चलन अनुसार राजाज्ञा सनद रुक्का हरुमा पुरानो चलन अनुसार गुरुज्यू खलक तथा राजाका चौतरासम्म

हुने राजाका भाइ मुख्य चौतरियाहरु मार्फतदार हुने गरेका थिए। सम्पूर्ण अधिकार प्राप्त गरी प्रधानामात्यपद हातलगाएर जंगबहादुरले पहिलो प्रधानामात्यकाल र बमबहादुरका प्रधानामात्यकाल सम्म पनि धिराजका हुकुम पत्रहरुमा मार्फतदारका स्थानमा जंगबहादुर वा बमबहादुरले आफैं मात्र सके पनि रुजुदार भई भाइ चौतरियाहरु र काजी भारदारहरुको पनि छाप हुनु आवश्यक थियो। तथा मुख्य चौतरिया र चौतरियाहरु सम्मान जागीर भत्ता प्राइमिनिष्टर लगायत सबै राजकर्मचारीहरु भन्दा श्रेष्ठ मानिएको थियो। मुख्य चौतरिया, चौतरिया तथा साहेबज्यूहरुको श्रेष्ठताको अवनति नाबालिक राजा पाउने वीरशम्सेर र चन्द्रशम्सेर का पालामा प्रारम्भ भई आज त्यसको अस्तित्व सम्म रहेको देखिदैन। नाँऊ मात्रको मुख्य चौतरियाको पद अझ पनी कायम छ, तथा बाब दरबारका राजा हिजो आज मुख्यचौतरिया छन्।

देशभित्र आफ्नो प्रभाव विस्तारको पुष्टि गराएर देशलाई आफ्ना मुठीमा अध्याउन समर्थ भएका जंगबहादुरले चीन बाट पनि तेस्को पुष्टि गराउने विचार गर्न थाले। आफ्ना पालाका छैटौं वर्ष सम्वत् १९०६ सन् १८५३ मा नेपाली काजीहरुले उपहार लिएर चीन जाने वर्ष थियो। त्यस पाला स्वयं जंगबहादुरले पनि चीन जाने विचार गरी यात्रा गरें। चीनमा निजले 'राणा' पदवीको प्रयोग नेपालका महाराजा समान गराई गरेका थिए। चीन सम्राटबाट विदा हुने बखत निजलाई "थोङ् लिङ् पिङ्को वङ् स्याङ्" (सेनाका अधिपती, सब काममा बीर, सब विषयमा निपुण, सुयोग्य सेनाध्यक्ष र महाराज) भन्ने पदवी प्राप्त भएको थियो। नेपाल फर्केका थिए।

सन् १८५४ सम्वत १९१० मा तिब्बतीहरुले तिब्बतमा बस्ने नेपाली हाकिमलाई निरपराध बन्दी गरी तहाँका नेपाली व्यापारीहरुलाई अकारण लूटपाट गरेका थिए। त्यस्ले गर्दा त्यसै सालका

फाल्गुन मैन्हामा नेपालले तिब्बत संग युद्ध घोषणा गर्नु पर्‍यो। त्यस तिब्बत युद्धमा बमबहादुर धीरसम्सेरहरु आफ्ना चार हजार साथीहरु र १२ तोपका साथ तिब्बत तिर रमाना भएका थिए। नेपाल वाट हिंडेको गोरखा सैन्य तीन भागमा बाडिएको थियो। त्यस पल्टनको प्रथम दलले नेपालवाट हिंडी चुसनागाँउका समीपमा तिब्बतीहरुलाई पर्यस्त गरी, कुतिमाथि अधिकार गर्दै, कुतिका अगाडि अढाई कोश माथि सम्म पुगेको थियो। दोश्रो दलले नेपाल वाट प्रस्थान गरि निर्विरोध केरुङ्गमाथि अधिकार गरेको थियो। तेश्रोदलले नेपाल वाट मार्चगरी सरासर घंटागढी वेसिमा पुगे पछि तिब्बतीहरुले तिनको सामना गरें।त्यहाँ तिनीहरुले जमेर युद्ध गनु परेको थियो।

त्यस दिन स्वयं प्रकृति देवीले तिब्बतीहरुका रक्षार्थ विकराल रुप धारण गरे कि थिएन। हिमपात तुषरोवर्षणका साथ घोरवृष्टि र हिमाल चुलिमा वग्ने चिसो बतासका बेग र विकरालत्वाल गोरखालीहरुलाई दुःखे कष्ट उठाउनु परेको थियो। तेस्ता वखतमा पनि गोरखालीहरुले विश्राम लिएनन् र तिब्बतीहरुलाई घंटागढी वाट पराजितगरी भगाएका थिए। त्यस पछि अगाडि वढेर गोरखा सैन्यको त्यस दलले दस दिनका युद्ध अविरल प्रयत्नले तिब्बतको प्रसिद्ध तथा अभेद्य झुँगाकिल्ला माथि अधिकार गरेका थिए।

कुति पुगी वसेको पहिलो दलले कुति भन्दा चार कोश माथिको सुनागुम्फा माथि पनि अधिकार गरी सकेको थियो। झुँगाकिल्ला र सुनागुम्फाको विजय समाचार सुनी स्वयं जंगबहादुर पनि रणक्षेत्रमा पुगेका थिए। पछि शीतकालसम्मलाई युद्ध स्थगित गरी बमबहादुर, धीर सम्सेर र जगतजंगका साथ नेपाल फर्केर आए।

त्यसै वेला तिब्बत तिर वाट संधिको प्रस्ताव उपस्थित भयो। त्यस प्रस्तावलाई लिएर तिब्बती प्रतिनिधि र तिब्बत स्थित चीनीयाँ हाकिम

…देव नेपाल आएका थिए। संधि वार्तामा सन्धिका शर्तहरु न मिल्न …लेकोले संधि भएन।

त्यस संध वार्ता कालमा सुनागुम्फामा बसेका गोरखाली दलमाथि …हरुको मदतले तिब्बतीहरुले आक्रमण गरे। गोरखालीहरुले त्यस …आकस्मिक आक्रमणले सुनागुम्फा र कुति लाई छाडी लिस्तिका …डाँडो माथि अड्डा बस्नु परेको थियो।

त्यसै वेला झुँगा माथि पनि तिब्बतीहरुले आक्रमण गरेका थिए। …गोरखालीहरुका प्रबल प्रत्याक्रमणलाई सहन नसकी तिनीहरुले फर्कनु …थ्यो। झुँगायुद्धमा पराजित भएका तिब्बतीहरुले नेपाल र झुँगाका …मार्गहरुलाई बंद गरेका थिए। त्यति गरि सके पछि तिब्बतीहरुले …गोरखालीहरुलाई आत्मसमर्पण गर भन्ने सन्देश पठाए। भंयकर शीत… …उसमाथि रसदका कमीले वेहाल भईरहेका वीर गोरखालीहरुले …छाडेका थिएनन्। त्यस अवस्थामा पनि तिनीहरुले तिब्बतीहरुका …लाई लत्याई, तिनीहरुको आक्रमणको मुहतोड उत्तर दिएका …थिए। त्यसवेला एकजना वीर प्रतिमान राना भन्ने सिपाहीले अद्वितीय …क्रम गरेको थियो। त्यस बहादुरले घेरागरी बसेका हजारौं शत्रुको …आँखामा छारो हाली एक्लै नेपाल पुगेर युद्ध भूमिको समाचार पुर्‍याएको …थियो। अविलम्ब नेपालबाट यौटा नवीन सैन्य दलका साथ कर्णेल …सिंह रंडन लाहुरे खत्री झुँगा तिर रमाना भए। तिन्को त्यस …ले पदपदमा तिब्बतीहरुको प्रतिरोध सहदै वीरता पूर्वक …प्रवेश गरेको थियो। नवीन दलका संयोगले गोरखालीहरुले झुँगामा …तिब्बतीहरुलाई बडो नराम्रो सँग पराजित गरे। झुँगा रणस्थलमा सूरवीर …कुनै एक चिरुवादारले अद्भूत पराक्रम प्रदर्शन गरेको थियो। …मा सुबेदार लालवारले वीरगति पाए पछि तिन्को चिरुवादार …ले आफ्ना मालिकका घोडामा चढी रणक्षेत्रमा पसेको थियो। त्यसले …तिब्बती सैन्यका मर्ममा घडा अड्याई, दुवै हातले लुकी चलाई,

सैकडौं तिब्बतीहरुलाई यमलोक पुऱ्याएको थियो। पछि त्यसको अपूर्व वीरताले प्रसन्न भई नेपालसरकारले त्यस सूरवीरलाई आफ्ना मालको सुबेदारी खानकी दिएको थियो।

लिस्ति फर्कि बसेका गोरखाली सेनाले नेपाल बाट आएको नयाँ कुमुकका सहायताले पुन: कुति माथि आफ्नो अधिकार गरे। इ रणक्षेत्रमा तिब्बतीहरुले भारी हानि उठाउनु परेको थियो।

अन्तमा सन् १८५६ का मार्च २४ सम्बत् १९१३ का पुस महिनामा तिब्बतीहरुले आत्मसमर्पण गरे। संधिलाई तिब्बत बाट यउटा तिब्बती प्रतिनिधिदल नेपाल आयो। दुइ महिना छलफल भए पछि चैत महिनामा संधि वार्ता छिनियों। तिब्बतीहरुले दिई आएको १००००) रुपया कर यथावत् दिने कबोल र नेपालको युद्ध व्ययको समग्र खर्चा दिन स्वीकार गरी संधिपत्रमा साहीछाप लगाए।

## तिब्बतको सन् १८५६ को संधिपत्रको नकल

हामी निम्न लिखित गोरखासरकारका प्रतिनिधिहरु र तिब्बत सरकारका प्रतिनिधि लामाहरु आपसमा तल लेखिएको दस धाराको यउटा संधि गर्दछौं। त्यसमा परमेश्वरको साक्षी राखी स्वयं आफ्ना इच्छा र मंसुवाले आफ्ना आफ्ना मोहर गर्दछौं। हामी ले आजसम्म चीन सम्राटका जुन् तरहले संमान गरिआएका छौं, त्यस्तै पछि पनि बराबर गरी रहने छौ।

दूबै पक्षले यस संधि पत्रलाई मानुन्ज्याल दुबै थरी दाजुभाई सरह रहने छन्। तथा यदि एक पक्षले अर्को पक्ष संग युद्ध गर्न खोज्यो भने परमेश्वर त्यस पक्ष लाई फल्नफूल्न न दिउन्। तथा दस संधि निर्णय लाई हटाउन खोज्ने पक्ष माथि यदि अर्को पक्षले चढाई गऱ्यो किंवा युद्ध गऱ्यो भने त्यो पक्ष सबै प्रकारका अपराध तथा अधर्म बाट मुक्त रहने छ। यस उप्रान्त आफ्ना दरबारका राजकीय प्रतिनिधिहरुको ...

तथा छाप छ । अनि तल लेखेका दस धाराहरुको उल्लेख गरिएको छ ।

१. गोरखा सरकारलाइ तिब्बतले वर्षेनी दसहजार रुपया दिनेछ ।

२. गोरखा र तिब्बतले चीन सम्राटको बराबर संमान गर्दछन् । तथा तिब्बत केवल लामाहरुको मठ देश हुँदा धार्मिक तपस्या र ध्यान आदि गर्ने स्थान हो । यसै कारण पछि भविष्यमा अन्य कुनै राजाका फौजले तिब्बत माथि आक्रमण गर्‍यो भने त्यसवेला गोरखासरकार बाट जहाँसम्म हुन्छ सहयोग गरी तिब्बतको रक्षा गरिनेछ ।

३. गोरखा सरकारका रैयत या व्यापारीहरु सित तिब्बतमा कुनै कर या मःगंकर वा भंसार लिइने छैन ।

४. गोरखासरकारका युद्धमा बंदी गरिएका सैनिकहरु तथा गोरखा प्रजाजनलाई तुरन्तनै छाडी दिइनेछ । गोरखा सरकारले पनि तिब्बती सेना तथा खोसेको अस्त्रशस्त्र फिर्ता दिनुपर्ने छ । तथा तिब्बती प्रजाहरुको गोरखालीहरुले लुटेको चिजवस्तु फर्काइने छन् । तथा यो संधि पूर्ण भएका बखत एले तलकच्चा र छेवरगुफा केरुँग, कुँगा, कुती ब्यावलङ्ग र भैरवलंगर सम्म फैलिएको गोरखाली सैन्यलाई हटाई सबै ठाँऊ खालि गराउनेछन् ।

५. ल्हासामा अब देखि गोरखाली हाकिम न राखी भारदार राख्ने छन् ।

६. गोरखा सरकारले ल्हासामा आफ्नो व्यापारिक अड्डा राख्ने छ । त्यस अड्डामा जुहारात बजाजा लगायत लाउने खाने सबै चिजवस्तु-हरुको वेपार स्वतंत्रता पूर्वक गर्न पाउने छन् ।

७. ल्हासामा रहेको नेपाली भारदारले तिब्बतीहरुको मुद्दा हेर्ने छैन, न त फैसला दिने छ । तथा तिब्बत सरकारले ल्हासा भित्र रहेका गोरखा प्रजाजन, नेपालका काश्मीरी मुसलमानहरुको मुद्दा सुन्ने छैन, फैसला गर्ने छैन । जब गोरखा या तिब्बतका प्रजा वा व्यापारीहरु मा कुनै प्रकारको झगडा होला, तब त्य... झगडा दुवै पक्षका भारदारहरुले बसेर छिन्ने

छन्। तिब्बती प्रजा वा व्यापरीहरुका मुद्दा बाट भएको जरिवाना आमदनीहरु तिब्बत सरकारको हुने छ। त्यस्तै किसिमले गोरखा प्रजा व्यापारीहरु र कश्मीरी मुसलमानहरुको मुद्दामा भएको जरिवाना आमदनी गोरखा सरकारले लिने छन्।

८. गोरखा सरकारका प्रजाजनले नेपाल बाट मानिसको हत्या गरी तिब्बत प्रदेशमा पसेमा। तिब्बतले र तिब्बती प्रजाले तिब्बत बाट हत्या गरी नेपाल पसेमा दुबै सरकार ले दुबै सरकारका ज्यानमागलाई सुम्पी दिने छन्।

९. यदि तिब्बती प्रजाले गोरखा प्रजा वा व्यापारीको संपत्ति लुटेमा भने तिब्बती भारदारले त्यो समस्त गोरखा प्रजा वा व्यापारीहरु लाई फर्काईदेलान्। यदि लुटहा संग त्यो सम्पत्ति निस्केन भने भर्ना गर्नाका लागी तिब्बतले त्यस लुटहालाई विवश गर्ला। यसै गरी तिब्बतो प्रजा वा व्यापारीको कोई सम्पत्ति गोरखालीले लुटे भने, गोरखासरकारले तिब्बतको त्यस व्यापारी अथवा प्रजालाई त्यसको सम्पत्ति फर्काइ देला, यदि लुटने मानिस संग माल निस्केन भने गोरखाले लुटेको संपत्तिलाई फिर्ता गर्नका लागी केहि कुरा पक्का गर्नका लगी विवश गर्ला।

१०. यो संधि पुरा भईसके पछि दुवै पक्ष मध्ये एकले पनि न ता तिब्बतका कुनै व्यक्ति अथवा सम्पत्तिलाई हानि पुऱ्याउला, जोकि युद्ध कालमा गोरखा भारदारमा दाखिल भईसकेको होस्। अरु न ता गोरखा प्रजा वा सम्पत्तिलाई हानि पुऱ्याउला, जोकि तिब्बत दरबारमा गएर मिलीसकेको होस्।

मिती चैत्र सुदी तृतीया सम्बत् १८१२...........

## संधिपत्रको तिब्बती नकल

स्वस्ती श्र. गोरखा र तिब्बतका बाच दस धाराहरुको संधि. जौहि सरदारहरु लामाहरु र साधारण कर्मचारीहरुका साधारण सभामा निश्चित

भएको थियो । तथा जसमा श्री गोरखा दरवार तथा श्री तिब्बत दरबारले भिन्नाभिन्नै मिलेर हस्ताक्षर गरेकाथिए । ईश्वरलई साक्षि राखेर हामी-हरु मिलेर अरु भिन्नाभिन्नै यस्तो बचनको सत्यताका चिन्ह स्वरूप आफ्ना मोहर छाप लाउँदछौ ।

महान चीन सम्राटलाई पैल्हे कै झैं पूरापूरामान मर्यादा गर्नाका सम्बन्धमा जो कुछ लेखिएकोछ उसलाई मान्य गर्दै दुवै दरबारले मिलेर तथा फरक फरक भाइ र बालखहरु झैं आपसमा समझौता गर्दछौ । दुवै मध्ये कुनै यौटा दरबारको कोहि मानिसले यो संधि लाई न मानेर युद्धको टंटा खडा गरोस् , त्यसबाट परमात्माने आफ्नु अनुग्रह हटाई लिउन् ।

यस संधि मा जो कुछ लेखिएको छ त्यसलाई यदि दुवैमा यौटाले पालन न गरे देखि अनि यस्को कुनै शर्त तोड्नूता तोडनका साथ युद्ध गर्ने सरकार पापको भागी न होस् ।

श्री गोर्खा महाराजको सम्मति लिएर आउने चौंही अधिकारी हिज्-आनर श्रीमधर जंगकुमार कुमारात्मज श्री तयिम् मिनितर एनव क्मन्द इन्सिवजनरल जंके भा दुरकुँवररदन मोहर ।

हिज्आनर श्रीमधर जंगकुमार कुमारात्मज श्री मिनितर जनरल वमबादुर कुँवर मोहर ।

हिज्आनर श्री गुरुराज पंडित धर्माधिकार श्री विजयी पंडित मोहर ।

हिज्आनर श्रीमधर जंगकुमार कुमारंगत मज श्री कर्मेगधर ईन्सिव-जनरल रानाउदापसिंह कुँवर राना मोहर ।

हिज्आनर श्रीमधर जंगकुमार कुमारंगत मज श्री जनरल जगत शमेर जंग कुँवर राना मोहर ।

श्रीमधरजङ्कुमार कुमारंगत मज श्री जनरल धीर शम्सेर कुँवर राना मोहर

श्री मत्सौहरिय राना शेरशाहको मोहर ।

श्री करनेल तितिपि करमसिंह थापाको मोहर ।

श्री करनेल दिलीसिंह बसन्येताको मोहर ।

श्री करनेल कलमान संह बसन्थुनाको मोहर ।

तिब्बतका लामा र सरदार जो नेपाल आएका छन् ।

श्री पोतोल लामाका प्रतिनिधि प्राइभेट सेक्रेटरी न्गाम्वोंगग्यल्सब् को मोहर ।

श्री देबुंग मठका प्रधान धर्माधिकारी-गग्वांग सम्दुबको मोहर ।

श्री डुयेपुंग मठमा समस्त घरका प्रधान लो जंगरवग्यको मोहर ।

श्री सरेमठ का प्रधान धर्माधिकारी लोजंगथुचेनको मोहर ।

श्री गदेन मठका प्रधान धर्मधिकारी न्गाग्यंगयिमाको मोहर ।

श्री गदेन मठका समस्त घरका प्रधान रबग्ययन्यिमाको मोहर ।

श्री तशील हुम्पो मठका प्रधान धर्माधिकारी लोजंगग्यलत्सन को मोहर ।

श्री तशील हुम्यो का समस्त घरका प्रधान गिलेतत्सको मोहर ।

श्री शाक्यमठका महामान्य प्रधान लामाका प्रतिनिधि जम्पंगमोन्लम को मोहर ।

श्री शेचोलिगका अवतार लामा प्रतिनिधि ग्यलत्शनताण्डुवको मोहर ।

श्री ल्हासा राज प्रसादका कार्यकारी मंत्री डयूकशेदको मोहर ।

श्री मंत्री पल्डुनको मोहर ।

सम्दुब पोडंगका श्री मत्री तैजीको मोहर ।

श्री तशील हुम्यो का खजन्ति न्यिमाताण्डुवको मोहर ।

तर्शासंगसरका श्री मंत्री तैजीको मोहर ।

मंत्री श्री डयूटशेतगका भतीज प्रधाम मान्याडुम्यसेको मोहर ।

इस प्रकार ..... र मित्रता गरियो ।

तिब्बत युद्ध सिद्धिएका चार महिना पछि सन् १८५६ अगस्तका १ आ दिन जंगबहादुरले नेपालामात्यपदमा त्याग पत्र दिए। तिन्ले त्यस पदमा आफ्ना प्राण रक्षक भाइ बमबहादुरलाई बहाल गराएका थिए। त्यस पछि जंगबहादुरले आफुलाई महाराजा सुरेन्द्र बाट कास्की लम्जुंग राज्य जागीर र त्यस राज्यको जागिरे "महाराजपद" बकसाएका थिए। यस प्रकार स्वेच्छाले नेपालामात्य पद त्याग र कास्की लम्जुगको महाराजा कहलाएर अंग्रेजप्रभू भरले सम्भवत: जङ्गबहादुरको विचारधारा झन् माथी उडून थालेको थियो। अंग्रेजहरुलाई ता नेपालमा राजा र प्रजाका बिचको कुनै एक ठेकेदार चाहिन्थ्यो। तिनीहरुले जंगबहादुरका त्यस इच्छामा बिचारै गरेनन्। यता भाईहरुका संमिलित प्रयत्नले जंगबहादुर ले नेपालामात्यक त्यो पद प्राप्त गरेको थियो र त्यसै निमित्त त्यस पदका उत्तराधिकारमा भाई रोलक्रमको श्रृष्टि भएको थियो। त्यस भाई रोलक्रमले पनि जङ्गबहादुरका त्यस बिचार माथि ठेस पुऱ्यायो। जङ्गबहादुरसे पदत्याग गरे पछि अंग्रेजहरुको पत्र व्यवहारको आदान प्रदान तत्कालिक प्रधानामात्य बमबहादुर सित हुनथाल्यो। जङ्गबहादुर आफ्ना मित्र भना दा अंग्रेजहरुका त्यस कार्यले निकै चिन्तित भए। त्यसै कुराले तिन्ले आफ्ना प्राणरक्षक भाइ बमबहादुरको हत्या सम्म गने आटेका थिए। जङ्गबहादुरका भाग्यले सम्वत १९१२ सन् १८५७ का जून महिनामा कालगतिले कँमर खलकका दोश्रा मुख्तियार बमबहादुरको मृत्यु भयो। राजा सुरेन्द्र बाट बक्साई आफ्ना वशको रोलक्रमलाई मिचेर स्वयं जङ्गबहादुर फेरि नेपालामात्य पदमा बहाल भए।

जंगबहादुरले प्रधानामात्य पद त्याग गरी त्यस पदबाट पृथक भए पछि प्राइमिनिष्ट्रि जगीर भत्ता न पाउने तथा प्राइमिनिष्टर सम्म पुगी सकेका व्यक्तिले त्यो सन्मान न पाउने हुनाले तिन्का संमान रक्षार्थ र भरण पोषणका निमित्त राजा सुरेन्द्रका निगाहले आफ्ना सेवाको पुरस्कार पाउँ कास्की र लम्जुङ्को राज्य जागीर र त्यस्को जागीरे महाराज

भन्ने पदवी पाएका थिए। जंगवहादुरले आफ्ना दोश्रा पटकका नेपालामात्य पद ग्रहण गरे पछि नेपालका प्रधान मंत्रीले महाराज न लेख्न पाए पनि तिनले पाई सकेका आफ्ना जागीरे महाराज पदवी लाई आफ्ना नाउँका साथ व्यवहार गर्न पाएका हुन। अवश्य जंगबहादुर लाई दिएको त्यो महाराजा पदवी तिन्ले राजकाज वाट अलग भए पनि तिन्का संमान रक्षार्थ व्यक्तिगत रूपले दिइएको थियो। जंगबहादुले आफ्ना कार्यकालमा आफ्ना नाँऊका साथ आफ्ना जागीरे महाराजा पदवीलाई लेखेका आधारमा त्यस पछि हुने श्री ५ धिराजहरुको पागलपन र नावालिगीयतको नाजायज फायदा उठाइ अंग्रेज वरद भएका प्रत्येक कवरखलकका राणा मुख्तियारहरुले आफ्ना कार्यकालमा आफ्ना नाऊँका साथ आफ्नो जागीरे महाराजा पदवीलाई श्री ५ का पंजाछाप सनदमा वक्साई लेखने गरेको पनी तिनीहरुको नमकहरायित पूर्ण चलमिच्याइ हो।

यसै दोश्रा पटकका पदग्रहण गरे पछि जंगबहादुरहरुले जागीरे 'महाराजा" युक्त स्वस्ती श्री मदति प्रचंडभुजडंजेत्या द भन्ने प्रसस्ती लेख्न थालेका हुन्। तेसै दिन देखि पछि हुने कँवरखलकका प्रधान मत्रीहरुले त्यो जागीर पदवीलाई कायम गराएको हो। तथा श्रीमद्राजकुमार कुमारात्मज पदवी प्राइमनिष्टरहरुका उत्तराधिकारीहरुमा गयो।

यस दिन उप्रान्त देखि क्रमश: नेपालकाधिराजका राजकीय सनद हुकुम पत्रहरुमा केवल प्राइमिनिष्टरले मात्र मारफतदार भई जारी हुन लागेको हो, तथा राजकिय व्यवस्थामा एकमात्र प्रइमिनिष्टर नेपालेश्वरका स्वयंभू मारफतदार भईआएका छन्।

त्यस घटनाका साथ साथ भारतवर्षमा अंग्रेजहरुले 'सन् १८५७ को सिपाही विद्रोह" भन्ने संज्ञा दिएको स्वतंत्रता युद्धको प्रारम्भ भयो। त्यस बेला विधर्मी र विदेशी अंग्रेजहरुका गुलामी-पाश बाट मुक्त हुन समस्त भारतीय जनताले संगठित मोर्चा खडा गरेका थिए। नेपाल देशका

स्वर्गीय विरात्मा भीमसेन थापा अमरसिंह थापा आदि नेता र नेपाली जनसाधारण तथा सैनिकहरुले सन् १८ ४।१६ का अंग्रेज आक्रमणमा गरेको महान वीरताको चर्चा तिन्ताक भारतवर्षका घर घरमा फैलिएको थियो। नेपालका तिनै वीरात्माहरुले गरेको वीरताले प्रेरणा पाएर स्वतंत्रता संग्राम यति भारतीय नरेश तथा तिन्का नेता प्रसिद्ध मराठा पेशवा नानारावले त्यस स्वतंत्रता यज्ञमा भाग लिन नेपाललाई समेत आमंत्रित गरेका थिए। नेपाल सरकारले त्यस युद्धमा मद्दत दिए बापत "अंग्रेजहरु बाट जीतेर फर्काएका समस्त भारतीय भूभाग माथि हामीले नेपालेश्वरको अधिनता मान्ने छौं।" भनी लेखेको थियो भन्ने कुरा वीर सावरकरले आफ्ना "सन् सन्तावनको संग्राम" भन्ने पुस्तकमा लेखेका छन्। लखनौका अन्तिम नवाबका सत्वाधिकारी वृजिसकद्दरले पनि 'विदेशी फिरंगीहरुबाट आफ्ना देशको स्वतंत्रता प्राप्त गर्न हामा लडीरहेका छौं। यस् युद्धमा हामीले नेपालको मदत पाई विजय लाभ गर्न सक्यौं भने, हामीले नेपाल सरकारलाई गंगा पारि सम्मको प्रदेश नजरानामा चढाउने छौं।" भनी बडो नम्रता पूर्वक लेखी पठाएका थिए। त्यसका जावाफ मा जंगबहादुरले "अंग्रेहरुका विरुद्ध हामी तिमीहरुको मदत गर्न चाहन्नौ, तिमी तुरन्त अवधका कमिश्नर मान्टोगोमरि संग भेट गरी क्षमा प्रार्थना गर" भनी लेखि पठाएका थिए। देशका दुर्भाग्यले नेपालमा त्यस बेला राजा पृथ्वीनारायणशाह, महाबला अमरसिंह थापा, महारानी साम्राज्यलक्ष्मीदेवी किंवा माथवरसिंहका ठाँउमा कँवरखलकका स्वयंभू मुख्तियार जङ्गबहादुर भए।

भारतवर्षमा आफ्ना गौराङ्ग प्रभूहरुको सत्ता स्थिर रहे सम्म नेपालमा आफ्ना लूट शासनको अधिकार स्थिर देख्ने क्षुद्र स्वार्थ भएका जङ्गबहादुर भारतीयहरु द्वारा प्रारम्भ भएको त्यस् स्वतंत्रता युद्धका पुनीत उद्देश्यमा किन संमिलित हुन्थे। तिन्ले भारतीयहरुको मदत दिने ठाँऊमा उल्टो अंग्रेजहरुले मदत माग्नु भन्दा पहिले नेपालका निर्बोध

गोरखा सैन्यलाई अंग्रेजहरुका मद्दतका निमित्त खटाई पठाएका थिए। त्यस कुराको नेपाली भारदारहरुले विरोध गरेका थिए तथा सेनामा विद्रोहको समेत लक्षण प्रकट भएको थियो र जङ्गबहादुरको हत्या गर्ने समेत चेष्टा गरिएको थियो भन्ने कुरा स्वयं जङ्गबहादुरका छोरा पद्मजंगले आफ्ना "जंगबहादुर" नाँउका पुस्तकमा लेखेका छन्।

यस किसिमले विदेशी विधर्मी मेच्छ शक्ति पास बाट मुक्त हुन जुझि रहेका आफ्ना स्वधर्मी र छिमेकि, जहको स्वयं नेपाल यउटा अंग हो, यदि पवित्र भारतामाताका वरपुत्र भारतीयहरुका पछिल्तिर बाट जंगबहादरले पिठ्यूँमा छूरा भोकेका थिए। जंगबहादुरका त्यै नीचतापूर्ण कृत्यले पतन भई सकेको अंग्रेजी सत्ता दृढ भई, भारतलाई वीरशून्य गराई अंग्रेजी बूटका किलोलाई भारतका हृदयमा गाडि, वीर अमरसिंह, बलभद्र सिंह, भक्ति थापा आदि वीराग्रणि हरुले उज्ज्वल पारेको देशका माथम कलंकको कालो टिको लगाएका थिए, भन्ने कुरा "हामी कुनै अवस्थामा पनि मित्रताले गोरखालीहरुको वाहुको आड न पाई दिल्लिको प्रख्यात उच्च भूमिमा वनेको स्मारकमा पुग्न सक्तैनम्।" भन्ने टाइम्स आफ दि हिष्ट्रि आफ दि वारले लेखेकोले स्पष्ट बुझ्न सकिन्छ।

वृटिस रेजिडेन्टको आज्ञा पाउना साथ सन् १८५७ मा जंगबहादुरले दुई रेजिमेंट गोरखा सेनालाई भारत तिर पठाएका थिए। जगबहादुरको त्यो खुशामत भारतका गवर्नर जेनरललाई मन न परेकोले त्यो सेनाले लगत्तै नेपाल फर्कनु परेको थियो। पछि गवर्नर जनरलको तार पाई जङ्गबहादुरले अगस्त महिना मा ३००० र २३ दिसेम्बरका दिन ९००० गरि १२००० गोरखा सेना भारतवर्ष तिर पठाएका थिए। अंग्रेजहरुका कमानमा त्यस गोरखा सैन्यले स्वतंत्रता युद्ध केन्द्र जौनपुर, आजमगढ, कुन्डिया अन्तरौलि, मुवारकपुर, चांदा, सोनपुर, गोरखपुर, विरोजपुर, सारावन, हमीदपुर, नरसतपुर, बादशाहगंज र लखनौमा जुझि रहेका वीर भारतीय-हरुको दमनगरी युद्ध नेता बेनिमाधव, राजामुबारकपुर, इसदबकस नजीम,

एञ्जेग्रलि; वंदाइसन गफूरवेगहरु मध्ये अनेकको हत्या गरि नेपाली वीरतालाई कलंकित गरेका थिए ।

त्यस दमन युद्धमा स्वयं जंगबहादुर पनि अवतरित भए। लखनौ माथि अंग्रेजी सत्ता दृढ गराई ता० २८ फरवरीका दिन तिन्ले आफ्ना १००० सैनिकका बलले केवल ३४ जनाले रक्षित अम्बरदुर्गलाई परास्त गरी, लार्ड कैनिङ्ग सँग भेट गर्न जंगबहादुर एलाहाबाद पुगेका थिए। लार्ड केनिङ्गले आफ्ना देशद्रोही मित्र जंगबहादुरको ठूलो सम्मान प्रदर्शन गरे र त्यस युद्धमा मदत दिए बावत धन्यवाद दिइ अघि सन् १८१४.१६ सवत १८७२।७४ मा नेपाल संग खोसेका प्रदेशहरु फिर्ता गरिनेछ भन्ने वचन समेत दिएका थिए ।

भारतीय स्वतंत्रता संग्राममा भारतीयहरुका विरुद्ध गरेका आफ्ना कुकृत्यहरुले जंगबहादुर सँग अंग्रेजहरुले निकै मुखेचिप्लो घसेको हुँदा निज लाई ठूलो अभिमान भएको थियो । त्यस करण संग्राम वाट नेपाल फर्केका जंगबहादुर आफुलाई सर्वतंत्र स्वतंत्र समझन लागेका थिए। त्यस्का फल स्वरूप जंगबहादुरको दर्पदलनका निमित्त रेजिडेन्ट लेफ्टिनेंट कर्णेल रेम्जेले तिन्को भरि दर्बारका अपमान गर्‍यां । त्यस्का प्रतिवादमा जंगबहादुरले भारतीय स्वतंत्रता संग्राममा बाहाजोरी सखा तुल्य भनिने मित्र लार्ड कैनिङ्गलाई रेमजेलाई तुरन्त नेपाल बाट हटाउन पत्र लेखी पठाए। तर तिन्का अंग्रेज महाप्रभूहरु बाट मौखिक कुलाचार भयेको क्षमा सम्म न मागेर त्यस कुरामा जंगबहादुरकै दोष सावित गरी पठाएका थिए। जंगबहादुरको दर्पदलन गर्न अंग्रेजहरुले रेमजे साहबलाई अनेक वर्ष सम्म नेपालको रेजीडेंट बनाई राखेका थिए ।

ता० ७ मई सन् १८५८ का दिन लार्ड केनिंङ्गले वृटिस सरकार तिरबाट अनेक धन्यवादका साथ जंगबहादुरलाई जि. सि. वी. को तकमा पठाएको र तिनै रेमजेरेजिडेंट वाट पैहाउन लगाई आफ्ना शक्तिको दौरात्म्य देखाएको थियो । त्यस्का साथ 'तपाई'हरु वाट मदत पाएर हामीले आफ्ना

विसाल शत्रुहरुको दमन गरि अनेक प्रदेश माथि अधिकार समेत गर्‍यौ। तसर्थ हामी तपाईका पूर्णतः ऋणि छौं, त्यसैको कृतज्ञता जाहेर गर्ने पूर्व कृत बचन पालनलाई सम्पूर्ण रूपले समर्थन भएपनि नेपालका दक्षिण पश्चिम सीमाना वाट ४० कोश लामू र १ कोश चौडा भूमाग नेपाल सरकारलाई चढाउँछौ, भन्ने पत्र लेखेका थिए ।

काहाँ सन् १८१४।१६ मा षडयंत्र बलले नेपालवाट छुस्याइएको करोडा आमदनीको सर्वश्रेष्ठ तीन उर्वर प्रान्त, काहाँ न ऊ मात्रयो आमदनी हुने जंगलको यौटा यउटा सानु टुक्रो, त्यस ठाँऊमा पेसवा नाना- राव तथा नवाबजादा बृटिसकद्दरको प्रस्ताव माथि विचार गर्नु होला) दिएर स्वधर्मघाति जंगबहादुरलाई लोप्याएर अंग्रेजहरुले तिन्को उचित खातिरी गरे। त्यस भूभाग को टुक्रोलाई पनी मालिकले मासुखाई फ्याँकेको हाडलाई पुछर हल्लाइ खाने कुक्कुर झैं जंगबहादुरले सधन्य- वाद स्वीकार गरेका थिए। त्यैं भूभाग आजको नेपालगंज या नआमुलुक हो। त्यस नआमुलुकलाई पनि जस्का प्राप्तिका निमित्त हजारा निरीह गोरखाली- हरु भेडा वाखा तुल्य काटिएका थिए, जंगबहादुरले आफना भाइ छोराहरुको पेवा र विर्ता गराए ।

सं० १९१४ सन् १८५८ का प्रारम्भमा स्वातंत्र संग्राममा विफल भएका अनेक भारतीय राजा आफना शरणागत ६०००० मानिसहरु स्त्री पुरुष केटा केटी गरी औलोमय तराईका सुरैयाबन जंगलमा शरणलिन पुगेका थिए। केहि काल पछि ती भारतीय नरेश र नेताहरुलाई समाती हामीलाई बुझाऊ भन्ने अंग्रेजहरुको पत्र नेपालमा पुग्यो। पत्र पाउना साथ जंगबहादुरका हुकुमले यउटा सेनाका साथ सरदार सिद्धिमानसिंह तिनीहरुलाई पक्रन तराई तिर आएका थिए। तिन्ले भोजनका कमि र औलोज्वरले पीडित भई रहेका ६०००० हजार भारतीयहरुको सहार र तिन्का नेताहरु मद्धे बेनिमाधव मन्नुखाँ आदि ५०० जना नेतालाई बंदी गरी अंग्रेजहरुलाई सुम्पेका थिए, भन्नेकुरा सुन्दरलाल कृत "भारतमा

अंग्रेजी राज्य" नाँऊका पुस्तकका १६३३ वाँ पृष्ठमा लेखेछन्। पेशवा नाना साहेब आफ्ना भाइ बालाराव र परिवारका साथ तथा अवध कि हजरत-महल बेगम आफ्ना पुत्र वृजिसकद्रका साथ तराईमा थिए। सरदार सिद्धिमानसिंहले ति दुवै राजपरिवारका साथ आफ्ना आफ्ना वंशको बहुमूल्य रत्नकोष छ भन्ने थाहा पाई, जंगबहादुरमा त्यो कुरा लेखि "तिनी हरुको के गर्नें" भनी आज्ञा मागी पठाएकाथिए। नानाराव बालाराव कि राजमाताले पनि आफ्ना पुत्र परिवारका रक्षाका निमित्त नेपाल दरवारमा पत्र पठाएकि थिइन्। रत्नकोषका समाचारले जंगबहादुरका मुखमा पानी भरियो। तिन्ले सिद्धिमानसिंहलाई "ति दुवै परिवारका स्त्रीजनलाई मात्र रत्नकोष समेत तुरन्त नेपाल लिएर आऊ" भन्ने आदेश पठाएका थिए। आज्ञा बमोजिम सरदार सिद्धमानसिंहले १८६० मा रत्नकोष समेत दुवै परिवारलाई सकुशल नेपाल पुऱ्याए। कुटिल जंगबहादुरले ती दुवै राजपरिवारका स्त्रीजनलाई थापाथलिका कम्पौन्ड भित्र अलग अलग घरमा राख्न लगाएका थिए। पछि सन् १८७५ मा लखनौ कि बेगमको नेपालमा मृत्यु भयो। औलोज्वरले पीडित भई तराईमा बालाराव मरें। नानासाहेब जोगी भेषले तराईमै लुकी बसें। त्यो कुरा धेरै दिन सम्म अंग्रेजहरुमा गुप्त रहन सकेन। अंग्रजहरु बराबर नानाराव बालारावलाई समाती हाम्रा सुपुर्द गर भनी नेपाल दरवार संग पत्र व्यवहार गर्दै थिए। रत्न लोभी जंगबहादुरले महारानी काशीबाईका रत्नलोभले "नानाराव बालारावको तराईमा औलोका प्रकोपले मृत्यु भयो र तिन्की विधवा महारानीहरुले मेरा संमुख स्वेत वस्त्र धारण गरेको छ" भन्ने लेखि अंग्रेजहरुको चित्त बुझाए। नानासाहेब पछि सम्म जीवित थिए। तथा जोगि भेषमा शिवरात्रीमा काठमाण्डू गई आफ्नी पत्नि संग भेट गर्दथे। अन्तमा तिन्को मृत्यु पनि तराईका औलोले भयो।

यस प्रकार नेपाल राज्य भन्दा विशाल र पुरानु राज्य पुना सितारा

का प्रतापी वीर श्रेष्ठ भारतीय नरेशहरुका शिरमौर ब्राह्मण वंशका पेशवा राज्य कुलवधु र अवधका संसार प्रसिद्ध धनकुवेर र दानवीर नवाव कुलवधुहरुले थापाथालिमा कैदी तुल्य जीवन यापन गर्नु परेको थियो। शरणमा आएका ती निरीह असहाय र अवला नारीहरु माथि पनि जंगबहादुरले आफ्नु कुत्सित वासना चरितार्थ गर्न बाँकी राखेनन्। नीच जंगबहादुरले साम दाम दंड भेद द्वारा ती दुवै महान राज्य कुलवधुहरुको पातिव्रत्य धर्म समेत भङ्ग गरेका थिए, भन्ने कुरा पर्सिवल्ले पनी आफ्ना "नेपालमा" लेखेको छ। तेतिले पनि न पुगेर निजले ती दुवै राजकुलवधु अवला नारीहरुको रत्नकोषलाई हर किसिम गरी आफ्ना हात लगाएका थिए। हजरतमहलवेगमले आफ्ना रत्नकोष लाई आफ्ना तकियामा महेर सिहानमा राखने गरेको थियो। तिन्को त्यो रत्न पोटलिलाई स्वयं जंगबहादुरले तिन्का कोठामा पसेर चोरेका थिए। नानासाहेब कि महारानीका करोडौं रुपयाका रत्नकोषलाई वलजफत पुग न पुग एक लाख रुपयामा वेचन कर लगाएका थिए। जंगबहादुरले रत्नका मोलमा दिने एक लाख रुपया पनि नगत न दि, त्यस्का सट्टामा दहरिया र धनगरा भन्ने ५।६ हजार आमदनिको गाँऊ दिएका थिए।

त्यस नीचका पूर्ण अपहरणबाट जंगबहादुरले संसार प्रसिद्ध ३ इञ्च लामो पन्ना, ४८ दाना मोति र २४ मकैका दाना भन्दा ठूलो पन्ना जडेको नौतरवाहार, चारैतिर ३८ दाना हिरा र माझमा १ इंचीको हिराजडेको ३ इंच लामो २ इंच चौडा आभूषण, वरीपरी ३१ दाना हिरा माझमा एक इंचको ठूलो हिरा जडेको ३ इंच लामो र चौडा वाजुबन्दहरु र ४।५ किस्ति भरि अनेकानेक रत्नहरु र रत्नाभूषणहरु हात लगाएका थिए। वर्तमान नेपालका कँवखलकका स्वयंभू प्रधान र तिन्का आंसिदार जन्मसिद्ध जनरल कर्णलहरुका श्रीपेंचमा र अन्य रत्नाभूषणहरुमा भारतीय रक्तले मुछिएको र जंगबहादुरका जघन्य कलंकले भरिएको रत्नहरु त्यस कुराको साक्षि दि रहेका छन्।

यस प्रकार श्री ५ धिराजको विश्वासको घाँटी निमोठी, यौटा स्वतन्त्र देशको धन लुटने छूट पाएर तथा पेशवा र अवधका नवावहरुको अनमोल रत्नाभूषण अठ्याउन पाए पछी जंगबहादुरले आफ्ना थापाथलीका सात इनारहरुलाई धनरत्न ले पुरेका थिए। यस प्रकार सामान्य कुलजन्मा अशिक्षित तथा दरिद्री जंगबहादुरले अपार धन र शक्तिमा मत्त भै, नेपाल नरेशले दिएका राणा पदवीका आधारमा आफुलाई उदयपुरे महाराणा वंशज भनाउने छेउ न टुप्पोको कल्पना तरङ्ग उठाएका थिए। कूपमण्डूक नेपाललाई मात्र दुनियाँ सम्झने जंगबहादुरले आफ्ना त्यसै कल्पनाका आधारमा "मूर्खस्य ठिङ्गा बल" उखान अनुसार राइट भन्ने कुनै अंग्रेज सज्जन बाट नेपालका वंशावलीको आधारमा यौटा नेपालको इतिहास प्रकाश गराएका थिए। राइट साहबले लेखेका त्यस इतिहासमा श्री ५ महाराजाधिराज खलकलाई उदयपुरका महाराणावंशको शाखा मानेको छ। साथ साथ जंगबहादुरले आफ्ना कँवरखलकलाई समेत उदयपुरे राणावंशका हुन् भन्ने लेख्न लगाएको छ। तल लेखेका राइटका इतिहासमा लेखिएको मिति सन् सम्वत् दिन स्थानहरुको उल्लेख नै न भएको कँवरखलकका राणाहरुको परि कल्पना मय वंशकथालाई पढेर पाठक हरुले त्यसको सत्यासत्यको स्वयं अनुमान गर्न सक्नु हुन्छ। यस कथानकलाई चन्द्रशम्सेरले आफुले पर्सिभल भन्ने सज्जन द्वारा लेखाएको इतिहासमा उल्लेख सम्म गराएको छैन। यस कुराले पनि यस कथानकको असत्यता प्रमाणित हुन्छ। साथ साथ जंगबहादुरका मनाई अनुसारका यस कथामा पनि अन्य राज बाट लखारिएर कष्टखाई आएका अहिमानकँवर तथा पछिका कँवरहरु संग शाह राजाहरुले ठूलो दयापूर्ण व्यवहार गरेका थियो भन्ने कुरा साबित हुन्छ। त्यस ठाँउमा पुस्तौं देखि नमक खाइ आएका कँवरखलकका राणाहरु आज आफ्ना वंशपालन कर्ता स्वामीहरुका प्रति कस्तो व्यवहार गरी रहेका छन्, त्यस्ले तिनीहरुका नमकहरामियतको पनि पर्दा फाँस भएको प्रमाणित हुनेछ।

"अगी तत्ता राणा नाउँका चित्तौडदुर्गका अधिपति थिए। तिनका एक जना फतहसिंह नाउँका भतिजा थिए। चित्तौड किल्ला हारे पछी फतहसिंहका छोरा रामसिंह राणा आफ्ना चार जना साथीका साथ पाहाड तिर लागे पाहाड पुगेर तिन्ले यौटा पाहाडी राजाको नोकरी गर्न थाले। राजाले तिनलाई निकै प्रेमपूर्वक राखेको र आफ्नु गुरु बनाएको थियो। तिनै पाहाडी राजाका अनुरोधले निज रामसिंह राणाले बनैता राज्यका वाग्ले क्षत्रीकी कन्या सित विवाह गरेका थिए। रामसिंहका तिनै पत्नी बाट ६ भाइ छोरा जन्मेका थिए।

"तिनै रामसिंह राणाका ६ भाई पुत्र मध्येको यौटा पुत्रले पाहाडी राजा र मतानकोटका राजा सँग युद्ध पर्दा ठुलो वीरता र साहस देखाएका थिए। त्यस कुराले पाहाडी राजाले तिनलाई "खँडका कवँर" भन्ने उपाधि दिएका थिए। त्यस पछी रामसिंह राणा चित्तौड फर्के। चित्तौड पुगे पछि तिन्को मृत्यु भयो। राजाले रामसिंहका छोरा रावतसिंह खँडकालाई सरदार बनाई राखे।"

"रावतसिंहका छोरा अहिमानकँवरलाई कस्काले राजाले निमन्त्रणदी बोलाएर भाइदार बानाएका थिए। तिनै अहिमानकँवरको यौटी अनुपम सुन्दरी कन्या थिइन्। कस्काले राजाले तिनीसँग विवाह गर्न खोज्झे। अहिमान कँवरले दियोकलस पूजेर कन्यादिन अस्वीकार गरे। त्यस्ले गर्दा कस्काले राजाले ती कन्यालाई बलपूर्वक हरण गर्ने अभिप्रायले अहिमानकँवर माथी आक्रमण गरे। त्यस्मा युद्ध भयो। अन्तमा अहिमानकँवर आफ्ना दुई भाई छोरा रामकृष्णकँवर र जयकृष्ण कँवरका साथ गोरखाधिपति पृथ्वीनारायणशाहको नोकरी गर्न थाले। राजा पृथ्वीनारायणशाहले रामकृष्णकँवरलाई "कँवरखोलो" बिर्ता दिएको थियो।"

"राजा पृथ्वीनारायणशाहका युद्धमियानहरूमा रामकृष्णकँवरले

चौध वर्षका उमेरमा ठूलो साहस देखाएकोले तिनी राजाका स्नेहपात्र भएका थिए, तथा सरदारीको मान समेत पाएका थिए" अस्तु।

"तिनताक मुख्तियारलाई काजी तथा सेनापतिलाई सरदार भनिन्थ्यो। राजा पृथ्वीनारायण शाहले रामकृष्णकँवरलाई सेनापति बनाई नेपाल हान्न पठाएको थियो। एकै पटक चारै तिरबाट अनेक सरदारहरूले नेपालमाथी आक्रमण गरे। त्यस बेला सर्वप्रथम रामकृष्णकँवरले नेपाल दरबारका सिंहढोकाबाट प्रवेश गरेको थियो। तिनले नेपाललाई विजयगरे र बालाजीका पाहाडमा किल्ला बनाएका थिए। राजा पृथ्वीनारायणशाहले पाटन र भादगाउँ विजय गरे पछि अरु सरदारहरुका साथ रामकृष्णकँवरलाई पूर्व हान्न पठाए। रामकृष्णकँवरले मेची सम्म जितेका थिए। त्यस पछि रामकृष्णकँवर प्यूठानामा नियुक्त गरिए। तिनको ५९ वर्षका उमेरमा तहीं मृत्यु भयो।"

"रामकृष्णकँवरका पुत्र रणजीतकँवरले ३५ वर्षका उमेरमा सुब्बांगी पाए र जुमला जानु परेको थियो। जुमला भरखर विजय गरिएको हुनाले जुमलाका राजाले बराबर हमला गर्ने गरेका थिए। अन्तमा रणजीत-कँवरले जुमलाका राजालाई भगाए। तेस्ले प्रसन्न भए र राजा पृथ्वी-नारायण शाहले तिनलाई चार काजी मध्येको एक काजी बनाए।"

"त्यस पछी रणजीतकँवरलाई काँगडा जित्न पठाएको थियो। रणजीत कँवरले भापेश्वरलाई जितेर संसारसिंह सँग घनघोर युद्ध पर्दा बाँसको सिंढीमा चढ्न लागेको बेलामा शत्रुको गोली खाई मर्नु पर्‍यो।"

"तिनका पुत्र बालनरसिंहकँवर आफ्ना २२ वर्षका उमेरमा काजी नियुक्त गरिएका थिए।"

यस पछिको नेपालको इतिहासलाई देशमा देशकैलुटेराहरुका लूट तथा स्वेच्छाचारको कहानी भने पनि हुन्छ। अगि वृटिस भारतका कुनै एक गाँऊका शैठा जिमीन्दारले जुन किसिम बाट हज्जारा आसामीहरुका रक्त-शोषण गर्दा पनि मूक आसामीहरुबाट त्यसका प्रतिकार हुन सक्दैनथ्यो, ठीक

त्यै रुपले वृटिस संगीन भरले जंगबहादुर तथा तिंका कँवरखलकका राणा ठेकेदार मुख्तियारहरुले एककावाद एक गरी ६४ लाख जनताको देशलाई आफ्ना शोषण, लूट, अत्याचार, अनाचार र स्वेच्छाचारको सब तरफवाट सर्वहारा बनाई ल्याएको छ। जंगबहादुरले स्वार्थ पूर्ति र धनलिप्सा चरितार्थ गर्न समस्त देशका आय माथि गरेको एकाधिपत्य, स्वदेश वासीहरुको जघन्योतर रितले बगाएको रक्त लिप्सा र नारकीय बलात्कार गर्न चलाएको अनाचारी प्रथा आज सम्म कँवर खलकका राणा मुख्तियारहरुले अविकल रुपमा चलाई जंगबहादुरको आदर्शलाई खडा राखेका छन्। आफ्ना नाँऊमा देशको समस्त आय बैंकमा जम्मा गर्ने अद्विविधा, वैध-अवैध कुनै रितले धन जम्मा गर्ने लिप्सा, दरवारको वर्तमान केटी प्रथा रुपि स्वतंत्र नग्न कामुकता, कुलशील हीना ती केटीहरुको सर्वोच्च (कथित श्री ३ बडामहारानी सम्मको) पदस्थता, केटीहरुका अवैध सन्तानहरुको मान्यता, दिदी बहिनी संसर्ग जनित अनाचारिता, अशास्त्रोक्त विवाह सम्बन्धको प्रचुरता, विदेशमा गरिने यवन म्लेच्छ ललना संसर्गको प्रच्छन्नता, काका दाजु भाइ गोत्र वंशको हत्या, जीह्वागत कानूनको प्रमुखता "एको ब्रह्म द्वितियो नास्ति" का मूर्तिमान स्वयंभू कंवरखलकका राणा मुख्तियारहरुको श्रेष्ठताको परिचायक भई रहेको छ, अस्तु।

सम्वत् १९१६ सन् १८६० मा नेपालमा नाँऊ मात्रको वन्दूक बनाउने कारखाना खुलेको थियो। सम्वत १९१७ सन् १८६१ मा अनाजका रुपले मालपोत लिइने स्थानमा नगत रुपया उठाउन कानून बन्यो। त्यस मालपोत उठाउने कार्यलाई चौधरी जिमीन्दार पटवारी आदि नयाँ नयाँ प्रजाको रक्त चुस्ने पदाधिकारी हरु थापिए। सम्वत १९१९ सन् १८६३ मा चीन देशीय कारीगरहरुलाई झिकाई स्वयंभूनाथको चैत्यको जीर्णोद्धार गरियो।

सम्वत् १९२२ सन् १८६६ फेब्रुवरी १६ तारेखमा नेपाल सरकार

बाट आमंत्रित भई भारतका तात्कालिक बृटिश युवराज सप्तम एडवर्ड शिकार-लाई नेपाल आएका थिए। त्यसै सालका मार्च महिनामा कुनै एक "लखन-थापा नामक देशभक्त युवकले जंगबहादुरका विरुद्ध जनआंदोलन प्रारम्भ गरेको थियो। तिन्ले 'मैले भगवती-दुर्गाबाट अत्याचारी जंगबहादुरको नाश गरी, नेपालमा सत्ययुग फिराउने वरदान पाएको छु" भनि यउटा विद्रोहि दलको संगठन गरेको थियो। जंगबहादुर बाट सन्त्रस्त भएको नेपाली जनताको यउटा विशाल समूह तिन्का दलमा सामेल भई सकेका थिए। स्वयंभू नेपालामात्य जंगबहादुरका पशुबलका संमुख निहत्था लखनथापाको दल काहाँ सम्म टिक्थ्यो। शस्त्रबलले दमन गरी देविदत्त पलटनले सदलबल तिनीहरुलाई बन्दी गरी काठमान्डू ल्याए। जंगबहादुरका हुकुमले गाछीमा झुंड्याइऐर लखनथापाहरु शहीद भए। नेपाली जनआन्दोलनकारीहरुमा सब भन्दा प्रथम शहीद हुने इनै वीर लखनथापा हुन्। त्यस पछि जंगबहादुरले आफ्ना ठेक्का शासनका अन्त सम्म कसैको विरोधको सामना गर्नु परेन।

यस प्रकार राजा, प्रजा र प्रतिद्वन्दिहरुलाई दबाई नेपालामात्य पदलाई सर्वथा स्वेच्छाचारमय तुल्याए पछि जंगबहादुरले एकान्त भोग विलासमा आफ्नो दिन बिताउन थाले। कुनै एक मेजर रुद्रमानसिंह गुरुङ्ग भन्ने जंगबहादुरका अंग रक्षक थिए। आफ्ना ९१ वर्षका उमेरमा तिन्को मृत्यु भएको थियो। तिन्ले भनेको कुराले जंगबहादुरका स्वभावचरित्रको यथार्थता विदित हुन्छ। तिन्का भनाई अनुसार जंगबहादुर विचित्र प्रकृतिका मानस थिए। तिन्को सुत्ने, उठने कुनै निश्चित समय थिएन। रिसाहा प्रकृतिका थिए कि सानु सानु कुरामा कसैलाई थिलथिलो पारी पिट्न वेरै मान्दैनथे। जगबहादुरका काम वासनाका शिकार पेशावा तथा अवध राजकुलवधूहरु भएको कुरा माथि लेखिएकै छ। त्यस बाहेक आफ्ना कामवासना चरितार्थका निमित्त तिन्को इच्छा सर्वोपरि थियो। बलेट-महाराजा कि नानी भाइचन्द्रबदन जसले जंगबहादुरका साथ त्यसै दरबार

रमा अनेक वर्ष बिताएको थियो, तिनको मृत्यु ९४ वर्षका उमेरमा काशीमा लौंडकका घरमा आजका ४।६ वर्ष पैल्हे भयो, तिनले भनेको कुराले कामुक जंगबहादुरको नग्न चित्र देखाउछ। मुगलदरबार हरेमका श्रेष्ठ पोषक जहाँगीरले "आफुले लगाएको बोटको फल आफुले न खाई अरुलाई खाउन ठूलो मूर्खता हो" भन्ने भनाई अनुसार जंगबहादुरले पनि गोत्र, वंश, संतान, ब्राह्मण, यवन, म्लेच्छ, हाडनाताको बिचार राखेका थिएनन्। तिनी आफ्ना कामलिप्साका उत्तेजन थैं सदा भांग, गाँजा, चरस, धतुरो, हरौंका साथ रसादि औषधि । संमिश्रणले बनेको मिश्रीका कुंजालाई दिन रात सुपारी खाए सरि चपाई रहन्ये।" एक पटक जंगबहादुरले कुनै एक हवल्दारकि सुन्दरी पत्निलाई अपहरण गरी थापाथलि भित्र लुका. राखेको थियो। हवल्दारले त्यस कुरालाई थाहा पाई जार जंगबहादुरलाई काट्न खुकुरी ली तिन दिन सम्म थापाथलिको ढोका कुरेको थियो। तिन दिन सम्म मुखलुकाई जंगबहादुर न निस्केको ले जार मरे तुल्य हो, भन्ने चलन अनुसार थापाथलिका ढोकामा थुकेर त्यो हवल्दार भारतवर्ष तिर भरेको थियो।

डुग्मबहिल टोल बस्ने बस्नेत कप्तानकि पत्नी अद्वितीय सुन्दरी थिइन। एकदिन तिन्माथि जंगबहादुरको नजर परेछ। आखाँमा चडें कि सुन्दरी रमणीलाई जङ्गबहादुर कसरि छाड्न सक्थ्ये। निजले बस्नेत कप्तान कवायतमा सामेल भएका बेला पारी, निज कप्तानकि पत्निलाई झ्यालमा उभिएका वेला वलजफत आफ्ना हात्तीमा तानी लगेका थिए। कप्तानी लाई लिएर थापाथलि पुगे पछि जङ्गबहादुरले विचरा बस्नेत कप्तानलाई "घरबाट निस्कस् भने काटिने छस्।" भन्ने पर्वान्गी लेखी पठाए। त्यस परवान्गीले गर्दा निज कप्तानले आजन्म घरबाट निस्कन पाएनन्। अन्तमा त्यसै अवस्थामा तिनको मृत्यु आफ्ना घरका बुंगेलमा भयो।

यस किसिमले आफ्ना निर्घिणी भोग र वासनापूर्ण जीवन बनाउंदै जंगबहादुरले आफ्ना तीस वर्षका अमात्य कालमा ... रत्न, ए...

अरब रुपया लूटेर कमाएका थिए। जंगबहादुर आफ्ना २५ वर्षका उमेरमा नेपालका रंगमंचमा आएका र ३० वर्षका उमेरमा नेपालामात्य पदमा बहाल भएका देखिन्छन्। साठी वर्षका उमेरमा तिन्को मृत्यु भएको थियो। राजनीति मंचमा प्रवेश गरे देखि मृत्यु पर्यन्तको तिन्को प्रत्येक वष हिंसा अत्याचार हत्या लूट बलात्कार शोषण र देश द्रोहिता पूर्ण नीच-ताले भरिएको छ। जंगबहादुरले प्रजाजनका निमित्त यउटा इनार सम्म बनाएनन्।

## युवराज त्रैलोक्यवीरविक्रमशाह (बलेट महाराज)

जंगबहादुरले गरेको स्वेच्छाचार र अनाचर बुझ्न सक्ने अवस्थाका भए पछि नवयुवक भावी सम्राट युवराज त्रैलोक्यवीरविक्रमशाह (बलेट महाराज) लाई नेपाल राजवंश माथि प्रधानामात्य जंगबहादुरको त्यो अप्रत्यक्ष अनुशासन दुःसह नियंत्रण बुझिनथालेको थियो। कँवरखलकका राणाहरुका स्वेच्छाचारीताले उत्पीडित जननी जन्मभूमि तथा शोषित प्रजाजन को कष्ट देखेर तिन्का हृदय चिरिन थालेको थियो। निजले त्यस बन्धन बाट मुक्त गरी जननी जन्मभूमि तथा प्रजाजनको उद्धार गर्ने र "कँवर कमारो" (तिन्ताक सम्म महाराजाधिराज सुरेन्द्रवीरविक्रमशाहले जंग-बहादुरलाई समथि, जंगबहादुर, जंगे, किंवा कँवरकमारो भनी आफ्ना मन परेका नाँऊले संबोधन गर्थे) हरुको विनाश न गरे सम्म आफुले श्रीपँच लगाउने छैन भन्ने प्रतिज्ञा गरेको थियो। आफ्ना त्यै प्रतिज्ञानुसार त्रैलोक्य वीरविक्रमले मृत्यु पर्यन्त श्रीपँच लाएनन्। त्यस प्रतिज्ञा र परामर्शमा बलेटमहाराजाका समवयसि पारिषद सुब्बा हेमनाथ उपाध्याय खतिओडा सर्व प्रथम तिन्का सहयोगी भएका थिए। त्यसै ताक सम्वत १९३१ साल सन् १८७५ का ८ अगस्तका दिन शाहजादा पृथ्वीवीरविक्रमशाह पैदा भए। त्यस्का चारवर्ष अगि बलेट महाराजको यौटा जन्मना मरेहा छोरा पनि भएका थिए।

सम्वत १९३३ सन् १८७७ फेब्रुवरी २५ ता० मा जंगबहादुर शिकार खेल्न भनि पथरघट्टामा गएका थिए । त्यसै ठाँऊमा हात्तीबाट लोटेर झाडा र बान्ता लागी फाल्गुन १८ गतेका दिन तिन्को अपमृत्यु भयो। जंगबहादुरले आफ्ना मृत्यु सैय्यामा आफ्ना पूर्वकृत पापहरुलाई सम्झी निकै यंत्रणा भोगेका थिए । त्यस्का निमित्त आफ्नी सती साध्वी पत्नी हिरण्वगर्भादेवीलाई नेपाल सम्राट र प्रजाजन संग माफी माग्ने प्रार्थना गरेका थिए । सती हिरण्यगर्भादेवीले सहमरण गरिन् , तथा चितामा वसी सके पछि सबै संग हात जोरेर जंगबहादुरको अन्तिम प्रार्थना जाहेर गरी माफि मागेकि थिइन् ।

यस प्रकार जंगबहादुरका त्यस आकस्मिक मृत्युको समाचार सुनेर तिन्का भाइ छोराहरुको मुटुत्ते ठाँऊ छ डेको थियो । कँवरखलकका राणा-हरुका मनमा युवराज त्रैलोक्यवीरविक्रमशाहले हाम्रो मनपरि चल्न दिने छैनन् भन्ने राम्ररी परेको थियो । जंगबहादुरले नेपालामात्य हुनु भन्दा पहिले आफ्नो योग्यताले नेपालको हर एक प्रजाजन प्रधानमंत्री वा सेनापति हुन पाउथे । त्यस ठाँऊमा अंग्रेजपादानुबल्ले हत्या, विश्वासघात, कूटकर्म र षडयंत्र हरु द्वारा जङ्गबहादुरले प्रतिद्वन्दि शून्य भएर, विकृत मास्तष्कका राजा सुरेन्द्रबाट आफ्ना जन्म भरिएका लागी मंत्रित्वको, टेक्काको पंजापत्र गराएको भए पनि नेपालका भावी सम्राट बलेट महाराज र अन्य भारदा-रहरुले नया प्रधानमन्त्रीका अदला बदली मा विरोध मात्र हैनकि आव-श्यकता परे शस्त्रको समेत प्रयोग गर्नें छन् भन्ने कँवरखलकका राणा हरुलाई विश्वास थियो । त्यसै निमित्त धीरशम्सेरले जंगबहादुरको मृत्यु सम्बादलाई दवाई, कपटाचरणले बलेटमहाराजाको सवारी पथरघट्टा तिर चलाएको थियो । त्यहीं सुअौसरमा एक्कासी आफ्ना पल्टनले दरबार लाइ घेरेर पागल राजा सुरेन्द्र का संमुख आफ्ना चीरकमार्तनको पुकार गरी वहाँ बाट मिलेका ( आफ्ना सात भाइका धर्मपत्रपदरोल अनुसार ) कँवरखलकका तृतीय ठेकेदार मुखियार रणोद्दिपसिंहलाई नेपाला-

मात्यको र जंगबहादुरका जेठा छोरा जगतजंगलाई कम्पाउन्डर-इन-चीफ पदमा बहाल गराए र महाराजाधिराज बाट पजापत्र गराई आज उप्रान्त मैले रणोदिपसिंहलाई नेपालामात्य बहाल गरें भन्ने पत्र लेखाई, तासका खोलीमा लाहाका लालमोहरका साथ बन्द गरि अंग्रेज म्यायसराय्लाई पठाइ सके पछि निश्चिन्त भएका थिए। बर्जेट महा- त्रैलोक्यविक्रमशाह त्यसै दिनका प्रतीक्षामा थिए। धिराज सुरेन्द्रले जंगबहा- दुरलाई दिएको जन्मना बाहालीको पंजापत्र सनदको अवधी त्यसै दिन समाप्त भई महाराजधिराज बाट त्यस पछि आफना इच्छानु रुप प्राइमिनिष्टर बहाल गर्नें पूर्णतः अधिकार थियो। तेसैले धीरशम्सेरजे बर्जेटमहाराजलाई कपटले पथरघट्टा पठाई त्यो कार्य सम्पन्न गरेका थिए।

कूटकर्मा दूराकांक्षी धीरशम्सेरको मनोकांक्षा पनि सानु थिएन। तिन्का हृदयमा स्वयं नेपालामात्य हुने उत्कट अभिलाषा थियो। आफ्ना त्यस इच्छाका पूर्तिका निमित्त दाजू रणोदिपसिंहलाई मानु परे मानेमा कत्ति द्विविधा न मान्ने प्रकृतिका थिए। तर जंगबहादुर जीवित छदा तिन्का क्रूरकर्मा स्वभावले आतंकित नेपाली जनताले जंग- बहादुरलाई जत्ति सुकै मान्यता दिए पनि जंगबहादुरका मृत्युले त्यो भय दूर भएका बखत सबै भाइ भारदार जनताले एकचित्त भई विरोध गरेमा मुठ्ठी भरीका कँवरखल्कका राणाहरुका वंशबाट नै सत्ता जाने संभावना भई सकेको थियो। दोश्रा तिर जंगबहादुरका शेष सम्म नेपालको सर्वोच्च मान-सम्पदा भोग गरि आएका जंगबहादुर पुत्र जगतजङ्गहरुले आफ्ना पिता द्वारा आर्जित गरेको नपालामात्य पदको दावा गरेमा आफ्ना वंशमा समेत विरोध हुने सम्भावनाले निज धीरशम्सेर ले आफ्ना मनको दूराकांक्षालाई प्रगट गर्ने साहस गर्न सक्नेनन्। त्यसैले तिन्ले जंगबहादुरले आफना भाइहरुमा निर्धारित गरेको भाइ रोलक्रमले दाजु मध्ये बाँचेका र आफ्ना इसारामा चल्ने निसन्तानी र साँझा रणोदिपसिंहलाई नेपालामात्य पद तथा आफ्ना रोलक्रमका ठाँउमा जगतजंगलाई कम्पाउन्डर-इन-चीफ पदमा बहाली

गराएका थिए। त्यो कार्य यति छिटो तथा गुप्त हिसाबले गरिएको थियो कि भई सके पछि मात्र राजपुरुष वर्ग किंवा जनसाधारणले थाहा पाए।

जंगबहादुरको मृत्यु संवाद पाएर पथरघट्टा गएका बलेटमहाराज आधै मार्ग बाट नेपाल फर्के। नेपाल पुगी रणोदिपसिंह महामात्य र जंगतजग कम्पान्डर-इन-चीफ भएको देखि तिन्का क्रोधको सीमा रहेन। धीरशम्सेरका त्यस कपटाचरण र निरंकुशताले तिन्लाई मर्माहत तुल्यायो। त्यसैका उत्तेजनामा निजले सर्व प्रथम धीर शम्सेरको प्राणनाश गर्ने प्रतिज्ञा गरे। त्यस बेला सुब्बा होमनाथ उपाध्यायले परिस्थितिको परिचय दी, एक्लै त्यो कार्य न हुन सक्ने हुदाँ, पुरना भारदारहरुको सगठन गरी, मौकामा काम गरे सफलता पाइने छ, भनि बुझाई बलेटमहाराजको उद्वेगलाई शान्त गरेका थिए। त्यै दिन देखि धीरशम्सेरका प्राणनाशका निमित्त यउटा दलको संगठन हुन थाल्यो। चाँडै नै त्यस दलमा थापा गएडे बस्नेत बिष्ट र राजभंडारी खवास खलकका गैह पुराना भारदार संतानहरु संमिलित भए।

रणोदिपसिंहका नाँऊले अमात्यकार्य चलाउने धीरशम्सेरको तिनै चार मैहना भित्रै वास्तविक रूप देखिन थाल्यो। तिन्ले जंगबहादुरले प्राइमिनिष्टर पद त्याग गरि आफ्ना जीवनावधिलाई पाएको जागीर कास्की र लम्जुंग र पोखराको उत्तराधिकारी जंगबहादुर पुत्रजगतजंगहरुलाई न गराई त्यस जागीरलाई प्राइमिनिष्टरहरुको जागीर गराएको र बातबातमा जगतजंग प्रभृति जंगबहादुर इत्यादि जंगबहादुर पुत्रहरुलाई होच्याउन थालेका थिए। जगतजंग प्रभृतिले [illegible] त्यस कुराको प्रतिवाद गर्दा रणोदिपसिंहले केहि बोल्न गर्नन सकेकोले जगतजंग प्रभृति धीरशम्सेरबाट सशंकित हुन थालेका थिए। त्यसै बेला धीरशम्सेरका वास्तविक दुराकांक्षाको कुरा सुब्बा होमनाथले जगतजंगमा अवगत गरें। [illegible] गर्दा जगतजंग र जंगबहादुरका भाइ [illegible] प्राइमिनिष्टर प्रभृ-

बहादुरका छोरा वमविक्रम पनि वलेट महाराजाका नवसंगठित दलमा संमिलित भए ।

संगठन भयो, विचार स्थिर भयो, प्रतिज्ञा समेत भयो, तर नियतिलाई त्यो कुरा स्वीकार थिएन भन्नु पर्‍यो। कार्य साधनको दिन र तिथि निश्चय भईसके पछि एकाएक जंगतजंगले वरखी भरी रक्त पातमा लिप्त हुने असमर्थता प्रकट गरेकोले त्यो विचार त्यस वेला टरेको थियो ।

यसै बीच रणोदिपसिंह प्रधानमन्त्री भएका एघारौं महिनामा, अकस्मात् एक दिनका वेरामीले, नेपाल उद्धारव्रत वलेटमहाराजा त्रैलोक्य वीरविक्रमशाहको देहावसान भयो। निजको मृत्युमा धीरशम्सेर बाट वीष प्रयोग गरिएकोले भएको हो भन्ने सबैले सन्देह गरेका थिए। वलेट महाराजलाई सामान्य रुघाखोकिको ज्वर आएको थियो। त्यसै वेला धीरशमसेरले डाक्टरले पठाएको औषधि खान भनी कुनै औषधी ल्याएका थिए। जेठा महारानी बाट त्यो औषधि औंस ग्लासमा हाला टक्राउन न पाउदै त्यो ग्लास खसी फुटेको थियो। औषधिको ग्लास फुटेकोले "अपसकुन भयो, म औषधी खान्न" भनी वलेटमहाराजले भन्दा भन्दै पना पुनर्वार माहिला बडा महारानीले जोड गरी त्यो औषधि वलेट महाराजलाई सेवन गराइन्। औषधि घाँटीमा परे पछि वलेटमहाराजले बडा महारानी तिर फर्की 'लौ यत्तिकै रहेछ" भन्दा भन्दै वाक्य बन्द भई पल्टेका आधा घंटामा वहाँको मृत्यु भयो, भन्ने कुरा उदयपुर प्रवासकालमा स्वयं बडा महारानीले लेखकका पितालाई भनेको थियो। वलेटमहाराजका मृत्यु पछी नवगठित युवक दल विघटित भयो। तिन्का मृत्युका चार महिना पछि स्वयं धीरशंम्सेर कम्याउन्डर-इन-चीफ पदमा बहाल भए ।

## राजा पृथ्वी वीर विक्रमशाह

काल गरि त्रिचिन्न क। वलेटमहाराज त्रैलोक्यवीरविक्रमशाहका मृत्यु पछि

भाँदगाऊमा वृद्ध बंदी महाराजधिराज राजेन्द्रवीर विक्रमशाहको मृत्यु भयो। त्यस्का वर्ष दिन पुग्दानपुग्दै सम्वत् १९३७ सन् १८८१ मा महाराजधिराज सुरेन्द्रवीरविक्रमशाह पनि परलोक सिधारें। यस किसिमले राजासुरेन्द्रका देहावसान पछि राज्यासनको उत्तराधिकार त्रैलोक्यवीरविक्रमशाहका एकमात्र पांच वर्षे शिशु पुत्र युवराज पृथ्वीवीरविक्रमशाहले पाए।

त्यस किसिमले शिशु राजा पाएर धीरशम्सेरका प्रसन्नताको पारावार रहेन। श्री ५ प्रतापी पृथ्वीनारायणशाहका सातौं पुस्तामा श्री ५ वंश खलकमा वयस्क पुरुष मद्धे कोहि पनि बाँकी नरही एक मात्र दुधे बालख मालिक पाएकोले राजापृथ्वीनारायणशाहको जुत्ता उठाउने तथा उनका पुराले आफ्नो उदर पोषण गर्ने रामकृष्णकँवरका सन्तान जंगबहादुर र तिन्का उत्तराधिकारी कँवर खलकका राणाहरुले आफना पुस्तैनी खाई आएको नमकको सोझो गरि, शिशु मालिकलाई दरवारका परिधिमा पारी, अन्य भाइ भारदारहरुको दरवार बन्द गरी, देशका लूटको एकाधिपत्य वलियो तुल्याउने महान वीरता (?) गरेका थिए।

त्यस घटनाले भाइ चौतरिया साहेवज्यू र अन्य भारदारहरुका हृदयमा ठूलो आघात गरायो। तिन्का हृदयको प्रसुप्त अग्नि पुनः प्रज्वलित भयो। स्वर्गिय वलेट महाराजाले संगठित गरियेका नवयुवक भारदार मध्येका महात्मा भीमसेन थापाका नाती र माथवरसिंह थापाका पुत्र कर्णेल श्री विक्रमसिंह थापा, कर्णेल अमरविक्रमसिंहथापा, कर्णेल संसार विक्रम थापा, जंगबहादुरका साला सनकनन्दनसिंह लाहुरे टंडन खत्रीका पुत्र कर्णेल इन्द्रसिंह टंडनखत्री, वस्नेत काजी खलकका कर्णेल धीरमानसिंह वस्नेत, कर्णेल कुलमानसिहवस्नेत, गगनसिंह राजभंडारी खवास पुत्र कर्णेल छत्रध्वज राजभंडारी, पाण्डे काजीखलकका कर्णेल चन्द्रसिंह पाण्डे, मेजर संग्रामसूरविष्ट, खजान्चि शिवप्रसाद, सुब्बा टंकनाथ, सुब्बाहोमनाथ उपाध्याय खतिवडा प्रभृति राज्यका ५२ जना नवयुवक भारदारहरु शादजादा नरेन्द्रवीरविक्रमका नेतृत्वमा गोप्य संगठित भए तथा धीरशम्सेर

आदि कँवर खलकका राणाहरुको समूल नष्ट गर्ने कटिवद्ध भएका थिए। त्यस दलका उपनायक श्री विक्रम सिंह थापा थिए।

संयोगले त्यहि बिचमा नवयुवकहरुका कार्य साधनको अपूर्व अवसर पनि आइ परेको थियो। सन् १८८० सम्वत ११३६ सालमा रणोदिपसिंह तिर्थाटनलाई भारतवर्ष आएका थिए। संगठित युवकहरुले त्यो मौका सलाह र बीचार मैं बिताई दिए। फेरी सन् १८८१ सम्वत् १९३७ सालका पूष महिनामा रणोदिपसिंह शिकारका निमित्त तराइ तिर झरेका थिए। जगतजँगले पनी त्यसै बखत देव दर्शनार्थ श्रीक्षेत्र जगन्नाथपुरीको यात्रा गरे। त्यसै वर्षका माघि संक्रान्तिका पूर्व दिन आफ्ना आफ्ना सैन्य र भृत्य हरुका साथ बावन्न जना भारदारहरुले रात्रीमा एकका'स थापाथलिमा आक्रमण गरि धीरशम्सेर लाई मार्ने निश्चय गरे। धीर शम्सेरलाई मारेर, नेपालेश्वर श्री ५ पृथ्वी वीर विक्रमशाहका अभिभावक स्वरूप शाहजादा नरेन्द्र वीरविक्रमशाह बाट नेपालका शासन सुधारको घोषणा गरी, नेपालमा कुनै एक व्यक्तिविषेशको सत्ता हुने प्रथा हटाई, पुरानु चलनले योग्य मंत्री सेनापति र प्रजाजनका सहयोगले शासन कार्य चलाउने योजना बनाएको थियो। तर अन्तमा त्यो योजना पनि पूर्ण हुनु सकेन। त्यको मूखय दुई कारण थिए। प्रथम काल विलंब दोश्रो विश्वासघातकता। खवास वंश र थापा वंशको पुरानु शत्रुता थियो। त्यस नवयुवक दलमा श्री विक्रमसिंह थापाको प्रमुखता देखेर उत्तरध्वज राजभंडारी खवासलाई पोल्न थाल्यो। तिन्को त्यै क्षुद्र वंश द्वेषले गर्दा नेपाल नरेश, देश, जनता र थापा तथा खवास बंशका मुख्य शत्रु कँवर खलकका राणाहरुको नाश गर्ने महान उद्देश्यमा हरताल फेरि उत्तरध्वजले नवयुवक दलको सम्पूर्ण वृतान्त आद्योपान्त धीर शम्सेरलाई भनेका थिए।

नवयुवकहरुको संगठन तथा त्यसको विवरण सुनेर धीरशम्सेर अतिशय भीत र व्याकुल भए। तिन्ले तुरुन्त कँवर खलकका राणाहरुको

बैठक बोलाएर त्यो सबै कुरा वर्णन गरे। त्यस बैठकमा संगठनको क्रूरता पूर्वक दमन गर्ने निश्चय भयो। धीरशम्सेरले आफ्ना भतिजा बमविक्रमलाई त्यस दलका दमनको अहिभारा सुम्पे। बमविक्रमले पनि त्यहि दिन रात्रीमा एकासी ५२ जना भारदारहरूका घर घरमा घेरा हाली तिनी हरुलाई वंदी गरे। त्यहि दिन शाहजादा नरेन्द्र वीर विक्रम पनि महलमा नजर बन्द गरिएका थिए।

त्यस किसिमले यावत भारदार बन्दी भए वछि तिन्का न्यायको नाटक हुन थाल्यो। त्यस न्याय नाटकमा शाहजादा नरेन्द्र माथि शिशुराजा पृथ्वीवीरविक्रमलाई पदच्यूत गरी स्वयं नेपालेश्वर हुन चाहने आरोप लगाई देश निकाला तथा आजंम वंदी गरिने फैसला गरिएको थियो। श्री विक्रमसिंह थापा, संग्रामसूर विष्ट प्रभृति ४१ जनालाई गाथ गादि ताक्ने अभियोगमा पोडेका हातले जातिच्यूत गरी काटिने सजाय दिएको थियो। सुब्बा टंकनाथ र सुब्बा रामनाथ प्रमृति १० जना ब्राह्मण युवकहरुलाई गाथ गादि ताक्ने र शाहजादा नरेन्द्र व र विक्रमको सहयोग गर्ने आरोपमा मुडेर जातिच्यूत गरी आजन्म वंदी गरिने दंड दिइएको थियो। ३८ सालको प्रसिद्ध वर्ष यहि हो।

त्यस मुद्दामा मुख्य साक्षी उत्तरध्वज थिए। तिन्ले साक्षी दिएका दिन उत्तरध्वज वाट त्यस आयोजनको कुरा प्रकटभएको रहेछ भन्ने रहस्य बन्दो भारदारहरुले थाहा पाए। त्यस कुराले क्रोधित भएका संग्रामसूर विष्ट। स्वर्गस्थ बलेटमहाराजका पालामा भएको आयोजनमा जगतजंग वमविक्रमका साथ उत्तरध्वज खवास पनि थिए त्यसको सबै वृत्तान्त कर्णेल अमृतसिंहलाई पनि थाह छ भनी पुरानु रहस्यको उद्घाटन गरे। संग्रामसूर वाट पहिलो संगठन र आयोजनको विवरण सुन्ना साथ धीरशम्सेरले बमविक्रमलाई वंदी गरे। त्यस पछि कर्णेल अमृतसिंहको साक्षी लिइयो। कर्णेल अमृतसिंहले आफ्ना साक्षीमा पूर्व

संगठनको यावत् कुरा विस्तार साथ भनेर त्यसमा उत्तरध्वज, जगत्जंग, बमविक्रम प्रभृति संमिलित थिए, भन्ने कुरा बयान गरी श्री त्रैलोक्यवीर विक्रम र जगत्जंगका बीच चरको कार्य गरी सुब्बा होमनाथले ति दुवैको सहयोग गराएका थिए भन्ने कुरा पनि स्वीकार गर। त्यस पछि नजर बन्दी बमविक्रमको पनि विचार प्रारम्भ भयो। अन्त्यमा मुद्दाका फैसलामा शाहजादानरेन्द्र वीरविक्रमका साथ बमविक्रम पनि भारतमा अंग्रेजहरुका हात सुम्पिए। कँवरखलकका आफ्ना संधि अनुसार अंग्रेजीहरुले तिनीहरुलाई आजन्म चुनारका किल्लामा कैद गर्ने व्यवस्था गरेको थियो। नेपाली राजपुरुषले अंग्रेजी कैदखानाका बन्दी हुने यो पहिलो घटना थियो। श्रीक्षेत्र दर्शन गरी फर्कन लागेका जगत्जंगले पनि भारतका तात्कालिक वायसरायका आज्ञाले रोकिएर भारत मानै निर्वासित जीवन बिताउनु पर्‍यो। विश्वासघाती पोलाहा उत्तरध्वजको पद मान जागीर खोसई तिनीले आफ्नो शेष जीवन ढाक्रे भई बिताई पछि कोढ फुटी काशी आई मनु पर्‍यो।

श्री विक्रमसिंहथापा, अमरविक्रमथापा, संसारविक्रमथापा, संग्रामसूरसिंह, इन्द्रसिंह टंडन खत्री, चन्द्रसिंहपाण्डेहरुको कायरता पूर्ण निर्मम रीतले १८, १८ पटकका खुँडाको चोट गरी गर्धन छुट्याइएको थियो। ति बहादुर शहीदहरुले पनि आफ्ना गर्धनमा पर्ने प्रत्येक खुँडाको चोट लाई सहन गरी आफ्ना प्राणको धुकधुकी रहे सम्म "लौहान लौहान" भ दै विर गति प्राप्त गरेका थिए। सुब्बा होमनाथ उपाध्याय प्रभृति दस जना ब्राह्मण युवकहरु मुडिएर आजन्म कैद गरिए।

यस प्रकार श्री ५ नेपालेश्वरका अन्तिम वयस्क भाइ तथा अन्य भक्त भारदारहरुको समूल नष्ट गरी, शिशु राजालाई मुठीमा छोपी, अमात्य-पद प्रतिद्वन्दी जंगबहादुर र बमबहादुर दुवै भूत प्रधानामात्य पुत्र जगत्जंग र बमविक्रमलाई समेत निर्वासित गराई, धूर्तराज धीर-

शम्सेरले आफ्ना मार्गकंटक रणोद्दीपसिंहलाई दूर गरी नेपालमात्यपद अधिकृत गर्नमा केही बाधा बाँकी रहेको थिएन। तर विधि विडंबना विचित्र छ। धीरशम्सेरले आफ्नो दूराकांक्षा पूर्ण गर्न न पाउँदै, मांछाको हाड घाँटामा अड्की तिनको अपमृत्यु भयो। तिनले आफ्ना मरण कालमा आफ्ना त्यस अतृप्त आकांक्षालाई "जसको तरवार त्यसको दरबार भन्ने" उपदेशका साथ आफ्ना छोरा हरु सँग आफ्नो उद्देश्य पालन गर्ने आदेश दिएका थिए। सन् १८८४ सम्वत् १९ ० का कार्तिक महिनामा तिनको मृत्यु भयो। धीरशम्सेरका मृत्युका वेलामा तिनका १७ भाई छोरा बीर, खड्ग, रण, देव, चन्द्र, भीम, फत्य, ललित, जीत, युद्ध, डम्बर, पूर्ण, यदु, खम्ब, दुर्गा, शेर, हर्ष, नाऊँ गरेका सबै थिए।

धीरशम्सेर मरे पछि रणोद्दीपसिंहले आफ्ना सातै भाइ संतान भतिजाहरुलाई सम सन्मान इज्जत दिई राखेका थिए। तर पिताका आज्ञाकारी पुत्र दुराकांक्षी वीरशम्सेरहरु रणोद्दीपसिंह तथा अन्य दाजुभाइको समूल नष्ट गर्ने मौका खोजी बसेका थिए। धीरशम्सेरका मित्र तात्कालिक रेजिडेण्ट मिस्टर एच वाइली संग वीरशम्सेरको निकै घनिष्ठता देखिन थाल्यो। त्यसै कारणले वीरशम्सेरहरुका प्रति जंगबहादुरका पुत्र जीतजंग, रणवीरजंग हरुले अविश्वास गर्नथालेका र त्यो कुरा काका रणोद्दीपसिंहलाई भनी तिनलाई सचेत समेत् गरेका थिए। तर निशंतानी र सोझा रणोद्दीपसिंह जंगबहादुर पुत्रहरुका त्यस कुरालाई ठट्टामा उडाई उल्टो "मेरो सान्नानीका छोराहरुको तिमीहरु रीस मात्र गर्दछौ" भन्दथें।

यसै बीचमा सम्वत् १९४१।४२ सन् १८८५ मा भारत सरकारले रावलपिण्डीमा सैनिक म्यानोअर गर्ने आयोजना गरे। भारत सरकारले नेपाल सरकारलाई पनि सैनिक-शिक्षा प्रदर्शनार्थ आफ्नो सेना पठाउने निमंत्रण पठाएका थिए। त्यसै म्यानोअरका मा संमिलित हुन वीरशम्सेर खटिएका थिए। त्यस बेला तिनमा आ ज ४ पल्टन सुंपिएको थियो।

वीरशम्सेरले त्यस सुवर्ण औसरलाई किन गुमाउँथे। तिनले त्यसै दिन रात्रीमा तेल लगाई घोप्टो सुती रामनाम लेखि रहेका रणोद्दीपसिंहका समीप अंग्रेज सरकारको खरीता आएको खबर पुऱ्याए। सोझा रणोद्दीपसिंहले होला भनि त्यसै अवस्थामा खरीता हाजिर गर्नु हुकुम् दिए। हुकुम् भए पछि बलवान काजीका साथ एक एक गरी खड्गशम्सेर, डम्बरसम्सेर, चन्द्रशम्सेर र भीमशम्सेरहरु रणोद्दीपसिंहका सन्मुख पुगेका थिए। के हो भनि मुख उठाउन पनि न पाएका वृद्ध रणोद्दीपसिंहले आफ्ना प्यारा साल्नानी पुत्र खड्ग, डम्बर र चन्द्रका तीन रिवाल्वरको ३ गोली एकै पटक खाई (२२ नवम्बर १८८५ का दिन) ठहरै हुनु पऱ्यो। तेत्तिले पनि प्यारा भतिजाहरुको रीस मरेन र तिनीहरुले आफ्ना मरेका काकाका शवलाई लात ले हुत्याई भऱ्याङभरी लुंडमुंड खवाई दरबारको ढोका सम्म पुऱ्याएका थिए। यहाँ सम्म कि निस्संतानी हतभागी रणोद्दीपसिंहको अन्तिम संस्कार सम्म वीरशम्सेरले आफु वा आफ्ना दाजुभाइ सिपाही जागीरे कँवरहरु द्वारा समेत गर्न लगाएनन्। सुब्बा चन्द्रकान्त नाउँ गरेका कुनै एक बाहुनले तिन्को अन्तिम कृया गरेका थिए।

रणोद्दीपसिंह हत्याकाण्डमा वीरशम्सेरका सहायक स्वयं श्री ५ माहिला राजमाता, रणोद्दीपसिंहकी कान्छा बडा महारानी, रणोद्दीपसिंहबाट बडाकाजीको मान सम्म पाएका धर्मभक्त उपाध्याय, अर्दली कप्तान बलबहादुर कँवर तथा कट्वाल कर्णेलहरु थिए। हजुरिया कट्वाल कर्णेल र काजी धर्मभक्तउपाध्यायलाई १।१ लाख नगद दिने प्रलोभन दिई तिनीहरुलाई वीरशम्सेरले आफ्ना तिर मिलाएको थियो। पछि ती दुवै नमकहराम, वेइमानहरुको तानावाना च्यातो, रणोद्दीपसिंहले दिएको तिनीहरुको विर्ता खोसी देश निकाला गरिदिए। अर्दली कप्तान बलबहादुर कँवरले पनि जागीर खोसिई पछि मगन्ते भई हिंड्नु परेको थियो। आफ्नै स्वामीघातिनी रणोद्दीपसिंहकी कान्छा महारानीलाई मासिक १५०) खर्च दिई वीरशम्सेरले काशी पठाई तिनको समुचित सत्कार गरेको थियो।

खड्गशम्सेर तीन भाइ बाट रणोद्दिपसिंहको हत्या भएको इशारा पाउना साथ बाँकीका १४ जना भाइ वीरसम्सेर प्रभृति र तिनका ४ पल्टनले नेपालमा कोतपर्वको पुनरावृत्ति झन् भीषण रूपले सम्पादित गरेको थियो। त्यस कालरजनीमा धीरसम्सेर वाहेक छ भाइ कँवर-खलकका राणा सन्तानहरुका जुन निर्मम गीतले हत्या गरियो त्यो दृश्य पनि सन्सारका इतिहासका कुनै पृष्ठमा पाइने छैन। सम्भवतः त्यस दृश्यलाई देखेर प्रेतलोकमा बसेका जङ्गबहादुर किंवा धीरशम्सेरको आत्मा समेत मूर्छित भएको होला। त्यसै रात्रीमा ९ वर्ष लगायत ६० वर्षका बुढा कँवरखलकका राणाहरुको कत्लेआमको मार्शल हुकुम् जारी भएको थियो। कोई आफ्ना घरमा सुतेका वेला काटिए, कोई आफ्ना स्वास्नीका फरिया बाट तानिएर काटिये। यहाँ सम्म कि आमाका काखबाट तानिएर बालखहरु समेत रेटिएका थिए! अगि कँवरखलकका राणा पदवी प्रवर्तक जङ्गबहादुर र तिनका छ भाइले आफ्ना ३ पलटन सेनाका तरवार कोतभूमि प्राङ्गणमा रक्तप्लावित गरी गैह्र कँवरका भारदारहरुका गर्धनमा चम्केको थियो। तर जंगबहादुरकँवरका साथ कोतमा निहत्ता भारदार-हरुलाई काट्ने ७ भाइ मध्येका एक भाइ धीरशम्सेरका छोरा वीर-शम्सेरप्रभृति १६ भाइ र तिनका ४ पलटनले आफ्नो तरवारको चमत्कारले नित्सन्तानी काका र आफ्नै कँवरखलकका राणा दाजू भाइहरुको गर्धन नापी भएभरका कँवर खलकका राणाहरूका प्रत्येक घरमा रुधिरको खोलो बगाएको थियो। अगि ३८ साल पर्वमा भारत गएका बखत भारत-मै रोकिएका जगतजंग, धीरशम्सेरको मृत्यु पछि नेपाल फर्कर मनोहरामा बसेका थिए। तिनी पनि त्यसै विशुद्ध वंश हत्याकांड यज्ञमा फौजसिंह कर्णेलका गोलीले मारिए। तिनका १४ १५ वर्षे पुत्र नातीजनेले बाबूलाई गोली खाई मरेको देखि पराल भित्र पसि लुकेका थिए। महान् वीर वीरशम्सेरका मानिसहरुले त्यस बालखलाई समेत् पराल बाट तानी दुई टुक्रा गराएका थिए। यहाँ यो विचार राख्नु होस्, कि कुनै

प्रकारले कोतमा कँवरखलकका राणाहरुको एक थोपो रगत खसेको थिएन, त्यै प्रकारले ४२ सालको त्यस विशुद्ध वंश हत्याकांड यज्ञमा गैर कँवरखलकको कुनै मानिसको एक थोपो रगत खसेको थिएन, वीरशम्सेर तथा तिनका भाई हरुले पनि त्यस हत्याकाण्डमा दोषी निर्दोषी बालख वृद्धको केही विचार राखेनन् ।

मामा माथवरसिंहका अन्नले प्रतिपालित, काजी गगनसिंहका कृपाले पद्‌थ र अनेक भारदारहरु बाट उपकृत भएका जंगबहादुरले आफ्ना क्षुद्र स्वार्थले आफ्ना ती मान्यहरुका प्रति गरेको कार्य इतिहासको सर्वश्रेष्ठ कायरतापूर्ण घटना हो । त्यस किसिमले वीरशम्सेरले नेपालको मुख्तियारी आर्जन लोभले आफ्ना दाजु भाइहरु र आफ्ना पिता तुल्य ममता गर्ने निस्संतानी वृद्ध काकालाई मारेकोले कँवर खलकका राणाहरुका इतिहास बाट यस जाति भित्र वीरोचित गुणको सर्वथा अभाव देखिन्छ ।

वंशहत्याकांड यज्ञका आचार्य वीरशम्सेर आफ्ना त्यस यज्ञफल वरदायिनी तत्कालीन श्री ५ राजमाता माहिला बडा महारानीका मदिरमा भक्तिको अवगत हुन पुगिसकेका थिए । धन्य हो ऊंची लोल-जिह्व दुराकाँक्षी सहोदराले ( जंगबहादुरकी पुत्री माहिला महारानी) सहोदरहरुका जंगबहादुरका पुत्रहरु जगत्‌जंग प्रभृति) हत्यागेके समेत वरदायिनी हुनु तिम्रा कृपाले सहज र सम्भव रहेछ ।

त्यस वंश हत्याकाण्ड यज्ञ बाट जीतजंग, रणवीरजंग, पद्मजंग, गगनरसिंह र अमरजंगहरुले आफ्नो धन सर्वस्व छोडी एक हातमा बोतल र एक हातमा गिलास लिएर लैन पर्सी लैन सेनाका संरक्षणमा भारत सीमा सम्म पुगाइएका थिए । खड्गशम्सेर तिनीहरु हाम्रा सपुर्द गरिदेऊ भन्न स्वयं रेजीडेण्ट कहाँ गएका थिए । त्यसमा रेफ्यूजी ( शरणागत ) लाई हामी सुपुर्द गर्दैनौं भन्ने जवाब मिलेको थियो त्रैलोक्यवीरविक्रम कि जेठा बडामहारानीले पनी दरबार छाडि भागी लैन संरक्षणमा भारतवर्ष तिर

आउनु परेको थियो। त्यस किसीमले आफ्ना कथितमदति प्रचंड भुजदंडबलले कोतपर्व जस्तो नृशंस हत्याकाण्ड गराउने जंगबहादुर र तिनका भाइहरुले त्यस हत्याकांडको प्रतिफलमा मदति प्रचंड भुजदंडादि बलले आफ्नै भतीजा वीरशम्सेर तथा तिनका भाइहरुका हात बाट पाई पाई चुकी पाएका थिए। जंगबहादुरले कृत्याकृत्यको विचार न राखी कमाएको सात ः नार भरिको अरबौं रुपया र रत्नकोष हरु पनि तिनका छोरा संतानले भोग्न न पाई आफुले चलाएको उज्वल आदर्शानुयायी भतीजाहरु द्वारा लुटिनु पर्‍यो। यस प्रकारले नेपालको वर्तमान स्वयंभू मुख्तियारी पद स्थापक जंगबहादुर प्रभृति कँवर खलकका ६ भाइ संतानको नेपालमा अस्तित्व सम्म न राखी तिनका दोश्रा पुस्तामा वीरशम्सेर वंश रक्तरंजित कँवरखलकका चौथा प्रधानासनमा बहाल भए। श्री ५ माहिला महारानीका प्रियपात्र वीरशम्सेरलाई बालक महाराजाधिराज पृथ्वीवीरविक्रम बाट आफ्ना बहालीको पंजापत्र र महाराजाधिराज बाट 'मैले आज देखि नेपालामात्य पदमा वीरशम्सेर लाई बहाल गरे" भन्ने बेहोराको पत्र लेखाई आफ्ना प्रभू अंग्रेज वायसराय काहाँ पठाउन केही अडचन रहेन।

यता भारतवर्षमा लघारिएका जंगबहादुरहरु ६ भाइका पुत्र संतानहरुले भारतवर्षका अंग्रेज वायसराय र विलायतका ५ ल्रियामेंट सम्म आफ्ना माथ गरिएका अन्यायको अरण्यरोदन गरेका थिए। त्यसका निमित्त तिनीहरुले प्रभावशाली भारतीय राजाहरु संग पनि अपील गरेका थियो। तर त्यस प्रयत्न बाट केही भएन। श्री ५ त्रैलोक्यवीरविक्रमशाह कि बडा महारानीले पनि तात्कालिक वायसरायका समीप आफ्ना प्रति भएका अन्याय तथा आफ्ना भरणपोषणलाई आवेदन पत्र पठाएकी थिइन्। वायसरायले त्यो आवेदनपत्र लाई बृटिस रेजिडेंट मार्फत वीरशम्सेरका समीप पुर्‍याएको थियो। त्यसका जवाबमा वीरशम्सेरले "श्री ५ बडा राजमातालाई ५०) महिना भत्ता दिन सकिन्छ" भनि लेखेका छ, भनि महारानीलाई वायसरायको जवाब मिलेको थियो भन्ने कुरा विज्ञियहरु

डिग्वे ले आफ्ना 1857 A Friend in need 1887 Friendship is Forgotten मा लेखेको छ। जुन ठाउँमा नेपालका धिराजका महलका घाईकेटीहरु १००) ५०) महिनामा पाउँछन्, त्यस ठाउँमा आफ्ना अन्नदातालाई त्यस्ता किसिमले हेय गर्नु नमकहराम कँवर खलकका राणाहरुको नमकहरामियतको यो पनि यौटा उत्कट नमूना हो।

त्यस बेला महाराजाधिराजको उमेर केवल ९ वर्षको थियो। सुयोग्य पिता धीरशम्सेरका पदचिन्हमा हिंड्ने योग्यतम पुत्र वीरशम्सेरले एक खुड्किलो अझ उन्नति गरे। जुन स्थानमा बाबूले ५ वर्षे शिशु राजालाई आफ्ना हातले ढाकी ठाँकेदारी मुख्तियारी चलन चलाउने नीचताको श्रीगणेश गरेका थि', त्यस ठाउँमा श्री ५ वंशका जुत्ता उठाउने र पुरा खाने रामकृष्णकँवरका महान् संतान वीरशम्सेरले ९ वर्षे राजा समेत तिनकी राजमातालाई आफ्ना दरबारले ढाकी पट्टराजत्व प्राप्त गर्न, वंशानुक्रमिक खाइ आएका नमकको सोझो चिताउने आदर्शको स्तरलाई यति उचालेका थिए कि नीचता र समाजद्रोहिताले पनि मुख लुकाउनु परेको थियो। कँवरखलकका आदर्श महापुरुष जंगबहादुरले खडा गरेको त्यो अपूर्व आदर्श आज खलकमा प्रच्छन्नताले चलि रहेको देखिन्छ।

त्यस बेला सम्बत १९४२ का पर्व आतंकले भागेर लैन पस्ने र लैन सैन्यका संरक्षणमा भारत सरहदमा पुऱ्याइएकी स्वर्गीय बलेट महाराजकी श्री ५ जेठा बडामहारानी कलकत्ता गई बसेकी थिइन्। तिनै ताक कुनै एक खन्नाले निज महारानीको यावत् द्रव्य ठगेर लिएकोले बडा महारानीले सुब्बा होमनाथ उपाध्यायलाई सहायतार्थ कलकत्ता बोलाई पठाइन्। स्वामीभक्त सुब्बा हेमनाथले पनि तुरन्त कलकत्ता पुगी महारानीलाई आश्वासन दिई उदयपुर राज्यमा गएर महारानाका निमित्त उदयपुर दरबार बाट राजोचित मर्यादा पूर्वक राख्ने प्रबन्ध तथा बारह हजार रुपया वार्षिक हात खर्च पाउने बंदोबस्त मिलाई श्री ५ जेठा महारानीको

सवारी उदयपुर पुऱ्याएको थियो । उदयपुरका तात्कालिक महान वंशाभिमानी महाराणा फतेहसिंहले आफ्ना भैयाद नरेशका नातामा भाउजू पर्नें महारानीको ठुलो सन्मान गरेका थिए । स्वयं महाराणा बराबर श्री ५ महारानीको दर्शन गर्न जान्थे । जुन महाराणाले लार्ड कर्जनका दिल्लीदरवारमा संमिलित हुनमा आफ्नो मान हानि संभेर त्यस दरबारमा उपस्थित सम्म भएका थिएनन् तिनै महाराणा फतेहसिंहले जेठा महारानीका संमुख जाँदा सर्वदा निरस्त्र तथा नाङ्गो गोडाले हाजोर भई अत्यन्त नम्रतापूर्वक निहुरेर ३ पटक सलाम गरी फर्शमा वीरासनले बस्ने गरेकाथिए । भारतको १३ सय वर्ष देखिको स्वतन्त्र तथा प्रतिष्ठित नरेशका नातामा भाउजू पर्नें भैयाद महारानीका प्रति गरेको व्यवहार तथा त्यसका तुलनामा आफ्ना यथार्थ स्वामी तथा स्वामिन हरुका प्रति गरिने कँवरखलकका राणाहरुको कार्य कलाप र आफ्ना अन्नदाता तीनै स्वामिनीलाई वीरशम्सेरले ५०) भत्ता दिने प्रस्ताव र त्यस ठाउँ अन्य नरेशले १०००) महिना हात खर्च दिनाका साथ अरु खर्च वहन गरेको मा पाठकहरुले विचार गरुन् । यस्ता प्रकार आफ्नी स्वामिनीश्री ५ जेठा महारानीको उचित प्रबन्ध गराई सुब्बा होमनाथ उपाध्याय काशी फर्केर आए ।

यता वीरशम्सेरले नेपालामात्य पदमा बहाल भएका दोश्रा वर्ष १९४४ सालमा पितृघाती खड्गशम्सेर लाई पनि त्यस पद लालसाले कुतकुत्याउन लाग्या । तिनी त्यस पदको आर्जन कर्ता एकमात्र आफुलाई संझन्थे । आफ्ना आदर्श खलक र दाजुका चरित्र गुणमा खड्गशम्सेर एक पाइला अगाडि नै हुन चाहन्थे । आफ्नु पद लाल्सा पुर्तीका निमित्त तिनले पनि जंगबहादुरका अर्की पुत्री आफ्नै वैरी कान्छीमैयाको फरिया समाते को थियो ।

४२ सालको वंश हत्याकांडमा सफल भएका वीरशम्सेरले जंगबहादुरहरुका ६ भाइ कँवरखलकको यावत् ७ इनारको धन एकै गुट भुक्त्याएका थिए । त्यसकुराले खड्गशम्सेरले चन्द्रशम्सेरहरु भाइ सन्तोमा

...लाई नेवारहरुको सिंभूक्तको पूर्णहुंतमा उपस्थित भएका खड्ग ...शम्सेरलाई तिहीं पाताकसा भपाउने षडयंत्र गरेको थियो। सबै कुरा ...लाई चन्द्रशम्सेर, वीरशम्सेरलाई लिन नारान्हिटी दरबार आएका थिए। ...सिंह कर्णेलले आफ्ना चर हरु द्वारा त्यो षडयंत्र थाहा पाई वीर-शम्सेर नारान्हिटी दरबार बाट निस्कन लागेका बेलामा तिनीलाई रोकी चन्द्र शम्सेरलाई तिहीं थुन्न लगाएका थिए। तुरन्त नै बिजुली गारदले सिंभू ...दल समेत खड्गशम्सेरलाई बंदी गरी नारान्हिटी दर्वार ल्याए। त्यसबेला ...दरबारमा आएका कान्छी मैयासाहेबका पट्टुका बाट रिव ल्वर खसेको ... तिनी पनि षडयंत्रमा सामिल भएको प्रमाण पुग्न गयो। त्यसै रात खड्ग-शम्सेर पाल्पा र कान्छीमैयासाहेब काशी पठाइए। चन्द्रशम्सेर पनि ...मरिन मइसकेका थिए तर मातृप्रेमि देवशम्सेरले वीरशम्सेरमा बिन्ती ...री चन्द्रशम्सेरको कसूर माफ गराएकोले चन्द्रशम्सेरले मुक्ति पाए। ...षडयंत्रमा पं० काशीनाथ आचार्यदिक्षित पनि सम्मिलित भएका ...रापमा षपिएका थिए। तर तिनी पश्चिम पाँचमाने सम्म पुगे पछि ...हरिनाथ ढुगानाले आफ्नो भानिज भनि बिन्ती गरी तिनको समेत ...क्त गराएका थिए। यो घटना सन् १८८७ को हो। पछि चन्द्रशम्सेर ...पाल्पामा पाल्पा तथा स्यमका अर्थानस्थ खजानाहरुको जम्मै रुपिया आसा-...खड्गशम्सेरले भागी सागर सी. पी. मा आई आफ्नो शेष निर्वासित ...जीवन बिताएका थिए। २८ दिसेम्बर १९२१ मा काशीमा खड्ग शम्सेरको देहावसान भयो।

त्यस बिचमा सम्वत् १९४१।४२ सन् ८८५ मा जगबहादुरका निर्वासित पुत्र रणवीरजंग प्रभृति र ३६ साल पर्वका मुख्य होमनाथ उपाध्याय प्रभृतिले नेपाल तराईका हनुमाननगर जलेश्वर र कलेया बरेवा मा थ आक्रमण गरी त्यहाँको माल कचहरी लुटेका थिए। मु० । होमनाथ उपाध्यायको ...गर्ने अगाडि सरेको ; मानको मुख्य गोरखबहादुरकैन ... होमनाथका हातको गोला खाई मर्नु पर्‍यो। स्वयं रणवीर-

जङ्ग रणक्षेत्रमा नपुगेकोले कर्णेल कुलचक्रमराणाका नेतृत्वमा आएर नेपाली सेनालाई मिलाउन न सक्दा तिनीहरुले त्यस आक्रमणमा असफल भै फर्कनु परेकोथियो। त्यसै सालका फरवरी महिनामा लार्ड डफरिन सँग भेट्न वीरशम्सेर भारतवर्ष आएका थिए। त्यस वेला तिन्को काशीयात्रा र नैं समेत कार्यक्रम बनेको थियो। वीरशम्सेरका त्यस कार्यक्रमको समाचार ले निर्वासित रणवीरजङ्ग. सुब्बा होमनाथ प्रभृतिलाई एउटा अर्को मौका हात लाग्यो। तिनीहरले वीरशंसेर काशी आएमा गंगास्नान अवश्य गर्नेछन्, त्यसै वेला गोताखोर मानिसका सहायताले तिनको गंगा भित्र बाट गोडा तानी गंगासमाधि गराउने कार्यक्रम बनाएको थियो। अमरजङ्ग बाट आफ्ना त्यस प्राणनाशको समाचार पाएर प्रचंड भुजदंड युक्त वीरशम्सेरले घोडाको डाकवाट भागेर कलकत्ता बाट नेपाल पुग्नु परेको थियो।

सन् १८०९ का द जार्दाँजी एसियामा इग्लैन्ड फ्रांस र रूस परस्पर तीव्र स्पर्धा चालि रहेको थियो, नेपालमा फ्रांसले आफ्नो प्रभाव बढाउने उपक्रम गरेको थियो। भारतीय इतिहासका र संस्कृत साहित्य विख्यात् धुरंधर विद्वान पंडित मुनशियोर सिलवनलेवीसाहब १८९७ मा नेपाल आएका थिए। लेवीको मधुर स्वभाव र भद्रतापूर्ण व्यवहारले फ्रांसीसीहरुका प्रति नेपाली हरुको सन्मान र भाव बढेको थियो। नेपालमा लेवी साहबको उपस्थिती अंग्रेज लाई रुचिकर लागेको थिएन तथा तिनीहरु निरन्तर तिन्का सशंकित रहन्थे। जब सम्म लेवि साहब नेपलमा थिए अंग्रेज नेपाल सँग रुष्टिएका थिए।

यस प्रकार आफना प्रचंड भुजदंडशक्तिले प्राप्त गरेको पदमा वीरशम्सेर १६ वर्ष सम्म बहाल रहे। इनले आफ्ना भित्रैबाट धर्मजात पुत्र चन्द्रशम्सेर, रुद्रशम्सेर, तेजशम्सेर र प्रतापशम्सेर लाई पनि नेपालमा रोलक्रमको सदस्यता दिएका थिए। पहिले

हरुको पानी चल्दैनथ्यो, वीरसम्सेरले कौखोला राखे देखि तिनका आफ्ले कौहरुको पानी चलेको हो। इनले नेपाल राज्यकोषको करोडौं रुपिया खर्च गरेर आफ्ना वासगृह नारायणहिटी दरबार र लालदरवार, पुत्रहरुका निमित्त पनि ४।५ ओटा दरबार बनाएका थिए। इनले जंगबहादुरले जम्मा गरिराखेको धन, नेपाल राज्यको यावत् आय लूटेर अन्दाजी ८०।९० करोड रुपिया नगद र ३०,४० करोडको जवाहिरात जम्मा गरेका थिए। जङ्गबहादुरले आफ्नो लूटको धन नेपालमा राख्ने मूर्खता लाई इनले दोहऱ्याएनन्। यिनैका पाला देखि कँवरखलकका स्वयंभू ठीकेदार मुख्तयारहरुको विदेशी बैंकहरुमा खाता खुलेको हो। इनैका पाला देखि नेपालको राजस्व आय अविछिन्न गतले आज ५५ वर्ष देखि प्रत्येक कँवरखलकका मुख्तियारहरुका नाउँमा विदेशी बैंकहरुमा जम्मा हुँदो छ। नेपालमा ईवानाइकेट्य क्स चनकस ट्याक्स साघुँ प्रथा, सिगरेट ट्याक्स, फेनार ट्याक्स, चर्सा ट्याक्स वसूलीको चलन वीरशम्सेरका शासन व्यवस्थाका प्रतीक हुन्।

फागुन मैन्हामा वीरशम्सेरको मृत्यु भयो। इनले पनि जंगबहादुरले जस्तै धिराजकुलमा सम्बन्ध गरे सरी, धिराज पृथ्वीवीरविक्रमको पहिलो विवाह पजाबी राजपूतका दुइ कन्या सँग भएको छदाँछँदै आफ्नी दुई कन्याको विवाह समेत् महाराजाधिराज सँग गराएका थिए। त्यस वैवाहिक सम्बन्धव्यवहारमा पनि वीरशम्सेरले आफ्नो नाक घुसाउन छाडेनन्। इनले माहिला बडामहारानीलाई धिराजका सहवासमा जाने समेत रोक लगाएका थिए। तिनलाई आफ्नी पुत्री साहिँला बडा महारानी र कान्छा बडा महारानीका गर्भबाट भावी नेपाल सम्राट् पैदा गराउने उत्कट अभिलाषा थियो। तर विधाताका विधानमा ता पजाछाप सनदबल चल्न सकेनथ्यो। रोकछेक गर्दा गर्दै पनि श्री ५ माहिला बडा महारानीका गर्भबाट वर्तमान महाराजाधिराजको जन्म भएको हो।

सम्वत् १९५१ सन् ८९६ मा नेपालको निमंत्रणा पाई सैनिक मा नोअर हेर्न तात्कालिक भारतका कम्यान्डर-इन-चीफ लार्ड रावर्ट्स नेपाल गएका थिए। तिनी अद्वितीय १८ वर्षीय सुन्दर महाराजाधि राज पृथ्वीवीरविक्रमशाहको अंग्रेजी भाषाको पाण्डित्य देखि निकै प्रभावित भएका थिए। तिनले भारतीय सैनिक पदबाट अवकास गरी इङ्गलैंड फर्केर आफ्ना भारत प्रवास कालको वर्णनमा नेपालका महाराजाधिराज पृथ्वीवीरविक्रमशाहको निकै प्रशस्ति गरी नेपाल नरेश संसारका इनेगिनेका सुन्दर युवकहरु मध्येका एउटा छन्, तथा तिन्को अंग्रेजी भाषा ज्ञान तथा संभाषणको धारा अद्वितीय छ" भनि भनेका छन्।

सम्वत् १९५५ सन् १८९९ मा लार्ड कर्जन राजनीतिक क्षेत्र रुपमा वायसराय भई भारत आएका थिए। तिनले भारत आएर भारतीय राज्यहरुका राजनीतिमा निकै उलटफेर गरे। कर्जनको मुख्य नीति भारतीय राजाहरुको यत्किंचित् रहेको सत्व समेत अपहरण गर्न त्यसलाई भारत सम्राट्का सार्वभौम शक्तिमा विकेन्द्रित गर्ने थियो। आफ्ना त्यसै नीतिले कर्जनले आफुलाई तिन्ताक सम्म सर्वतंत्र स्वतंत्र संभन्ने हैदरावादका निजामको दपदलन गरी हैदरावादको बरार प्रान्त बलजफतले पट्टा लेखाई आफ्ना अधीन गरेका थिए। त्यसै दिन देखि हैदरावाद भारत सरकारको मांडलिक राज्य हो भनि जाहेर भयो। त्यसै किसिमले भारतवर्षका मैसूर, वडोदा, ग्वालियर प्रभृति देशी राज्यहरुलाई पनि कर्जनले सर्वथा माण्डलिक राज्य तुल्याई तिनीहरुको नाउँ मात्रको स्वतंत्र सत्तालाई अपहरण गरेका थिए। त्यसै दिन देखि भारतीय देशी राजाहरुले आफ्ना प्रत्येक कार्यको स्वीकृति भारतीय वायसराय संग लिनु पर्ने भएको थियो।

लार्ड कर्जनले आफ्नो त्यै नीति नेपालमा पनि चरितार्थ गर्न खोजेको कुराले वीरशम्सेर लाई निकै रुचाएको थियो। जङ्गबहादुर देखि प्रतिष्ठित प्रत्येक कँवरखलकका नेपालमाथिको भारतवर्षमा आफ्का

...राय आफ्ना महाँप्रभूहरुको दर्शन गर्न आउनु पर्दथ्यो। सम्वत् १९५७ ...न् १९०१ का पूष मैन्हामा वीरशम्सेरले कर्जनलाई भेट्न भारत आउने ...क्रम बनाए। वीरशम्सेर नेपाल बाट हडो कटहर वन सम्म आई ...यात्रालाई स्पेशल ट्रेन सम्म आइसकेको थिए। त्यसै बेला ...लिक नेपालका रेजिडेन्ट एच. वाइलीले कर्जनको तार वीरशम्सेर-...ई सुनाए। कर्जनका त्यस तारमा "नेपालामात्य वीरशम्सेरले नेपाल ...का अम्बेसडर रूपले आउन पाउँदैनन्, तिनले भारतमा इन्त्वाय-...मा आउनु पर्नेछ, तिनलाई भारतमा १५ तोपको सलामी पाइने ..." भन्ने लेखेको थियो। त्यस कुराले वीरशम्सेरले त्यस बेला झाडा ...को बहाना गरी कलकत्तायात्राको कार्यक्रमलाई स्थगित गरी नेपाल फर्की ...थिए। तर रेजिडेंट वायलीसाहबले वीरशम्सेरका मनोभावलाई बुझी "...वेट विजिट" ले "कलकत्ता गई र यहाँ पुगी अरु कुरा मिलाउने छौं" भन्ने ...ाए पछि वीरशम्सेर कलकत्ता पुगेका थिए। कलकत्तामा पदको कुरो र ...मीका विषयमा निकै विचार विमर्श भयो। त्यस विचार विमर्शमा ...ले जगबहादुरका पाला देखि नेपालराज्यकुनै शक्ति मानिएको छैन, तेसैले ...य सानु राज्यका प्रतिनिधिलाई हामीले अम्बेसडर, कसरी मान्नु, यसकु-...तिमी स्वयं विचार गर भनी भनेका थिए। अन्तमा वीरशम्सेरले ...नो १६ तोपको सलामी कुनै प्रकार थाम्न लगाई इन्त्वायरूपमा ...जिट गर्न स्वीकार गर्नु परेको थियो।

वीरशम्सेरल। त्यस यात्रामा कर्जनले काठमांडू आउने र महाराज-...ज सँग प्राइवेट कुरा गर्न पाऊँ भन्ने विचार प्रकट गरेका थिए। कर्जनका ...विचारले वीरशम्सेरको सातोपुत्लो गएको थियो। नेपाल पुगी ...नरेश र भाइ भारदारहरूको सल्लाहले जस्तो होला लेखनेछु भनी ...शम्सेर नेपाल फर्कें। यो कुरा प्रेसका रिपोर्टरहरु बाटको छिपे रहेन। ...पोर्टर बाट खबर पाई त्यसै मितीको "अमृतबाजार पत्रिका" का ...कीय कालममा "स्वतंत्र देशमाथिको हस्तक्षेपको साजिस" भन्ने

हेडिंगको लेख छापिएको थियो। त्यसमा नेपालको उपरोक्त कुराको प्रचार र समालोचना थियो।" त्यसका लागी भारत सरकार बाट कैफियत मागिएका मा पत्रिका सम्पादकले त्यस कल्पनाको मैले रचना देखेको थिएँ भनी क्षमा मागेर बाँचेका थिए" भन्ने कुरा चम्पारन जिल्लाका पुराना राष्ट्रीयकार्य तथा कांग्रेसका नेता श्री विभूति मिश्रजीले लेखकलाई भनेको हो। वीरशम्सेर नेपाल पुगे पछि निकै दिन सम्म कर्जन र वीरशम्सेरका पत्रको जावत आवत लागेको थियो; वीरशम्सेरले पहिले कर्जनलाई नेपाल आउने कुरामा "नेपाली जनता गोरा जाति विरोधी हुन्, तिनीहरू बाट तिम्रो ज्यान सम्मको खतरा हुने संभावनाले म तिमीलाई नेपाल न आऊ भन्ने सलाह दिन्छु" भनी लेखि पठाएका थिए। त्यसमा कर्जनले "म मेरा ज्यानको स्वयं रक्षाको प्रबन्ध मिलाई आउनेछु, त्यसमा तिमीहरूले चिन्ता लिनु पर्दैन, यदि त्यस्तो भयो भने पनि नेपाल सरकार माथि त्यसको दायित्व रहने छैन" भन्ने कुरा लेखेका थिए। कर्जनका त्यस पत्रका उत्तरमा वीरशंसेरले "तिमी वृटिस सम्राट्का वायसराय हुनाले तिमीलाई नेपाल नरेश सँग कस्ता शीटको क्रममा कता राख्ने र तिम्रो रिटर्न भिजिटमा नेपाल नरेशले कसरी भाग लिने, इत्यादि कुराको झंझट हुनाले तिमीलाई नेपाल बोलाउन सकिएन" भन्ने जवाब दिएका थिए। अन्तमा कर्जनले "म वायसरायका रूपमा न आई प्राइवेट रूपमा आउँछु। मेरो संमान सत्कार या पद शीट क्रमका निमित्त कुनै प्रकारको चिन्ता लिनु पर्दैन, मलाई महाराजाधिराजले रिटर्नभिजिट समेत दिनु पर्दैन, म फगत महाराजधिराज सँग प्राइभेट रूपले भेट गर्न चाहन्छु" भनी लेखेका थिए। त्यसका उत्तरमा वीरशम्सेरले "तिमीले नेपाल आएकोमा मेरो व्यक्तिगत हानी हुने हुनाले तिम्रो नेपाल यात्रालाई मैले मंजुर न गरेको हो" भनी प्रार्थना गरी त्यो कुरा थामे। त्यस पछि कर्जनले 'त्यसो भए नेपाल तराईमा म शिकार खेल्न चाहन्छु' भनी लेखि पठाएकोमा वीरशम्सेरले त्यसलाई सहर्ष मंजुर गरी कर्जनलाई

सरकार खेलाई प्रसन्न पारी आफ्नो ज्यान जोगाएका थिए' भन्ने कुरा पुष्पदेवीप्रसाद सापकोटाले लोखकलाई भनेको हो।

लर्ड कर्जनको नेपाल प्रवेश गर्ने अभिसंधिमा ठूलो गूढार्थ थियो। उसले नेपालका दलाल कँवरखलकका प्राइमिनिष्टरहरु सितको त्यो परिवर्तित प्रथाको अन्त गरी प्रत्यक्ष नेपालका महाराजाधिराज संग सरकारको सम्पर्क स्थापित गर्ने विचारधारा छिपेको थियो। उनका त्यस अभिप्रायलाई कँवरखलकका ठेकेदार मुखियारहरुले बुझन सकेनन्। त्यसै निमित्त कर्जनको त्यत्रो आग्रहलाई व.रश.से.ले स्वीकार गर्ने अन्तमा लाचार भै "मेरो व्यक्तिगत हानि हुने हुनाले" भनी प्रार्थना गरेको हुनाले त्यसवेला त्यो कुरा त्यसै रुकेको थियो।

कर्जनले पछि १९०२ मा "तिब्बत मिसन" का नाउँले तिब्बत माथि गरेको आक्रमण तथा तिब्बतमा अधिकार समेत गरेको थियो। त्यस कुराले अन्तर्राष्ट्रीयता वायुमंडल वृटेन विरोधी भई चीन र रुसले प्रत्यक्षतः त्यसको विरोध गरेका थिए। त्यस परिस्थितीमा वृटिश पार्लियामेंट बाट "तिब्बत छाडिदिनु" भन्ने हुकुम् पाएर उसले तिब्बत बाट अंग्रेजी फौज हटाउनु परेको थियो। त्यसै बेला कर्जनलाई वृटिस पार्लियामेंटको हुकुम् विना तिमीले आफ्ना मनले नेपालमा कुनै नजा कार्य न गर्नु भन्ने हिदायत आएकोले कर्जनको नेपालाभियानको कुरा रुकेको हो।

काठमाण्डूमा जलकलको प्रबन्ध घन्टाघर र समस्त तराई प्रान्तको नाउँ मात्रका अंग्रेजी दवाईखाना खोल्ने दया वीरशम्सेरले गरेका थिए। इनलाइ अंग्रेज तथा चीन सरकार बाट अनेकानेक पदवी मिलेको थियो। सन् १९०१ का ५ मार्च सं० १९५७ का फागुन महिनामा वीर-शम्सेरको मृत्युभयो वीरशम्सेरले आफ्ना जिवनका शेष कालमा भैरवनरसिंहका छोरा चंपनरसिंहहरु २ भाइ, भक्तबहादुरबस्नेत हेमबहादुरनेवार, तिलक-राम संघ माझी गरी ५ जना नवयुवकहरुलाई इञ्जिनियरिंग अध्ययनका

निमित्त जापान पठाएका थिए। तिनीहरु सबै जना इञ्जिनियरिंगका डिप्लोमा लिई चन्द्रशम्सेरका पालामा नेपाल फर्केका थिए। तिनीहरुका संग लागी भएको मुसेथापा भन्ने नोकर समेत प्राक्टिकल इञ्जिनियर भई नेपाल फर्केको थियो। मुसेथापाको इञ्जिनियरिंग मेधाले प्रभावित भई कँवरखलकका चौथा मुख्तियार वीरशम्सेरका जेठा पुत्र गेहेन्द्रशम्सेरले आफ्ना सँग सुन्दरीजल ग्याग्जिन्मा राखेका थिए।

वीरशम्सेरका मृत्यु भए पछि कँवरखलकको माइ रोलक्रमले देवशम्सेर नेपालामात्य पदमा बहाल भए। इनी नेपालका कँवरखलक दलका पाँचौं महामन्त्री थिए। देवशम्सेरले पनि रीत अनुसार श्री ५ महाराजाधिराजको पजापत्र सनद पाई भारतका भायसरायलाई खिराजवाः आफ्ना पदबहालीको पत्र पठाएका थिए। कँवरखलकमा दानव वंशमा प्रल्हाद भए सरी देवशम्सेर साधु स्वभावका राष्ट्र र प्रजा प्रेमी तथा सुधार प्रिय मुख्तियार भए। इनले आफ्ना भतीजा गेहेन्द्रशम्सेरका सलाहले देशमा पार्लियामेंटरी व्यवस्था गरी राम्रो संविधान बनाउन देश देशान्तरका सात ठूला राष्ट्रका राजनैतिक विशेषज्ञ सलाहकारहरु लाई झिकाउने प्रबन्ध गरेका थिए। त्यस काममा तात्कालिक रेजिडेंट वायलीसाहब लंडनका दुइ जना विषेषज्ञ बोलाउन सिमला पठाइएका थिए। तिन्ताक राज्य व्यवस्थाका सलाहका निमित्त देवशम्सेर रोजिन्दा बेहान धिराजको दर्शन गर्न जान्थे। देवशम्सेरले महाराजाधिराजको सामुहिक सलामी दिने प्रथा चलाउन थापाथलीमा एउटा गोलबैठक भवनको निर्माण गराएका थिए। त्यस गोलबैठकका मध्यमा महाराजाधिराजको राज्यासन राखिएको थियो। त्यसका वायाँ तिर होचो प्राइमिनिष्टरी सीट र तीन गोल पङ्क्तिमा दर्जानुसार भाइ चौतरिया साहेबजू कम्यान्डर इन चीफ लगायतका अरु भारदारी सीटर दुनियाँ लाई बस्न गेलेरी तयार गरेको थियो। त्यस गोलबैठकमा महाराजाधिराजको सामुहिक सलामी हुन्थ्यो। त्यस प्रकार देवशम्सेरले

आफ्ना प्रभु नेपाल नरेशको नमकको सोझो गरी देश दुनियाँका भलोका निमित्त न्यायोचित धर्मरथ ग्रहण गरेका थिए। तिन्ले कचहरी अदालतका यावत राजकर्मचारीहरूले दसबजे देखी ५ बजे उप्रान्त (गोरु जस्तो रात दिन) काम गर्नु पर्दैन भन्ने उर्दी गरेको थियो। इनैले राज्यकर्मचारीहरूको वर्षदिन मा रिजर्व १७ दिनको विदा, एकादशीको बिदाको प्रथा चलाएका थिए। देश देशान्तरको समाचार बुझुन र तिनीहरूमा भाषाको प्रचार होस् भन्ने अभिप्रायले तिन्ले साप्ताहिक गोर्खा पत्र प्रकाशित गराए। त्यस् पत्रका तात्कालिक सम्पादक मदनदेव शर्मा लाई भय रहित सबै कुरामा स्वतंत्र समालोचना गर्ने अधिकार समेत दिएको थियो। साधारण जनताका शिक्षा र मनोरंजनका निमित्त तिन्ले काशी बाट प० रामचन्द्रबुआ भन्ने भट्ट कथावाचकलाई झीकाई, टुडिखेलमा साझ पख हरिकिर्तन र बत्ती बलेपछि जनताका ऐतिहासिक ज्ञानका निमित्त निशुल्क सेनेमेटोग्राफ देखाउने प्रबन्ध गरेको थियो। नेपालमा दिउसो १२ बजे पड्कने तोपको चलन, नेपालका कमराकमारी प्रथा हटाउने कार्यारम्भ, नेपाल भरमुलुकमा र तीन शहरका प्रत्येक टोल टोल पिच्छे पाठशाला र भिछुखोरीको ४ कोशको परिधिको पानी न भएको झाडीमा आफ्नी पत्नि कर्मकुमारीका नाँऊमा धारा बनाई पशुपक्षिको समेत सुख सुविधाको विचार गरी धाराका संचित जलको पड्या पोखरी समेत बनाएका थिए। तिन्ले देशका उन्नतिको विचारले नेपाल भरीका प्रत्येक टोलमा लेटरबाकस टाँगी निर्भय चित्तले देशका विधानमा जनताले आफ्नो संमति लेखी खसाउनु भन्ने अपील गरेको थियो। त्यस सम्मतिपत्रमा नाँऊ दिन डराउने मानिसले नाँऊ न दिए पनि हुन्छ भन्ने उर्दि थियो।

देवशम्सेरका सुधार तथा उन्नति कार्यले दुनियाँमा ज्ञान तथा चेतना आई कँवर खलकको ठेक्का शासन समाप्त हुने र आफ्नो स्वार्थमा धक्का

पर्ने लागेको देखि नेपाली औरंगजेब चन्द्रशम्सेरले, अधि खड्गशम्सेर पर्वमा लागी धपिनु पर्नेभएकोमा ज्यान र रोल समेत वचाई दिने सहोदर दाज्यू देवशम्शेरका विरूद्ध षडयन्त्र रच्न कत्ती द्विविधा मानेनन्। चन्द्रशम्सेरले आफ्ना त्यस् षडयंत्रमा आफ्ना भाई फत्येशम्सेरहरुलाई देवशम्सेरका सुधार प्रयत्नले "जुन नेपालीहरु हाम्रो घोडाको जीन समाती दौडदछन्, तिनै नेपालीहरुका घोडाको जीन समाती हामीले दगुर्नु पर्ने छ" भनी भडकाई, विद्वान र उदार चेता र लोकपृय गेहेन्द्रशम्सेर लाई समेत "तिम्रो लोकपृयताले देवशम्सेर तिमीलाई धनकुटा धपाउने भएका छन्" भन्ने न भएको कुराले उत्तेजित गराई आफ्ना तरफ मिलाएर देवशम्सेरलाई पदच्यूत गर्ने षडयंत्रको संगठन गरे। चन्द्रशम्सेरका त्यस् षडयंत्रको कुरा पचलिभैरवका महंत पुरुषोत्तामदासले एक दिन प्रथम देवशम्सेर लाई भनेको पनि थियो। तर भातृ प्रेमी देवशम्सेरले "भाई फोर्ने कुरा गर्ने भनी उल्टो पुरुषोत्तमदास सँग रिसाएका थिए।

चन्द्रशम्सेरले ज्योतिषी देविप्रसादरेग्मी वाट शुभमुहुर्त देखाई संवत् १९५८ साल असाढ तेरह गते बुधवारका दिन आफ्नु षडयंत्र पूर्ण गर्ने निश्चय गरे। त्यस दिन दरवार स्कूलमा पारितोषिक वितरण उत्सव थियो। श्री ५ महाराजाधिराज पृथ्वीवीरविक्रमशाहका साथ देवशम्सेरले दरवारस्कूलमा उपस्थित भई विद्यार्थीहरुमा पारितोषिक वितरण गरेको थियो। पारितोषिक वितरण पछि घर फर्कने बेलामा चन्द्रशम्सेरले "कान्छा वडा महारानी ( वीरशम्सेर कि कौपलि ) विरामी होइवक्सेकोले हजूरलाई संझी वक्सेको छ" भनी भुलाई नारान्हिटीदरवार लगेका थिए। देवशम्सेरले नारान्हिटीदर्वार भित्र पसे पछि (२६ जून १९०१ का दिन ) एक्कासी फत्येशम्सेर, दुर्गाशम्सेर, गेहेन्द्रशम्सेरहरुले देवशम्सेरलाई पक्री उनैका पट्काले पाता कस्न लडाएका थिए। त्यस् वेला देवशम्सेरका हजुरीया कर्णेल इन्द्रबहादुरशाहीले चन्द्रशम्सेर माथी कायर नाम आफ्नो बंदुक तानेको थियो। तिनको तानेकोले

बन्दूक लाई पछिल्तिर बाट भीमशम्सेर खोसी इन्द्रबहादुरलाई पनी कब्जामा पारेका थिए। एक्कासी त्यो विचित्र कांड भई रहेको देखि महाराजधिराजले "यो के गरेको, यो गरेको" भनी रोक्न अगाडी सरी बक्स्यो। त्यसमा चन्द्रशम्सेरले "देवशम्सेरले मुलुकको धन जथाभावि उडाएको ले उन्लाई खारेजगरी मलाई मंत्री पद बक्सिनु पर्‍यो" भन्ने बिन्ति चढाए। तर महाराजाधिराजले त्यस कुरालाई मान्न एकदम अस्वीकार गरी बक्सेको थियो। यहाँ यो कुरा बिर्सनु हुँदैन कि देवशम्सेरले देशको सुधार गर्न तथा जनतालाई शिक्षित गर्नलाई गरेको खर्च जथाभावी ठहरेको र चन्द्रशम्सेरले विदेशी बैंकहरुमा जम्मा गरेको अरबौं रुपयाले देशको हित गरेको होला क्यार !

उता फत्येशम्सेरले नारानहिटीदरवारका झ्यालबाट बिजुलीगारतलाई संबोधन गरी "आज उप्रान्त देवशम्सेर खारेजभई चन्द्रशम्सेर नेपालाधीश भई बक्स्यो, सलामी चढाऊ" भन्ने आदेश गरेका थिए। फत्येशम्सेरको उर्दि सुनी बिजुलीगारतले 'हामी स्वयं महाराजधिराजको हुकुम न पाए सम्म चन्द्रशम्सेरलाई सलामी दिदैनौं र हाम्रा महाराज देवशम्सेरलाई देखाऊ न देखाए हामी मार्थी दरवारमा पस्त छौं" भन्ने जवाफ दिएका थिए।

बिजुलीगारतको जवाफले आत्तिएर भीमशम्सेरले चन्द्रशम्सेरका पदप्राप्तिलाई अस्वीकार गरि रहेका धिराजलाई रिवाल्भर साम्न्याई "चाँडै हुकुम गरी बक्सीवोस् नत्र गोली खानु पर्ने छ" भनी धमकाए। एक्ला भित्र खलकका आफ्नै नमक हराम लूटेरा नोकरहरूले घेरिएका श्रीयुक्त महाराजाधिराजले लाचारभई त्यस्को स्वीकृति दी "हो मैले चन्द्रशम्सेरलाई आज देखि बहाल गरे" भन्ने घोषणा गरे पछि बिजुली गारतले चन्द्रशम्सेरलाई सलामी दिएको थियो।

यस कि समले नारानहिटीदरवार कांडलाई सिध्याई चन्द्रशम्सेरले मह-

राजधिराजलाई आफ्ना दरबार सम्म जान न दि घेरी आफ्नु व.सगृह थापाथ
मा पुऱ्याए। त्यहाँ आफ्ना पदवहालि पंजापत्र सनद र कँवरखलकका प्र
अंग्रेज भायसरायलाई लेखने पत्रहरुमा धिराजको पंजाछाप लि
प्रवन्ध गरिएको थियो। त्यस पंजापत्र सनदको कागजमा धिराज
पंजाछाप लिन मुल्की अड्डाका हाकिम (होममिनिष्टर) स
कृष्णमान तीन पटक अधि सर्दा पनि महाराजधिराज पृथ्वीवीरवीक्रमशा
पख भनी रोकेको थियो। अन्तमा स्वयं चन्द्रशम्सेरले आफ्ना हात
पिस्तौल सोझ्याई "गरि वक्सीयोए, गरिवक्सीयोस" भनी धमकि दि
पछि मात्र धीराजले पंजाछाप दि वक्स्यो। त्यस् पछि भारतीय भायस
लाई पठाउने पत्र समेत लेखी पठाइएको थियो।

पदच्यूत देवशम्सेर वंदी अवस्थामा धनकुटा पुऱ्याइएका थि
त्यहाँ वाट तिनी २।३ मैन्हा पछि भागी दार्जिलिङ्ग पुगेर पछि मसुर
झरीपानीमा आई आफ्नो शेष निर्वासित जिवन विताए। तिन्ले आ
सुधार प्रियता र देशोन्नति चाहने स्वभावले भारतवर्ष आएर पनी काश
व्रह्मांघाट स्थित यौटा विशाल घर किनी त्यसलाई पाठशाला र विद्या
भवन बनाउने संकल्प गरेका थिए। त्यस् विद्यापीठका खर्चका निमि
संकल्पका साथ ४ लाख रुपया नगद बैंकमा राखी काशीका हरिहरशर्मा
कप्तान बखानसिंह शाही प्रभृति ४ जना लाई ट्रष्टीप्रबन्ध
नियुक्त गरेका थिए। त्यस धार्मिक कार्यमा पनी चन्द्रशम्सेरले
ट्रस्टीहरुलाई "खबरदार त्यस काममा न पर" भनेकाले उपरोक्त ट्र
हरुले पछि त्यस विद्यापीठको कार्यभार लिन अस्वीकार गरे। ने
जनताको दुर्भाग्य, पछि देवशम्सेरले आफ्नु संकल्पित त्यो ४ ल
रुपया लंडनका Orphanage Institution भन्ने अनाथालय लाई
दिएका थिए। देवशम्सेरको मृत्यू सन् १९१४ का २० फरवरीका
झरीपानीमा भयो।

यस प्रकार आफ्ना मदती प्रचंड भुजदंडका बलका छल्ले

देवशम्सेरलाई पदच्यूत गराईं चन्द्रशम्सेर स्वयं नेपालामात्य पदमा वहालभए। कँवरखलकदलका चन्द्रशम्सेर छैटौं मुख्तियार थिए। आफ्ना त्यस षड्यन्त्रका प्रारम्भमा चन्द्रशम्सेरले आफ्ना भाई भतिजाहरुको चित्त बुझाउन "अब उप्रान्त मैले कुनै भाई भतिजाहरुलाई घपाउन खोजेमा सबै भाई भतिजाले मिलि मलाई धपाउन सक्नेछन्" भन्ने धर्मपत्र लेखि फत्तेशम्सेरलाई दिएको थियो। त्यस धर्मपत्रलाई राखेकोले पछि फत्ते-शम्सेरले विष परि अकालमा मर्नु परयो। फत्तेशम्सेरले आफुले विष परि मर्नु पर्ने कारण त्यै धर्मपत्र हो भन्ने बुझेर त्यसलाई मर्ने बेलामा भीमशम्सेरलाई दिएका थिए। फिलि भीमशम्सेरले त्यो धर्मपत्र आफ्ना कान्छा भाई युद्धशम्सेरलाई राख्न दिए।

फत्तेशम्सेरका मृत्यु पछि हत्तपत्त आफै चन्द्रशम्सेर फत्तेशम्सेरका घरमा पुगे। तिनले त्यहाँ पुगी भाई बुहारीहरुलाई सान्त्वना दिनु, फकाउन, सोध्नु समझाउने कुरा केवै न गरि फत्तेशम्सेरको मूल कन्तुर खोली त्यो धर्मपत्र खोज्न थाले। त्यो धर्मपत्र त्यहाँ न पाएर भीम-शम्सेरका हात परेको थाहा पाई चन्द्रशम्सेर लगत्तै भीमशम्सेरका घरमा पुगे। भीमशम्सेर बाट त्यो धर्मपत्र युद्धशम्सेरलाई दिएको छु, भन्ने थाहा भई निजले युद्धशम्सेर सँग त्यो धर्मपत्र मागे। त्यसमा "त्यो धर्मपत्र ता हामीले राख्नु पर्ने हो, हजूरलाई किन चाहियो भन्ने युद्ध-शम्सेरले स्पष्ट उत्तर दिएकोले चन्द्रशम्सेरले चुप लाग्नु परयो। यस प्रकार आफ्ना वंश प्रवर्तक जंगबहादुर र वीरशम्सेर द्वारा चलाएको नेपालामात्य पद प्राप्ती तथा त्यस्का स्थिरताका निमित्त चलाएको हत्या र वंश हत्याको परिपाटीलाई फत्तेशम्सेरको हत्या गरि चन्द्रशम्सेरले पनि कायम राखेका थिए।

आगि अगिका कँवरखलकका भएका ठीकेदार मुख्तियारहरु शिक्षित थिएनन् तथा तिनीहरुले शिक्षाको आवश्यकता पनि बुझेका थएन।

त्यस्ता कालमा चन्द्रशम्सेर इन्ट्रेन्स पास हुँदा र अनेक काल भारत बसेकाले सन्सार बुझेका व्यक्ति मानिएका थिए। तिन्लाई देश, काल र परिस्थितिको ज्ञान छ भन्ने भई दुनियाँले देवशम्सेरले प्रारम्भ गरेको सुधार कार्यमा तिन्ले प्रगति दिनेछन् भन्ने पुरा विश्वास राखेका थिए।

तर तिन्को ध्येय केवल सकेसम्मको धन एकत्रित गर्नमा केन्द्रित भएकोले जनताको त्यो आशा मृग मरिचीका नै सावित भयो। चन्द्रशम्सेरको विदेशि बैङ्कको खाताको रकम आज पर्यन्त भए भरका कँवरखलका ठेकेदार मुख्तियारहरुका खातालाई माथ गर्ने थियो।

सम्वत १९५८ सन् १९०२ मा लडन कि साम्राज्ञी विक्टोरियाको मृत्यु भयो। भारतेश्वरीका मृत्यु पछि सप्तम एडवर्ड तिन्का उत्तराधिकारी घोषित भए। त्यसै वर्ष लार्ड कर्जनले भारतको राजधानी दिल्लीमा सम्राटका राज्यारोहणको दरबार गर्ने निश्चय गरे। त्यस दरबारमा सम्राट एडवर्डका प्रतिनिधि स्वरूप तिन्का भाई ड्यूक आफ कनट आएका थिए। दिल्ली दरबारमा नेपाल राजप्रतिनिधि रुपले निमन्त्रित भई चन्द्रशम्सेर पनी गए। त्यसै बेला देवशम्सेर र तिन्का साथ सुब्बा होमनाथउपाध्यायले श्री५नेपालेश्वर पृथ्वीवीरविक्रमशाहकोदर्शन गर्न भिच्छाखोरी जाने प्रयत्न गरेका थिए। त्यो कुरा विश्वासघाति अमरजंगले पोलेकोले चन्द्रसम्सेर दिल्ली बाट भागेर भिच्छाखोरी पुगे। निजले भिच्छाखोरि पुगी देवशम्सेर तथा होमनाथहरु राजद्रोह कार्य गरी रहेका छन्, तिनी हरुलाई नेपाल पठाई पाऊँ, भनी भारत सरकार सग लेखापढी गरे। त्यस कुरामा भारत सरकारले भारतीय न्यायालयमा तिनीहरुका विरुद्ध लगाइएका राजविद्रोहको मुद्दा सावित न भए सम्म शरणार्थीहरुलाई पठाइन्न, भन्ने जवाफ गयो। त्यसै निमित्त चन्द्रशम्सेरले बनारसका वृटिस न्यायालयमा देवशम्सेर र सुब्बा होमनाथका विरुद्ध नेपाल राजविद्रोह गर्ने चेष्टाको मुद्दा चलाए। त्यसमा देवशम्सेर तिरका व्यारिष्टर पिउसाहेबले "चन्द्रशम्सेर नेपालेश्वर श्री ५ पृथ्वीवीरविक्रमका वेतन भोगी नोकर

मात्र हुन् । पदत्याग गरी आउने देवशम्सेरले आफ्ना स्वामीको दर्शन गर्नु जानखोज्नु कुनै राजद्रोह ठहरिदैन" भनी सावित गरे । अन्तमा चन्द्रशम्सेर द्वारा आरोपित त्यो मुद्दा झूठो ठहरी खारेज भएको थियो ।

सम्वत् १९५९ सन् १९०३ मा भारतमा लोकमान्य तिलक, लाला जपतराय, विपिनविहारीपालहरुको संचालनमा उग्ररूपले स्वदेशी आन्दोलन चलेको थियो । तिनै लार्ड कर्जनका नादिरशाही र वंगभंगले भारतीय जनतामा विक्षोभ उत्पन्न भई क्रान्तिकारी आन्दोलन पनि बढ्न थालेको थियो । त्यस तथाकथित क्रांतिकारी आन्दोलनमा सहयोग गर्ने दोषारोपमा राजा महेन्द्रप्रताप, सुफि अम्बाप्रसाद र सरदार अजितसिंहलाई तत्कालिक भारत सरकारले पक्रने हुकुम जारी गरेको थियो । राजा महेन्द्रप्रताप भागेर अफगानिस्तान पसेकाले आज पुनः भारतका स्वतन्त्र वातावरणमा भारत फर्की आफ्नो धन सम्पत्ति पूर्ववत भोग्न पाएका छन् । त्यस स्थानमा नेपाललाई स्वतन्त्र हिन्दूराज्य भन्ठानी सुफि अम्बाप्रसाद र सरदार अजितसिंह भारतबाट भागेर हाम्रा सीमाना भित्र नेपालगंजमा पसेका थिए । नेपालगंजका तात्कालिक बडा हाकिम कर्णेल तेजबहादुर मल्लले ती शरणार्थी हरुलाई शरण दिए । सरदार अजितसिंह सन्यासी भेषमा पहाड पर्यटन गर्दै काठमाण्डू पुगे । तिनले त्यहाँ हकीम अकमल खाँ भन्ने कुनै मुसलमान हकीमका घरमा बसाओ गरेका थिए । त्यसै बेला ति दुवै राजनीतिक कैदीहरु नेपालमा छन् भन्ने थाहापाई अंग्रेजहरुले ति दुवै जनालाई भारत फर्काइ दिने दवाव गर्न थाले । सन्धि विरुद्ध ( रेफ्युजी ) शरणार्थी हरुलाई सुपुर्द गरे दुनियाँले थुक्दछ भन्ने समेत विचार न राखा चन्द्रशम्सेरले ति दुवैलाई आफ्ना सरहद वाहिर जान कर लगाएका थिए । वलात् ति दुवै जना नेपाल सरहद पार गरिए पछि भारत सिमामा वसेका भारतीय सैनिकहरुले ति दुवै जनालाई बन्दी गरे । गिरफतार भए पछि सुफि अम्बाप्रसादले चन्द्रशम्सेरलाई

यउटा धिक्कार पत्र लेखेको थियो । त्यस्मा "अन्तर राष्ट्रीय ऐन विरुद्ध शरणार्थी लाई समेत प्रकारान्तरले शत्रुका हातमा सुम्पने तिमी स्वतन्त्रताको खोल ओढी बसेका अंग्रेजहरुका कृतदास तथा यत्तीका नपुन्सक होला भन्ने थाहा थिएन इत्यादि" लेखेका थिए । शरणार्थीलाई अंग्रेज-हरुका सुपुर्द गरेर मात्र चन्द्रशम्सेरको चित्त बुझेन निजले ती दुवै राजनीतिज्ञ भारतीयहरुलाई शरण दिने अपराधमा कर्णेल तेजबहादुर मल्लको जागीर मान समेत खोसेको थियो । अंग्रेजहरुले आफुले मागेका मागमा देवशम्सेर र सुब्बा होमनाथउपाध्यायलाई न दिई लोप्याइएका महान् राजनीति पटु भनी प्रख्यात भएका चन्द्रशम्सेरका नीति पटुताको यो थौटा सफल प्रमाण हो ।

सम्वत् १९६४ सालका चैत मैन्हामा सन् १९०८ मा सप्तम एडवर्ड द्वारा निमंत्रित भई चन्द्रशम्सेरले लंडनको यात्रा गरेका थिए । लंडनमा तिन्को निकै स्वागत सस्कार गरियो । लंडन र फ्रांस र स्विजरलैंड हेरदै ६ महिनामा ति नेपाल फर्कैका थिए । लांडन प्रवास कालमा चन्द्र-शम्सेर लाई जि. सि. वि. आक्स्फोर्ड र. डि. सि. भी. को पदवी मिलेको थियो ।

सम्वत् १९६८ सन् १९१८ मा भुंगा न.ऊँ गरे कि थापाथलिमा बसेकी पेसवा महारानी कि केटी मरिछ । त्यसले आफ्ना मालिकहरु बाट पाएको जुहारात मद्धे मसिना चामलका दाना जस्ता मोति ४ सेर, बुढी औलाका नङ जत्रा मोति ४० दाना र अगणित हिरा र पन्ना जडेको कंठा र चुरीहरु लुकाई राखेकि रहिछ । त्यस झुँगाका मृत्यु पछि ती रत्न हरु त्यसका घरमा भान्से भै बसेका नैकाप बस्ने विष्णूलाल ढामिछाने का हात पर्‍यो । ति विष्णूलालले झूँगा केटिको किरिया समेत गरेको थियो । विष्णूलालले ती रत्न हरु झोसेटल बस्ने नन्दलाल साहुका हात ९००० रुपयामा बेचेछन् । त्यो कुरा झुँगा केटीको कमारीले चन्द्रशम्से मा जाहेर गर्‍यो । चन्द्रशम्सेरले दुरन्त विष्णुलाल

लाई बोलाउन पठाई केरकार गरे। त्यसमा विष्णुलालले त्यो रत्न वेचेको स्वीकार गरे। चन्द्रशम्सेरले नन्दलाल साहुलाई बोलाई त्यो रत्न जफत गरे लिए। रत्नहरु बुझाएकोले नन्दलाल साहुले केहि सजाय पाएनन्। गरीब बाहुन विष्णुलालले झुँगा केटाको किरिया गरि. हकले पाएको रत्न वेचेका अपराधमा घरजायजात भइ ९ वर्ष लाई कैदी समेत हुनु पर्यो। त्यस कुरालाई पोल्ने कमारोले १८ रोपनि खेत बक्सिसमा पायो। हकको रत्न बेच्ने बाहुन अपराधी भयो। त्यसको त्यो रत्न र रत्नको मोल ९ हजार रुपया समेत घर जायजातहरु यावत चन्द्रशम्सेरको आफ्नु भयो। चन्द्रशम्सेरको फायदा गराउने कमारोले पं० लिलानाथ कोइरालाको नाऊँमा विर्ता दर्ता भएको सर्कारिया खेत जवरजस्ती खोसीएर १८रोपनि जमीन बक्सिस पायो। चोरीको माल किन्ने साहुले माल चन्द्रशम्सेर लाई बुझाएकोले सजाय सम्म पाएन। कँवरखलकका राणाहरुका इन्साफको यो यौटा उत्कृष्ट नमूना हो। त्यस रत्न मद्धेको एउटा पन्ना लाई चन्द्रशम्सेर ले ३ लाखमा वेचेका थिए. भन्ने कुरा निज लिलानाथ कोईरालाले लेखक लाई भनेको हो।.

सम्वत १९६७ चैत्र महिना सन् १९११ मा चन्द्रशम्सेर वायुपरिवर्तनलाई गोकर्ण गई बसेका थिए। त्यसै बीचमा भीमशम्सेरका साहिला छोरा प्रकाशशम्सेरका पुत्र महावीरशम्सेर पैदा भए। पहिलो नाति पाएकोले भीमशम्सेरका हुकुमले पुरानु गोरखका सिपाहीहरुले बढाइको बन्दूक पड्काएका थिए। एक सेक्सन अर्थात ५ सिपाहीले ५।५ फैर गरेकोमा चन्द्रशम्सेर कि कान्छी पत्निले त्यसलाई २१ तोप पड्केको मानिछन्। त्यस बेला चन्द्रशम्सेर सुतेका थिए। हत्तपत्तरानीले तिन्लाई उठाईक।ठमाण्डुमा २१ तोप पड्केको छ भन्ने कुरा भनिन्। भीमशम्सेरले वितायो कि भन्ने डरले गर्दा चन्द्रशम्सेर अत्यन्त डराई, त्यहाँ भएका जम्मै गोली गठ्ठा मसिनगन बन्दूकहरु जम्मा गरी यज्ञडोलको नाङ्गो डाडाको खोजमा सतर्क भई बसे। त्यस बेला चन्द्रशम्सेरको चित्त आत्तिएकोले तिनो

भाग्न भनी इतपत्तमा घोडा पुछर तिर मुख गरी चढ्न पुगेका थिए। युद्धशम्सेरले तोप किन पड्केको हो भनी बुझ्न आफ्ना कप्तान र लेफ्टिनेण्ट हरु सिंह दरबार र हाँडिगाँऊ तिर पठाएका थिए। हाडीगाँऊबाट नेपाल तिरको समाचार लिएर यउटा सुबेदार हिरण्यशम्सेरलाई खोज्न गोकर्ण आएको थियो। त्यसलाई कालीबहादुरका सिपाहीहरुले पक्री गोखेलाचुरी कसी माथि चन्द्रशम्सेरका सन्मुख लगे। त्यसै बेला चन्द्रशम्सेरले हिरण्यशम्सेरलाई पनि सुतेका ठाऊँ बाट बोलाई हिरण्यशम्सेर र त्यो समाचार लिएर आउने सुबेदार दुबै जनालाई दस कदमको फरक गरी सिंहदरबार र हाँडिगाऊ गएका कप्तानहरु न फर्के सम्म गार्डमा राखे। अन्तमा काठमाण्डुको हालखबर पाए पछि हिरण्यशम्सेर र सुबेदारले मुक्ति पाएका थिए। यो हो कँवरखलकका राणाहरुको वीरताको नग्न चित्र!

सम्वत १९६६ सन् १९१० मा सम्राट एडवर्डका मृत्यु पछि ब्रिटेनको राज्यासन पंचमजार्जले पाए। आफ्ना राज्याभिषोत्सवका निमित्त जार्ज पंचम सम्वत् १९६७ सन् १९११ मा भारत आएका थिए। नेपाल सरकार बाट निमन्त्रित भई त्यस बेला तिन्ले ठोरिका जंगलमा शिकार खेलेको थियो। शिकारका प्रबन्धले प्रसन्न भई बडा दिनका उपलक्षमा सम्राट् जार्जले चन्द्रशम्सेरलाई जि. सि. मि. ओ भन्ने पदवी र नेपाल सरकारलाई २५००, लिमिटकोर गन चढाएका थिए।

जार्ज पंचम शिकारलाई आएकोले तिन्ताक भारतवर्षका पत्र पत्रिकाहरुमा नेपाल विषयक लेखहरुको प्रमुखता थियो। लण्डनका शाही पार्टिलाई प्रभावित गर्न चन्द्रशम्सेरले कलकत्ताको 'इंग्लिसमैन" पत्रमा नेपालमा आफ्नो ठूलो पापुलरटी छ र गरिएका सुधारहरुले प्रजा साह्रै प्रसन्न छन् भन्ने प्रचार गराउने लेख छाप्न लगाएका थिए। त्यसका जवाबमा सुरेन्द्रनाथ बैनर्जीका सम्पादकत्वमा निस्कने 'बंगाली" पत्रमा कुनै चन्द्रभक्त भन्ने सज्जनले "चन्द्रशम्सेरको पापुलरटी" देखी दि यउटा लेख

छापेका थिए। त्यस लेखमा—"सुधार प्रिय, प्रजारंजक देवशम्सेरलाई धपाई, सफल वैज्ञानिक र लोकप्रिय गेहेन्द्रशम्सेरका आत्महत्याका कारण, देशमा वर्वर अधिनायकता लादने र देशको समस्त आय नोट सत्नीका नाऊँमा विदेशमा जम्मा गर्ने चलन चलाउने चन्द्रशम्सेर वास्तवमा नेपालका सर्वश्रष्ठ पापुलर भएका हुन् कि" इत्यादि लेखेको थियो। अन्तमा 'जुलियस सिजारले प्रतिपालना गरेको ब्रुटसले शत्रु षडयंत्रमा सामिल भई जुलियस सिजारको हत्या गरेर" जुलियस सिजार वाट देश द्रोहिकार्य हुन लागेकोले मैले तिन्लाई मारी देशको महान उपकार गरेको हूँ भनेका थिए। ब्रुटसका त्यस उक्तिमा आन्टो-निले उभीएर भनेका "तिनीहरु सबै महान् महान् व्यक्ति हुन्" भन्ने शब्दलाई चन्द्रशम्सेरका प्रति चन्द्र भक्त भन्ने सज्जनले दोहन्याएका थिए।

# राजा त्रिभुवन वीर विक्रमशाह

सम्वत १९६८ सन् १९१२ सालका पुष महिनामा श्री ५ महाराजाधिराज पृथ्वीवीरविक्रमशाहको स्वर्गारोहण भयो।

सम्वत १९६६ सन् १९१० सम्म मा देशकालको तथा आफ्ना नावालियतमा कँवरखलफका ठेकेदार मुखितयारहरुले मिच्दै गएको कुराहरुको ज्ञान भए पछि महाराजाधिराज पृथ्वीवीरविक्रमशाहलाई पनी कँवरखलकका अनियंत्रित ठेकेदारीले निकै पिर्न लागेको थियो। त्यस विश्वासघाती ठेकेदारीप्रथाका नाशका निमित्त यहाँ वाट पनी यउटा दलको संगठन गरिबक्सेको थियो। त्यस दलमा ईश्वरबहादुरशाह, कर्णेल कुमारजंग राणा, कप्तान जगनरसिंह (जापान बाट मेकनिकल इञ्जनियरिं पढी फर्केका) कप्तान गंगाबहादुर बस्नेत र मोहनशम्सेरका दिवान र संस्कृतका ठूला विद्वान सुब्बा दुर्गानाथ

अधिकारी ( गुरुज्यू ) हरु मुख्य थिए। त्यस संगठित दलले आफ्ना आयोजनमा पहिले पल्टनमा सामिल भएका बेला महाराजाधिराज बाट पल्टनमा एलान हुकुम दि चन्द्रशम्सेर प्रभृतिलाई मार्ने आयोजन गरेको थियो। तर त्यस्को निश्चयतामा संदेह भएकोले पछि नागार्जुन बाट मैसिनगन सोझ्याई रोलका चालिस कँवरखलकका राणा जम्मा भएका बखत सिंहदरबार माथी विष्फोट गरि एकै पटकमा त्यस्लाई विध्वंस गर्ने कार्यक्रम बनाएको थियो। त्यस आयोजनका पूर्तिका एक दिन प्रथम महाराजाधिराज पृथ्वी वीरविक्रमशाहले आफ्ना दरबारमा दलका सदस्य हरुलाई भोज दिएको थियो। त्यस भोजमा कप्तान गंगाबहादुर बस्नेत डरले जान सकेनन्। विश्वासघाति दुर्गानाथले चन्द्रशम्सेरलाई त्यस आयोजनको संपूर्ण वृत्तान्त भनो भोज हुने कुरापनी पोलेको थियो। त्यो कुरा थाह पाउना साथ चन्द्रशम्सेरले निश्चित बेलामा गुप्ति पुलिस द्वारा नारायणहिटी दरबारलाई घेरि चियो बसाए। भोज खाई फर्केका सदस्यहरुलाई स्वयं महाराजाधिराजले दरबारका पछिल्तिरको परखाल नघाँयी बाहिर गरिबक्सेको थियो। तेसै बेला चन्द्रशम्सेरका गुप्ती पुलिसले डम्बरबहादुर, कुमारजंग र जङ्गनरसिंहलाई समाति जंगी पहरामा रात भरी थुने। भोलिपल्ट ती तीनै जना चन्द्रशम्सेरका संमुख लगाए। धूर्त चन्द्रशम्सेरले तिनीहरु माथि राजकीय षडयंत्रको अभियोग न लगाई परमिसन बिना धिराजका दरबार भित्र पसेको र उपाफत खाएको अभीयोग लगाइयो। त्यस अपराधमा ति तिनैजनाले देश निष्कासनको दण्ड पाए। कप्तान जङ्गवीर राणा बाग्लुङ् धपाइए र त्यहाँको म्यागजीनको काम पाए। कर्णेल कुमारजंग पल्टन बाट खारज भई नेपालगंज पठाइए र पछि ज्यान मारा मुद्दा लगाइएर आजन्मका लागी धनकुटामा बन्दी जीवन बिताएका थिए।

त्यस प्रकार पहिले त्यस संगठनलाई भंग गरेर सुतेको सिंह उठन न पाउँदै आफ्नु वंश बक्सिस सबै आफ्नो नियमको सोझो गर्ने चन्द्र-

शंसेरले महाराजाधिराज पृथ्वीवीरविक्रमशाईं दूषित विष (स्लोप्वायजिंग) गरेको थियो। राजा पृथ्वीवीरविक्रमका मृत्युकालका अन्तिम वखतमा लेका-वालुई विलायत बाट कुनै एक ठूलो डाक्टरलाई धिराजको औषधि उप-चारका निमित्त बोलाइएको थियो, त्यस डाक्टरले धिराजका शरीर परीक्षा गरी "इन्लाइ स्लोप्वायजन परेको छ, इ बाच्दैनन्" भनी खुल्ला शब्दमा भनेको थियो। त्यस वेला स्वयं चन्द्रशम्सेर किंग जार्जका शिकारका बहानाले ठोरीमा मुख लुकाई बसेका थिए। महाराजाधिराज पृथ्वीले स्लोप्वायजिंगको कुरा थाहा पाई, बाँचे भने कँवरखलकका राणा ठाकेदार-हरुको अन्त गर्ने एउटानिया सपत खाएका थिए। तर विषले आफ्नो प्रभाव दिखाई सकेकोले वहाँको मृत्यू भयो। अघि सप्तम एडवर्ड सिकार खेल्न नेपाल जान बनी सकेको प्रोग्राममा चन्द्रशम्सेर कि जेठी पत्नी बिरामी भएकोले शिकारको त्यो प्रोग्राम रुकेको थियो। यता यस पटक नेपालेश्वर अन्नदाता प्रभू धिराजलाई विष दिए पनि वहाँका मृत्युशैय्यामा परेका बखत देशमा शिकारको उत्सव गरेर चन्द्रशम्सेरले आफ्नु जातीय कृतघ्नताको रूपलाई छर्लङ्ग देखाएका थिए। पिताका देहावसान पछि वर्तमान महाराजाधिराज त्रिभुवन वीर विक्रमशाह आफ्ना ५ वर्षका उमेरमा नेपाल राज्यासनमा सुशोभित भइवक्स्यो। यस प्रकार नेपाल का राज्यासनमा अर्को दुधे शिशु राजा पाएर चन्द्रशम्सेरले पनी नेपाला-मात्य शक्तिलाई हढोत्तर गराउने राम्रो मौका पाएका थिए। तिन्ले नेपा-लमा चलि आएको परम्परागत अमाली पंचायत पद्धतिलाई खारेज गरी सं० १९६८ सन् १९१२ मा अड्डा अदालतको स्थापना गरेर अदा-लतको अन्तिम निर्णय नेपालका अमात्यका हुकुमले सम्पादित हुने चलन चलाएर हुक्मी न्यायलाई पनि नेपालमात्य संग केन्द्रित गराएका थिए।

महाराजाधिराज त्रिभुवन वीरविक्रमशाहका राज्यारोहणका तिश्रा वर्ष सम्वत १९७१ सन् १९१४ को युरोपीय महासमरको प्रारम्भ भयो। त्यस वेला भारतका रक्षाका निमित्त १६००० शिक्षित गोरखा सेना

पठाइएको थियो। त्यस बाहेक चन्द्रशम्सेरले अंग्रेज प्रभू प्रसन्न गर्नका लागी लाँखा रेग्रुट समेत युरोप समरक्षेत्रमा पठाएका थिए।

सम्वत १९७१ सन् १९१४ का २८ सौं जूनका दिन अस्ट्रियाका आर्कड्यूक फर्डिनैण्ड र तिन्की पत्निको सर्वियामा कुनै आततायी द्वारा हत्या भएको थियो। यस दुर्घटनाका एक मैन्हा पछि अस्ट्रियाले सर्वियाका विरुद्ध युद्ध घोषणा गरे। जर्मनी र हंगरीले अस्ट्रियाको साथ दिए। त्यस पछि साते दिन भित्र इग्लैण्ड, फ्रांस, इटली रुस आदि देशहरूले त्यस युद्धमा भाग लिए र अन्तमा जापान र अमेरिकाले पनी यसमा सामेल हुनु पर्‍यो। सन् १९१४ लगायत १९१८ सम्म यो समरानल प्रज्वलित हुँदै रह्यो, त्यसमा ८० लाख भन्दा बढता मानिस विकलांग भए, जस्मा कति अन्धा, कति लुल्ला, कति लगँडा, कति हातहीन भएर सदाका निमित्त अकर्मण्य भएका थिए। त्यस युद्धमा अंग्रेजहरु अष्ट्रिया र जर्मनीका विरुद्ध खडा भएकोले युरोपीय महासमरमा अंग्रेज दास कँवरखलकका ठेकेदार मुख्तियार चन्द्रशम्सेरले पनि नीरिह र निर्दोष गोरखालीहरुलाई भेडा बाखा तुल्य कटाई तथा राज्यकोषको दसलाख पौंडको सहायता दिएर अंग्रेजहरुको ज्यूजानको सहयोग गरेका थिए। अंग्रेजहरुका सहायतार्थ चन्द्रशम्सेरले नेपालको यावत पल्टनलाई भारतवर्ष जाने उर्दि दिए। उर्दि बमोजिम गैह पल्टन टुडिखेलमा सामेल भएका बेलामा खरीका बोट मुनी उभीई चन्द्र-शम्सेरले मित्र अंग्रेजहरुको आपत बताई, तिन्को परंपरानुसार गरी आएको सहायताको हवाला दि, त्यस महासमरमा जानु पर्नें भएको छ भनी घोषण गरेकाथिए। तर चन्द्रशम्सेरका त्यस हुकुमलाई नेपाली पल्टनले अस्वीकार गरी महाराजाधिराजको हुकुम न पाएसम्म हामी हिड्ने छैनौ भनी स्पष्टतया त्यसको विरोध प्रदर्शन गरेका थिए। त्यस्मा वालख महाराजाधिराज पाएर आफैलाई नेपालनरेश सम्झने चन्द्र-शम्सेरको आँखा रातो भयो। तिनले पल्टनलाई महाराजाधिराजको हुकुम गराउन

४१५ दिन नारानहिटी दरबारमा दिन दिन भर गई चाकरी गर्नु पर्‍यो। राजमाता श्री ५ माहिला बडा महारानीले अन्तसम्म त्यस कुराको विरोध गरेकि थिइन्। अन्तमा कँवरखलकको मुख्य शस्त्र पिस्तौलका भयले माहिला बडा महारानीले त्यस कुरामा स्विकृती गरे पछि बालख महाराजाधिराजलाई खरोका बोट मुनी पल्टन सामेल भएका बखत ल्याएर हुकुम भएको छ भन्ने सुनाए पछि नरेशभक्त नेपाली सैन्यले भारतवर्ष जान स्वीकार गरेका थिए। शताब्दिक वर्ष देखि थिचिएर रहेका गोरखाली हरुको वीरता कुंठित भएको रहेन छ भन्ने कुरा यूरपीय महासमरमा गरेएका तिन्का बहादुरी पूर्ण कार्यले प्रकट भयो। यूरोपमा पुगेका पुडके गोरखा सैनिक लाई हेरेर यूरोपका वा अंग्रेजहरुले पहिले ता ओठ लुंच्याएका थिए। पछि तिनीहरुका अमानवीय पराक्रम देखि तिनीहरुले आफु ओठ चपाउनु पर्‍यो। यहाँ सम्मकि पछि पछिना अत्यन्त कठिन मोर्चाहरुमा गोरखालीहरुले अंग्रेज जातिको रक्षा गरेका थिए तथा नेपाल बाट गएको गोरखा सैन्यको जहाज यूरोप जटिमा पुग्ने वेलामा अंग्रेज किंवा फ्रैंच नरनारा हरुको मेला लाग्न थालेको थियो। फ्रेंच रमणीहरुले गोरखालीहरुलाई देख्ना साथ "हाम्रा रक्षक, हाम्रा रक्षक" भनी जयघोष समेत गर्न थालेका थिए।

त्यस महासमरमा पद्मध्वज गुरुङ्ग, रामप्रसादथापा, तेजबहादुर गुरुङ्ग, गोपालसिंह रावत, गंभीरसिंहगुरुङ्ग, भीमसिंह, सर्वजीतसिंह गुरुङ्ग, रणशूरराई, पुरणसिंह थापा, खड्गवीर, महतवीर र कुलवीर थापाले आफ्ना पराक्रमका प्रदर्शनले संसारलाई चकित पारेर ब्रिटेनको सर्वोच्च सामरिक पदक र भीक्टोरियाक्रासहरु समेत पाएका थिए। यूरोपीय युद्धका इतिहास मा तिनीहरूको नाऊँ स्वर्णाक्षरले लेखिने लायकको छ। "म मेरा प्यारा सैनिकहरुलाई संसारका कुनै सेना संग लडाउन रत्तिभर डर मान्दिन, तर गोरखा सैनिकको नाँऊ सुना साथ

मेरो मुटु थर्कन्छ।" भन्ने उक्ति शत्रुपक्षका सम्राट कैजर विलियमले भनेको छ हाम्रा गोरखालीहरुको वीरताका अन्दाजा लाग्दछ।

संसारले सब भन्दा पहिले फ्रांसका फटुवर्टका रणक्षेत्रका युद्धमा गोरखालीहरुका खुकरीको चमत्कार देख्यो। न्यूमचामेलका समरमा आफ्ना घरका झ्यालको आड गरि गोली वर्षाउने जर्मनीहरुका घर-घरमा पसा गोरखालीहरुले तिन्को उछित्तो पारेका थिए। पश्चिम फ्लैन्डर्सका रणभूमिमा गोरखालीहरुले चरम पराक्रम देखाए। प्रेस समरमा भयानक अग्निवर्षामा जुटिएर पनी गोरखालीहरुले जस्तो बहादुरी गरे त्यो असाधारण थियो। अंग्रेजी तोप मासनगन र वैज्ञानिक सेनाले न हटाउन सकेको स्लाईपका युद्धस्थलको जर्मनी तोपखानालाई पैदल गोरखालीहरुले आफ्ना असमान्य वीरताले हटाएका थिए।

स्लाइप युद्धस्थलको जर्मनी तोपखानाका अग्नि वर्षाले अंग्रेजहरुको महान संसार गरेको थियो। त्यस्का प्रतिरोधमा गएका अंग्रेजी तोप, मसिनगन र बैज्ञानिक सेना ध्वस्त प्राय हुन थालेको थियो। अन्तमा कमान्डरका हुकुमले यौटा पैदल गोरखा सैन्य तोपखानालाई नष्ट गर्न रमाना भयो। गोरखालीहरुको त्यो दल जेर नदि किनारै किनार मुहाना तिर वाट त्यस्का नजीकै सम्म पुगेको थियो। त्यहाँ पुगे पछि त्यस दलका ६ जना वीर गोरखालीहरु जर्मन तोपखानाका रक्षकहरुलाई सिध्याउन खटिएका थिए। तिनीहरुले आफ्नो तानावाना फ्याँकि मुखमा खुकुरी च्यापी चार हात खुट्टाले हिंडनु परेको थियो। त्यस किसमले तोप-खाना नेर पुगेका गोरखालीहरुले जर्मन प्रहरीहरुलाई चुँ सम्म बोल्न न दि तिन्को गर्धन छुस्याए। प्रहरीहरुको अन्त भए पछि ति वीरहरुको इशारा पाई बाँकीको गोरखाली सैन्य तोपखाना माथि जाई लागेको थियो। गोरखालीहरुका अग्नि प्रहारले त्यस जर्मनी तोपखानामा घडाका साथ विस्फोट भएको शब्द हुनथाल्यो। त्यस्का फलस्वरूपमोलि पल्टनै त्यस जर्मनीतोपखानाले पछि हटेको देखियो।

त्यस महासमरमा जर्मनीका सहायतार्थ तुर्की पनि रणक्षेत्रमा सामेल भएको थियो। ग्यालिपोली प्रायद्वीपका अनेक स्थानमा तुर्कीहरु सँग गोर्खालीहरुको युद्ध पर्‍यो। मित्रपक्षका न्यूजिलैन्डसैन्य, ल्याङ्काक् सैन्य मैनचेष्टर सैन्य र डब्लिन सैन्य दलले दर्दनियालका समुद्रधुनिका पहाडहरुलाई कब्जा गर्न गएका आक्रमणहरुमा पराजित भई फर्कनु परेको थियो। त्यस समुद्रधुनिका पहाडलाई वीरश्रेष्ठ पराक्रमशाली गोरखालीहरुले सहजै कब्जा गरेकोले त्यसको नाँऊ "गोरखा ब्लफ" अर्थात् "गोरखा टाकुरा" परेको छ। मेसोपोटेमियाँमा बहादुर गोरखालीहरुको रणकौशल अपूर्वको थियो। अरबगाँऊहरु माथी आक्रमण गर्नें गोरखाली सैन्यका हवल्दार कर्णबहादुर खत्रीले ठूलो विक्रम देखाएकोले तिनलाई "इन्डियन ऑडर आफ मेरिट" भन्ने द्वितीय श्रेणीको तक्मा पाइएको थियो।

लूस नामक स्थानमा गोर्खाली बहादुर कुलवीरथापाले अपूर्व वीरता गरेको बाबत नीजलाई सर्वोच्च सामरिक पदक "भीक्टोरिया क्रास" मिलेको थियो। त्यस रणस्थलमा जर्मन तथा अंग्रेजी सैन्य दल आफ्ना खाईमा बसेर, एक दोसरा माथी गोली वर्षा गरि रहेका थिए। अंग्रेजहरुका अविरल गोली वर्षाले जर्मन खाइका सम्मुख लगाएको तारको बाडा धेरै जस्तो ध्वस्त भयो। बाडा ध्वस्त भए पछि, नकली धुँवाको रूप बनाई त्यसैका आँडमा अंग्रेजी सेनाले जर्मन खाई माथी धावा बोले। धावा गर्नें अंग्रेजी सेनामा दाहिने तिर गोरा पल्टन तथा देब्रे तिर गोरखा सैन्य दल थियो। जर्मन खाई तिर बाट आई रहेको गोलीका फर्राहरुको परवाह न गरी गोरखा सैन्यदल बढदै जर्मनीका तारका बाडा सम्म पुगी सकेको थियो। बाडा सम्म पुगेका गोरखालीहरुलाई तारको घेरोले रोक्यो। यता उता मार्गको खोजी गर्दा यौटा मानिस छिर्ने गल्लीको सम्म पत्ता लागेन। उता शत्रु पक्षले नजिकै पुगी सकेका

गोरखालीहरु माथी अचूक गोली हानी तिनीहरुको संख्या घटाउने राम्रो मौका पाएका थिए। अन्तमा लाचारी साथ गोरा सैन्य दल आफ्ना खाईमा फर्कि आयो। तर त्यसै दलका वीर गोरखालीहरु आफ्ना अंग्रेज अफिसरका साथ तारको बाडालाई नाघेर, जर्मन खाईमा पस्न समर्थ भए। समुद्र तुल्य जर्मन सेनाका सन्मुख त्यो यौग थोरै काहाँ शम्म अडथ्यो। एक एक गरी सबै जनाले जर्मन गोली द्वारा वीर गति प्राप्त गरे। तिनै मद्धे कुलवीरथापा नामक सैनिक एक्लै लडदै भिड्दै जर्मन खाईका पारी सम्म पुगेका थिए। अन्तमा घायल भए पछी शत्रुको आँखामा छाँरो हाली तिनी आफ्ना खाई तिर फर्कन लागे। त्यसै वेला नीजले यउटा गोरालाई घाइते भई लडेर कन्ही रहेको देखें। आफु घाइते भएको अवस्थामा र शत्रुको गोली वर्षा रहेको बेलामा पनि त्यस बहादुरले आफ्ना घाइते साथीको मदद गर्न मुख मोडेनन्। त्यो गोरा बहादुर थियो। कुलवीर थापाले मदत गर्नलागेको देखेर तेस्ले पहिले ता मर्न लागेका मेरा पछि न लागी तिमी आफ्नो ज्यान जोगाऊ भन्ने आग्रह गरेको थियो। तर कुलवीर थापा सच्चा बहादुर थिए। तिन्ले त्यस गोराको कुरामा कानै न दि त्यसका नजिकै सुतेर संपूर्ण रात त्यसलाई कुहेर चिताए। भोली पल्ट कुइरोले अन्धकार भएको बेलामा त्यस गोरा लाई पिठ्यूँमा उठाई कुलवीर थापा कुनै तरह बाडाको तारलाई नाघेर वारी आएका थिए। त्यही ठाँऊमा नीजले अरु २ जना गोरखाली सिपाहीहरुलाई पनि घाइते भई लडी रहेको देखे। आफ्ना घाइते दुई जना साथीहरुलाई देखेर तिन्का प्रति पनि तिन्को हृदय द्रवित भयो। तिन्ले पिठ्यूँमा बोकेका गोरा सिपाहीलाई त्यही नेर गोला खसे भएको थौटा खाल्टोमा लुकाएर राखी दिए। अनि एक एक गरी आफ्ना दुवै गोरखाली साथिहरुलाई सुरक्षित स्थान सम्म पुऱ्याए। त्यस बेला कुइरो हटेर सूर्यको तेज चारै तिर फैलि सकेको तथा जर्मनीहरुले अंग्रेजी खाईं तरफ गोली बर्षाउन प्रारम्भ गरी सकेका थिए। त्यस्ता बेलामा पनि

[illegible]बहादुर कुलवीर थापाले हरेस खाएनन्। वर्षी रहेको गोलीहरु [illegible] परवाह न गरी नीजले आफ्ना गोरा साथीलाई पिठ्यूँमा बोकेर गिर्दै [illegible] आफ्ना खाई सम्म पुऱ्याएका थिए। यस प्रकार आफुले घाइते [illegible] पनि दुश्मनका गोलीका बीच बाट आफ्ना तीन तीन जना [illegible]लाई बचाउन कुलवीरथापाले स्वेच्छाले मृत्यु मुखमा पस्न कत्ति [illegible] दुविधा मानेका थिएन। कत्रो ठूलो साहस, कत्रो अलौकिक त्याग।

[illegible] पल्टनका कर्णबहादुरराणाले शत्रुका गोलाबारीले ध्वस्त भई [illegible] आफ्ना सेनाका रक्षाका निमित्त एक्लै हातेगोला तथा राइफलका [illegible] जर्मनीहरुका तोपको मारलाई रोक्न सकेका थिए। त्यस शौर्यता- [illegible] कार्यले निजलाई पनि "भिक्टोरिया क्रास" पदक मिलेको थियो।

[illegible] प्रकार कुनै एक गोरखा सैनिकले जर्मन सैनिकहरुले गोली [illegible] रहेका बखत, एक्लै जरमनहरुका घर भित्र पसी आफ्ना संगीनका [illegible] आठ जना जर्मनीहरुलाई कैदी गरिल्याएका थिए। त्यस किसिमले [illegible] पुढके गोर्खालीले अग्ला अग्ला आठ जना जर्मनीहरुलाई कैदी गरि [illegible] देखी अंग्रेजी सेनाले आनन्द ध्वनी गरी आकाश फारेका [illegible]। सत्य नै हो, त्यो कार्य त्यस्तै अलौकिक थियो।

त्यसै बीचमा सन् १९१७ संवत १९७ सालमा महासमरमा फँसेका [illegible] बाट प्रतिरोध हुन न सक्ने बुझी भारतका पश्चिमी सीमाका मासुद प- [illegible]हरुले स्वतंत्रताका निमित्त भारतमा पसेर लूटपाट गर्नथालेका थिए। भारत [illegible]ले त्यस्का दमनको उचित व्यवस्था गरा नेपाल सरकार सँग मदत मागि [illegible]को थियो। नेपाल तिर बाट पद्मशम्सेर तथा बबरशम्सेरका नेतृत्वमा [illegible] तथा शेरदल पल्टन खटिएको थियो। त्यस युद्धमा गोरखाली- [illegible] हेदरकपू प्रभृति २।३ टिप्पाहरु माथी अधिकार गर्नमा ठूलो पराक्रम [illegible] थिए। वजिरिस्तान युद्धमा नेपालीहरुका सहायताले अंग्रेजहरुले [illegible] सफलता पाए।

सन् १९१८ संवत् १९७५ मा अफगानिस्तानका नवयुवक राजा

अमानुल्लाखाँले पनि देशलाई स्वतंत्र गराउन भारतीय पश्चिमोत्तर सीमा माथी आक्रमण गरें जर्मन महासमर शान्त भएको ४।५ मैन्हा मात्र भएथ्यो ता पनि अंग्रेजहरुले आफ्ना तयारिमा विलंब गरेनन्। त्यस बेला प्रति चन्द्र शम्सेर द्वारा प्रेरित ४००० गोरखा सैन्यदल रुद्रशम्सेरका अधिनायकत्वमा सीमा प्रान्तका रणांगनमा सामेल भएको थियो। तर युद्ध चाँडै समाप्त भएकोले गोरखा सैन्य ३ मैन्हा भित्रै नेपाल फर्क्यो। युद्धको प्रारम्भ हुना साथ चन्द्रशम्सेरले यौटा ठूलो सैन्य खडा गर्ने निमित्त नेपालमा चारै तिर नयाँ भर्ति प्रारंभ गरिदिएका थिए। थियो चन्द्रशम्सेरको अंग्रेज भक्ति।

युरोपीय युद्ध, वजिरिस्तान दमन युद्ध र अफगानयुद्ध समाप्त भए पछि ता० २७ दिसेम्बर सन् १९१९ संवत १९७६ मा ती युद्धहरुमा सहायता दिए बाबत भारत सरकारले नेपाल सरकारलाई उपहार स्वरुप प्रति वर्ष १० लाख रुपया दिने निश्चय गरेको तथा त्यो रुपया नेपाल सरकारलाई वंगाल बैंकबाट दिइने प्रबन्ध मिलाएकोछ भन्ने समाचार पठाएका थिए। साथ साथ त्यो उपहार पठाउने बेलामा अघिको नेपालका केहि गाँउ फिर्ता दिने कुरा पनी हामी भारत सरकारले सम्भेका थियौं तर समयले गर्दा पहिलेका विजीत प्रदेशहरु फर्काउनु असंभव छ भन्ने चिप्लो समेत घसेर चन्द्रशम्सेरलाई लोप्याएको पनि थियो।

त्यसै साल संवत १९७६ सन् १९१९ का फागुन महिनामा महाराजाधिराज त्रिभुवनवीरविक्रमशाहको पजाब तिर कि दुइटि राजकन्यकाहरु सँग विवाह भएको थियो। यहाँ यो भन्नु अत्युक्ति छैन कि चन्द्रशम्सेर कि कुनैपुत्री वा नातिनीहरु न भएकाले तिनले जंगबहादुरले बलमिच्याईले चलाएको परंपरानुसार महाराजाधिराज सँग आफ्ना पुत्री वा नातिनीको विवाह गरिदिन पाएनन्। त्यस ठाँऊमा नीजले ...का ३ जना दिदी शाहजादीहरुको विवाह क्रमशः आफ्ना ३ जना पुत्र ... शम्सेर, सिंहशम्सेर र कृष्णशम्सेर सँग गराएका थिए।

जंगबहादुरले विकृत मस्तिष्कका राजा सुरेन्द्र बाट शासनाधिकार पाएर तथा राजा सुरेन्द्रका मृत्यु पछि भएका मुख्तियारहरुले शिशु राजा पाउदै गएकाले तिनीहरुले धिराजहरुको शिक्षा दिक्षा तथा वहाँहरुलाई राजनीतिको ज्ञान हुने मौका नै दिन छाडेका थिए। वीर शम्सेर तथा चन्द्र-शम्सेरले आफ्ना मन्त्रित्व कालमा धिराज पृथ्वीवीरविक्रमशाहको आधुनिक् शिक्षा तथा राजनीति ज्ञानार्जनमा ठूलो प्रतिबन्ध राखेको हुँदा छँदा पनी वहाँले आफ्ना अध्यवसायले अंग्रेजीको राम्रो ज्ञानार्जन गर्री बक्सेको थियो। त्यसै किसिमले महाराजाधिराज तृभुवनवीरविक्रमशाहले पनि स्वयं आफ्ना अध्ययनले अग्रेजीको ज्ञान प्राप्त गरेको तथा आफ्ना युवराज शाहजादा र शाहजादीहरुलाई आफ्नै परिश्रमले आफ्ना डाकू भृत्यहरुको आँखा छली पुस्तक संग्रह गरी पढाई बक्सिएको हो। चन्द्रशम्सेरले देखाउन-अर्ह महाराजाधिराजका शिक्षालाई यौटा वंगाली मास्टर राखेका थिए। तर त्याले पढाउने विषयमा चन्द्रशम्सेरको आज्ञानुसार कार्य गर्नु पर्दथ्यो। एक दिन त्यस वंगाली मास्टरले धिराजलाई वृटेनको वैधानिक इतिहास पढाए अन्, त्यसै अपराधमा ति विचरा वंगाली बाबूको नोकरी नै गयो। त्यस पछि धिराजलाई आधुनिक प्रभाव बाट टाढा राख्न अंग्रेजी शिक्षा व्यवस्था नै बन्द गर्री चन्द्रशम्सेरले वहाँको शिक्षाको माध्यम संस्कृत बनाएका थिए। धिराज बाट राखिएका आफ्ना व्यायाम शिक्षक अमर शहीद धर्मभक्तले वहाँलाई नागरिक शास्त्र र राजनाति विषयका अनेक ग्रन्थहरु भारतवर्ष बाट खरिद गरी लुकाएरलगी टक्र्याएकाथिए। राणा बनाउने कँवरखलकका मुख्तियारको यो घृणित कार्य संपादनको अधिकार पनि तिनीले परम्परागत तथा पन्जाछाप सनद बाट नै पाएको हुन् क्यार।

सम्वत १९७० सन् १९२१ मा प्रिंस अष्टम एडवर्ड नेपालमा शिकार खेल्न आएका थिए। ता: १७ १८ दिसेम्बर लगायत २१ दिसेम्बर सम्म मिमले भीखनाठोरीमा शिकार खेले। त्यसै ताक महात्मा गांधीका नेतृत्वमा भारतवर्षको असहयोग आन्दोलन बडो उग्रताले चलीरहेको थियो।

अंग्रेज दास चन्द्रशम्सेरले म आफ्नो पल्टन पठाई १ महिनामा अंग्रे योगीहरुको धूलो पीठो गर्न सक्दछु भनी भारतका भायसरायलाई लेखे पठाएका थिए। त्यसमा अंग्रेजहरुले चन्द्रशम्सेरका बुद्धिमा हाँ परेको थियो।

यस किसिमले स्वेच्छाचार, सौख्य तथा निर्विरोध २९ वर्ष अमात्य कालमा चन्द्रशम्सेरले नेपाल राज्यकोषको लाखौं रुपया खर्च गरी सिंहदरबारको निर्माण गराए पछि एक करोड रुपया लि त्यसलाई नेपाल सरकारका नाँऊमा बेचेका थिए। नेपाल राज्यकोषमा अघि देखि जम्मा रहेको रुपया, जवाहिरात, नेपालको समस्त आयको अरबौं रुप भाँडारखालमा रहेको धिराजवंशको रत्न पोटली समेत हात लगाई ४०।५० करोड मूल्यका रत्न रत्नाभूषण विदेशी बैंकमा सुरक्षित राखे थिए। साथ साथ तिन्ले ६० लाख वर्षेनी आय हुने बिर्ता पनी आफ्ना नाँऊमा गराएका थिए। राज्यकोषका रुपयाले चन्द्रशम्सेरले आफ्ना छोरा हरुलाई ८।९ ओटा महल समेत तयार गरेका थिए।

चन्द्रशम्सेरले जनताका हितका नाँऊमा थानकोट भीमफेदी मार्ग र कुलेखानी गरी अन्दाजी ३५ कोशको बाटो, काठमांडुको पक्की सडक र थोर बहुत नदीहरुमा पुल, भादगाँऊ, धनकुटा, पाटन र पाल्पामा जलकलको प्रबन्ध, नेपालको बिजुली र टेलीफोन तथा त्रीभुवन चन्द्रनाँऊको कालेज र २।४ स्कूल बनाएका थिए। ति सब पनी तिन्ले आफ्नो र आफ्ना छोराहरुका सुख सुविधाका ध्येयले बनाएको हो तथा ति सबका उपभोगका अनुपातमा ९० सैकडा कँवरखलकका राणाहरुका व्यवहार आउछ।

इन्नै देवशम्सेरले दास प्रथा विमोचनलाई गरेको कार्यारम्भ सम्वत १९८२ सालमा कार्यान्वित गरी नेपालको दास प्रथाको अन्त गरेका थिए। यो कार्य कँवरखलकका राणाकालको अवश्य यौग कार्य हो। त्यसै साल आठ महिनामा ... अस्पताल, ... 

निमित्त यक्ष्मालय, धीरसिंह देखि मातातिर्थ सम्म ५ मीलको रोप्वे लाइन, र सम्वत १९९३ का फागुन ५ गतेका दिन सन् १९३७ मा रक्सौल देखि अमलेखगंज सम्म न. ग. रेल्वे लाइन चलाएको थियो। यो सब गुठिबन्द बस्त अड्डाका रुपयाले भएको हो।

चन्द्रशम्सेरका दमनचक्रले एक पटक जंगबहादुरलाई समेत बिर्साएको थियो। जस्ता प्रकार जंगबहादुरले आफ्ना राष्ट्रीय चेतना भएका विरोधिहरुलाई आफ्ना षडयंत्रका शिकार तुल्याई मारे काटे पनि ती मर्ने वीर पुरुषहरुका मुद्दाको फैसलामा "धिराजको गाथ गादी ताक्ने तथा प्राइमिनिष्टरको रोटी हर्ने कोशिस गर्ने अपराधको डंडले फैसलामा अमुकले अमुक सजाय पाएको हो, भन्ने चलन चलाएका थिए। त्यो चलन अविकलरुपमा वीरशम्सेरले अक्षुण्य राखेका थिए। त्यस ठाउँमा चन्द्रशम्सेरले एक खुड्किलो माथि 'पुगी आफ्ना इच्छित फैसलाका साथ साथ जबरजस्ती धिराजको स्विकृति लिने चलन चलाएका थिए तथा चन्द्रशम्सेर पछि हुने प्रत्येक मुखितयारहरुले पनी त्यसैको अनुकरण गर्ने गरेकाछन्। चन्द्रशम्सेरका पालामा कौशिल-अड्डाका सुब्बा कृष्णलाल भन्ने कुनै ब्राह्मणले "मकैका खेती" नाँऊको पुस्तक प्रकाशित गरेका थिए। त्यस पुस्तकका भुमिकामा "हामी आफ्ना देशी कुकूर भन्दा विदेशी कुकूरको धेरै मान गर्दछौ तर चोर डाँकूहरु बाट हाम्रो रक्षा गर्ने बखत, गद्दीमा सुत्ने विदेशी कुकूर काम न लागी स्वदेशी कुकूरहरु नै काम लाग्दछ" भन्ने लेखेको थियो। त्यस अपराधमा उक्त सुब्बा कृष्णलाल ९ वर्षलाई कैद गरए र तिन्का दस जना साथीहरुलाई ५।५ वर्षका कैदको सजाय मिल्यो। धिराज पृथ्वीका सङ्गठनका पोलाहा दुर्गाप्रसाद अधिकारी गुरुज्यूको पनी त्यसै मकैकोखेती पुस्तक पर्वमा दर्बार बन्द भई नोकरी खोसिएको थियो। यद्यपि त्यो पुस्तक प्रकाशित हुनु भन्दा पहिले स्वयं चन्द्रशंसेरका साहिंला पुत्र केशरशंसेरले पढि त्यसलाई प्रकाशित गर्ने आज्ञा दिएका थिए। बिचरा कृष्णलालको मृत्यु भ्यालखानमै भयो तिन्को मुद्दामा

पनि धिराजको गाथ गादी ताकने भन्ने अपराध लगाइएको थियो। कृष्ण-लालका मृत्युकालमा तिन्की बुढिया आमाले "कृष्णलाल शिकिस्त छन्, तिन्को औषधि उपचार गर्न पाँउ" भनी बिन्ति चढाएकि थिइन्। त्यसमा क्रूर हृदय चन्द्रशम्सेर बाट "कृष्णलाललाई मार्न भनेरै जेलमा हालेको हो" भन्ने जवाब मिल्यो। यस प्रकार बुढियाकोले मर्न लागेका आफ्ना छोराको अन्त्यकालमा मुख समेत हेर्न पाइनन्।

चन्द्रशम्सेरका पालामा नेपालका अनेक पुराना बिर्ताहरुको अपहरण भयो तथा दुनियाँले राखेका देवोत्तर सम्पत्ति माथी पनि सरकारी गुठी-बन्दवस्तअड्डाको अधिकार भयो।

चन्द्रशम्सेरले बिर्ता, गुठी वा मठका जमीनहरुको नापीको कुराको बिगो उठाए। पैल्हेको न.पाको जञ्जीर ९ हातको हुन्थ्यो। त्यस स्थानमा तिन्ले केय केटी महाराजाधिराजका ९ हातको सानु जञ्जीर तुल्याएए र आफ्नु आँखा लागेका जमीन माथी पोलाहा खडा गरी त्यसलाई नया जञ्जीरले नापी गर्दा पुराना जञ्जीरले नापिएका जमीन अवश्य बढ्थ्यो। त्यस्ता किसिमले बढेको जमीन दवाईखाने भनी धनी माथि ५ वर्षको बिगोडंड लगाई बढेको जमीन र सनद हराएका बीर्ताहरु अपहरण गर्न थाले। त्यस बिर्ता अपहरणमा नेपालका कँवरखलक बाहेक समग्र प्रजाजनको सत्वाधिकार अपहरण हुन थालेको थियो। दुनियाँले अन्तमा परिसान भई "बिगो माफी पाए रैकड हुन तैयार छौ भनि" जाहेर गर्न थाले। त्यस पंछु अघ्र गरिएका पुराना बिर्ताको बिगो माफ गरी त्यस्लाई रैकड तुल्याएका थिए। कहि कहि त पोलाहाले नै पुरानु बिर्तालाई रैकड रुपमा पाएका थिए। त्यस बिर्ता अपहरणमा मिलेको रुपया स्वयं चन्द्रशम्सेरको बिशुद्ध कमाई गानिएर तिन्का ढुकुटिमा पन्थ्यो।

चन्द्रशम्सेरले आफ्ना पालामा मठियानीका महन्थ देवदास र तिन्का मुख्य चेला रामशरनदास र चेला रामलखनदासमा आपुसना झगडा गराई महन्थ देवदासको न मरे पछि त्यसको मुद्दामा रामशरनदास

सँग ५००००) हजार रुपया घूस खाएर पनि पछि मठियानीको मठलाई राज तिर बाट मैनेजर राखी त्यस्लाई जफ्त गरेका थिए ।

जनरल गेहेन्द्रशम्सेर एक जना सफल वैज्ञानिक थिए । तिन्ले सुन्दरीजल मैगजिनमा आफ्ना सहयोगी पि० डब्लू० डि० तीर्थप्रसाद देवदास र मुसेथापा ( जापान बाट प्राक्टीकल इन्जीनियर भई फर्केका ) का सहयोगले आफुले अविष्कार गरेको भाँफले चलने मोटर गाडी तयार गरी चलाएको थियो । तिन्ले नेपालमा सहज प्रयासले बन्न सक्ने ताप र मसिनगनको अविष्कार र त्यसको प्रतिमूर्ति ( मौडेल ) समेत तयार गरेको थियो । तिन्ले अविष्कार गरेको मोटरलाई तात्कालिक नेपाली जनताले "विना घोडाको बग्गी" भन्ने नाँऊ दिएका थिए । वैज्ञानिक मुसेथापाले स्वतन्त्ररूपले आफ्ना घरमा मइनबत्तीका भाँफले चल्ने रेलगाडीको मोडेल बनाई त्यस्लाई चलाएर देखाएका थिए । पि. डब्लू. डि. तीथप्रसाद शर्माले स्वतन्त्ररूपले सानु ओटोमैटिक ( आफै चल्ने ) तोप बनाई त्यस्को सफल प्रयोग देखाएका थिए । ठइटीमा बस्ने देवदास नेवारले टिनको पंखा र सल्लो काठको बस्ने स्थान बनाई त्यस्मा आफुले अविष्कार गरेको मैसिन फिट गरी उडनखटोला (उडने जहाजको सानु मोडेल ) तैयार गरी उडाएका समेत थिए । आफ्नो प्रभाव विस्तार चाहने तथा देशको हित हुने अविष्कारहरुका द्वारा चन्द्रशम्सेरलाई त्या कुराहरु पो किन सह्य हुन्थ्यो । तेसैका फलस्वरूप हतभागी गेहेन्द्रशम्सेरलाई चन्द्रशम्सेरले धनकुटा पठाउने भएका थिए । तेसैले ग्लानि भई तिन्ले बीषपान गरी आत्महत्या गरे । तिन्का अन्तिमकालमा तिन्लाई हेर्न गएको लेनको डाक्टर सर्जन कारवाइटले "तिमीलाई विष परेको रहेछ" भन्दा "हो मलाई था । छ" भनी गेहेन्द्रशम्सेरले उत्तर दिएका थिए ।

गेहेन्द्रशम्सेरका मृत्यु पछि मुसेथापा देश बाट धिराजको गाथगादि ताकने अपराधी हुन भनी निकालिएर भारत आई दमदमका कुनै जहाजी कम्पनीमा भर्ना भई जापान गएका थिए । तिनी अद्य बधि जापान मै छन् भन्ने सुनिन्छ ।

पि. डब्लू. डि. तिर्थप्रसादलाई पनि तोप बनाए वापत गाथगादि ताक्ने निहुँ गराई ७ वर्षको कैदको सजाय मिलेको थियो।

देवदासलाई "खबरदार अब उप्रान्त यस्तो बिठंग्याँई गरिस भने जन्म कैद पर्नेस" भनी नोकरी खोसी छोडी दिएको थियो। तिन्ले ठइटीमा घडीसाँजीको काम गरी आफ्नो अन्तिमकाल बिताए। त्यस बेला पनि तिन्ले आफ्नु स्वतन्त्र रूपले सुन चाँदीको जलप गर्ने मसिनको अविष्कार गरेका थिए।

अन्य स्वतंत्र राष्ट्रमा भएका भए हाम्रा माथि लेखिएका सफल वैज्ञानिकहरुको कत्रो इज्जत र ख्याति हुने थियो। त्यस्ठाँऊ ती हतभागी हरुले कँवरखलकका स्वार्थीहरुको ठेक्कापंजामा फँसेका राष्ट्रमा जन्म पाएकोले आफ्ना महान अविष्कारका पुरस्कारमा त्यसो दानवीय दंड भोग्नु पऱ्यो। यो घटना सन् १९०६ सम्वत १९६२ मा भएको थियो।

सम्वत १९६३ सन् १९०७ मा बृटिस सरकारले तिब्बत मिसनका नाऊँले तिब्बत माथि आक्रमण गर्ने तैयारी गरेको थियो। अंग्रेजहरुले आफ्ना त्यस अभियानमा नेपाललाई समेत सहयोग दिन लेखि पठाए। अंग्रेज भक्त चन्द्रशम्सेर कसरि त्यस आज्ञालाई टार्न सक्थे। तिन्ले त्यस कुरामा कसैको सल्लाहको आवश्यकता न बुझी आफ्नो स्वीकृति लेखि पठाए र नेपालमा त्यसको तयारी गर्ने आज्ञा समेत दि सकेका थिए। चन्द्रशम्सेरको त्यो कार्य तिब्बतका संधि विरुद्ध मात्र हुनको महान कायरता पूर्ण पान थियो। त्यस्ले नेपालमाथि अंग्रेजी नियंत्रणको प्रत्यक्ष प्रभाव परेको बुझिन्थ्यो। नेपालका (फौरेन आफिस) विदेशी अड्डा का सुब्बा देविप्रसाद सापकोटाले तिब्बत नेपाल संधि अनुसार एक दोश्राका शत्रुलाई मदत दिन सकिन्न भन्ने कुरा देखाए र रोकेका थिए। त्यस कुराका समर्थक स्वयं चन्द्रशंसेरका पुत्रहरु भएकोले चन्द्रशंसेरले अंग्रेजहरुलाई आफ्नो असमर्थता लेखी पठाए। त्यसै रिसले निजले

पछि कुनै विगो थापि देविप्रसादको जागिर खोसेका थिए। साथै देविप्रसाद चाप रोगले विरामी भई विदा मागी औषधि गर्न कलकत्ता आएको बेला। पारी तिनको घर सर्वस्व गरेका थिए । त्यस किसिमले दुब्ला देवीप्रसादले नेपाल छाडी काशी आई निर्वासित जीवन बिताउनु पर्‍यो। उनले काशी बाट गोरखाली नाउँको राष्ट्रीय साप्ताहिक पत्रको प्रकाशनको कार्य प्रारम्भ गरे । 'गोरखाली' ले सर्व प्रथम कँवरखलकका राणाहरुका शासनको भन्डाफोड, शोषण र लूटको यथार्थ रुप जनताका सन्मुख ल्याएको थियो । विदेश बाट गरिने जन आन्दोलनको प्रथम प्रयास तथा सूत्रपात त्यही थियो । पछि चन्द्रशम्सेर द्वारा प्रेरणा पाई भारत सरकारले पुगनपुग चार वर्ष पछि त्यस पत्रलाई बन्द गर्ने आज्ञा दिएको ले त्यो पत्र बन्द भयो । त्यस तिब्बत मिसनमा चन्द्रशम्सेरले सक्रिय भाग न लिन सके पनि अंग्रेजहरुलाई गोरखा रेमुटको ठूलो मदत दिएका थिए । तथा अंग्रेज प्रभू प्रसन्नता प्राप्त गर्न नेपालका सरहदमा भारत तिरबाट तिब्बत सीमा सम्म जोरिएको यउटा सटक बनाई दिएका थिए। त्यस्ले गर्दा प्रत्यक्षतः नेपाल सरकारको भंसार आयको ठूलो नोकसानी समेत भएको थियो ।

महात्मा गान्धीका सम्वत १९७७ सन् १९२१ का असहयोग आन्दोलनका उग्रताले अंग्रजहरुलाई आफ्ना भारतीय साम्राज्यका स्थिरतामा संदेह भई सकेको थियो। त्यस निमित्त अंग्रेज कूट नीतिज्ञहरुले भारत रक्षाका निमित्त त्यसको किल्लाबन्दी दृढ बनाउने विचार स्थिर गरे । त्यै विचारानुसार नेपाललाई स्वतंत्र र वर्मा लाई पृथक प्रान्तको रूप दिने निश्चय गरिएको थियो। भारतीय देशी नरेशहरुलाई सम्वत १९९६ सन् १९४० मा दिइएको स्वतंत्र सत्ता पनी त्यसै किल्लाबन्दी। कल्पनाको अंग थियो। त्यसैका अनुरुप सम्वत १९७९ सन् १९२३ का २१ दिसेम्बर का दिन वृटिस सरकार र नेपाल सरकारको दोश्रो संधि भएको हो। त्यस्मा वृटिस तरबाट

कर्णल ओक्यानेर र नेपाल तिरबाट चन्द्रशम्सेरले सहिछाप गरेका थिए। यसै संधिपछि भारत तथा वृटिस सरकारले नेपालका परराष्ट्रकार्यहरुमा नेपाल स्वतंत्र छ भन्ने मानेका थिए। कँवरखलकका राणावंश प्रवर्तक नेपालका स्वयंभू पहिला मुख्तियार जंगबहादुरका पालामा भएको सेंट्रजेम्स कोर्टको नियंत्रणको त्यस किसिमले अन्त भयो।

## अंग्रेजहरूसँग भएको दोश्रो संधिको नकल

सम्वत १८७१ सन् १८१५ ता० २ दिसेम्वरका दिन भएको सुगौलि संधि देखि लगायत आज सम्म वृटिस सरकार तथा नेपाल सरकारमा बराबर शान्ति तथा मैत्री चलि आएको छ। तथा त्यस वेला देखि नेपाल सरकार बराबरै वृटिस सरकारका प्रति आफ्नो मैत्री देखाउदै आएका छन्। तथा वृटिस सरकार पनि निरन्तर नेपाल सरकारका प्रति आफ्नो सदभावना देखाउदै आएका छन्। इ दुवै सरकार एक शताब्दी भन्दा अधिकको आफ्नो श्रेष्ठ सम्बन्ध तथा मैत्रीलाई झन बलियो तथा पुष्ठ गर्ने अभिप्रायले समझौता गर्ने दुवै दलले तल लेखिएका धारा बमोजिम यउटा नविन मैत्री पूर्ण संधि गर्ने निश्चय गरेका छौं।

१—ग्रेट ब्रिटेन र नेपाल सरकारमा स्थायि शान्ति तथा मित्रता रहला साथ साथै दुवै सरकार परस्परमा अभ्यान्तरिक र वाह्य स्वतंत्रता लाई सदा मान्य राख्ने र आदर गर्न मंजूर गर्दछन।

२—(सम्वत १८७१) सन् १८१५ वाला सुगौलीको संधि र अघिको समस्त संधि समझौता तथा निश्चय आदि जो अब सम्म दुवै सरकारका बीचमा भएका छन्। तिनका सबै कुराहरुमा केवल ती कुराहरु छाडी जुनमा यस संधि संग केही परिवर्तन भएको छ अरु कुराको यस संधि बाट पुष्टि गरिन्छ।

३—समझौता गर्ने दुवै दलको संमिलित सीमाका आसपासका जो राज्य छन्। तिनका साथ शान्ति र मित्रताको सम्बन्ध स्थापित

राख्नु दुवैका लागी हित.र हुनाले ई दुवै दल यस कुरामा सहमत हुन्छन्, कि यदि दुइ दल बाट कुनै लाई ता छिमेक राज्यका कसैका साथ केहि प्रकारको संघर्ष वा मनोमालिन्य भई परस्परकोमै त्री सम्बन्ध छु:ने संभावना भएमा दुवैले एक दोश्रा लाई त्यस कुराको सूचना दिएर प्रत्येक दलले यथासाध्य त्यस संघर्ष वा मनोमालिन्यतालाई हटाउने पूर्ण चेष्टा गर्नें छन् ।

४—समझौता गर्ने दुवै तिरकाले आफ्ना प्रदेशका कुनै स्थानको पनि एक अर्काका शत्रुले उपयोग न गर्न पाउन भनेर सबै साध्य उपाय हरूको व्यवस्था गर्नु पर्ने छ ।

५—वृटिस सरकार र नेपाल सरकारमा धेरै दिन देखि भई आएका मित्रताको ध्यान राखी छिमेकका सद्भाव पूर्ण सम्बन्धको रक्षाका विचारले वृटिस सरकार यस कुरामा सहमत हुन्छ कि नेपालको शान्ति तथा भलाईका विचारले नेपाल सरकारलाई जति शस्त्रास्त्र गोला वारुद मगिनगन आदि युद्धका उपकार वा मालको जरुरत वा मगाउने इच्छा होला ती सब वृटिश भारतका मार्ग वाट मगाउनका निमित्त स्वतंत्र होला । अरु जब सम्म वृटिस सरकार लाई नेपाल सरकारको मनोभाव मित्रतापूर्ण छ तथा त्यस बाट तत्कालै वृटिस भारतलाई कुनै प्रकारको हानि पुग्ने आशंका रहोइन तब सम्म बराबर यहि निश्चय मान्य रहनेछ । यसका साथ नेपाल सरकार पनी यस कुरामा सहमत हुन्छ कि यस प्रकारका हतियार गोला बारुद आदि नता नेपाल सरकार द्वारा न वहाँ का व्यक्तिहरु द्वारा नेपालका कुनै सीमन का बाहिर पठाइने छ। तर हतियारहरुको व्यापार र एताउती पठाउने नियंत्रण तथा व्यवस्थाका लागी यस्तो समझौता हुनेछ जस्मा वृटिस सरकारलाई हथियार र गोला वारुद आदि मगाउने त्यहीं अवस्थामा अधिकार रहला, जब पहिले त्यो समझौतामा एक पक्का दुवल संमिलित होलान

अनि त्यस अवस्थामा यि सब सामान समझौताका शर्त कै बमोजिम मगाउन सकिएलान् ।

६—नेपाल सरकारका तर्फ बाट जो माल देशलाई पठाई दिइना-का लागी मगाइन्छन् । त्यस मालमा बृटिस भारतका बन्दरगाहमा कुनै प्रकारको कर ड्युटि (भंसार) लिने छैनन् । तर त्यसमा शर्त यहि रहलाकि कुनै यस्ता अधिकारीको जसलाई दुबै सरकारहरूले समय समयमा नियत गर्दै रहने छन् । लेखेको प्रमाणपत्र माल उत्रने बेलामा त्यस बन्दरगाहका कस्टमका प्रधान अधिकारीका सन्मुख राखिनेछ कि यि सबमाल नेपाल सरकारका राजकीय कार्यमा इनको आवश्यकता छ । ई सब राज्यका व्यापार वा एकाधिकारका लागी मगाइएका हुनैन् । बरंच नेपाल सरकारका आज्ञानुसार नेपाल पठाइन लागेका हुन् ।

बृटिस सरकार यस कुरामा पनि सहमतछकि बृटिस भारतका बन्दरगाहमा तुरन्तै काठमाण्डू पठाइने जो व्यापारिक माल मगाइन्छन । ती माल यदि ज्यूँकात्यूँ पठाइन्छन भन्ने तिनमा जो भन्सार लागेको होला त्यो फर्काइने छ । तर शर्तमा यो रहलाकि दुवै सिरकारमा माथी लेखिएको जो समझौता भएको छ । त्यसका अनुसार यस प्रकारका माल यस्ता नियमानुसार जो यस सम्बन्धमा समय समयमा बनाइनेछन, कस्टमका अधिकारीहरूका देखरेखमा त्यस बन्दरगाह जहाँ कि ती उत्रन्छन्, फेरि प्याक गर्नाका लागीनै खोलिनेछन् ।

७—यस सन्धिमा बृटिस सरकार तर्फबाट लेफ्टिनेन्ट कर्णल डब्लू एफ. टी. आक्योनर सी. आइ. इ. सी. वी. ओ. नेपाल दरबारमा रहने राजदूत तथा नेपाल सरकार तिरबाट हिज हाइनेस महाराज चन्द्रशम्सेर राणा जी. सी. बी. जी. सी. यस. आइ. जी. सि. एम. जी. सी. वी. ओ. डी. सी. यल् थोंङ् लिङ् माङ्को कांग वांग, स्थान प्रधान मन्त्री र मार्शल नेपालको हस्ताक्षर भएका यउटा अर्को संग परिवर्तित होला ।

आज सन् १९२३ ई० को दिसेम्बरको २१ सौं तारीख बमोजिम

सम्वत १९८० को पूषमासको षष्ठीका दिन यसमा हस्ताक्षर गरिन्छ। यसप्रकार नेपालको दोश्रो संधि भएपछि अंग्रेजहरुले नेपाललाई आफ्ना स्वार्थवश पूर्ण स्वतंत्र र धीराजलाई मैजेष्टी लेखे पछि चन्द्र-शम्सेरले पनि जंगबहादुरले राइट संग नेपालको इतिहास लेखाए सरी उनैको अनुकरणमा आफ्ना विरुदावलीमय गाथा लेखाइएको यौटा इतिहास पर्सिवल लन्डन सँग लेखाई प्रकाशित गराएका थिए। तर चन्द्रशम्सेरका मृत्यु पछि उनैका सहोदर भाई र उत्तराधिकारी भीमशम्सेरले त्यस पुस्तकको नेपालमा भएभरको प्रतिलाई पोल्न लगाई त्यको धज्जा उडाएका थिए ।

सम्वत १९८२ सन् १९२५ सालमा माथि लेखिएका अनुरुप भारतीय असहयोग आन्दोलकारीहरुको चेतना तथा प्रयत्नले अंग्रेजहरुले भारत वर्षमा अनेकानेक सुधारहरू दिने घोषणाहरुका गर्न कर लागेको थियो। तिनै गरिने सुधार घोषणाहरुका फलस्वरूप किंगकमिसन र भायसराय-कमिसन बाट भारतीय सैनिकहरुले भारतका जंगी विभागमा विग्रेडियर कमान्डर सम्मको पद पाउन थालेका थिए। संगसँगै भारतीयहरु सरह गोरखालीहरुले पनि ती पद पाउने भएको थियो। विदेशी तथा विधर्मि अंग्रेजहरुले आफ्ना पराजित तथा शासित जातिलाई दिए जति अधिकार देशमान पाए पनि विदेशमा पर्ना आफ्ना गोरखालीहरुले नपाउन भन्ने चाहने देशद्रोहि र जातिद्रोहि चन्द्रशम्सेरलाई त्यो कुरा किन मन पर्दथ्यो। नीज चन्द्रशम्सेरले तुरन्त वृटिस भारतीय सैन्यमा गोरखालीहरुले सुबेदारी पदमान मन्दा बढ्ता न पाउन् भन्ने प्रार्थना गरी पठाए। अंग्रेजहरुले आफ्ना देशद्रोहि मित्रको प्रार्थना स्वीकार गरी दुनियाँमा नभएको यउटा अनौठो लाठ सुबेदारी भन्ने पदलाई भारतीय फौजका गोरखाली-हरुको अन्तिम पद निर्धारित गरेका थिए।

सम्वत १९८३ सन् १९२६ मा चन्द्रशम्सेर पनि आफ्ना महाप्रभू लार्ड इरविन सँग भेट गर्न कलकत्ता आएका थिए। आफ्ना त्यस

यात्रामा चन्द्रशम्सेरले आफ्नो प्रतिद्वन्दि समान बुझ्ने अफगानका शाह अमानुल्लाखाँ लाई गरेको स्वागत सरी स्वागत गर्न र आफू एम्बेसेडरका हैसियतले कलकत्ता जाने प्रस्ताव राखेका थिए। तर लार्ड इरविनले चन्द्रशम्सेरका त्यस प्रस्तावलाई नामंजुर गरेकाले प्राइभेट भिजिट गरी चन्द्रशम्सेर कलकत्ता आएका थिए। अंग्रेजहरुले त्यस पटक चन्द्रशम्सेरको गर्नु सम्म अपमानमा गरेका थिए। अफगानिस्तानका शाह अमानुल्लाको शस्त्रोक सम्राट पंचमजार्जले लण्डनमा जटिमा गएर तथा दिल्लीका स्टेशनमा स्वयं भायसराय इरविनले गरेका स्वागत सत्कारका स्थानमा चन्द्रशम्सेरका स्वागतलाई स्टेशनमा डिपुटी कमिश्नर गएका थिए। साथ साथ दिल्लीमा लार्ड इरविनले ठाँऊठाँऊमा उपस्थित भएको प्रोग्रामहरु छलाछलै पनि चन्द्रशम्सेरलाई विरामी छु भनी महिनो सम्म कलकत्तामा डल्पाएको थियो। त्यस यात्रामा आफ्नो अपमान र असफल भएका चन्द्रशम्सेर अंग्रेजहरु माथि निकै मुरमुरिएका थिए।

सम्वत १९८४।८५ सन् १९२७।२८ मा देहरादूनमा बलेट महाराज त्रैलोक्यका भाई शाहजादा वृद्ध नरेन्द्रवीर विक्रमशाह र ठाकुर चन्दनसिंहहरुका प्रयत्नले 'गोरखालीग' कोस्थापना भयो। गोरखालीगको मुखपत्र स्वरुप ठाकुर चन्दनसिंह सम्पादकत्वमा 'गोरखा संसार' र पछि 'तरुण गोरखा' नामका दुइटा राष्ट्रीय साप्ताहिक पत्रहरु प्रकाशित गरिएका थिए। ती दुवै पत्रहरुले कँवरखलकका राणाहरुका कुकृत्यहरुका विरोधमा ठूलो आन्दोलन उठाएको थियो। ति पत्रहरुमा प्रकाशित भएका पंडित भवानीप्रसाद खतिओडाका राष्ट्रीय कविताहरुले कँवरखलकका राणाहरुको राम्रो पोल प्रकाश गरी जनतामा ठूलो मान पाएको थियो। पछि चन्द्रशम्सेरका अर्थचक्रमा परी दुई वर्ष भित्रै ती पत्रहरु पनि अकालकलवित भए।

चन्द्रशम्सेरलाई आफ्ना जीवनको ठूलो ममता थियो। साथ साथ तिन्लाई आफ्ना जीवन माथि खतरा हुने सर्वदा शंका रहन्थ्यो।

वंशानुक्रमिक रक्त लिप्सा र आफुले गरेका काका रणोद्दीपसिंह हत्या र सहोदर दाजू देवशम्सेर सँग गरेको विश्वासघातमा इनी स्वयं लिप्तसिद्ध र प्रवीण पुरुष थिए। त्यसै निमित्त इन्ले सुत्ने उठ्ने बस्ने जगाको निश्चय स्वयं इन्कि धर्मपत्नी वा पुत्रहरु सम्म लाई थाहा हुन्नथ्यो। इनले जगबहादुरका उद्भट दिमागमा आफ्ना कँवरखलकको राणा वंशलाई उदयपुरका महाराणा वंशोद्भव बनाउने उठेको विचारका पुष्टिका निमित्त उदयपुर राज्यदरबार सँग पत्रव्यवहार गरी महाराणाका सेवामा उपहारादि समेत पठाएको थियो। तर स्वाभिमानी तत्कालिक उदयपुरका महाराणा फतेहसिंहले त्यस कुरालाई अस्वीकार गरेका थिए।

चन्द्रशम्सेरका अन्तिमकाल सम्वत् १९८६ सन् १९२९ मा तिब्बती-हरुले संधि भङ्ग गरेकोले नेपाल सरकारले तिब्बतका विरुद्ध युद्ध घोषणा गर्नु पर्‍यो। चन्द्रशम्सेरले ठूलो निगाह गरी तिब्बत युद्ध व्ययका निमित्त नेपाल राजकोषमा २॥ करोड रुपया छाडेका थिए। त्यसै बीचमा सन् १९२९ नवम्बर २४ ता० का दिन चन्द्रशम्सेरको मृत्यु भयो। तिन्का मृत्यु पछि तिन्का माहिला छोरा बबरशम्सेरले प्राइमिष्टिरी श्रीपेच-पगरी रोकेर आफ्ना खलकको रक्तपात प्रवृत्तिलाई प्रकट गर्न चाहेका थिए। तर चन्द्रशम्सेरले आफ्ना भाईहरुलाई लेखेर दिएको, युद्ध-शम्सेर सँग भएको धर्मपत्रले पछि मोहनशम्सेरले आफ्ना भाईलाई शान्त गरे पछि त्यो पगरी भीमशम्सेरले पाएका हुन्।

चन्द्रशम्सेरका मृत्यु पछि कँवरखलक राणा रोलक्रमले कँवरखलकका पाँचौ व्यक्ति भीमशम्सेर नेपालका प्रधानमन्त्री पदमा बहाल भए। तिनले पनि बन्दूकका नालका बलले श्रीराजको पंजापत्र सनद र आफ्ना पद बहालीको पत्र भारतका भायसरायलाई लेखाएका थिए। भीमश-म्सेर गाँजाका विशेष प्रेमी थिए। तथा इन्का पार्षदहरुमा गाँजा-

 

भक्तहरु कै प्रधानता थियो। इन्का पालामा पूर्व संधि अनुसार आचरण गर्नें वचन दिएकोले तिब्बत युद्ध स्थगित भयो। त्यस संधिका मध्यस्तामा भारतसरकारको समेत ठूलो हात थियो। तिब्बत युद्ध स्थगित भए पछि युद्ध व्ययका निमित्त रहेको राजकोषको अढाई करोड रुपया भीमशम्सेरले आफ्ना घरमा ओसारेका थिए।

सम्वत १९८७।८८ सन् १९३०।३१ मा तुल्सिमेहर भन्ने वीर नवयुवकले देशमा खद्दर प्रचार विषयको प्रयत्न गर्नथालेका थिए। बहादुर तुलसीमेहरको चर्खा प्रचार कार्यले आज विशालरूप लीं सकेको छ। यहाँ सम्म कि तिन्को त्यस कार्यको प्रगतिमा आज ५००७० चर्खा चल्ने आयोजन र त्यस्को संगठित कार्य देखि ठा० रघुनाथजीले आफ्ना "जाग्रतनेपाल" मा त्यो कार्य महात्मागांधीजीले हेर्न पाउनु भएको भए खुशीले उफ्रनुहुन्थ्यो भन्ने समेत लेखेका छन्। त्यस अपराधमा भीमशम्सेर ले तिन्लाई अर्थनव्यर्थ आर्यसमाजी हो तथा तिन्का चर्खा प्रचार भित्र धिराजको गाथगादी ताक्ने अभिप्रायछ भन्ने बात लगाई झ्यालखानमा हालेका थिए। त्यसै ताक खरदार कृष्णप्रसाद कोइराला र तिन्का मानिज मुन्शी रामचन्द्र अधिकारीहरुले "कँवरखलकका राणाहरुका विरुद्ध संगठनलाई यउटा लाइब्रेरी खुलेको छ।" भन्ने मनगढन्त पोल भीमशम्सेरमा पुर्‍याएका थिए। त्यस कुरामा पनी धिराजको गाथ गादी ताक्ने षडयंत्र शंकाका नाँऊले लक्ष्मीप्रसाद देवकोटा र कृष्णप्रसाद खातिओडा प्रभृतिमा अभियोग लगाई २६ जना समातीएका र तिनीहरुलाई १०० १००) जुरमाना गारएको थियो। त्यसैका साथसाथ तथाकथित अपराधमा भैरवप्रसाद जोसी, लक्ष्मीरंजनजोसी, ठाकुरनाथ, धर्मराजथपलिया, वसंतमणि आचार्य दिक्षित प्रभृति १०।१२ जना मानिस समातिएर तिनीहरुले १२।१२ वर्षको सजाय पाएर पछि ५।५ वर्षको जेल यातना सहनु परेको थियो। त्यै तथाकथित अपराधमा पोलिएका राजाराम शर्मा खातिवडा आफ्ना नाउँको राजा शब्दले नेपाल पस्न दिदैन कँवरखलकका राणा र तिन्का

भिट्ठुहरु बाट निकै परेशान भई रहेका थिए, त्यस पकाउका एक दिन पहिले काठमाण्डू बाट हिंडी भारतवर्ष झरिसकेका थिए। तिनका प्रति "त्यो बाहुन भेटिएको भए त्यस्को छाला काढ्ने थिए।" भनी भीमशम्सेरले उर्ली भनेको शब्दहरुबाट ति राजाराम शर्मा माथि भीमशम्सेर कत्तिका कुपित थिए भन्ने थाहा हुन्छ।

त्यसै बेला रामशम्सेर तथा हिरण्यशम्सेरका महल षडयंत्रले भीमशम्सेरका विरुद्ध गरिने अर्को यउटा तथाकथित षडयंत्रको कुरा प्रचलित भयो। त्यस तथाकथित षडयंत्रमा भीमशम्सेरका नाति, पद्मशम्सेरका छोरा वसन्तशम्सेर र हिरण्यशम्सेरका भाई यज्ञशम्सेर उर्फ डल्ले बाबुसाहेब समेत सामिल थिएरे। बसन्तशम्सेर, यज्ञशम्सेरहरु नजरबन्द गरिए तथा षडयंत्रमा सहयोग दिने धीराजको गाथगादी ताक्ने अभियोगलगाई त्यसै अपराधमा तिलकमणि आचार्यदिक्षित, सुबेदार बहादुर बस्नेत, शेरबहादुर-हरुलाई नेल गलफन्दी हतकडी लगाई १२।१२ वर्षकालागी झ्यालखानमा हुलिएका थिए। पछि जेल यातनाले बिरामी भई छुटेका बसन्तमणिको तत्काल मृत्यु भयो। तिन्का दाज्यू तिलकमणि बौलाहा भई पछि ठूलो ढुङ्गा खाई मरेका थिए।

सम्वत १९८६ सन् १९२९ मा खड्गमानसिंह बस्नेत र कप्तान खन्डमानसिंह पं० रंगनाथशर्माहरुका प्रयत्नले ; बरियारपुरका गुरुज्यू उमेशविक्रमशाह उर्फ कृष्णराणाले कँवरखलकका राणाहरुको मूलोच्छेद गर्ने यउटा सफल आयोजन बनाएको थियो। उमेश-विक्रमशाह कँवरखलकका राणाहरुका संबन्धि हुनाले र यस सदिका मुलुकी शाह खलकहरुबाट कँवरखलकका राणाहरुलाई रत्ती भर डर-त्रास न रहेकोले दरबारहरुमा उमेशविक्रमशाहको प्रवेशाधिकारमा बाधा थिएन। स्वाभिमानी उमेशविक्रमशाहलाई आफ्नो वंशको दुर्दशाले निकै पीरेको थियो। तिनीहरुले त्येहारका जुवामा जम्मा भई बसेका भएभरका कँवरखलकका राणाहरु माथि डायनामैडको विस्फोट

द्वारा एकै ठाउँमा सबैको चिहान गर्ने विचार स्थिर गरेका थिए त्यस विषयको सम्पूर्ण तैयारी समेत भई सकेको थियो। बरेवाका शाहेबज्यू लक्ष्मन राजा पनी त्यस आयोजनमा संमिलित थिए। पछि धन र प्राणमयले नीजले भीमशंसेरमा त्यस आयोजनको जम्मै कुरा र सहयोगीहरुको नाउँ समेत प्रकट गरिदिए। त्यस कुराले गर्दा उमेशविक्रमशाह पक्रिए। तिन्का साथी कप्तान खन्डमानसिंह, मैनाबहादुर, खड्गमानसिंह वस्नेत र रंगनाथउपाध्याय हरुलाई बाँसमा झुन्ड्याई सबैलाई ४ दिन सम्म लगातार कोर्रा हान्न लगाएको थियो। अन्तमा महाराजाधिराज समेत सबै भाई भारदार जम्मा गरी तिनीहरु माथी महाराजाधिराजको गाथगादी ताके तथा कँवरखलकको रोटी मार्ने षडयंत्रको अभियोग लगाईसजाय सुनाइएको थियो। त्यसै भरी सभामा वीर खड्गमानसिंहवस्नेतले कँवरखलकको नाँशहोस् भनी नारा लगाएकोमा भीमशम्सेरले गोली हान्छु भन्दा लौ गोली हान्न भनी आफ्नो छाती थापेका थिए। ती चारै वीरहरु जन्म भरिलाई बन्दी गरिए र स्वदेशाभिमानी उमेशविक्रमशाहलाई नजर बंद गरी ३ वर्षसंम पाल्पा राखिएको थियो। पछि तिनी छूटेर वरियारपुर आएका थिए। तिनले देश दशा ग्लानिले पछि कुटी सेवन गरेका थिए। त्यसै अवस्थामा तिनको मृत्यु भयो। पछि ३ वर्ष सम्म कैद भएर पं० रंगनाथशर्मा श्रीपुरदरबार कि महारानीका प्रयत्नले छुटी भारतवर्षमा निर्वासित जीवन विताएका छन्।

नेपाल जेलमा तिन्ताक कैदीहरुका रासनमा कुहेको मकै दिइने गरेको थियो। त्यस्का विरुद्ध वीर कप्तान खन्डमानसिंह, मैनासिंह र खड्गमानवस्नेतहरुले दुई पटक पहिलो पाला ३ दिन र दोश्रो पाला ५ दिनको सफल हडताल गरेका थिए। त्यस हडतालका फलस्वरूप त्यस उप्रान्त कैदीहरुलाई चामल पाइन थाल्यो। त्यस किसिमले नारकीय जेल भित्र पनि आफ्ना विरोचित कार्यले कँवरशाहीलाई झुकाउने नवयुवकहरु माथि कँवरखलकका राणाहरु अत्यन्त कुपित भए। उत्तरोत्तर तिनीहरुका त्यस कोपका फल स्वरूप तिनीहरुको जेलयातना

हुदै गएको थियो । अन्तमा त्यै जेल यातनाका अत्याचारका फलस्वरुप शान खड्गमानसिंह र मैनासिंह क्षय रोग भई जेल मै शहीद भए । तिन्का मृत्यु कालमा तिन्की ७४ वर्षिया बुढिया आमाले छोराको मुख हेर्नै सम्म पाइनन् । बहादुर खड्गमानसिंहवस्नेत आज २० वर्ष भयो जेल यातना भर्दै छन् । तिन्का घाटिमाँ एक धार्निको गलफन्दी र कम्मरमा २० सेर को सिक्री लगाएको छ । वर्षौं देखि खड्गमानसिंहवस्नेतले भित्ताको आड गरी एक गोडाले उभीएर दिन भरी मातृभूमिको वंदनामा दिन बिताउने नियम गरेको छ । पद्मशम्सेरका अमात्यकालमा मीर सुब्बा गोविन्दप्रसादढुगानाले आफ्ना छोरा वीर चुडाप्रसादका साथ सबै बन्दीहरुले माफि मागे छाडिने छौ, भन्ने प्रस्ताव लिएर झ्यालखानमा गएका थिए। त्यस बखत वीर खड्गमानसिंहवस्नेतले "हामीले के बिरायेका छौं र कुन कुराको माफि माग्ने हो, उसमाथि बीस बीस वर्ष देखि बसी आएका हामीहरुको यहि जेलखानानै घर द्वार हो" भन्ने वीरोचित उत्तर दिएका थिए ।

गाँजा प्रेमी भीमशम्सेरका अमात्य कालमा प्रत्येक कुरामा अंधाधुन्ध चलेको थियो । इन्का भोटिनी गर्भजात पुत्र रामशम्सेरले बाबूका कार्य कालमा वंश परम्परागत प्रच्छन्न कामुकताको आदर्श खडा राखेका थिए । आफूले मन पराए कि सुन्दरी मातृजातिलाई आफ्नो अंकशायिनी तुल्याउने घृणित इच्छा पूर्तिका निमित्त इनी बाटो घाटोमा मोटर कुदाई दिन रात कुर्न वा इच्छित नारीलाई बलात् अपहरण गर्न समेत पछि राख्दैनथे ।

भीमशम्सेरले कुनै एक सुन्दरी थाक्सिनि भोटे सुन्दरीलाई आफ्नो बडामहारानी बनाएको थियो । ती भोटे सुन्दरी सर्वप्रथम पहाड बाट झरी कुनै एक लप्टेनका घरमा भाँडा माझ्ने नोकरी गरि वसेकी थिइन् । पछि ती केटिले आफ्ना सुन्दरताले रामशम्सेरका दरबारमा केटी भई पाई तीन चार वर्ष यहाँ बिताए कि थिइन् । कुनै कार्यवश रामशम्सेरका

महलमा आएका गांजा पृथ्वी वृद्ध नेपालामात्य भीमशम्सेरले तिन्लाई देखि विमोहित भए। निजले पछि तिनै सुन्दरीलाई कँवरखलककाराणाहरु कि सर्वमान्या कान्छा बडा महारानी तुल्याएका थिए। पछि सिता महारानीका नाउँले प्रसिद्ध भएकि भीमशम्सेरकी कान्छा बडा महारानी तिनै भोटनी सुन्दरी हुन्। भीमशम्सेरले आफ्नी प्रथम भोटिनी गर्भजात पुत्र हरख-शम्सेर, रामशम्सेर र नाति महाबीर शम्सेर प्रभृति लाई समेत नेपाला-मात्य रोलक्रमको सदस्यता दिएका थिए।

मतिमन्द भीमशम्सेरले आफ्ना पालामा श्री ५ नेपालेश्वरको चलि आएको मौखिक सन्मानमा समेत ठेस लगाउने दुःसाहस गर्न थालेका थिए। स्वयं जङ्गबहादुरले वीर देशभक्तहरुलाई निर्विज गरी नेपालमा एकेश्वरी ठिकेदारी प्राप्त गरे पछि पनी आफ्ना पाला सम्म नेपालामात्य पदको वर्षैंनी थमौति गराउनु पर्दथ्यो। प्रत्येक चाँड दसैं र धिराजका जंमोत्सवका दिन कमान्डर-इन-चिफ लगायतका भारदार हरुका साथ धिराजका दरबारमा उपस्थित भई नेपालका अदना भार-दारका समान कायदा साथ दुबै हातले कुर्नेश गरी असर्फी नजर राख्नु पर्दथ्यो। ददा खानकि भुक्त जङ्गबहादुरले महाराजाधिराज लाई आफ्ना पिठ्यूमा बोकेर उनका इच्छुत स्थानमा पुऱ्याउनु आफ्नो कर्तब्य सम्झेका थिए। धिराज कुलका प्रत्येक भाई सन्तान चौतरिया साहिबजूहरुमा यथोचित मान दर्शाउनु पर्दथ्यो। त्यसै प्रकार कँवरखलकका द्वितीय मुख्तियार बमबहादुरले पनी त्यस नियमको पूर्णताले पालन् गरेका थिए।

कँवरखलकका तृतिय मुख्तियार रणोद्दीपसिंहले काखे बालक महा-राजाधिराज पाएर राजकाजमा जति सुकै अनगलता गरे पनी धिराजका प्रति तिन्को पूर्ण भक्ति थियो। रणोद्दीपसिंह सदा आफ्ना प्रभू धिराजको चरणोदक पान गर्दथे तथा सर्वदा धिराजलाई आफ्ना काखमा लिएर "मेरो प्रभू" "मेरो मालिक" भन्न कहिल्यै पनि थाक्दैनथे।

वंश रीतानुसार महाराजाधिराजको पुरा खाने चलनको पनि तिनले भक्ति साथ पालन गर्ने गरेका थिए। धिराज कुलका भाई सन्तान, साहेबज्यूहरुका सन्मानको यथोचित प्रदर्शनमा कमी न गरी तिनीहरुलाई पनि रणोद्दीपसिंहले मालिक शरह नै मानेका थिए। त्यस ठाँऊमा काका र वंश हत्याकांडमा सफल भएका कँवरखलकका चतुर्थ मुख्तियार वीरशम्सेरले श्री ५ माहिला बडा महारानीको प्रश्रयताले नारायणहिटीदरबारलाई लालदरबारले छोपेर धिराजको बाल्यावस्था र निर्बोधताको आडमा दरबार भित्र धिराजका सम्मुख बस ऊठका नियम पालनको उत विचार राख्न घटाउँदै गए पनि चलि आएको रीत अनुसार बाहिरिया प्रदर्शनमा केही त्रुटि गरेका थिएनन्। लूटेको धनबल तथा आफ्ना हुँदैरा शक्तिबलले तिन्ले भाई चौतरिया साहेबजूहरुका सम्मानको विचारको शिष्टाचारलाई छाड्दै गएका थिए। कँवरखलकका माँचौं मुख्तियार देवशम्सेरले श्री ५ महाराजाधिराजका सभापतित्वमा बृटेनियाका पार्लामेंटरी हिसाबले राजकाज चलाउने प्रथा ग्रहण गर्न आँटेका र तेसै अनुरूप कार्यगर्न तिन्ले नेपालका साहेबजूहरुलाई समेत आमन्त्रण पठाएका थिए। कँवरखलकका पाँचौ चन्द्रशम्सेर जस्ले आफ्ना पदबहालिमा नवयुवक धिराज पृथ्वीवीरविक्रमशाहको विरोध सहनु परेको ले धिराज पृथ्वीक शेष सम्म धिराजको सम्मान तथा श्रेष्ठतामा त्रुटी गर्ने साहस गरेका थिएनन्। त्यस विषयमा घटेका गरटा घटनाको वर्णनको लोभलाई रोक्न न सकि यहाँ लेखि रहेको छु—महाराजाधिराज पृथ्वीनारायणशाहले एक दिन शिकारमा जाने इच्छाले आफ्नो मोटर ल्याउने हुकुम बक्सयो। धिराजका अंगरक्षक रुपमा रहने चन्द्रशम्सेर पुत्रहरुले धिराजको इच्छा चन्द्रशम्सेरमा भन्न पठाए। त्यस बेला चन्द्रशम्सेर कुनै कार्यमा अन्यमनस्क भएकाले ऐ हे पर्दैन भनी जवाफ दिएका थिए। चन्दशम्सेरको त्यो जवाब महाराजाधिराजलाई सुनाइयो, त्यसमा भृत्य चन्द्रशम्सेरको त्यो प्रत्युत्तरको नियन्त्रण स्वाभिमानी पृथ्वी

वीरविक्रमशाहलाई किन मन पर्दथ्यो। तिन्ले क्रोधपूर्ण स्वरले, चन्द्र-शम्सेर म माथी खटन गर्ने को हौं, म अवश्य शिकारलाई जान्छु भनी स्वयं मोटरमा सवारी भई दरबार बाट बाहिर निस्की बक्सोयो। त्यो समाचार तुरन्त चन्द्रशम्सेरले पाए, आफ्ना औचित्यको सीमा उलंघन गरिएको कुरा चन्द्रशम्सेरले समझन वेर लाएनन्। त्यसैले तिनी तुरन्त कार्तुस गोलीहरुको पेटी भिरी आफैले सामान्य अर्दलीका रुपमा महाराजाधिराज सवारी हुने सडकमा अगाडी गई उभीई रहे। केहिबेर पछि धिराजको सवारी त्यहाँ पुग्यो। धिराजको सवारी पुग्ना साथ चन्द्रशम्सेरले जंगी सैल्यूट चढाएर "सरकारको शिकारको सवारी चलाउन तावेदार हजीर छ" भनी बिंति चढाएका थिये। नवयुवक महाराजाधिराजले चन्द्रशम्सेरको त्यस किसिमल प्रदर्शलन गरेकोले हाँसि बक्सेका थियो। फेरि चन्द्रशम्सेले धिराज पृथ्वीका शेष सम्म कुनै दुःसाहस गर्न सकेनन्। तर सिंह-शावकका नङ्को उग्रताले डराई त्यस्लाई अकालकलुवित गर्नमा सफलता पाएका थिए। धिराज पृथ्वीका शेष पछि पुनः ५ वर्षे वालख महाराजाधिराज त्रिभुवनवीरविक्रमशाहलाई पाएर चन्द्रशम्सेरले नेपालामात्य शक्तिलाई अपिरहार्य गराउदै गए पनि धिराजका मौखिक सन्मान सुख साधन तथा श्रेष्ठतामा रत्ति भर पनि कमि गरिएको थिएन। अवश्य सत्ताधिकारमा दुधे वालख राजाधिराज भ को र आफ्ना बढो रहेको कँवरखलकका राणाहरुका बहुसंख्याले चन्द्रशम्सेरले धिराज कुलका भाई सन्तान चौतरियाहरुका श्रेष्ठतामा आत्रात गर्न थालेका थिए। कँवर-खलकका छैरौ ठेकेदार मुख्तियार गाँजा भक्त भीमशम्सेरले दा स्वयं धिराजका प्रति गरिएका अहमन्यतापूर्ण व्यवहारले धिराजका सम्मानमा समेत शिथिलता देखाउन थालेको थियो। यहाँ सम्म कि त्यसै अहम-न्यता वश तिनले आफ्नी भोर्टिनी गर्भ जात पुत्रका दुई जना छोरी-हरुको विवाह युवराज धिराज महेन्द्रप्रताप वीर विक्रमशाह सँग गर्ने ठीक पारि सकेको र विवाह का दिन तिथि सोत निश्चि भई सकेको थियो त्यसै बेला

तिन्को मृत्यु भएकोले मात्र त्यस निकृष्ट हीन रक्तका संबन्ध बाट नेपाल राजवंश बाच्नसकेको हो ।

भीमशंसेरका पालामा जनहितका नाँऊले काठमांडूको थप जलकल तथा रत्नालय तथा मोरङ्गको जलकलको प्रबंध भएको थियो । भीमशंसेरका थप जलकलले पहिलेका जलकलको पानीलाई समेत भ्रष्ट गरेकोले हुनाँले त्यस थप जलमा ठूलो असन्तोष प्रकट गरेका थिए ।

भीमशंसेरले पनि आफ्ना पुग न पुग ९ वर्षका अमात्य कालमा नेपाल राजकोषको करोडौं रुपया व्यय गरी ४, ५ ओटा दरबारहरु बनाए । नेपालको समस्त आय लुटेर १५ करोड रुपया नगद र ५, ६ करोड रुपयाका जवाहिरातहरु विदेशी बैंकमा आफ्ना नाँऊले सुरक्षित राखेका थिए । इन्ले ० लाख रुपया आयको भूभागलाई आफ्नो विर्ता बनाएका थिए । भीमशम्सेलाई पनि आफ्ना पूर्वज जंगबहादुर र दाजू चन्द्रशम्सेरका सरहको उपज कँवरखलकलाई शिसौदिया वंशोद्भव बनाउने खत चढेको थियो । त्यस्का निमित्त तिन्ले नेपाल बाट अनेक उपहारादिका साथ उदयपुरमा आफ्नो मानिस पठाएको थियो । त्यस्का उत्तरमा महाराणा भूपालसिंहले मोजजंगराणा मार्फत चिल्लो घसेर भीमशम्सेरलाई समेत फुस्याई दिएका थिए । सम्वत १९८९ का भाद्र महिना सन् १९३३ मा तिन्को मृत्यु शंका जनक रितले भयो । भीमशंसेरले संग्रह गरेका धन रत्न तथा नेपाल राजकोषका रुपया ओसार्नमा व्यस्त भएकोले भीमशम्सेर कि मोटे सुन्दरी सिता महारानी बोक्न गरेकि पत्नि र रामशम्सेर गरी दुवै आमा छोराले तिन्का शवलाई १२ घन्टा सम्म तेसै कुहाई राखेका थिए ।

भीमशम्सेरका मृत्यु पछि कँवरखलका आठौं सदस्य युद्धशंसेर नेपाल-अमात्य पदमा बहाल भए । इन्ले आफ्ना पदबहालि पंजापत्र सनदलाई बडा नम्रता पूर्वक प्राप्त गरी पहिल्ले ता महाराजाधिराजको राजभक्तिको स्वांत पनि गरेका थिए ।

इन्का पालामा सम्वत १९९० सन् १९३४ मा २ बजे दिउसो ठूलो भैंचालो गएको थियो। यस भीषण भैंचालोले भादगाँऊ पाटन र काठमाण्डू प्रायः ध्वस्त भएको र राज्यका अनेक स्थान क्षतिग्रस्त भएका थिए। यस भूकम्प मा राज्यभरीमा ८५१९ को मानिसहरुको मृत्यु भयो, त्यस्मा काठमांडू बाहिर भित्र गरी ७२४४ भादगाँऊ बाहिर भित्र गरि १४२८ को मृत्यु भयो त्यसै गरी पूर्व पहाडमा ३९७४ मानिस पश्चिम पहाडमा ६५ मानिस र पूर्व मधेस र पश्चिम मधेस गरी कुल जम्मा ८७०३ मानिस मरे। राज्य भरीमा सब मिलाई १७२२२ मानिसहरु मरेका थिए। भुकम्प पीडित जनतालाई युद्ध शम्सेरले गुठी अड्डाको ३० लाख रुपया कर्ज समेत दिएका थिए। इनैका पालामा नेपाल तथा ब्रिटेनमा एक दोश्राका समानाधिकारपूर्ण राजदूतहरू राखिने संधि भएको थियो। स्यस्का पहिले काठमाण्डूमा बृटिश रेजिडेन्ट र दिल्लीमा नेपालको एजेन्ट रहन्थ्यो।

युद्धशम्सेरले आफ्ना पालामा आफ्ना पुत्र हरिशम्सेर कि पुत्रीको विवाह वर्तमान युवराज महेन्द्रप्रताप वीरविक्रमशाह सँग गरे। त्यसै साल मार्च सन् १९३७ मा वर्तमान नेपालेश्वर श्री ५ महाराजाधिराज त्रिभुवनवीरविक्रमशाह देवका शासनको २५ सौं वर्ष पुगेकोले नेपालमा बडा धूमधामले रौप्य वार्षिकोत्सव ( सिल्वर जुबलि ) मनाइएको थियो।

काशीमा पनि सु० । होमनाथजीका पुत्र पण्डित केदारनाथजीले आफ्ना खर्चले नेपालेश्वरको जुबलि उत्सवको सभागरी बडो धूमधामले मनाएका थियो। त्यस सभामा पं० केदारनाथ उपाध्याय खतीओडाले दिनु भएको भाषण:—

## सभापतिजी तथा उपस्थित महिला र सज्जनवृन्द

"श्री ५ सरकार त्रिभुवनवीरविक्रमशाहदेव बाट नेपाल मुलुकको राजसिंघासनमा विराजमान भ० बक्सेको आज २५वर्ष भयो।"

"यसै उपलक्षमा आज नेपालमा भारी उत्सव हुन लागेको कुरा नेपालीहरूलाई जाहेर छ, उसैको अनुकरण गरी हामी काशीवासी नेपालीहरुले समेत श्री ५ सरकारको परमेश्वर सित जय प्रार्थना गर्नु धर्म हुनाले यो समागम गरिएको हो ।"

"जगत्कर्ता भगवानले श्री ५ सरकारलाई चिरायु गराउन् । हामी सारा नेपालमात्रका राजा सो श्री ५ सरकार जस्तो धीर वीर विवेकवान् समेत् अर्को कोही नेपालराज्य भरमा छैनन् भन्न्या कुरा विश्वस्त सुत्र बाट हामीले सुनेका पनी छौं जगत्कर्ता भगवान्ले वहाँकोसो गुण चाँडो पृथ्वीभर सर्वत्र विकाश गराउन् ।"

"जस्तै महाराणा सग्रामसिंहका वंशज श्री ५ सरकारका पुरखा पृथ्वीनारायणशाह र रणबहादुरशाहलाई भगवान्ले आफ्नू विमल कीर्ति पृथिवी भर सर्वत्र फैलाउने युक्ति बल जय बक्सेको थियो, त्यै प्रकार भगवान्ले श्री ५ सरकारलाई आफ्नू विमल कीर्ति फैलाउन युक्ति बलको संयुक्त गराई जय गराई दिउन् ।"

"जस्तै महारानी कैकईले बाधा गराई बक्सेता पनी श्रीरामचन्द्रजी अयोध्यामा राजा होइबक्सियो । जस्तै रानी छत्रकुमारी साहिबाले र अरु कसैले बाधा गराई बक्सेता पनी हालैमा श्री ५ महाराजाधिराजका दाज्यू श्री ५ राम राजासाहेबले आफ्ना हकको रामनगर ईस्टेट प्राप्त गरी बक्सियो, त्यै प्रकार भगवानको मर्जी भये न हुन सक्ने कुनै कार्य मानव, जो कुछ बस जसलाई हुनजान्छ त्यो त्यो भगवान कै मर्जीले हुन्छ सो हुन गयेकाम सम्झद रहरुले सन्तोष राख्छन् ।"

"सोही कारण श्री ५ सरकार बाट भगवानको भरोसा गरेर यथानुकूल सबै सित योग्य वर्ताव राखी राज भै रहे आफ्नू विमल कीर्ति फैलाई बक्सन क्यै पनि कठिनको कुरा छैन।"

"तसर्थ आफ्नू क्षात्रधर्म छाडी भिक्षावृत्ति ग्रहण गर्ने इच्छा गर्ने

अर्जुनका माफिक श्री ५ सरकार बाट कुनै प्रकारको मलीनता ग्रहण गरी बक्सनू उचित होइन भगवानले वहाँको मन्साय पूर्ण अवश्य गराई बक्सने छ।"

सम्वत १९९१ सन् १९३५ मा अगि वीरशम्सेर र भीमशंसेरले आफ्ना आफ्ना अमात्यकालमा आफ्ना कउ र भोटेनी भित्रैनी पुत्रहरुलाई दिएको प्राइमिनिष्टरी रोलक्रमको सदस्यतालाई युद्ध शंसेरले खारेज गरे। त्यस कार्यमा चन्द्रशसेर र युद्धशंसेर पुत्रहरुको ठूलो षडयंत्र थियो। मझ्या रुद्र, तेज, प्रताप, हिरण्यहरुको रोलक्रम रहनाले चन्द्र र युद्ध पुत्र मोहन, बबर, केशर, बहादुरहरुको रोलक्रम टाढा पर्दथ्यो। त्यसै निमित्त ति मझ्या कँवरखलकका राणाहरुले पदच्युत र लांछित भई काठमाण्डू बाट निर्वासित हुनु पर्‍यो। रुद्रशंसेर पाल्पाका, हिरण्यशंसेर वीरगंजलका रामशंसेर जलेश्वरका बड़ा हाकिमा भई धपिएका थिए। स्वाभिमानी तेजशंसेर तथा प्रतापशंसेरले भारतवर्ष भरि आफ्नु शेष जीवन उतै बिताए। प्रतापशंसेरले "लिग आफ नेसन्समा" त्यसको अपिल सम्म गर्ने विचार गरेका थिए। तिन्को मृत्यु शंकाजन भयो। महावीरशंसेर पनि कलकत्तामा आई स्वतंत्र व्यवसाय गरि बसेकाछन्।

महाराजाधिराज कि जेठी शाहजादी को विवाह आफ्नै मनले युद्धशंसेरले कुनै कँवरखलकका राणा सँग ठिक गरी, जरनेल न भई शाहजादी सँग विवाह न हुने हुँदा त्यस भाग्यवानलाई जरनेलि समेत दि, महाराजाधिराज काहाँ सलामी राख्न भनी पठाएका थिए। आफ्नो मनत न ली आफ्नी छोरीको विवाह छिनी र एक्कासी भाविज्वाई हुने भएका ले रुपया राख्न आएको देखि महाराजाधिराजले त्यस सम्बन्धलाई अस्वीकार गरिबक्स्यो। त्यले गर्दा रिसले कँवरखलकका राणाहरुले ति शाहजादीको विवाह ज्यपुरको मान्डलिक सिकर नाउँको नगन्य राज्यमा गराएका थिए। महाराजाधिराज बाट आफ्नो द्वितीय शाहजादी नलिनीराज्यलक्ष्मीदेवीको विवाह अप्रैल सन् १९५० मा भारतको काश्मीरान्तरगतको पुँछ रियासतका राजा रतनदेवसिंह

सँग गरी नेपालका कँवरहरुको पंजा बाट आफ्ना दुईजना शाहजादीहरुको मुक्ति गराई बक्सेको थियो ।

सम्वत १९९४ सन् १९३८ मा माधवरामजोसिका पुत्र शुक्रराज शास्त्री र गंगालालश्रेष्ठले यउटा दल कायम गरी गीता प्रवचनको संवबनिक भाषण गरेका थिए । त्यस अपराधमा शुक्रराजले ६ वर्षको सजा र कुटपिट गरी पहिले ता गंगालाललाई छुडेका थियो, तर पछि ति पनी बन्दी भए । तिनै ताक भारतबाट कृषिशास्त्रमा विशेषता प्राप्त गरी नेपाल फर्केका शंकरप्रसाद शर्माले कँवरखलकको कमातिन गन अस्वीकार गरेका अपराधमा सर्वश्व भई भारत भरि ज्यान जोगानु परेको थियो ।

उपरोक्त घटना पछि युद्धशंसेरको स्वेच्छाचार प्रवृत्तिले उग्ररुप लिन थाल्यो । साथसाथ कामुक युद्धशंसेरले आफनो कामवासना चरितार्थ गर्नमा कृत्याकृत्यको समेत विचार राखन छाडेका थिए । युद्धशंसेरका मन परेका सुन्दरी मातृजातिलाई दरबार भित्राउने कर्ममा अनेक नेपाली पशुहरुको एक प्रकारले होडनै लागेको थियो । युद्ध शंसेरका नजरमा परेकि नवयौवना सुन्दरी स्त्री अनेक किसिमले दरबार भित्राइन्थे । कान्छी रानी साहेब भनाउने निजकि भित्रेनी आफ्ना खोपिमा आफ्ना परिवारका सुन्दरी चरिहरुलाई फँसाउने कलामा निपुण भएको लेनै तिन्को ठूलो प्रतिष्ठा भएको थियो । युद्धशंसेरका काम लिप्साको चरमता यस एक कुराले बुझ्न सकिन्छ कि तिन्ले आफ्नै दुध खवाउने धाई सँग यौन सम्बन्ध राखेका थिए तथा तिनै बुधाईका गर्भबाट मानबहादुर पछिका मानशंसेरको जन्म भएको थियो ।

यसै किसिमका अरु अनेक स्वेच्छाचार तथा अनाचारहरु र रक्त बीज तुल्य बढेका वर्ण शंकर कँवरखलकका राणा संतति हरुका गैर जिम्मेदारी पूर्ण कुकृत्यहरुले उत्पीडित भएर नेपाली जनता आजीत तथा जागत हुँदै गएको थियो । त्यसै बखत दशरथचन्द्र भन्ने एक साहसी नवयुवकको टंकप्रसाद उपाध्याय सँग तिन्का भीमफेदीका

होटलमा भेट भयो। कुरा कुरामा तिनीहरुले कँवरखलकका राणाहरुको अत्याचारका विरुद्ध यउटा संस्था कायम गर्नें निश्चय गरे। यस किसिमले भीमकेदीका होटलमा पहिलो नेपालीजन आन्दोलन प्रजा-परिषधको बीजारोपण भयो। त्यस पछि उपरोक्त दुवै नवयुकहरुले जीवराजशर्मा, धर्मभक्त रामहरीशर्माको पनी सहयोग पाए। सम्वत १९९३ साल जेष्ठ २ गते का दिन तथा सन् १९३८ मा झोसेटोलको धर्मभक्तका घरमा प्रजापरिषधको रित अनुसारले उद्घाटन भयो र त्यसका सभापति टंकप्रसाद उपाध्याय मनोनित भए। प्रजापरिषधका कर्णधारहरुले गुप्त व्यवहारका निमित्त गुप्त नाम पनी राखेका थिए। त्यस गुप्त नाम अनुसार महाराजाधिराजको 'मुखिया' प्राइमिनिष्टरको 'जमादार' 'टाइपको' ग्रेव टंकप्रसादको 'प्रकाश' दसरथचन्द्रको 'सेवासिंह' पछि 'सुशिल' जीवराजशर्माको 'वसन्त रामहरी शर्माको 'हरेराम' तथा धर्मभक्तको 'अवबहादुर' भन्ने राखेका थिए।

प्रजापरिषधको उदेश्य श्री ५ महाराजाधिराजका वैधानिक अधिनायकत्वमा नेपालमा प्रजातंत्र शासन व्यवस्था कायम गरी जनसाधारण लाई मानिसको जन्मसिद्ध अधिकार स्वतंत्रता प्राप्त गराउने थियो। प्रजापरिषधले त्यस उदेश्यमा महाराजाधिराज त्रिभुवनवीरविक्रम शाहदेव बाट पनि आशीर्वाद र सहानुभूति तथा मंजूरी प्राप्त गरि सकेका थिए आन्दोलन पूर्णतः असहयोग तथा अहिंसात्मक रुपले चलाउने निश्चय भएको थियो। प्रजापरिषदका श्रीदसरथचन्द्र र २।१ अरु सदस्यहरुको व्यक्तिगत अहिन्सा मा उत्ति विस्वास थिएन तथा तिनीहरुले व्यक्तिगत हिसाबले केहि डाइनमाइडहरुको संग्रह समेत गरेका थिए। त्यस डाइनामाइडको प्रयोग प्रधान मन्त्री लगायत यावत कँवरखलकका राणाहरु जम्मा भएको जुवाका खालमा वा खलकले पंचायतनको मंदिरमा दर्शनार्थ उपस्थित भएका बखतमा या श्री ५ नेपालेश्वर अनुपस्थित रहेका कँवर खलका राणाहरुको बैठक दरबारमा विष्फोट गरी कँवरखलकका राणा

हरूको नाश गर्ने विचार स्थिर गरेको थियो । त्यो प्रयत्न सर्वथा दसरथ-चन्द्रको व्यक्तिगत थियो तथा त्यसमा प्रजापरिषधको केहि सम्बन्ध थिएन ।

प्रजापरिषधका प्रमुख सदस्यहरुमा चूडाप्रसादशर्मा, गोविन्दप्रसाद-शर्मा, पुष्करनाथउप्रेति, मुकुन्दनाथरिमाल, बलबहादुरपाण्डे, भुवनप्रसाददवाडी, फणिन्द्रराजसत्याल, हरिकृष्णश्रेष्ठ, गंगालालश्रेष्ठ चक्रबहादुर खत्री, गणेशमानश्रेष्ठ, केशवखत्री, रामजीखत्री, चन्द्रमानश्रेष्ठ तथा राजा जयपृथ्विबहादुरहरु थिए । यस बाहेक अरु पनि अनेक व्यक्ति थिए जो नेपालमा अद्यावधि छन् तथा तिन्को नाऊँ दिनाले सम्भत: तिनीहरु माथि आपत पर्ने भएकोले यहाँ लेखन सकिएन । प्रजापरिषधका सदस्यहरुमा अनेक कुलललनाहरु पनी संमिलित थिए ।

वस्तेट महाराजा त्रैलोक्यविक्रमशाहका शेष पछि शिशु नरेश पृथ्वी वीरविक्रमलाई पाएर तथा वहाँले पनि देश काल ज्ञान प्राप्त गर्नु भन्दा प्रथम अकाल मृत्युले स्वर्ग भए पछि वर्तमान महाराजाधिराज त्रिभुवन वीरविक्रमशाहलाई समेत बालख पाएर कँवरखलकका राणाहरुले निकृष्तम नमकहरामी पूर्वक नेपाल नरेशको शक्ति तथा सत्वलाई खोउदै गए पनी चन्द्रशम्सेरका पाला सम्म महाराजाधिराजका मौखिक सम्मान सुख साधान तथा विलास सामग्रीहरुमा कमी गरिएको थिएन, तथा त्यसै कारण संसारिक वार्ता बुझ्न सक्ने अवस्थाका भएर पनी वर्तमान नेपाल नरेशले देशका शोषणको र आफु माथि भएको कँवरखलकका राणाहरुको अप्रत्यक्ष अनुशासनको अनुभव गर्ने मौका पाई बक्सेको थिएन । भीमशम्सेर तथा युद्धशम्सेरका पालामा प्रत्यक्षत: महाराजाधिराजका गौरव माथी हस्तक्षेप हुन थाल्यो । कँवरखलकका राणाहरुका त्यस प्रकारको औचित्यको सीमा उलंघन गरिएको कार्यले महाराजाधिराजलाई आफ्नो अवस्था तथा प्रजाका उत्पिडन माथी नजर दिने मौका मिल्यो । त्यस वेला आफ्नू असमर्थताले खिन्न भई रहने महाराजाधिराजका संमुख वहाँका

व्यायाम शिक्षक धर्मभक्तले प्रजा परिषधको प्रस्ताव पुऱ्याएका थिए। त्यस कार्यले आफ्ना पीरको समाधान हुने आशा देखि वहाँले प्रजापरिषध माथी आफ्नू आशीर्वाद तथा सहानुभूति बक्सेको थियो।

तिन्ताक सम्म प्रजापरिषद तिर बाट काठमाण्डुमा हातले लेखिएका पर्चाहरु बाडिन थालिएका थिए। सम्वत १९९४ सन् १९४० मा परिषदका प्रार्थनाले श्रीरामवृक्षवेनिपुरीनाऊमा विहारी सज्जनले आफ्ना सम्पादकत्वमा पटना बाट निस्कने 'जनता' पत्र द्वारा नेपाली प्रजापरिषध बाट पठाइएको कँवरखलकका राणाहरुका काला करतूतहरुको लखिएका लेखहरु छाप्न स्वीकार गरी प्रकाशित गर्न थालेका थिए। "जनता" बाट निस्कने ती लेखहरु बाट प्रोत्साहन पाएर यस ग्रन्थका लेखकले पनी कँवरखलकका राणाहरुको इतिहास र २।१ लेखहरु लेखी पठाएको थियो। तेस्लाई पनि श्रीवेनिपुरीजीले जनतामा स्थान दिनुभएको थियो। रामवृक्षवेनिपुरी जीका कृपाले नेपालीजन आन्दोलनका प्रथम अवस्थामा नेपाली जनताले निकै उत्साह पाएका थिए। श्रद्धेय रामवृक्षजीले आफ्नो नेपाली प्रजापरिषध प्रेमले ३.४ पटक आफ्ना पत्रको जमानतको रुपया जफ्त भई स्वयं आफ्नो ठूलो नोक्सानी उठाउनु भएको थियो। वहाँ लाई कँवरखलकका राणाहरुले पनि लाखा रुपया घूसमा दिने प्रलोभन दिएकोमा पनि वहाँले आफ्नू नीति वदलेनन्। त्यस कार्यले नेपाली जनता सदा रामवृक्षजीका आभारी रहनेछन्। जनता पत्रका साथ कलकत्ताको अंग्रेजी पत्र 'एडवान्स' ले पनी प्रजापरिषध वाट पठाइएका लेखहरु लाई छापेको थियो।

त्यसै बिचमा महाराजाधिराज तथा धर्मभक्तमा प्रजापरिषधका विषयमा बराबर कुरा हुन्थ्यो। एक दिन धर्मभक्तले महाराजाधिराज लाई परिषधका सदस्यहरुलाई दर्शन दिने आग्रह प्रकट गरे। महाराजाधिराजले त्यस विचार लाई असंगत मानेर त्यसको विरोध गरि बक्सेको थियो। अन्तमा प्रजापरिषधका सबै सदस्यहरुका हरुले महाराजाधिराजले

त्यो आग्रह मंजूर गर्नु भयो। एक दिन आफ्ना हावाखाने बेलामा वृक्ष लगेसन्नेर महाराजाधिराजले एकतृत प्रजापरिषदका सदस्यहरुलाई दर्शन बक्सियो। महाराजाधिराजको सवारी त्यस ठाउँमा पुग्ना साथ प्रजापरिषदका सदस्यहरुका दलमा केहि चन्चलता उत्पन्न भएको थियो। एकत्रित जनताको चंचलता तथा श्री ५ धिराजको भावभंगिमाले विराम-का अंग रक्षकका नाउँले बसेका कँवरखलकका गुप्तचर प्रताप जंग लाई शंका गर्ने मौका मिल्यो। त्यसै दिन देखि प्रजापरिषद माथि आफतको श्री गणेश हुन थाल्यो। प्रताप जंग बाट आफ्ना शंकाको उल्लेख गरिए पछि कँवरखलकका राणाहरुले आफ्ना प्रत्येक गुप्तचर हरुलाई नेपालका नवयुवकहरुका गतिविधि माथि विचार राख्ने कडा आदेश जारी गरेका थिए।

त्यसै बखत साहसी टंकप्रसाद तथा दशरथचन्द्रले भारत आई क्लियो मासिन खरीद गरेर नेपाल पुऱ्याएका थिए। नेपालमा क्लियो मसिन पुगे पछि त्यसै बाट छापिएका पर्चाहरु नेपालमा बाँडिन थालिए। ती पर्चाहरुमा अत्यन्त शिष्ट भाषामा कँवरखलकका राणाहरुलाई शुभ-सम्मति तथा आफ्ना अनेगल अत्याचारलाई रोक्ने सलाह विषयका लेख रहन्थे। त्यस पर्चा आन्दोलनले गर्दा नेपाली जनताको बडा फुर्तिका साथ चेतना तथा जाग्रति बढ्न थालेको थियो। राष्ट्रको त्यस नवचेतनालाई देखि आततायी कँवरखलकका राणाहरुको मुटुले ठाऊँ छोडेको थियो। पर्चा प्रचारक संस्थाका खोजमा कँवरखलकका राणाहरूले नेपाली र भारतीय गुप्तचरहरुमा रुपयाको खोलै बगाएका थिए। त्यति हुँदाहुँदै पनि पर्चा आन्दोलन जारी रह्यो तथा त्यसले झन् उग्ररुप लिंदै गएको थियो। त्यस कार्यमा प्रजापरिषदका साहसी सदस्यहरुले, हर एक कँवरखलकका दरबारको ठोका, दरबार भित्रका कोठा, यहाँ सम्म कि स्वयं युद्धशम्सेर सुत्ने कोठामा पनि पर्चा पुऱ्याएर टाँसेका थिए। तिन्ताक त्यस पर्चा

आन्दोलन आन्तकले समग्र कँवरखलकका राणाहरुको मुख कालो भएको देखिन्थ्यो। कँवरखलकका राणाहरुले ३।४ महिना सम्म पनी कुनै प्रकारले पर्चा आन्दोलनकारीहरुको पत्तो पाउन सकेनन्। अन्तमा परिषधको पता दिने वा कुनै व्यक्तिलाई समात्न मदत दिने मानिसलाई ५०००) रुपया दिने घोषणा भयो। त्यति हुँदा पनि बहादुर देशभक्त सदस्यहरुको हावा सम्म कँवरखलकका राणाहरुले पाएनन्। आखिर मा त्यसै सालका अक्टूबर महिनामा कँवरखलकका राणाहरुले नेपालमा पढे गुनेका नवयुवकहरुको अनधिकारी सामुहिक पक्राउ गर्न थाले। साथैसाथ तिनीहरुका घरको खानतलासी पनि हुन थाल्यो। त्यसै अन्यायोचित तलासीहरुमा कुनै एक सदस्य का घरमा प्रजापरिषधका कतिपय सदस्यहरुको नाऊँ प्रकट भयो। त्यसै बेला माधवरामजोसी पुत्र शुक्रराज शास्त्रीका भाई देशद्रोही रामजीजोसीले ५०००) रुपयाका लोभले परिषधको सबै कुरा प्रकट गरे। त्यस पछि अखबार पढने, राजकाजको चर्चा गर्ने, कँवरराणा किंवा तिनका खालि गाडीलाई देखेर सलाम न गर्ने, मानिसहरु बिना अपराध किंवा बिना बिचार अन्धाधुन्धरुपले समातिन थालेका थिए। त्यस बेला पुलिसको शंका मात्र भएका ठुला से ठूला मानिसहरुको घरको खानातलासी हुनु सामान्य कुरो थियो। चोटा र कोठा इज्जत पर्दा सम्ममा प्रहार गरीएकोले नेपाली जनताले आफ्नो इज्जत रहन सक्नेछ, भन्ने आशा सम्म राखन छाडेका थिए। नेपालमा सर्वत्र आतंक पूर्ण मार्सल ऑडर प्रचारित थियो।

त्यस सामुहिक पक्राऊमा ४०० मानिस पक्रिएका थिए। तथा हेजारा मानिसहरुले पुलिसलाई घूस खवाएर मात्र आफ्नू ज्यान जोगाउन सकेका थिए। त्यस अत्याचार तथा खानातलासीको स्वयं नेपालेश्वर समेत शिकार भई बक्सो। एक दिन नारायणहिटीदरबारमा सदलबल एक्कासी नरशम्सेर पुगेका थिए। नीजले महाराजाधिराजका सन्मुख हातको रिभाल्बर तेर्स्याएर "महाराज (युद्धसमसेर) ले हजुरको

दरबारको खानतलासी गर्नं हुकुम बक्सेको छ" भनी दरबारको खानातलासी लिएका थिए। त्यै खानातलासीका बहानाले महाराजाधिराजका अनेक बहुमूल्य रत्नहरु पनि नरशम्सेरले चोरेर लगेका थिए। त्यस बखत नरशम्सेरका जालमा परेका श्रा ५ का दरबारका प्रायः प्रत्येक मानिसले चाँदीका जुत्ताले नरशम्सेरको पूजा गरेर मात्र प्राण बचाउन सकेका थिए। त्यस दमन चक्रमा नेपालका अनेक अन्य कँवरखलकका राणा विरोधी संस्थाहरुको समेत भेद खुलेको थियो। महाराजाधिराज त्रिभुवन वीरविक्रमशाह बाट संचालित "रक्त मंडल" नाऊँको संस्थाको भेद पनि त्यसै बेला प्रकट भयो। सबै गुप्त संस्थाका मानिसहरु एक ठाउँ गरी समातिएर कालो कोठरीमा जम्मा गरिएका थिए।

त्यस आतंक पूर्ण दमन र पक्राउका बेला प्रजापरिषधका अध्यक्ष टंकप्रसाद शर्मा भारतवर्षमा आएका थिए। तिनलाई रामशम्सेरले "तिम्रा बाबु साह विरामी छन्, मुख हेर्न आऊ" भन्ने जाली तार दिएर जयनगर झिकाई बन्दी गरेका थिए। बन्दी टंकप्रसाद नेल हतकडी तथा हतकडी लगाई पैदलको मार्ग बाट नेपाल पुऱ्याइए। यस किसिमले ३ महिनाका अविरल पक्राऊ पछि काठमाण्डूमा न्यायको ढकोसला हुनथाल्यो। न्याय ढकोसलामा अन्यायपूर्वक निरपराध समातिएका मानिसहरुलाई समेत जुर्माना दिनु वा माफि माग्न लगाएर छाड्ने गरेको थियो। त्यस न्याय नाटकको स्पेसल अदालत सिंहदरबारको गद्दी बैठक थियो। स्पेसल अदालतका न्यायासनमा कँवरखलकका राणा तथा तिनका छनौटा पिठ्ठुरुको जमघट एकत्रित गरिएको थियो। कँवरखलकका राणाहरुका पिठ्ठूहरुका अनुपातमा कुमाई विजयराजका कँवरखलकको नै विशेषतः थियो। त्यस मुद्दामा महिनो सम्म विचार फैसला भएको थियो। प्रजापरिषधका सदस्यहरु मुद्दाका दौरानका ६।७ महिना सम्म नेलगल फन्दी लगाएर सिंहदरबारको नर्क यातना हिरासतमा राखिएका थिए।

त्यस न्यायनाटकका अदालतमा संसारमा न भएको, नमकहरामीयत को सीमालाई उलंघन गरिएको अभूतपूर्व घटना समेत भएको थियो। स्वयं आफ्ना देशका सार्वभौम सत्ताधारी नरेश महाराजाधिराज त्रिभुवनवीरविक्रमशाले आफ्ना वेतन भोगी नौकरहरुका समक्ष त्यस स्पेसल अदालतमा उपस्थित हुनु परेको र सवाल जवाब दिनुपरेको थियो। त्यस न्यायनाटकका अदालतमा युवराजधिराजलाई उच्चासनमा राखी महाराजाधिराजलाई होचो आसनमा राखेर अदालतको कारवाई गरिएको थियो। सन्सारका इतिहासमा यस्का जोडको नककहरामियत तथा श्रेष्ठतम कालो कुकृत्यको अर्को उदाहरण पाइने छैन। त्यति भएर पनि नीच कंवरखलकका राणाहरुलाई सन्तोष भएको थिएन। तिनीहरुले युवराजधिराज महेन्द्र वीरविक्रम शाहलाई नेपालका राज्यासनमा थपना गराई आफ्ना दुई पुत्रका साथ महाराजाधिराजलाई राज्यच्यूत गराई 'गोरखा' थपाउने विचार पनि गरिसकेका थिए। त्यस कुरामा कँवरखलकका राणाहरुका गौराङ्ग प्रभु अंग्रेजहरुले समंत न दिएकोले तिनीहरुले खप्टिनु परेको थियो। त्यस अदालतमा बसेका बखत युद्धशम्सेरका मुखबाट फटहर गाली बाहेक अरु कुनै कुरा निस्कदैनथ्यो। तिन्ताक युद्धशम्सेर नागार्जुनमा बसेका थिए। तथा अदालतको कार्य हेर्नै मात्र सिंहदरबारमा आउथे। अदालतको अन्तिम दिनका कारवाई पछि पद्मशम्सेरलाई हुकुम सुनाउने आज्ञा दिएर युद्धशम्सेर नागार्जुन गएका थिए।

कँवरखलकका राणा किंवा तिन्का पिठ्ठूहरुले मुद्दाका सिलसिलामा गरेको प्रश्नको मुहतोड जवाफ दिन वीर आन्दोलनकारीहरुले बाँकी राखेका थिएनन्। तिनीहरुले वीरतापूर्वक गरिएको पर्चा आन्दोलनका कायलाई स्वीकार गरे। त्यसै बीचमा एक दिन नरपिशाच नरशम्सेरले धर्मभक्त तथा दशरथचन्द्रलाई बाँसमा झुंड्याई तिनीहरु बेहोस न भए सम्म पानी मा फुलाएको कोर्राले ठोक्न लगाएको थियो। त्यस कोर्राको जखमले ति दुवै बहादुरहरु ८।१० दिन हिड्डुल समेत गर्न समेत अ...

मर्थ भएका थिए। टंकप्रसाद, चन्द्रमान लेफ्टिनेन्ट रामदासहरुलाई कठविजुली लगाएर सासना दिएको थियो। यहाँ सम्म कि नीच कँवर खलकका कमारा बनेका कप्तान सूर्यप्रसादखत्रीले परिषदका वीर सदस्यहरुको कंसरीको रौं उखेलेर मुखमा थुक्ने नीचातिनीच कृत्य गर्न सम्म बाँकी लगाएनन्। तिनैताका कुनै एक दम्नराजतुलाधर नाउँका युवक पनि सामुहिक प्रार्थना गर्ने अपराधमा समातिएर गारदमा थुनिएका थिए, गारदका त्यस नर्क तुल्य यातनालाई सहन न सकी तिनले आत्महत्या गर्ने चेष्टा गरेको थियो।

यस किसिमले पाशविक अत्याचारका साथ २ महिना सम्म न्यायको नाटक गरे पछि कुनै अपराध वा आरोप सम्मन न सुनाई सम्वत १९९७ का माघ १० गतेका दिन बन्दीहरुले पाउने सजायको हुकुम सुन्न पाए। त्यस हुकुम अनुसार दशरथचन्द्र, शुक्रराजशास्त्री (जो परचा आन्दोलनका समयमा नेपाल जेलमा थिए) धर्मभक्त तथा गंगालाललाई सर्वस्व गरी मृत्युदंड तथा टंकनाथ, रामहरीहरुलाई सर्वस्व गरी मुडेर आजन्म कारावास तथा अरु आठ जनालाई बीस वर्ष, ६ जनालाई बारह वर्ष, १२ जनालाई ६ वर्षको कारावासको सजाय सुनाइयो। सजाय सुनाएका भोलीपल्ट बन्दी हरुलाई ४।४ धार्निको नेलगलफन्दी ठोकी कालकोठरी तुल्य ८ हातका कोठामा दसदस जनालाई राख्ने व्यवस्था भयो। त्यस काठकोठरी मा हावा वा घामको नाउँलाई पनि प्रवेश हुदैनथ्यो तथा त्यो कोठा शीतले पूर्णतः चिसो रहन्थ्यो। बन्दीहरुका रासनमा एक माना खोस्टे चामल २ भीडा खुर्सानी तथा १ डलो नुन दिइन्थ्यो। तिनीहरुलाई वस्त्रका नाउँमा ६ हातको गाडाको लुगी तथा ६ हातको खाडा कै पछ्यौरा दिएको थियो। मृत्युदंड पाउनेहरु मध्ये शुक्रराज तथा धर्मभक्तले ता० २६ जनवरीका दिन पसुपति नेरका खरीका बोटमा झुन्डयाइएर फांसी द्वारा वीर गति पाए। गंगालाल तथा दशरथचन्द्रले नरशम्सेरका हुकुमले अङ्ग प्रत्यङ्गमा गोलीखाई वीर गति प्राप्त गरेका थिए।

वीर गति प्राप्त गर्ने गंगालाल तथा दशरथचन्द्रलाई गोलीहान्नका निमित्त भद्रमतिका किनारमा लगी उभ्याएको थियो। त्यस बेला दशरथचन्द्रले नरपिशाच नरशम्सेर तिर हेरी "उमेरमा गंगालाल म भन्दा कान्छा छन् मैले गोली खाएको यंत्रणाले छटपटाएको मेरो शवलाई नोजले हेर्न सक्ने छैनन्, तसर्थ पैल्हे गङ्गालाललाई गोली हान्ने आग्रह गरेका थिए।" दशरथचन्द्रको त्यो कुरा सुन्ना साथ गर्बैर वीर गंगालालले "यो कस्तो कायरता हो? देशद्रोही राणाहरु संग आत्मबलिदानको पालोको पनि किन हामी भिक्षादान मागौ। जल्लादलाई आफ्नो इच्छानुरुप गोली हान्न देउ" भनेका थिए। त्यसै बेला नरशम्सेरका हुकुमले दशरथचन्द्रका जंघामा गोली हानियो। गोली खाएर त्यस महान वीरले "नपुंसक तँ यदि सच्चा क्षत्रिय होस् भने छातिमा गोली हान" भनेर गर्जेका थिए। त्यस बेला गोली हान्ने सिपाहीहरुले समेत अधोमुख लगाएका थिए। तर आततायी नरशम्सेरले विद्रूपपूर्ण हाँसोका साथ—"अझ पनि बिग्रने भन्न" भनेको सुनी आहत वीर दशरथचन्द्रले छाती फर्काएर 'त्यो कार्य तँ तथा तेरो वंशले गरेको छ। मेरो बाजेले कोतपर्वमा र मेरा बाबूले ४८ सालपर्वमा ज्यान दिए सरी आजम पनि मातृभूमिका निमित्त बलिदान भई रहेछु। सच्चा क्षत्रियका गुह्याङ्गले पनि त्यो कुरा स्वीकार गर्ने छैन" भनी गर्जें। त्यसपछि नरशम्सेरका आज्ञाले गोली प्रहारद्वारा गंगालाल तथा दशरथचन्द्रको इहलीला समाप्त गरियो। धन्य छन् ती शहीद जस्को तिन तिन पुस्ताले आफ्ना रक्तदानले मातृभूमिका सेवाको सौभाग्य पाए। कँवरखलकका राणाहरुले नेपाली जनतालाई आतंकित गर्न ती ४ जना अमरशहीदहरुका लाशमा "देशद्रोहिहरुको यस्तै अवस्था हुन्छ" भन्ने लेखटाँसेर तिन्का लाशलाई रुखमा झुंड्याई २४ घंटा सम्म त्यस्को प्रदर्शन गरिएको थियो। तर त्यस प्रदर्शनको प्रभाव उल्टो भयो। नेपालका समस्त नर नारीहरुले त्यस मौकामा आफ्ना वीरआत्मा अमर शहीदहरुको दर्शन गर्ने मौका पाएर तिन्का प्रति श्रद्धाञ्जली चढाएक

थिए। शहीदहरुका लाश माथि सिंधुर अक्षत पनि चढाइएको थियो। आश्चर्यका साथ हाँसो समेत आउँछ कि त्यो नारकीय काण्ड पनि धिराजको गायगादी ताक्ने र प्राइमनिष्टरको रोटी खोस्ने तथाकथित अपराधका आधारमा गरिएको थियो।

यस किसिमका नारकीय हत्या तथा दमनचक्रले प्रजापरिषधको पर्वा आन्दोलनको दमन भएको थियो। प्रजापरिषध गुप्त संस्था हुनाले त्यस्का साथ जनताको प्रत्यक्ष सम्बन्ध भएको थिएन। न ता प्रजापरिषधको कुनै प्रकाश्य व्यवस्था नै थियो। त्यसै कारण नेपाली जनतामा भएको जाग्रति विक्षोभ तथा कँवरखलकका राणाहरुको मूलोच्छेदको ध्येयको कार्यको उचित किसिमले पालन हुन सकेन। कँवरखलकका राणाहरुका क्रूरदमनचक्रले नेपालको राजनीतिक चेतनाहरु केहि दिनका लागी शान्त हुँदै गएको देखियो तर उपरोक्त अमर शहीदहरुको बलिदानले नेपालमा क्रान्तिको अग्नि सलकिइ सकेको छ। समय पाएर त्यो अवश्य विष्फोट हुन बाँकी रहने छैन।

तिनैताक जेलखानामा भावगत र वेदका श्लोकको मानेको उल्था गरि लेखेको अपराधमा युद्धशम्सेरको पालामा पं० मुरलीधरलाई ५० रुपया र भगवति प्रेसका जोशीलाई ५) रुपया जरिमाना तिर्नु पर्‍यो। नीजहरुले काल-कोठरीमा परेका बखत सताइ भन्दा जेलको अमरबहादुर कप्तानले पं० मुरली सँग भागवतको पुस्तक खोसी सुन्ने हरुलाई सिक्रा ठोकि सेलभित्र बन्द गरेको थियो।

सन् १९१४ मा जर्मन सम्राट कैशरले जुन दम्भ एवं दर्पका साथ युद्धको घोषणा गरेको थियो, तेसैगरी पुनः हिटलरले पनि घोषणामा त्यै किसिमको दर्प एवं दम्भ प्रतिध्वनित गरे। हिटलरले दृढकाण्डले युद्धको घोषणा गरेर आफ्ना सैन्यदललाई जुन उत्तेजनामयी वाणी सुनाएको थियो, त्यो केवल वृथा गर्जना थिएन, बल्की त्यसमा उत्कट प्रतिहिंसाको स्पष्ट

प्रकाश मिल्दथ्यो। एक पटक फेरी नरमेध यज्ञको शोणितधाराले पृथ्वी रञ्जित हुन थालिन्।

सन् १९३८।३९ सम्वत १९९६ मा पुनः युरोपको द्वितीय महासमरको प्रारम्भ भयो। ऐडोल्फ हिटलरका अधिनायकत्वमा संगठित भएको जर्मनीले समस्त योरपका साथ फ्रांसलाई समेत पददलित गरिसकेको थियो। जर्मनीको योरप देशीय साथी इटली अफ्रिका तिर बढेको तथा अर्को साथी जापान आफ्ना विजयाभियानमा सिंहापुर विजय गर्दै वर्मा र मणिपुर सम्म आई सकेको थियो। जापानका आकस्मिक बमबारीले अमेरिकाको पर्लहारवर बन्दरको ठूलो क्षति तथा बृटिश सरकारको २।३ प्रसिद्ध तथा सर्वोच्च जंगी वेडाहरु विध्वंस भएका थिए। त्यस महासमर कालमा भारतवर्षका रक्षाका नाँऊले तथा त्यहाँ हुने राष्ट्रीय आंदोलन दमनलाई राणा भनाउदाहरुले आफ्ना सुदक्ष तथा शस्त्रास्त्र सज्जित १६००० सैन्यपठाएको थियो। त्यस १६००० पल्टन वाहेक लाखौं रेक्रुट रुपमा नेपाली प्रजाजनहरु नेपाल सरकारका हुकुमले अंग्रेजी सेनामा भर्ती गराएका बावत ब्रिटिस भारतका रेक्रुटीङ्ग अफसर तुल्य वहादुरशम्सेरले अंग्रेजहरु बाट करोडा रुपया कमिसन स्वरुप पाएका थिए। त्यस गोरखाली सैन्यवाहिनीले मिश्र, सुदान, इस्ट्रिया, अविनिसिया, सिरीया, इराक, इरान, वर्मा, सिंगापुरहरुका रणक्षेत्रहरुमा लडेर आफ्नू वीरोचित नामलाई सार्थक तथा उज्वल गराए। भारतका नेताजी सुभाषचन्द्रबोसका पलटनमा सहयोग गरेर अनेक गोरखा रेजिमेन्टले आततार्इ अंग्रेजहरुका विरुद्ध युद्धमा परम्परागत आफ्नू काध भारतीय योद्धाहरुका साथ जोरेका थिए। त्यस द्वितीय महासमरमा सुवेदार लालबहादुर थापा, जमादार गजेघले, सिपाही गंजुलामा, नायक अमरसिंह राइ, सुवेदार नेत्रबहादुरथापा, सिपाही तुलबहादुर पुन आदी गरिएका विराग्रणीहरुले "भिक्टोरिया क्रास" आदि उच्च सामरिक पदक पाएका थिए। 'इण्डियन डिस्टिङ्गुइस सर्विस'

को पदक पाउने ५०।६० जना तथा २५।३० जना वहादुर गोरखालीहरुले "इन्डियन श्राडर श्राफ मेरिट" भन्ने तगमा पाएका थिए।

उत्तरीय अफ्रिकाको ट्यूँनिसिया, मकनासिनेर, इटलीको वाइफर्नो, चिनार, टाखरघाटी, सिरीया रणक्षेत्र, वर्मा, चीनका पहाडीश्रेणी, माथू, पहाडको रणभूमि, मलउपहाड, टिडिम, इम्फाल मार्ग, कोहिमा, इम्फालक्षेत्र र वाटो, कोहिमा चर्च पहाडको क्षेत्र, चीन डाँडाका युद्धहरुमा गोरखालीहरुका वहादुरीको प्रदर्शनले गोरखालीहरु संसार श्रेष्ठ योद्धा हुन भनी संसारले राम्ररि चिन्ह्यो। सवप्रथम इटली पछी जर्मनी तथा अणुबमका प्रयोगले जापानले आत्मसमर्पण गरे पछि द्वितीय महासमरको अन्त भयो।

विश्ववन्ध्य महात्मा गान्धीको "भारतछाड" आन्दोलन प्रारम्भ गरिएकोले सन् १९४२ मा अंग्रेजी गुलामी पास वाट मुक्त हुन भारतमा महान क्रान्तिको प्रादुर्भाव भएको थियो। त्यसै बेला भारतवर्षका प्रसिद्ध नेता सुभाषचन्द्रबोस द्वारा संचालित 'आजाद हिन्द' फौजले वृटिश भारत माथि आक्रमण गरी मणिपुर सम्म प्रवेश गरेको थियो। त्यस बेला सम्म नेताजीका आदेश सैन्यमा अनेक गोरखा बटालियन समेत मिलिसकेका थिए। सन् १९४३ मा अवोटावादका काकुलछावनीका गोरखाली पलटनमा अग्रेजहरु र तिन्का कमारा कँवरखलकका राणाहरुका विरुद्ध पर्चा बाँडिएको थियो। त्यस घटनाले र नेपालवाट भागेर आएका पर्चा आन्दोलन कारी र तिन्का सहायक भारतीय नेपालीहरुको दमन गर्न कंवरखलकका राणाहरुले अंग्रेजहरु सँग प्रार्थना गरे। त्यसै वखत शुद्धशम्सेर वाट भारतीय जन आन्दोलन दवाउन महात्मा गांधी तथा जवाहरलालहरुलाई मारी दिए, सहजमा आन्दोलन दब्नेछ भन्ने आफ्नो अमूल्य (?) सम्पत्ति लेखि पठाएका थिए। कँवरखलकका राणाहरुका प्रार्थनाले भारतीय जन आन्दोलनका दमनका साथ भारत बस्ने अनेक निरपराधी नेपाली जनता पनि कारारुद्ध गरिएका थिए। तिन्मध्ये

प्रोफेसर दिल्लीरमणरेग्मी, काशी, सुब्बा आदि भक्त, कलकत्ता, सूर्य विक्रम ज्ञवाली, रायसाहब हरिप्रसाद प्रधान, पंडित धरणीधर कोइराला, दार्जीलिङ, सूर्यप्रसाद उपाध्याय, राजेश्वरी प्रसाद उपाध्याय, काशी, संतवीर लामा, दार्जीलिंग प्रभृति मुख्य थिए। तिनीहरुका गिरफ्तारीलाई तत्कालिक भारतीय गुप्तचर विभागका कर्मचारी आनन्दकुपूरनेगी भन्नेले नेपाल सरकार बाट वेठेगान पैसा धूतेका थिए। तिनैताक काठमाण्डु स्कूलका लक्ष्मीचन्द्र चालिसे नामका विद्यार्थीले जाँच प्रश्नका उत्तरका कापोमा "राणा सरकारको नाश होस" भन्ने लेखे वापत जेल जानु परेको थियो, तिन्को मृत्यू जेल मै भयो।

तिनैताक सन् १९४२ को भारतीय जन आन्दोलनका अग्रदूत भारतीय समाजवादी नेता जयप्रकाशबाबू अंग्रेजी जेलबाट भागेर नेपाल तराईमा पसेका थिए। नेपाली जनताले आफ्ना आपतग्रस्त भारतीय भाईहरुको प्रेम पूर्वक स्वागत गरे। जयप्रकासबाबू नेपाल तराईमा समातिएर राजविराजका फूँसका जेलखानामा क्यै दिनका लागी बन्दी भए तर राजवीराजका त्यस फूँसका जेलमा तिन्ले विशेष दिन बस्नु परेन। आफ्ना साथीहरुका मदतले तिनी त्यस जेलबाट सकुशल भाग्न सकेका थिए। जयप्रकाशबाबूलाई आफ्ना घरमा राख्ने बात लगाई खरदार कृष्णप्रसाद कोइराला मोरंगबाट बन्दी गरिएर नेपाल पुऱ्याएका थिए। सन् १९४४ मा तिन्को मृत्यु काठमाण्डुका जेलखाना भित्रै भयो। त्यसै अभियोगमा सप्तरीका बडा हाकिम सोमशम्सेरले आफ्ना जिल्लाका साठिसत्तरी जना प्रतिष्ठित नागरीकहरुलाई बन्दी गरी कोर्रा ठोक्ने सजाय दिएका थिए। तथा १५० २०० जनाहरुमाथी मुद्दा चलाएका थिए। त्यस किसिमको अत्याचार गरी २२ जना मानिसलाई बन्दी अवस्थामा काठमाण्डु पठाइएका थिए। तिन्मद्धे कृष्णवीर कामी र अब्दुल मियाँको मृत्यु जेलखान मै भयो। चतुराननसिंह, जयमंगलसिंह, रामेश्वरसिंह, यमुनाप्रसादसिंह, तारिणी-

प्रतापसिंह, मीतबहादुर, विष्णुभक्तजी, रामसिंह, नेबुमंडर र किसन-दुलालहरुले अढाई अढाई वर्षको जेल यातना सहनु पर्‍यो।

तिनैताक सर्वप्रथम श्री ५ महाराजाधिराज त्रिभुवनवीरविक्रमले भारतवर्ष आई तिर्थाटन गरी बक्सेको थियो। नेपालका सिंहासनासीन नरेशले तीर्थयात्राका नाऊँले आफ्नू राज्य बाहिर भारतवर्ष सवारी भएको यो इतिहासको प्रथम घटना हो।

युद्धशम्सेरले आफ्ना मंत्रित्व कालमा अत्याचार पूर्ण दमनको पराकाष्टा पुर्‍याएका थिए। तिन्ले सन् १९४५ मा पदत्याग गरे। इन्ले पनि नेपाल राजकोषको करोडा व्यय गरी आफ्ना तथा आफ्ना संततिहरुका निमित्त ४ ओटा महलहरु बनाएर विदेशी बैंकमा करोडा रुपया २५ करोडको जवाहिरात र करोडा रुपाया नगद आफ्ना पास राखेर राजकोषमा एक पैसा सम्म छाडेका थिएनन्। युद्धशम्सेरले महासमर उपान्त भारत सरकारले दिनभनेको २० लाख सालनाको रुपया मध्ये "१० वर्षको एकै पटक पाए देशमा सबै कुराको विकास गर्नें छौं।" भनी एकैचोट २ करोडको रकम ली त्यसलाई पनि आफ्ना ढुकुटी दाखिल गरेका थिए। इन्ले त्यागपत्र दिनु भन्दा २,३ महिना अघि देखीर ाज्य भरका अड्डाहरुमा भए भरको धन काठमान्डु झीकाई राजधानीका कर्मचारीहरुलाई दिने वेतन सम्म नराखी सबै धन गुटमुट्याए पछि त्यागपत्र दिएका थिए। यस किसिमले रित्तो राजकोष भएकोले राज्यले पछि राज कर्मचारीहरुको वेतन दिन मोहनशम्सेर बाट कर्जा लिनु परेको थियो।

युद्धशम्सेरका अमात्यकाल सन् १९४४-४५ तिर भारतमा अंग्रेज प्रभूहरुले अन्नहरुमा कंट्रोल र पैडीलेवी गर्ने व्यवस्था चलाएका थिए। त्यसैको देखा सिकी गरी युद्धशम्सेरले पनि नेपालमा पैडीलेवी जारी गरेका थिए। त्यस पैडीलेवी चक्रले सोमशम्सेर आदिले अनेक बडा हाकिम मनाउदाहरुले प्रजावर्गबाट लाखौं लाख रुपया चुसेर लिएका थिए।

युद्धशम्सेरलाई अंग्रेज सरकार तथा अन्य यूरोपीय राष्ट्रहरुले अनेक तगमा पदकहरु दिएका थिए। इन्ले स्वयं आफु द्वारा सिर्जन गरिएका "ओजस्वि राजन्य" "तृशक्ति पट्ट" "नेपाल पृथुलाविस" आदि पदवीहरु स्वयं धारण गरी नेपाल नरेश, बृटिस नरेश तथा तत्कालिक इटली नरेशहरुलाई समेत चढाएका थिए।

युद्ध सम्सेरका पालामा कृषि उद्धोग उन्नतिलाई "कृषि परिषद" खडा गरि त्यस्का खर्चका लागी राज्यका मालपोत आमदनीमा २) सैकड़ा काटी राखिने गरियो। उद्योग व्यवसाय वा वाणिज्य प्रचारका निमित्त कम्पनी ऐन बनाई "उद्योग परिषद" खडा गरियो। विराट नगरमा "जूटमिल्स" "कौटनमिल्स" "मोरंग हाइड्रोजन इलेक्ट्रीक सप्लाई" वीरगंजमा जुद्धमैच फैक्टरी नाऊँ ले यौटा लिमिटेड कम्पनी खड़ा भयो। जनता गरिब भएका देशको उपरोक्त कारवारमा विदेशी मदिसेहरुको नै एकाधित्य छ र कँवरखलकका राणाहरुको कमिसनका नफा सुरक्षित छ। नेपाल खनिज तत्वान्वेषणलाई "बूरो आफ साइस" र वैङ्कहरु स्थापित गरिएका थिए। भुकम्प पछि नेपाल र तराईमा गरि अनेक सड़कहरु बनेका थिए। दार्जीलिङको धीरधाम इनैका पालामा वनेको हो।

इन्ले कुनै एक दाउरा बेचने भोटिलाई महारानी पद दी दरबार भित्र्याएको थियो। विषयासक्त युद्धशम्सेरले तिनै भोटिनी रानीका सहायताले आफ्ना दरवारलाई मोगलदरवार रंगमहल रहस्यपूर्ण बनाई आफ्ना कामकेलि व्यसनमा नाता रिस्ताको समेत विचार राखेका थिएनन्। कामुक युद्धशम्सेरले आफ्ना ७० वर्षका उमेरमा यौटी १४ वर्षिया मेनकालाई ग्रहण र त्यस्का साथ रिढीमा विहार गरी वसेर आफ्नो राजर्षित्व प्रकट गरेका थिए। तिन्ले पदत्याग गरे पछि रिढी तथा चिरैया वनको वास लिए। त्यहाँ पनि तिनको अनाचारको सीमा रहेन। गरीब रैयतको मालजाल किंवा सुन्दरी विवाहित अविवाहित या विधवा स्त्री जसमाथी तिन्को वा तिन्का कर्मचारीहरुको आँखा पर्‍यो, त्यसलाई बलपूर्वक खोस्न वा अंक-

साथिनी तुल्याउन रत्ति भर पनी द्विविधा मान्ने गरेका थिएनन्। त्यसै किसिमका असहनिय अत्याचारको सोमा उलंघन गरिएकोले महनशम्सेरका पालामा तिन्का आज्ञाले युद्धशम्सेरले गिदी छाडी भारतवर्षका देहरादूनमा शरणलिनु परेको छ।

यस प्रकार सन् १९४५ मा युद्धशम्सेरले पदत्याग गरे मछि भीमशम्सेरका पुत्र पद्मशम्सेरले स्वयंभू भाईक्रम पालो अनुसार नेपालमात्य पद बहाली पाए। इनी कँवरखलकका नवौं मुखितयार थिए। पद्मशम्सेर सुधार प्रिय मानिस हुँदा महाराजधिराजले प्रसन्नताले निजलाई पंजापत्र सनद बक्सेको थियो। यहाँ देखि कँवरखलकका राणाहरुको तेश्रो पुस्ताको प्रारम्भ हुन्छ। पद्मशम्सेर सुधारप्रिय भए पनि कायर दब्बू तथा रुन्ने स्वभावका मानिस थिए। इन्का दब्बू तथा कायरताका फलस्वरूप मोहनशम्सेर प्रभृतिहरुले निजलाई निकै दवाईं राखेको थियो। यहां सम्मकि निजका एकमात्र पुत्र वसंतशम्सेर समेत बाबूका अमात्यकालमै मोहनशम्सेर तिर मिलका थिए। एक्लापरेका तथा दब्बू स्वभाव भए पनि पद्मशम्सेरले शासनसुधार दिएर नेपाली प्रजाजनको सहानुभूति आफ्ना तिर आकृष्ट गर्ने इच्छा अवश्य गरेको थियो।

सम्वत् २००२ सन् १९४६ सम्म अंग्रेजी दासता पास बाट मुक्त भई भारतवर्ष स्वतंत्र भई सके पछि कँवरखलकका राणाका गौरङ्ग प्रभूहरु भारतबाट विदा भई सकेका थिए। भारतवर्ष बाट अंग्रेजहरुले विदा हुनासाथ स्वयमेव अंग्रेजहरुको नियंत्रण बाट नेपाल पनि मुक्त भएको थियो। त्यसै वेला भारतका स्वदेशी सरकारका सद्भावनाले भारत र अमेरिका तथा फ्रांसमा समेत नेपाली दूतावासको स्थापना भयो। भारतीत स्वतंत्रता बाट प्रेरणा पाएर सम्वत् २००२ सन् १९४६ मा काशीमा सुब्बा देविप्रसादसापकोटाका अध्यक्षतामा उनैका घरमा नेपालीराष्ट्रीयकांग्रेसको स्थापना भयो। नेपालीराष्ट्रीय

कांग्रेसको स्थापनामा तरुणयुवक विश्वेसरप्रसादकोइराला लाईनै श्रेय दिनु पर्दछ।

तिनैताक नेपालमा प्रेमबहादुरकंसाकार, होराप्रसाद र टंकविलास हरुका उद्योगले नेपाली सेवासमितिको स्थापना भएको थियो। तीनै शहर नेपालामा ९० जना सम्म सदस्य बनाएर काम गर्ने भन्ने तत्कालिक प्रधान मंत्री पद्मशम्सेरको सम्पत्ति पनि तिनीहरुले प्राप्त गरेका थिए। पद्मशम्सेर बाट स्वीकृति पाए पछी सेवासमिति तिरबाट त्यस सालका शिवरात्रीकामेलोमा सेवाकार्य गर्ने विचार स्थिर भयो। तिनीहरुले आफ्नो समितिको टेन्ट थानकोट टुंडिखेल तथा पशुपति गोसाला नेर स्थापना गरेका थिए। एक दिन पुलिसका हाकिम कर्णेल चन्द्रबहादुरथापाले एक्कासी तीनै ठाऊंको टेन्ट काँटेर फ्यांकि दिए तथा प्रेमबहादुर कंसाकारलाई बन्दी गरे। त्यो समाचार पद्मशम्सेर ने थाहा पाए पछि त्यो कार्य गर्न मैले हुकुम दिएको हो, पुलिसले तेस्मा हस्तक्षेप गर्नु पर्दैन भनी प्रेमबहादुरलाई छाडने हुकुम दिए। त्यस वर्षका शिवरात्रीमेलामा नेपाली सेवासमिति बाट यात्रीहरुको राम्रो सेवाकार्य पनि भएको थियो। तर मोहनशम्सेरका गुप्त अनुचर पुलिस हाकिम कर्णेल चन्द्रबहादुरले प्रेमबहादुरलाई छाड्नु परेको अपमानलाई विर्सेकाथिएनन्। तिन्ले मोहनशम्सेरका आज्ञाले एक दिन प्रेमबहादुरको घर घेरी त्यस्को तलासी पनि लिए। त्यसै बखत प्रेमबहादुरका घरबाट सेवासमितिका ५०० सदस्यहरुले हस्ताक्षर गरेको लिष्ट समेत भेटियो। ९० जनाको हुकुम भएका स्थानमा ५०० सै मानिस मेम्बर बनाउने बात लगाई प्रेमबहादुर तथा तिन्का साथीहरुको पक्राउको आज्ञा निस्क्यो। तिनीहरु वीरगंजमा समातीएर काठमांडू पुऱ्याइए। पछि पद्मशम्सेरले मोहनशम्सेरका दबावले सेवासमिति राख्नु पर्दैन भनी प्रेमबहादुरहरुलाई छाडी दिएका थिए।

जयनगरमा पनि नेपालको सेवासमितिको शाखा, रुद्रप्रसाद गिरी तथा

...प्रसादले खोलेको थियो। त्यस शाखाका १४ जना सदस्यहरु ...ई तिलकशम्सेर थापाले समातेर बन्दी गरे। त्यसैका पुरस्कारमा तिन्लो ...पद बाट एकदम कर्णेलीको पद पाएका छन्।

वीरगंजमा पनि श्यामजीप्रसाद शर्माका उद्योगले सेवासमितिको शाखा ...को थियो। त्यसलाई वीरगंजका हाकिम कर्णेल सोमशम्सेरले ... गरेका थिए, तथा श्यामजीप्रसादले घरमा आपत्तिजनक पर्चाहरु ...का रहेछन् भन्ने बात लगाई त्यस तथाकथितअपराधमा नीजलाई बन्दी ...र नेपाल पठाएका थिए।

तिनैताक गोपालप्रसाद रिमाल र दमनराज तथा तिनका साथीहरुले ...मा यौटा नाट्य समिति खोलेर नाटकको प्रदर्शन गर्ने आज्ञा सनेत पद्म... ...र बाट पाएका थिए। त्यसैका उद्घाटलाई तिनीहरुले ब्याहन बेलुका ...पतिनाथ तथा सोभाभगवतीका मंदिरमा गई प्रार्थना गर्ने गरी। ...नाका अन्तमा जनता तीर मुख गरी—

...सम्म चन्द्र सूर्य रहन्छन् अकाशमा।

...ल्दो रगत् सरीको फर्कोस् निशान हाम्रो।

भन्ने गरेर नाटकका प्रति जनताको अभिरुचि पढाउने वक्तव्य ... गरेका थिए। त्यस प्रकारको सामुहिक प्रार्थना तथा नाटकका ...मित्त गरिएको प्रचार कार्यलाई पनि मोहनशम्सेरएन्डकम्पनीले राष्ट्रीय ...नाको प्रचार मानेर त्यस कार्यलाई भंग गराउने आज्ञा दिएका थिए। ...ता २६ जनवरी १९४७ सम्वत् २००३ मा कलकत्तामा बडा समारोहका ...नेपाली राष्ट्रीय कांग्रेसको उद्घाटन समारोहको आयोजन भयो। तेस्मा ...तीय मुख्य नेताहरु आचार्य कृपलानी (तत्कालिक भारतीय राष्ट्रीय ...सका सभापति) श्रीमती विजयालक्ष्मीपंडित (विश्वमान्य ...हरलाल नेहरु कि दिदी) जयप्रकाशबाबू, आचार्य नरेन्द्रदेवजी, ...हरुको शुभ कामना प्राप्त भएको थियो। त्यस उद्घाटन

सम्मेलनमा ने. रा. का का सभापति पं० टंकप्रसाद शर्मा (नेपाल प्रजा-परिषधका सभापति तथा नेपाल जेलयातना सहने वीर) मनोनित भए। संस्थाले अहिन्सात्मक नीति ग्रहण गरी प्रकाश्य रुपले जनआन्दोलन गर्ने उदेश्यको घोषणा गरेको थियो। अर्को अधिवेशन तथा चुनाव न भए सम्म कामचलाऊ कार्यकारी अध्यक्ष विश्वेसरप्रसाद कोइराला तथा प्रचार विभागका अध्यक्ष श्री दिल्लीरमणरेग्मी छानिएका थिए। ने. रा. कांग्रेसको आफिस काशीमा सम्वत २००२ सन् १९४६ देखि स्थापित भएको कुरा माथि लेखिए कै छ। कलकत्ता अधिवेसन पछि दार्जीलिङ तथा नेपालका तराईका भारयीय संस्थाहरुमा पनी नेपाली राष्ट्रीय कांग्रेसका शाखाहरु खोलिए तथा नेपाल भित्र तथा भारतवर्षमा कांग्रेसको सदश्य बनाउने कार्य र प्रचार कार्यको प्रारम्भ भयो। यस्ता किसमले नेपालको प्रजापरिषधको पुनर्जन्म ने. रा. का का रुपले कँवरखल-कका राणाहरुका विरुद्ध आन्दोलन गर्ने तैयारी हुन थाल्यो। त्यस पछि गंगा नारायण श्रेष्ठले कलकत्ता बाट यौटा "नेपाल टूडे" नाऊँको राष्ट्रीयपत्र आंग्ल भाषामा प्रकाशित गरी कँवरखलकका राणाहरुका विरुद्ध प्रचारको प्रारम्भ गरे।

यसै बीचमा ता० ४ मार्च १९४७ सम्वत २००३ सम्ममा वीराट नगर जूट मिलका मालिक र कँवरखलकका राणाहरुका स्वार्थले पिसएका मजदूरहरुका आपुसी तनातनीले हडतालको रुप लिन लागेको थियो। त्यस विराटनगर मजदूर हडतालको संचालन मनमोहनअधिकारीले गरेका थिए। ता० ९ मार्च लगायत २४ मार्च सम्म बराबर सभा द्वारा मजदूरहरुले आफ्ना मागको समर्थन गरेका थिए। अनेक सभाहरुमा स्वयं बडाहाकिम रामशम्सेर पनि उपस्थित भएका थिए। त्यसै विचमा विराटनगर पुगेर यउटा सभामा ने. रा. कांग्रेसका कार्यकारी अध्यक्ष विश्वेसरप्रसादकोइरालाले मजदूरहरुका मागको समर्थन गरी पञ्चायत बाट यो झगडा निपटाई

दिन नेपाल सरकार सँग अनुरोध समेत गरेका थिए। तर त्यस्को जवाब सरकारले दमनह्नो दियो।

ता. २४ मार्चका दिन एक्कासी २ जना कर्णेलका मातहत काठमान्डू बाट २५० सैनिकहरुको यौटा दल विराटनगर पुग्यो। त्यस क्षेत्र दलले मोरंग पुगेका भोली पल्ट ब्याहानै ७ बजे श्रीविश्वेसरप्रसाद तथा तिन्का ९ जना साथीहरु बालचन्द्र शर्मा, गोपालप्रसादभटराई, गिरिजाप्रसादशर्मा, मनमोहनअधिकारी, तारिणीप्रसादशर्मा, युवराजअधिकारी, श्रीकपिलदेवहरुलाई समातेर हाजतमा हाले, तथा त्यसका भोली पल्ट पैदल मार्ग बाट तिनीहरु काठमान्डु पठाइएका थिए।

विश्वेसरप्रसादहरु पक्रिए पछि विराट नगरका जनतामा निकै चंचलता देखिन थाल्यो, तथा क्रमशः त्यसले जनआन्दोलनको रुप लियो। एकका बाद एक गरी विराटनगर, वीरगंज, काठमान्डु, नेपालगंज, जयनगर तथा इलाम सम्म आन्दोलनको लपक फैलदै गएको थियो।

विराटनगरको प्रारंभ भएको सत्याग्रहका संचालक मातृकाप्रसाद कोईराला थिए। ता० १२ अप्रैलका दिन राजेन्द्रप्रसाद, तिर्थप्रसाद, अनिलकुमार, नरपति लेकपाने र कमलकुमार राई समेत ५ जना सत्याग्रहीहरुको जत्था विराटनगर बजारमा निस्केको थियो। त्यो जत्था नारा लगाउदै तथा ने. रा. कांग्रेसको उद्देश्य बताउदै बडा हाकिमका घर सम्म पुगेर रुक्यो। त्यहाँ तिनीहरु बंदी भएर पुलिस वैरेकमा थुनिएका थिए। ता० १८ अप्रेलका दिन आफ्ना साथीहरुका साथ मातृकाप्रसाद कोईराला पनि समातिए। ता० २० का दिन शिव जंग कँवर राणाका „नेतृत्वमा यउटा सत्याग्रही जत्था निस्केको थियो। त्यस १८ वर्षिय युवकलाई माफि माग्न कर

लगाएकोमा नीज ले त्यो कुरा मंजूर नगरेकोले तिनी बन्दी गरिए। तिन्लाई काँचो बांस चिरेर त्यस्का फट्टामा सुताइएको थियो।

वीरगंजको सत्याग्रह ता० ७ अप्रेलका दिन प्रारम्भ भयो। सर्व प्रथम निरंजनगोविन्द, बिस्नु रंग, तथा रामसरनहरुको जत्था निस्केको थियो। वीरगंज हाइस्कूलका अन्दाजी २०० बालकहरुले सत्याग्रहीहरुको सहायता गरें। सत्याग्रहीहरु भीसवाका मार्ग बाट वरेवा तिर बढन थालेका थिए। वीरगंजका राजकर्मचारीहरुले तिनीहरुलाई रोक्नथालेकोले सत्याग्रहीहरुले बीच मार्गमा डेरा गिराए। त्यस् किसिमले ती वीरहरुले सत्रह दिन सम्म धूलो हात्रा पानी र घामको कत्ति परवाह नगरी बीच मार्गका भूमिमा बसेर काटे। सत्रौं दिन कृष्ण प्रसाद भट्टराई पुगे पछि सत्याग्रहीहरुको त्यो प्रतिबन्ध छुट्यो। तिनैताक खेमप्रसाद तथा युद्धप्रसादमिश्र र अनेक उत्साही युवकहरुले सर्कारी नोकरी छाडी कांग्रेसमा संमिलित समेत भएका थिए। वीरगंज सत्याग्रहमा फणिन्द्रराजशर्मा माथि लाठी चार्ज भएको थियो तथा त्यसैले तिन्को कपाल समेत फुटेको थियो।

जनकपुरमा ता० २७ अप्रेल देखि सत्याग्रह प्रारम्भ भयो। त्यहाँ मेघप्रसाद, गोवर्धनकार्कि, कृष्णमोहनअधिकारी तथा भीमजंगहरुको सत्याग्रही दलले ३ दिन सम्म निर्विरोध प्रचार कार्य गरेका थिए। ता० ३१ अप्रेलका दिन तिनीहरु आफना १६ जना साथीहरुका साथ समातीएर बन्दी गरिए।

इलामको सत्याग्रह पनि १ मई देखि प्ररम्भ भयो। सर्व प्रथम चन्द्रबहादुर गरतौलाका नेतृत्वमा सत्याग्रहीहरुको यौटा जत्था मुक्तियापोखरीबाट इलामका सरहदमा पसेको थियो। त्यो दल नागरीक अधिकारका विषयमा जनतालाई समझाउदै बराबर इलाम तरफ बढि रहेको थियो। तिनीहरु आफना त्यस अभियानका तेश्रा दिन बन्दी गरिए। अर्को जत्था ता० १६ मईका दिन मानबहादुरसिंहको नेतृत्वमा तथा तेश्रो जत्था श्री [illegible]सिंहका नेतृत्वमा निस्केर इलाम तिर बढेको थियो।

तिनीहरु पनि मार्गमा बन्दी भएर धनकुटा पुऱ्याइए। धनकुटामा सत्याग्रहीहरु माथी निकै अत्याचार गरिएको थियो।

राजधानी काठमाडौं पाटन तथा भादगाऊँमा पनि ता० ३० अप्रेल देखि सत्याग्रह प्रारम्भ भएको थियो। विराटनगरमा बन्दी भएका विसेश्वरप्रसादकोइराला तथा तिन्का साथीहरु काठमाण्डु पुऱ्याइएर विशालनगरदरबारका सामनेका घरमा राखिएका थिए। शताधिक काल पछी कँवरखलकक्काराणाहरुका उत्पीडन तथा अत्याचारले पीडितभै रहेको नेपाली जनतामा तराई तिरको सत्याग्रह संग्रामले चेतना दिएर जनजाग्रतिकोरुप लिन थालेको थियो। ता० ३० का दिन काठमान्डूका प्रत्येक दोबाटामा नगरीक अधिकारको मागका विषयमा भाषण हुन थाल्यो। पहिले ता त्यस सत्याग्रहका फलस्वरूप पुलिसले सत्याग्रही हरुलाई बन्दी गरी हावलातमा ठुस्न थालेका थिए। तर त्यस दिन नेपाली जनताको उत्साह अपूर्वको थियो। जनसाधारणले सत्याग्रहीहरु लाई हवालातमा हालेको देखी हामी पनि सत्याग्रही हौ भनी हवालातमा पस्न थाले। जनसाधारणको त्यस किसीमको कार्यले पुलिसले लाचारी साथ सत्याग्रहीहरुलाई समेत छाड्नु पऱ्यो। त्यस पछि सत्याग्रही तथा जनसाधारणको त्यो दल जुलुसकारूपमा वीशालनगरदरबार तिर अग्रसर भयो। त्यो जुलुस नकसाल टोल सम्म पुगे पछि नेपाली हिमलर नरशम्सेर यौटा सैनिक दलका साथ तिनीहरुलाई रोकन आई पुगे। नरशम्सेरका हुकुमले सैनिकदलले पहिले झुटो फायर गरेका थिए। त्यस फायरका आतंकले सर्व प्रथम सत्याग्रह आन्दोलनमा संमिलित हुने जनसाधारण यता उत्ता भाग्न थाले ता पनि धीर सत्याग्रहीहरु ले एक इन्च पनि पाइला हटाएनन्। त्यसै वेला नर-शम्सेरले उपस्थित महिलाहरुलाई "मेरो पल्टन अति नाङ्गा छ, तिमीहरु हर्देनौ भने सिपाहीहरुलाई तिमीहरु माथी पासविकता पूर्ण कामवासना चरितार्थ गर्न छाडी दिनेछु।" भन्ने नीच उक्तीलाई हज्जारा नेपाली

जनताका संमुख भनेका थिए तिर तिन्को त्यस नीच उक्तिको समेत क्यै असर भएन ।

त्यस किसिमले सत्याग्रहीहरुले डटेको देखि नरशम्सेरले सैनिकहरुलाई सत्याग्रहीहरु माथी आक्रमण गर्ने हुकुम दिए । हुकुम पाउना साथ सैनिकहरुले पनि बन्दूकको कुन्दा, लाठी तथा आफ्ना बूटहरुले निहत्था जनतालाई अन्धाधुन्ध रितले कुटपीट गर्न थाल्ने । त्यसै पैशाचिक कूटपीटमा सत्याग्रही टंकविलासलाई ढुंगा छापेको सडकमा पछारेर सिपाहीहरुले आफ्ना बूटले कुल्चेका थिए । सत्याग्रही लक्ष्मीनाथको हात मर्काए भाँचेका थिए । सत्याग्रही गजसुन्दरका कनपारोमा मुक्का हानेर फोरी रगतपच्छे गरेकोले तिनी संधैका निमित्त बहिरा भए । तेति हुँदा हुदै पनि वीर सत्याग्रहीहरुले आफ्नो छाती बन्दूकका नालिका संमुख ल्याएर "मर्नलाई तैयार छौं" भन्ने नारा लगाउन छाडेका थिएनन् ।

त्यसै बखत कुट्दै पिट्दै तथा लछाद भाँदगाऊ र पाटन वाट पनि २६ जना सत्याग्रहीहरु काठमांडु ल्याइएका थिए । ती सत्याग्रहीहरुमा साधनादेवी, साहानादेवी, स्नेहलतादेवी तथा कनकनलतादेवीहरु पनि थिए । त्यस जत्थाका तिलकराजशर्मा लाई मर्मान्तक चोट लागेको थियो । ती सबै बन्दीहरुलाई मोटरलौरीमा खाँदेर मोहनशम्सेरका दरबारमा पुऱ्याइयो । त्यस पछि हर एक दोवाटामा पलटन तैनाथ गरिएर ९ जना भन्दा बढता मानिस जम्मा भए गोलीले उडाई दिनु भन्ने मासल आर्डर जारी भएको थियो ।

ता० २ मईका दिन फेरी काठमान्डुमा प्रियदर्शन नाऊँका विद्यार्थीका नेतृत्वमा जुलुस निस्केको थियो । त्यस दिन पाटनमा पनि जुलुस निकालेर नागरिक अधिकारका मागको नारा लगाइएको थियो । त्यस दिन काठमान्डुमा ५ जना तथा पाटनका २ जना सत्याग्रहीहरुलाई समातेर तिनीहरुलाई पनि मोहनसम्सेरका दरबारमा लगेको थियो ।

ता० ३ मईका दिन भएको सत्याग्रह नेपालका इतिहासको अभूतपूर्व

घटना हो । त्यो सत्याग्रह आयोजन कालेज तथा स्कूलका विद्यार्थीहरुले प्रारम्भ गरेका थिए । त्यस दिन विद्यार्थीहरुका उत्साह तथा लगनको पारावार थिएन । त्यसै दिन विद्यार्थीहरुलाई स्कूलबाट निस्कन न दिने विचारले अधिकारीहरुले तिनीहरुलाई स्कूल भित्र थुनेर बाहिरबाट ताल्चा लगाई दिएका थिए । त्यस अवस्थामाति विद्यार्थीहरुले चोट खाने किंवा घाइते हुने परवाह न गरी स्कूलका द्वितला बाट हामफाली निस्केर जुलुसको संगठन गरेका थिए । त्यस किसिमले संगठित भएको त्यो जुलुस क्रमशः विशालोत्तर हुँदै भयो । त्यस जुलुसमा अन्दाजी पच्चिस तीस हजार नरनारी संमिलित भएका थिए । विशालनगर दरबार तिर अग्रसर भएको त्यस जुलुसलाई देखेर कँवर खलक राणाहरुका मुटुले ठाँऊ छोडेको थियो । तिनीहरुका हुकुमले कर्णेल चन्द्रबहादुर आफ्ना सैनिक दलका साथ सत्याग्रही जुलुस माथि जाई लागे । पुलिसले संगीनको कुन्दा तथा बूटको प्रयोग गरी जुलुसलाई भंग गर्ने प्रयत्न गर्‍यो । त्यस किसिमका पशुबलका प्रयोगले अनेक मानिस बडा न राम्रा रितले घाइते भएका थिए । जनता विक्षुब्ध भएर पनि पूर्णतः शान्त रह्यो । त्यस किसिमले सत्याग्रही हरुको सत्याग्रहले पुलिसका हाकिम चन्द्रबहादुर रन्थनीन लागे । तिन्ले आफ्ना सिपाहीहरुलाई सत्याग्रहीहरुलाई "खुकूरीले काट" भन्ने आज्ञा दिए । त्यसै बेला जुलुसका अगाडी उभिएका वीरबद्रीनाथउपाध्यायले सिपाहीको नाङ्गो खुकुरीका सामुने आफ्नो गर्दन थाप्न पुगे । बद्रीनाथको त्यो अपूर्व वीरता पूर्णकार्यले पुलिसहरु माथि निकै प्रभाव पर्‍यो । तिनीहरुले आफ्नो खुकुरी दाप मा यन्काए । त्यस पछि त्यस स्थानमा २५ जना सत्याग्रही नेता समातिए र मोहनशम्सेरका दरबारमा पुर्‍याइए र पछि प्रधानामात्य पद्मशसेरका आज्ञाले वीसालनगर दरबारमा पुर्‍याइएका थिए ।

सुधारको इच्छा राखने तर आट न पुर्‍याउन सक्ने शक्तिहीन पद्म-शम्सेर, नेपालको पूर्णतः शत्ताधारी प्राइमनिष्टर सम्म भएर पनि मोहन-शम्सेर कम्पनीका दबाबले तिनको मनस्थिति विचित्र भई रहेको

थियो । तिनले ती बन्दी सत्याग्रहीहरुलाई "तिमीहरुको के इच्छा छ" भन भनी सोधे । त्यसका उत्तरमा सत्याग्रहीहरुले नागरिक अधिकारका साथ राजनितिक बन्दी हरुलाई छाडने माग उपस्थित्त गरे । त्यस बेला पद्मशम्सेरले त्यस कुरामा सत्याग्रहीहरुलाई आश्वासन दी १२ दिन पछि सुधार घोषणा गर्नुँ तथा चार भंज्याङ्ग भित्रका सत्याग्रही तथा अन्य राजनैतिक बन्दीहरुलाई पनि छाडिदिने छु भन्ने वचन दिएका थिए ।

त्यस किसीमले नेपालको एकेश्वर शक्ति सम्पन्न प्राइमिनिष्टर बाट आश्वासन पाएका विजयी सत्याग्रहीहरुका दलका मानिसहरु आफ्ना आफ्ना घर तिर फर्कन थाले । तीनीहरुको त्या दल वीशालनगरदरवारवाट क्यै पर न पुग्दै मोहनशम्सेरका हुकुमले यौटा आएको सैनिक दलले एकनासी तिनीहरु माथि आक्रमण गर्‍यो । त्यस अप्रत्यासित मारपीटले गर्दा त्यस दलको सायदनै कोई घाइते भएको होवैन । यहाँ सम्म कि शिशु तथा बालखहरु पनि त्यस पैशाचिक मारवाट बाँचेनन् । त्यस किसिमको आसुरि कृत्य भईसके पछि तीलकराजशाही, शम्भूराम तथा टंकविलास लाई पक्रेर क्याम्पमा लगी, बहादुरशम्सेरका हुकुमले बुटले लत्याई तिनीहरु माथि गर्नु सम्म अत्याचार गरिएको थियो । दोश्रा दिन तिनीहरुलाई संगिनका घेरामा नेल गलफंदी लगाई बन्दी गृहमा पठाइयों । त्यस दिनका त्यस पासविक अत्याचार तथा गिरफ्तारीका विषयमा पद्मशम्सेरवाट सम्मति सम्म लिएको थिएन ।

जून १९४७ मा जनरल कैशरशम्सेरले वासिंगटन गएर आफ्नो धन सुरक्षित गराई राणाहरुको मित्रताको संदेस अमेरिका सम्म पुर्‍याएका थिए । यस शदिका प्रारम्भिक भागमा अमेरिका अंग्रेजहरुको नेपाल तथा तिब्बतमा भई रहेको विशेष प्रवेशलाई सदा संदेहका दृष्टिले हेरी रहेको थियो यदि एकातिर रुसको र अर्कोतिर चीनका पक्षमा अमेरिकाको विरोध बाधक न भएको भए व्रिटीश साम्राज्यवादले ई दुवै देशलाई आफ्ना शिकंजामा कैल्हेनै कसी लिएको हुनथ्यो । यै अमेरिका अव चीनको

अन्यथा बदलिएकोले मध्य एशियामा टाटा सम्म बढा वहाँ रूसको प्रगति-लाई रोक्न सकियोस् भनी आउनलाई उत्सुक देखिन्छ। मई १९५८ मा हेनरी ग्रेडीका प्रमुखतामा यउटा अमेरिकन मिसन नेपालमा आयो - वहाँ त्यस्को पर्याप्त सन्मान भयो। चीनमाथी कम्युनिष्टहरुको प्रमुखता भई-सके पछी तिब्बतमा त्यस्को वक्र दृष्टि देखेर तथा आफ्ना लूट शासन अन्त भई नेपाली जनताले गर्न लागेको आन्दोलनका भयले नेपालका शासकहरुलाई पनि त्यस तिरबाट चिन्ता भयेको थियो। इनै सब कारणले पद्मशम्सेरले नेपालमा केहि सुधार गर्नें विचार लिएका थिए। तर त्यसै बखत संसारको सर्व श्रेष्ठ साधन र शक्ति सम्पन्न अमेरिकाले आफ्ना माथि वरदहस्त भएको देखेर देश माथि आफ्नो लूटतंत्रको स्थिरता देखे मोहन शम्सेर कम्पनीका मनमा पद्मशम्सेरलाई हटाई नेपालको शासनाधिकार थाम्ने इच्छाले कुत्कुत्याउन र तिन्लाई मिच्नथालेको थियो।

सम्वत् २००३ सन् १९४७ मा काशीमा सुवर्णदेवी प्रसाद साप-कोटाका सभापतित्वमा नेपाली राष्ट्रीयकांग्रेसको प्रथम वार्षिकोत्सव भयो। त्यस वार्षिकोत्सवमा एक वर्षका लागी ने० रा० कांग्रेसका अध्यक्ष श्री दिल्लीरमण रेग्मी छानिए। त्यस अधिवेशनमा भारतवर्षका समाजवादीनेता राममनोहरलोहिया पनि उपस्थित थिए। तिन्ताक सम्म मोहनशम्सेरका उग्रदमनले नेपाली जनआन्दोलन कुल्चिदै गएको थियो, ता पनि तीन शहर नेपाल तथा तराईका सैकडा डेलिगेटहरु काशीका त्यस अधिवेशनमा संमिलित भएका थिए। यस किसिमले सभापति मनोनित भए पछि रेग्मीजीले नया किसीमले नेपाली जन आन्दोलनलाई फेरी संगठित गर्नें चेष्ट गर्न थाले। तिन्ले अनेक पुस्तक तथा पुस्तीकाहरु हिन्दी अंग्रेजीमा लेखि प्रकाशित गराएर जनतामा कवर खल-नायक राणाहरुका कालो कुकृत्यहरुको नग्न रूप प्रकाशमा ल्याएका थिए। त्यै ताक काशीबाट बटुकप्रसाद भटराईका संरक्षणमा र नेपालका युगकवि-लक्ष्मीप्रसाद देवकोटाका सम्पादकत्वमा निस्कने राष्ट्रीय साप्ताहिक

पत्र "युगवाणी" ले पनि कँवरखलकका राणाहरुका कर्तुतको निकै खुइरो खनेको थियो ।

तिनैताक ता० १० जुलाईका दिन, कलकत्ता मा दौलतविक्रम् कँवर राणाले नेपाली दूतावासमा गई राणा शाहीका विरुद्ध नारा लगाएका अपराधमा. दमनशम्सेरका आरोपाधारमा तिन्लाई कलकत्ता पुलिसले गिरफ्तार गरेको थियो । दौलत विक्रम "हिमालय छात्र संघ' का मंत्री तथा एम. ए. कक्षाका छात्र थिए ।

यसै बीचमा भारतीय नेताहरुका प्रयत्नले विश्वेश्वर प्र. कोइराला नेपाल जेलबाट मुक्त भई भारतवर्षका सिमा सम्म पुऱ्याइएर छाडिएका थिए तिनताक पद्मशम्सेर बाट हुने सुधार घोसणाको रोजिन्दा आज भोलि हुन्छ भन्ने अटकलबाजी भई रहेको थियो । यता रेग्मीका कडा नियंत्रणमा तथा कांग्रेस लाई अगि मिलेका चन्दाको हिसाबको कुराले कोइरालानुयायी कांग्रेस कार्यकारी सदस्यहरु मद्धे अनेक रेग्मीका विरुद्ध भई सकेका थिए । कोइरालाले जेल मुक्त भई भारत आए पछि तिनीहरुले कोइरालालाई लुप्त पद प्राप्त गर्नका निमित्त उत्तजेन दिन थाले । सुधार घोषणा हुने कालमा स्थान चुछिस्याउन लाई वा किन हो कोइरालाले अवैधानिक रितले "मैले ने. रा. कांग्रेसको कार्यकारी सभापतित्वको चार्ज लिए" भन्ने वक्तव्य प्रकाशित गराए । त्यसै वेला देखि ने. रा. कांग्रेस दुई दलमा विभक्त भएर "रेग्मी ग्रूप" तथा "कोइराला ग्रूप" का दलबन्दीमा फँसेको थियो । नेपाली जनता या व्यक्ति विशेषबाट मिलेका चन्दाका रकमलाई खर्च गरी कोइरालाले सम्वत २००३ सन् १९४७ का डिसेम्बरमा आफ्ना सहयोगीहरुका सहयोगले काशीमा नेपाली राष्ट्रीय कांग्रेसको वार्षिवकोत्सव गरे तथा रेगमीले पनि सम्वत २००३ सन् १९४८ का फ्रेब्रुअरिमा काशी मै 'नेपाली राष्ट्रीय कांग्रेस को राजनैतिक सम्मेलन" बडा धूमधामका साथ मनाएका थिए ।

तिनैताक काठमाडौं संस्कृत पाठशालाका विद्यार्थीहरुले हामीले

हरी संस्कृतका साथ भूगोल इतिहास तथा सिविक्सको शिक्षा पाउनु पर्दछ, भन्ने विंतिपत्र पद्मशम्सेरमा पठाएका थिए। कँवरखलकका पिठ्ठू माहिला गुरुज्यू हेमराज पाण्डेले ती विद्यार्थीहरुका त्यस विद्योपार्जन गर्ने पाउँ भन्ने कार्यलाई "बदमाशी तथा गुंडोपन हो" भनि "कडा सजाय दिनु पर्छ भन्ने" आफ्नो अमूल्य (?) सम्मति दिएका थिए। मोहनशम्सेर कम्पनीका आज्ञाले पुलिस हाकिम चन्द्रबहादुरले ती विद्यार्थीहरुलाई बडो निर्ममता पूर्वक पिटेर दिन भरि पाठशालामा थुनेका थिए। तिनै मद्धे कमलप्रसाद नाउँका एक विद्यार्थीले वाहिर निस्कने प्रयत्न गर्दा चन्द्रबहादुरले आफ्नो रिवाल्भर सोझ्याएको ले त्यस बहादुर विद्यार्थीले आफ्नो छाती फर्काइ "लौहान" भनेको थियो। त्यस पछि १४ जना विद्यार्थीहरुलाई डाडों कटाई दिनु भन्ने सजाय मिल्यो। तिनीहरु निर्वासित भई भारतवर्षमा झरेका थिए।

मोहनशम्सेर भूतपूर्व प्रधान मन्त्री चन्द्रशम्सेरका जेठा छोरा तथा तिन्का ३० वर्षका शासनका सहयोगी र लूटका धनका जेठा अंसियार भई प्रचूरधनका अधिकारीका साथ स्वार्थ साधनमा पनि पिताका योग्य उत्तराधिकारी हुन्। चन्द्रशम्सेरले देशलाई सर्वहारा बनाई लूटेको विशाल सम्पत्तिको जेठो अंसिदार भएर पनि तिन्को धन लिप्सा पुरा भएको रहने छ। पद्म-शम्सेरले गरिएका सुधारका चर्चाले आफ्नु वंशको नेपालका लूट शासन प्रणालिको अन्त देखने तथा नेपालका त्यस लूट मय शासनमा सब भन्दा अधिक आफ्नो कम्पनीको स्वार्थ निहित देखने मोहनशम्सेरलाई त्यो सुधारको चर्चा सम्म मन परेको थिएन्। वरदहस्त भएका अमेरिका र बृटेनका आडमा लूटशासनको स्थिरता देखने पिताका आदर्शले तिन्ले पद्मशम्सेरलाई हुत्याएर स्वयं नेपालामात्य पदग्रहण गर्ने उठाएको विचारको माथि नै चर्चा गएकोछ। त्यसैले निजले प्रारम्भ देखि नै त्यस सुधार चर्चा माथी कुठाराघात गर्न क्यै बाँकी राखेका थिएनन्। आफ्नो कम्पनी तथा बबरशम्सेरएन्डकम्पनीका सहयोग बलले निजले नेपालामात्य

पद्मशम्सेरको हुकुम अमान्य गरी तिनको प्रत्यक्ष अपमान समेत गर्न बाँकी राखेका थिएनन् ।

त्यसै कसमकसले पद्मशम्सेरबाट शासन सुधार गर्ने घोषणाको तिथि बराबर बढ्दै गएको थियो । अन्तमा शासन सुधार योजना बनाउनका निमित्त भारतका प्रधानमंत्री पं० जवाहरलालनेहरूबाट योग्य कांग्रेसी कानूनका पं० हरुलाई नेपालमा पठाई दिने प्रार्थना गरियो । नेहरुजीले पनि आफ्ना नीजी प्रतिनिधिका हैसियतले श्री श्रीप्रकाशजीलाई सम्वत् २००: सन् १९४६ मा नेपाल पठाएका थिए । त्यसै वेला कँवरखलकका राणाहरुले वैतनिक सलाहकारका रुपमा कानूनका पंडित डा० रामउग्रहसिंहलाई समेत नेपालमा झिकाएको थियो ।

श्री प्रकाशजीले कंवरखलकका राणाहरुका सन्मुख नेपालराज्य शासन विधानमा ३।४ किसिमको मसौदा वनाएर दिएका थिए । कँवरखलकका राणाहरुलाई आफ्ना राणासाहीको अन्त किन स्वीकार हुन्थ्यो । देशका समस्त प्रजाजन तथा नरेश सम्मलाई अर्धनागरिक अधिकार सम्म न दिएका देशले नागरिक अधिकार मात्र पाए पनि वालुवाको किल्लारूपी राणासाहीको लूटतन्त्र एक दिनमा भूसात् गराउनेछन् भन्ने तिनीहरू राम्ररी थाह छ । त्यसैले भारत तथा दुनियाँका आँखामा छारो हाल्न त्यस किसिमको नाटक गरिएको थियो । त्यस किसिमले पुग न पुग १५ दिन पछि अनेक रत्नाभूषण उपहारका साथ श्री प्रकाशजीलाई तिनी हरुले नेपालबाट बिदा दिए । त्यस पछि कँवरखलकका राणाहरुले आफना वैतनिक डा० रामउग्रहसिंह बाट आफ्ना इच्छानुसारका नौंऊमात्रको विधानको मसौदा लेख्न लगाएर त्यसलाई कार्यरुपमा दिने घोषणा गराएका थिए । यहाँ यो कुरा विर्सनु हुदैन कि कँवरखलकका राणाहरुले भारत सरकार बाट झिकाएका कानूनज्ञका रायलाई थन्क्याई आफ्ना वेतनभोगी कानूनज्ञ डाक्टर रामउग्रहसिंहले बनाएको इच्छित विधान मसौदालाई घोषणा गराई नेपाली जनतामा भारत सरकारले पठाएको

...कानूनले बनाएको विधान मसौदाको नाँऊको आलसाजी गरि जुन विधान लागु ...एका थिए, त्यो पैसाका जोरले लेखाएको मसौदा मोहनशम्सेरएन्ड, ...बहादुरशमसेर कम्पनीको कृति थियो। संसारका कुनै देशका कानूनका पंडित ...वकील या व्यारिष्टरलाई तिन्को निर्धारित फिस दिएमा प्रत्येक व्यक्तिले ...आफ्नो मनोनुकूल दलिल दस्तावेज या मसौदा लेखाउन सक्छन्।

माघ ११ गते २००४ सन् १९४७ का दिन पद्मशम्सेर बाट सुधार ...को घोषणा गरियो। त्यस घोषणा मा नाऊँ मात्रलाई पनि महाराजा-...धिराजको स्वीकृतिको उल्लेख गरिएको थिएन। त्यस्मा पनि लोकतंत्र तथा ...वैधानिक शासन पद्धतिका आडमा कँवरखलकका राणा शासन पद्धतिलाई ...कायम राखन षडयन्त्र मात्र गरेका थियो। राणा शासन पद्धति वैधानिकता ...को ठीक उल्टो रुप हो, तथा त्यसको वास्तविकता शुद्ध डाकेजनि मात्र ...हो। प्रजा वर्ग र राजा बाट छानिएका प्रधान मन्त्री जस्तो संसारमा ...चलेको छ, त्यस्तो न भई यौटा वंशका भाई रोलक्रमले भई ...आउने अपरिमित अधिकार सम्पन्न प्रधान मन्त्रीका हातमा वैधानिक ...शासनसूत्र रहेमा वैधानिकता काहाँ रहन्छ। त्यो ता नेपालमा ...१०४ वर्ष देखि चलिआएको कँवरखलकका राणाहरुका लूट माथी लोक-...तंत्रको छाप लगाई त्यसलाई अक्षुण्य बनाई नाम मात्रलाई पनि रहेको ...राजेश्वर श्री ५ महाराजाधिराजको सत्वलाई लोप गराउने भीषण षड-...यन्त्रमान थियो। ऐतिहासिक नेता स्वरुप निर्धारित अधिकार भएका राजा ...र प्रजावर्गका सार्वजनिक चुनाव बाट भएको प्रधान मन्त्री द्वारा सचालित ...(ब्रिटेनियाँ तुल्य) शासन पद्धतिलाई पो लोकतंत्र भन्न सकिन्छ। त्यस ...दरबारमा कैदी तुल्य गरि राखिएका राजा, जन्मना उसमाथि भाई क्रमरोलका ...अपरिमित अधिकार भएका स्वयंभू प्रधानमन्त्री लाई लिएर कुनै लोक-...तंत्र काहाँ सम्म सफल होला त्यो कुरा मूर्खले पनि विचार गर्न ...सक्ने हो।

त्यस विधान पद्धतिका शीर्षमा पनि श्री ५ महाराजाधिराज होई

बक्सिन्छ। त्यस्मा पनि श्री ५ महाराजाधिराजले शासन कार्यलाई प्रइमिनिष्टर-मा समर्पित गरेका छ भन्ने भ्रान्ती पारेकोछ। तर विधानमा कहीं पनि महाराजाधिराजले त्यसलाई स्वीकार गरेको छ भन्ने कुरा लेखिएको छैन। न ता महाराजाधिराजको स्वीकृति बोधक लालमोहर किंवा सहि छापनै गराइएकोछ। विधानका प्रस्तावनामा "श्री ५ महाराजाधिराज त्रिभुवनवीरविक्रमशाहको (नाम र प्रशस्ति लेखि) बाट यस नेपालराज्यको सिंहासनमा आरुढ भई बक्सेको छत्तिसौ वर्षमा हामी श्री ३ महाराज पद्मशम्सेर (को नाम र प्रशस्ति लेखि) बाट यो नेपालको विधान जारी गरि बक्सेकोछ"। भन्ने कुराले ता श्री ५ को उल्लेख समय संकेत गर्ने साधन मात्र बुझिन्छ। श्री ३ प्राइमिनिष्टर भनाउने ठिकेदारहरुको स्वेच्छाचारी र अनियंत्रित शासनाधिकार पूर्ववत कायम राख्न र शासन सुधारको विधानमा इच्छित बेलामा रोक्ने बन्द गरने अधिकार विधान कानून भागचारको 'ख' केन्द्रिय सभा महलका दफा २३ को देहाय 'ख' दफा र भाग ३ को ८ को देहाय दफा क मा गठित हुने मंत्री मंडलले श्री ५ महाराजाधिराजका प्रति उत्तर-दायित्व न भई श्री ३ प्राइमिनिष्टरका प्रति उत्तरदायी रहने भएकोले महाराजाधिराजको ता अस्तित्व नै न रहेन र जनताको वास्तविक उत्तरदाई शासन स्वीकार गरिएका तथाकथित वैधानिक कानूनको अस्तित्व पनि इच्छित बेलामा लोप हुन सक्दछ। देशको बढ्दो राजनीतिक चेतनालाई दबाउन राजनीतिक बन्दी, खारेज गरीएका निजामति र जंगीका कर्मचारीहरु समेत साधारण कैदी जस्ता एकै श्रेणीमा राखी नागरिक अधिकार बाट वन्चित गर्दै चुनावमा ५ वर्षसम्म प्रतिबन्ध भाग ४ ख को दफा ३ को देहाय दफा ५, ६ मा जनाएकोले यो सुधार नीस्सार यौटा षडयंत्रमात्रहो भन्ने स्पस्ट बुझिन्छ। केन्द्रिय व्यवस्थापिकाका दुई अंग भारदारी सभा र राष्ट्रसभाको समान अधिकार रही मतभेद भएका बखतमा दुवै सभाको संमलित बैठकले निर्णय गर्ने हुँदा र त्यस निर्णयमा जनताका निर्वाचित प्रतिनिधिको समान भए सम्म न भई प्राइ

मिनिष्टर द्वारा नियुक्त भएका सदस्यहरुको सवदा बहुमत हुने गराएको छ। मौलिक अधिकारहरुका विषयमा व्यक्तिगत स्वतंत्रता, वाक स्वतंत्रता, प्रकाशन स्वतंत्रता आदिको उल्लेख भए पनि विधानका दफाहरुको अर्थ गोल बोलीमा दोहरो लाग्ने गरि लेखिएकोले त्यस्ले पनि प्रकारान्तरले जनताले क्यै मन्न गर्न पाउने छैन भन्ने सिद्ध भएको छ।

पद्मशम्सेर बाट गरिएको त्यो सुधार घोषणा प्रकाशित भए पछि, त्रिपुरवरसिंह, विजयबहादुर मल्ल, गोपालप्रसाद रिमाल र गोपालदासहरुबाट पाइएका हकहरुलाई कार्यान्वित गरी विजया दशमीका दिन प्रजा-पंचायत कायम गर्नें यउटा सार्वजनिक सभा गरिएको थियो। सुधार घोषणा भए पनि मोहनशम्सेरले नेपाली जनताको त्यो मनमारी सहन सकेनन्। तिन्का आज्ञा ले पद्म शम्सेर बाट मिलेको नाऊँ मात्रको सुधार कार्यमा हरताल फेरी सम्वत् २००६ सन् १६४८ ता० ४ तथा ६ नवम्बरमा विजयादशमीका सभामा भाषण गर्ने र सहयोग गर्नें प्रजा पंचायतका ३६ जना सदस्यहरु समातिए। गोपाल रिमाल र कृष्ण रिमाल पहाड तिरको विकट मार्ग बाट भागेर भारत पसे। त्यसै प्रजा-पंचायतका समातिएका सदस्य बालमुकुन्द र बाह वर्षें नूतन बहादुर थपलियालाई सेन्टर जेलका संतरीले "खबरदार" भन्दा "होसगर" भन्ने जवाब दिएको बाबत नेल गलफन्दी लगाई कालकोठरीको सजाय दिएको थियो।

घोषणा गरी सम्वत २००६ सन् १६४८ का जनवरीमा नेपालमात्य पदत्याग गर्नें कुरा भएर पद्मशम्सेरले भारतवर्षमा झरी अनेक भारतीय नेताहरु संग भेट घाट गरेका थिए। तिन्ले भारतवर्ष झरेर ३, ४ मैना सम्म पनि आफ्नो नेपालमात्य पदको त्याग पत्र पठाएनन्। उता तिन्का त्याग पत्रको समेत वास्ता न गरि मोहनशम्सेरले पिस्तौल का नालका प्रयोगले धिराजबाट आफ्ना पदवहालीको पंजापत्र सनद हासील गरी सिंधुर यात्राका साथ आफुनै नेपालमात्य पदमा बहाल भएको घोषणा गरे। कँवरखलकका राणाहरुलाई कुनै कार्य दुष्कर

छैन। देशमा यउटा प्रधानमन्त्री छँदाछँदै अर्कोले त्यस पदमा बहाल हुनु कहाँ सम्मको मूर्खतापूर्ण तथा हास्यास्पद कार्य थियो स्वयं पाठकले विचार गर्नुहोला। यस किसिमले मोहनशम्सेरले नेपालमात्य पदमा आफै आफु लाई बहाल गरे पछि पद्मशम्सेरले आफ्नो त्याग पत्र नेपालमा पठाएको थियो। आफ्ना ३ वर्षका अमात्य कालमा पद्मशम्सेरले पनि करोडा रुपया लूट्न पाएका थिए। तथा प्रधान मन्त्रित्व त्याग विनिमयमा मोहनशम्सेर द्वारा दुई करोड रुपया राजकोष बाट झिक्छूट पाएका थिए। ती सबै रुपयाका तथा नेपालको आफ्नो जम्मै घर खेतहरु बेची भएको भरको सम्पत्ति लिएर पद्मशम्सेरले नेपालबाट निर्वासित हुनु पऱ्यो। बिहार सरकारले नीजलाई वासगृह बनाउन ९९ वर्षका लागी रांचीमा निष्कर जमीन दिएकोले घर बनाई हिजो आज पद्मशम्सेर त्यहीं बसेका छन्।

प्रधानमन्त्री हुना साथ मोहनशंसेरले आफ्ना सिंधुरयात्राका दिन (मई २७ सन् १९४८) सिंह दरबारमा अमेरिकन प्रतिनिधि हेन्डरसन्-का सन्मुख अमेरिकाको मित्रताको चर्चा गरेर भनेका थिए:—

"अमेरिका, जो आजको संसारमा यौटा सब भन्दा प्रधान राष्ट्र हो, यद्यपि नेपालबाट धेरै टाढा प्रसान्त सागर पारी अवस्थित छ, ता पनि हामी तेस्का साथ प्रगाढ मित्रताको सम्बन्ध पैदा गर्नका निमित्त उत्सुक छौ। हामी तिनीहरु सँग व्यापार गर्न चाहन्छौ। अरु एक दोश्राले एक दोश्राका राज्यमा राजदूत नियुक्त गरेका छौ। मलाई विश्वास छ कि अमेरीकाको सहायता हाम्रा देशका निमित्त ठूलो लाभप्रद सिद्ध हुनेछ"। त्यसै बेला दुबै देशका प्रतिनिधिहरुले एक दोश्राका प्रमुख प्रतिनिधिहरुलाई उपाधिहरुले विभुषित गरेका थिए र भारत स्थित अमेरिकाको राजदूत नै नेपालको पनि राजदूत मानिएको थियो।

त्यसै सिंधुर यात्राका उत्सवका भाषणमा मोहनशम्सेरले यो पनि भनेका थिए "म यस कुराको पनि प्रयत्न गर्दछु कि, चीन, तिब्बत

फ्रांस, नीदरलैंड, वेल्जियम इत्यादि अन्य देशहरुका साथ पनि हाम्रो प्रगाढ मैत्री सम्बन्ध स्थापित हवस् ।

नेपालका राजनैतिक इतिहासमा त्यो यौटा नत्रा अध्यायको आरम्भ थियो । त्यस्वेला आफ्ना स्वार्थका दृढताका लागी राणाहरु विदेशीहरु सँग नीकट सम्बन्ध स्थापित गर्ने उत्सुक भएका थिए । यता पश्चिमी देशहरु पनि कूटनैतिक सम्बन्ध स्थापित गरेर नेपालमा आफ्नो दूतावास राख्न उत्सुक भएका थिए । त्यस परिवर्तनका तहमा मोहनशम्सेरको एकान्त अभिलाषा नेपालको आधुनिक प्रगतिशीलताका नाऊँमा आफ्नो दस्यूतंत्रलाई वलियो बनाउनें भएकोले तिनीहरु त्यस्मा चीन र मध्य एसियाका नत्रा राजनैतिक परिवर्तनहरुमा आफ्ना स्वार्थ पूर्ती दृष्टिले अमेरिकादि पश्चिमि राष्ट्रहरुले सहयोग गरेको हो भन्ने कुरामा विचारै गरेका छैनन् क्यार !

भारतको दृष्टि कोण त्यस विषयमा अन्य दूरवर्ति देशहरु भन्दा भिन्न र पृथक थियो । भारतले नेपाल देशका उन्नतिको विचारले विदेशी पाश्चात्य शक्तिहरु सँग नेपालले गरेको संधिहरुलाई स्विकार गरी भारत र नेपलाको हालको मैत्री र व्यपारिक संधि हुनु भन्दा पहिले देखि नै आफ्नो उदेश्य, अधिक गहिरो र अधिक औचित्य पूर्ण र अत्यधिक स्वभाविक हो भन्ने देखाई दिएको थियो । त्यो भएकोहो पूर्णत: सामाजिक तथा संस्कृतिक दृष्टिकोणले, यद्यपि राजनैनिक मैत्रीका निमित्त दुवै देशको उत्कंठा पनि कुनै कम जवर्दस्त थिएन । त्यसै भावनाले भारतले कम्यूनिष्ट चीन सरकारलाई स्वीकार गर्ने वेलामा नेपाल सँग संधिहुनु भन्दा पैल्हे नै त्यस सम्बन्धमा पहिले बृटिसभारतले चीनियाँहरु सँग भने अनुसार नेपाल, सिकिम, भुटान आदि हिमालयका अन्तर्गतका राज्यहरुमा चीन तर्फ बाट भएको कुनै प्रकारको हस्तक्षेव सहन गरिने छैन भन्ने प्रतिज्ञा गराएको थियो ।

भारतवर्षमा स्वतंत्र वातावरणमा वसी नेपालका राजनीतिमा प्रवेश गर्नका निमित्त सन् १९४७ मा कलकत्तामा नेपाली प्रजातंत्र कांग्रेस

नाऊँ को संस्थाको स्थापना भएको थियो । त्यस संस्थाका स्थापनामा निर्वासित सुवर्णशंसेर महावीरशंसेर कँवरराणाहरुको मूख्य हात थियो । त्यस नेपाली प्रजातंत्र कांग्रेसका प्रथम सभापति महेन्द्र विक्रमशाह र प्रधानमन्त्री सूर्यप्रसाद उपाध्याय भएका थिए। त्यस्को प्रधान कार्यालय पहिले कलकत्तामा थियो र पछि पटना तथा काशीमा ल्याइएको थियो । त्यस संस्था बाट "नेपालपुकार" नाँऊको यउटा राष्ट्रीय साप्ताहिक पत्र निस्केको र त्यस बाट कँवरखलकका राणाहरुको निकै पोल प्रकाशमा आएको थियो। त्यसै नेपाल पुकार आफिस बाट क्यै दिन मासिक रुपले "हिन्दी" संस्करण पनि प्रकाशित भएको थियो ।

नेपालमा प्रजा पंचायतका सदस्यहरू मध्ये बंदी हुन बाट बांचेका सदस्यहरुले गुप्ति हिसाबले आफ्नो संगठन गरी सत्याग्रह गर्ने आयोजन गर्न थालेका थिए। त्यस बेला विश्वेसरप्रसादकोइराला फेरि नेपाल पुगेका थिए। एक दिन कोइरालाजी पुनः बन्दी भए । तिनका साथमा रहेका प्रजापंचायतका अनेक गुप्त सदस्यहरुको नामावलि प्रकाशित भए पछि नेपालका अनेक प्रजापंचायतका सदस्यहरु समातिएर बन्दी गरिएका थिए। तिनैताक काशी बाट प्रकाशित हुने "युगवाणी" का सत्वाधिकारी वटुकप्रसाद भटराई पनि बरेवा तराईमा गएका बखत बन्दी गरि काठमान्डु पुऱ्याइए। जेल प्रवासकालमा कोइरालाजी र वटुकप्रसादजी हरुले जेल सुधार र राजनैतिक बंदीहरुका मुक्तिका निमित्त अनसन प्रारम्भ गरे र त्यसको चाँडैनै अन्त गरे । अनसन भङ्ग गरे पछि नेपाल सरकारले तिनीहरूलाई जेल मुक्त गरी भारतवर्ष तिर पठाई दियो। कोइराला-जीको त्यस अनसनको भारतवर्षमा निकै प्रचार गरिएको थियो। निजले भारत आए पछि त्यस अनसनले भएका प्रचारका वातावरणमा दिल्ली तथा पटनाको निकै दौड धूप लागएका थिए। यहाँ सम्म कि भारतका प्रधान मन्त्री श्री जवाहरलालनेहरू सँग सम्म भेट गरी निजले मोहनशम्सेर बाट सुधार गरिने पक्का आश्वासन पाएको कुरालाई बडा

जोरदार शब्दमा भनेका थिए। तर त्यो सुधार आश्वासन कँवरखलकका रणाइरुका दमन चक्र द्वारा आज प्रकट हुदैछ। अवश्य त्यस पछि नेपाल जेल बाट विराटनगर मिल मजदूर कांडमा पक्रिएका कोईराला-जी का भाई तारिणीप्रसाद र गिरजाप्रसादहरु छुटेका थिए। बटुकप्रसाद भट्टराईजी ले नेपाल जेल बाट मुक्ति पाई काशी आयेर आफ्ना युगवाणी पत्रको प्रकाशन कार्यलाई स्थगित गरे। त्यस पत्रका सम्पादक लक्ष्मीप्रसाद देवकोटा मोहनशम्सेर बाट क्षमा मागी पुनः काठ-मान्डु फर्केका छन्।

यसै बीचमा प्रजापरिषद कांडका वीर सेनानी टंकप्रसाद, चूडाप्रसाद, गोवि-न्दप्रसाद, रामहरी तथा बरीयारपुरका साहेबजी कृष्णराजाकांडमा परेका २० वर्ष देखि जेल यातना सहने वीराग्रणी खड्गमानसिंहबस्नेतहरुले जेलको सुनार कप्तानलाई जेलको व्यवस्था ठीक छैन भन्ने आरोप लगाएका बापत तिनीलाई नेल गलफंदी र सिक्री लगाएर पिंजडामा हाली सेंट्रल जेलमा राखेको थियो। हिजो आज तिनीहरु भद्रगोलका कालकोठरीमा राखिएका छन्।

सम्वत् २००६ वैशाख पंचमी रविवार १८ अप्रैलका दिन मोहन-शम्सेरले नेपालको घोषित्त भएको पुरानो विधानमा क्यै सुधार गर्ने घोषणा गरे। मोहनशम्सेरले गरेको त्यो घोषणा "गोरखा पत्र" का शब्दमा तल लेखि-एकोछ। त्यस क्रोसो सुधारबाट नेपाली जनतालाई कत्तिको नागरिक अधिकार दिएको छ तथा ती सुधारहरु बाट जनताले कती लाभ उठाऊन सक्दछन् त्यो कुरा विचार गर्ने लायकको छ।

"सम्वत् २००५ साल देखि चालू हुने वैधानिक कानूनमा र यसो गर्न हुदैन भन्ने हद गरी सम्वत् २०० साल चैत्र ३१ गते रोज २ मा जारी भएको इश्तिहार समेतमा विरोध नपरा सरकार र दुनियाको असङ्ग हुने साबिक ऐन सवाल स्थिति कायम रहने गरी गर्न पाउने संवत २००५ साल वैशाख २ गते रोज ४ मा बनी जारी भैसकेको मौलिक हक सम्बन्धी ऐनको वाक

स्वतंत्रता सम्बन्धी ऐन सभा वा संघ स्वतंत्रता सम्बन्धी ऐन र छापाखाना प्रकाशनसम्बन्धी ऐनबाट गर्नु पर्ने काम कुराका नियमहरू जारी गरिबक्सेकोछ सो अगि बनेको ऐन र तपसील बमोजिमका नियममा रही काम गर्नु प्रत्येक नागरिक को कर्तव्य हुनाले सो बमोजिम सबैले गर्नू, लेखिए बमोजिम दर्खास्त पर्न आएमा जांची बुझी ऐन नियम इश्तिहारहरूमा विरोध न पर्ने गरी सदरमा भए पुलीस गोस्वाराका तालुक वालाले र पहाड मधेसमा भए गौंडा गढी गोस्वाराका बडाहाकिम र हाकिमहरूले निस्सा दिने काम गर्नू—

सभा गर्दा या वक्तृता दिदा यस किसिमको यस ठाउँमा यस यस विषयको तेस दिन यस बेला आफै मात्र वा अरूहरू समेत भै गर्ने या दिने जो जो हुन् सो सबैको नामनामासी समेत खोली सभा गर्ने या वक्तृता दिने सबै कुरा खुलस्त लेखी सदरमा भए पुलीस गोस्वारामा र पहाड मधेसमा भए गौंडा गढी गोस्वारामा सभा या वक्तृता हुने४८ घण्टा अगाडि नै सभा गर्ने या वक्तृता दिने सबैको सहिछाप परेको दर्खास्त दाखिल गर्नु पर्छ, सो गरि भएको दर्खास्तबाट अख्त्यारी पाएकाले सभा गर्न या वक्तृता दिनमुनासिब ठहराएमा यस ठाउँमा गर्नू भनी ठाउँ समेत तोकी निस्सा दिनेछन् सो निस्सा पाए पछि सो पास भए बमोजिम सभा गर्ने वा वक्तृता दिन हुन्छ, यी सबै रीत न पुऱ्याई सभा गरेको या वक्तृता दिएको गैर कानूनी ठहर्छ— १

सभा गर्दा या वक्तृता दिंदा त्यस ठाउँमा ज्यान धन मालको नोक्सानी हुन्छ सो सबै कुराको जवाफदेही सभामा भए सभाका सबै सदस्यहरू र वक्तृतामा भए वक्तृतादिनेहरू सबैको हुन्छ, यस कुरामा सजाय हुँदा मुलुकी ऐन बमोजिम सजायँ हुन्छ— २

ऐन सवाल नियमको रीत पुऱ्याई सभा संघ, वक्तृता गर्न लागेमा शान्ति भङ्ग हुने जस्तो देखी त्यहाँ खटिई आएका अफिसर या पुलीस प्रमं नाजिमले रोकने अर्डर दिनासाथ बीचमा भए तापनि सभा संघ,

वक्तृता रोकि हाल्नु पर्दछ, रोक्ने अडर दिंदा दिंदै पनि गरेको सभा संघ वक्तृता गैर कानूनी ठहर्छ— ३

अडर पाई गरेको सभा, संघ, वक्तृताको कुनै ठाउँमा सभा वा संघ सम्बन्धी ऐनको ५ दफा र वाक् स्वतंत्रता सम्बन्धी ऐनको ४ दफा बमोजिमका कुरा पर्ने गरी दिएको सभा संघ वक्तृता गैर कानूनी ठहर्छ ४

ऐन सवाल नियमले खोल्न पाउने पुस्तकालय, विद्यालय, स्कूल, पाठशाला सन्देशगृह खोल्नलाई शिक्षा विभागका रूल नियम बमोजिम हस्पताल, वैद्यखाना, डिस्पेन्सरी इत्यादि खोल्नलाई डाइरेक्टर जनरल हस्पतालका रूल नियम बमोजिम, पार्क इत्यादि खोल्नलाई नगर पंचायत ग्राम पंचायत न रहे सम्म सदरमा भए पुलीस गोस्वारामा पहाड मधेसमा भए गौंडा गडी गोस्वारामा र नगर पंचायत ग्राम पंचायत खडा भए पछि तिनै संस्थाहरूको रूल नियम बमोजिम र यी देखि बाहेक अरू कुराको संघ खोल्न सदरमा भए पुलीस गोस्वारामा र पहाड मधेसमा भए गौंडा गोस्वारामा यो यो मानिसहरू मिली यस किसिमको संघ खडा गर्ने भएका छौं भन्ने प्रत्येक सदस्यहरूको नाम थर वतन पेसा समेत प्रष्ट खुलाई यस उद्देश्यले यस नियम बमोजिम भन्ने सबै सदस्यहरूको सहीछाप परेको दुई प्रति नियमावली आफ्ना आफ्ना तालुकमा दुइ महिना अगावै दाखिल गर्नु पर्दछ, सो दाखिल भए पछि तालुक अड्डाहरूले सबै जांची खोल्न दिन ठीक ठहऱ्याएमा एक प्रति अड्डैमा राखी एक प्रतिमा अड्डाको समेत निस्सा लाई संघ खडा गर्नेहरूलाई फिर्ता दिने छन, सो अड्डाको निस्सा लागेको प्रति पाए पछि सोही बमोजिम संघ खडा गर्न हुन्छ यति रीत न पुऱ्याई गरेको संघ गैर कानूनी ठहर्छ— ५

संघको यस किसिमको काम भएको छ भन्ने शुरु देखिको कामको खेस्ता खडा गराई राख्नु पर्द छ। सो खेस्ता हरूसबै सो संघ जाँच गर्न खटिई आएका अफिसर कामदारहरूले जून सुकै बखत जाँच्न आए पनि

तुरन्त हेर्न बुझ्न दिन सक्ने गरी राख्नु पर्दछ। यति रीत न पुऱ्याई गरेको संघ गैर कानूनी ठहर्छ—
६

संघका कामको सो स्ताहरू जाँच गर्न आउनेहरूले हेर्दा ऐन सवाल रूल नियम वखिलाप पर्न गएको देखिनासाथ सो संघ रोक्ने अडर दिने छ, सो रोकिसके पछि गरेको संघ या संघको कुनै काम गैर कानूनी ठहर्छ—
७

ऐन सवाल नियम बमोजिम खोलिएको संघ संचालन गर्ना निमित्त खुशी राजीसंग चन्दा लिन दिन र उठाउन हुन्छ तर यसो गर्नु पऱ्यो यति नै चाहियो भनी करकाप गरी कसै संग कौनै कुराको चन्दा रकमहरू लिन उठाउन हुँदैन, करकाप संग चन्दा उठाएको ठहरें संघ नै गैर कानूनी ठहर्छ—
८

चन्दा उठाई खडा गरेको संघको आमदनी खर्चको हिसाप दुरुस्त मिलाई राख्नु पर्दछ, शंका लागी तालुक अड्डाले जांच्दा वेरीत संग खर्च गरेको देखियो भने तुरुन्त जनाउ दिनेछ, सो जनाउ पाए पछि कारण सबै खोलाई दाखिल गर्न सक्नु पर्दछ सो कारण दिन न सक्ने या कारण दिएको ठीक न देखिएमा मुलुकी ऐन बमोजिम सजायँ हुन्छ—९

यस नियममा गैर कानूनी ठहर्छ भनी लेखिएका कलमहरूमा सजायँ हुँदा जुन जुन विभागको छ उही उही विभागको ऐन बमोजिम हुन्छ—
१०

मुलुकी ऐनको अदलको नम्बर २१ ले जुन सुकै कुराको किताप छपाउँदा समिति पास गराई मात्र छाप्नु पर्दछ भनी लेखिएको बाट समितिमा पास भएको प्रुफ बाट छपाई तयार भएका कितापहरू फेरि रुजु गर्ने न भै बीचमा घटी बढी पारी लेखिएको छापिन गएमा पनि थाहा हुन न आउने भै रहेकोले मौलिक हक सम्बन्धी ऐनको छापा र प्रकाशन सम्बन्धी ऐनको नम्बर १२ मा छापिएका किताप १ महीना भित्र तोकिएका ठाउँमा दाखिल गर्नै भए बाट मुनासिब रुजु गरी ठीक भएन भएको

अड्डा बाट जांचिन पाउने भै लेखिएको ऐन जारी भएकोमा सोही ऐन नम्बर ३४ मा यो ऐन जारी भए पछि यो ऐन अनुसार बनेका नियमहरू मुलुकी ऐनमा बाझिएको भए बाझिएको जति ऐन खारेज भएको संझनु पर्छ भन्ने लेखिए बाट धेरै जसोले मुलुकी ऐन खारेज भएको संझी सो ऐन कायम गरी साबिक बमोजिम पास गर्ने गरी पाउँ भन्ने दर्खास्त पर्न आएको हुनाले समेत लेखिए बमोजिम प्रष्ट न खुली दुविधा पर्न गए-कोमा माथि लेखिए बमोजिम भएको कारण बाट मौलिक हकहरू सम्बन्धी ऐन जारी भएको हुनाले सो दुवै ऐन कायमै रहेको हुँदा जो सुकैले पनि जुन सुकै किताप अर्थात् पुस्तक पत्र पत्रिका इत्यादि छपाउन मनसुवा गर्ने हरूले २ प्रति लेखी सहिछाप गरी समितिमा दाखिल गर्नु पर्छ। समितिले पनि सो कापी दाखिल भए पछि जांची बुझी छपाउन ठीक ठहरेकोमा १ प्रति अड्डैमा राखी १ प्रतिमा छपाउन हुन्छ भन्ने अड्डाको निस्सा दिनु, सो निस्सा लगाई दिएको प्रुफ कापी बमोजिम तयार भै सके पछि सो छापिएको २ प्रति छापाखाना प्रकाशन सम्बन्धी ऐनको १२, १७ नं० मा लेखिएका टायम भित्र समितिमा दाखिल गर्नु पर्दछ। सो दाखिल भए पछि पहिले जांची पास भएको प्रुफमा मिलाई मिलेकोमा १ प्रति समितिमा राखी १ प्रतिमा समितिले निस्सा लगाई दिए पछि मात्र सदर हुन्छ। यति रीत न पुऱ्याई छाप्ने छपाउने विक्री गर्ने प्रचार गरे गैर कानूनी ठहर्छ — ११

यस किसिमले रंगनढंगको संसारमा कहि कतै न भएको मूर्खता पूर्ण ऐन बनाउने तथा त्यसको घोषणा गरि सुधार दिएको कहलाउने र अमेरिकन पुँजीपतिका हातमा नेपालको भूसम्पत्ति बेचि, कुनै अर्को राष्ट्रले न गर्ने कार्य अंग्रेजहरुका सैन्यदलमा निरिह गोरखाली सेनालाई मलायाबासी हरुको दमनलाई मलायामा राख्न दिएर, आफ्नो पुछर जोरी, कँवर खलकका राणाहरुले त्यसै बीचमा राष्ट्रसँघ ( यू० एन० ओ० ) को सदस्य हुने प्रयत्न समेत गरेका थिए। यद्यपि राष्ट्रसँघको विधाननियम मद्धेको

कुनै एक नियम प्रजाराज्य, नागरिक--अधिकार, कानूनवद्ध--न्यायालय, शिक्षा-प्रचारको प्रबन्ध नेपालमा छैन ता पनि नेपालमा भारतको प्रभाव विस्तार न चाहने अमेरिकन तथा अंग्रेजहरुको प्रसन्नता प्राप्तिले राष्ट्रसंघमा प्रवेश गरी आफ्ना १०४ वर्षको अनियंमित्र दस्युतंत्र शासनाधिकारको स्थिरता देख्ने कँवरखलकका राणाहरुले भारतले त्यसमा हस्तक्षेप न गर्नसकोस भन्ने विचारले यो दुस्साहस गरेको थियो। तर तिनीहरुका त्यस प्रयत्नमा आफ्नो भीटो पावरले रुसले हरताललाई दियो। त्यसै राष्ट्रसंघको लग्जेमवर्गका अधिवेसन मा श्री दिल्लीरमण रेग्मीले स्वकृत "नेपालमा सय सालको राणा अत्याचार" भन्ने वृहद ग्रन्थ स्मृति रुपमा पठाएका थिए। त्यस स्मृतिको एक प्रति जगत्मान्य वर्तमान भारतका प्रधान मन्त्री नेहरुजीलाई पनि रेग्मीजीले पठाएको थियो

नेपालमा आफ्ना दमन चक्र आतंक बलले स्वेच्छाचार तथा दस्युतंत्र शासनलाई स्थिर राख्ने विचारका मोहनशम्सेर हरु भारतवर्ष, र भारतीय राजदूतहरुबाट भय रहित थिएनन्। भारतीय दूतका साथ हर बखत यउटा कँवरखलकका राणाहरुको पिछ्लू राखिने र दूतावासका चारैतिर राणाहरुका गुप्तचरहरुको घेरो बसाइएको रहन्छ। कुनै नेपालीले भारतीय दूतसँग आफ्नो सम्पर्क स्थापित गर्नु वा वार्ता गर्नु ता परको कुरो, तिन्को दर्शन सम्म गर्न पाउदैन। कसैले त्यस किसिमको साहस गर्‍यो भने त्यस्को सर्वस्व भई ३ वर्ष सम्मको कडा वा कँवरखलकका राणाहरुका इच्छानुसारको सजाय पाउनेछ भनी उर्दी समेत गरिएको छ। त्यस्ता अवस्थामा नेपाली जनता बाट टाँढा राखिएका तथा भेटघाट मा चिप्ला कँवरदल द्वारा उचित भन्दा बढ़ता सम्मान तथा "उपहारादि, जस्मा रत्नाभूषणका साथ नगद पनि रहन्छ" दिएर भारतीय दूतहरुलाई नेपालका मनस्थितिका जानकारी बाट अलग राख्ने प्रयत्न गर्न समेत बाँकि राखेका छैनन्। प्रथम भारतीय राजदूत श्रीसूर्यसिंह मजेठियाका विदाईका बखत तिन्लाई मोहनशम्सेरका तरफ बाट अन्य उपहा-

तादिका साथ दुईटी केटी समेत झिइएको थियो। ति दुवै केटीहरुका निरिह पतिहरुले त्यस कुरामा आफ्नो मंजूरी न दिएकोले निज मोहनशम्सेरले आफ्ना "प्रचंड भुजदंड बललाई सार्थक गरी" "हाम्रा हजूरका हुकुमले जान सक्दछन्" भनी पठाएका थिए। मोहनशम्सेर कि पत्नीले निज मजेठिया कि पत्नी सँग मित्यारी समेत लगाएको थियो।

तिनीहरुले यस्ता किसिमका नीच कृत्य र उपहाररुपी घूँस बलले भारतीय राजदूत हरुलाई भुलाई एसियाका प्रत्येक राष्ट्र को स्वधीनताका निमित्त प्रयत्नशील भारतवर्षका आँखामा छारो हाल्ने प्रयत्न समेत गरेका छन्। यसमाथि आफ्ना गौराङ्ग प्रभू शासन कालमा जुन् कँवरखलकका राणाहरुले आफ्ना गौरांग प्रभूहरुका आज्ञानुसार सन् १८५७ लगायत १९४२ सम्मका भारतीय स्वतंत्रता संग्रामहरुमा भारतीयहरु माथि जघन्शेत्तर अत्याचार गर्न क्यै बाँकी राखेका थिएनन्, तिनैहरु आज भारत सँग मैत्रीपूर्ण संधि गर्दा नेपालको आफ्नू दस्यु शासन पद्धति लाई स्थिर राख्ने स्वप्न देख्न थालेका छन्। यस किसिमले एकातिर बलसंचय गर्दै गएके सम्झनेर र अर्कोतिर नवप्रवुद्ध नेपालले तिनीहरुको त्यस प्रकारको मनपरी लाई न सहेमा तिनीहरुको पतन सम्भावित भय भएकोले कँवरखलकका सरदार मोहन शम्सेरले आफ्ना लूटको यावत् धन रत्न तथा सामानहरु ता० २७ अक्टुबर १९४९ का दिन आफ्नी वंगलोर स्थित बैन्हीका घरमा सुरक्षित राख्न पठाई सकेका छन्। ती सामानहरु ओ. टि. रेलवेका १३ वैगनमा भरिए ओसारिएका थिए। त्यसै किसिमले नेपालका कँवरखलकका अन्य लुटेराहरु पनि एक एक गरी त्याग पत्र दिंदै आफ्ना लूटको रुपयाँ, रत्नाभूषण र सामानलाई सुरक्षित गर्न भारतवर्ष तिर झर्दै आएका छन्।

गतवर्ष अमेरिकाका प्राणीशास्त्रका विख्यात प्रोफेसर डाक्टर रिप्लेको यउटा वैज्ञानिक दलका साथ अनेक अमेरिकि कूटनीतिज्ञहरु नेपाल आएका थिए। नेपाल सरकारले तिनलाई अनेक पशुपंछीहरुको नमूनाको सौगात दिई टहेको छ भ प्रचारको ओडम नीहर सँग आफ्नो साठ

गाठ मिलाएर आफ्ना लूटसत्ताको स्थिरताको मजबुति गर्ने कुरामा पनि कसै बाँकी राखेका छैनन् ।

गतवर्ष अप्रेलमा स्वर्गीय सिलवनलेवीका पुत्र मोसिए डेनियललेवि फ्रांसका राजदूत भएर काठमान्डूमा गएका थिए त्यहाँ तिन्को स्टाफ र परिवार १५ अप्रैलका दिन उपस्थित भएको थियो। महाराजाधिराज त्रिभुवनवीरविक्रम शाहदेव वाट आफ्ना भाषणमा स्वर्गीय सिलवेनलेवीले नेपाल आएको कुरो स्मरण गरेर तिन्को विद्वताको प्रशंसा गरे र फ्रांसका प्रति कृतज्ञता प्रकट गरिबक्सेको थियो । भारत स्थित फ्रांसको राजदूत नै नेपालको पनि राजदूत भएकोछ।

पश्चिमी राष्ट्रअमेरिकाहरु सँग वेचिएका राणाहरुले गरेको कुकृत्यको उल्लेख काशीको आजले लेखेको टिप्पणीमा पढनोस । ता० २५ मार्चका आजमा लेखेकोछ—राज्यको बढदो जन विरोधबाट त्रस्त भई नेपालका राणाहरु अमेरिकनहरुका कसरी दास हुँदै गएका छन् र यउटा अमेरिकन मिसनलाई तिनीहरुले नेपालमा ईसाई धर्म प्रचार गर्न दिएको आज्ञाले प्रकट गर्दछ। नेपालमा परापूर्व देखि आज सम्म आफ्ना सीमाका अनर्तगत कुनै विदेशीलाई धर्म प्रचारका निमित्त अनुमती दिएका थिएन. त्यस ठाउँमा दिल्ली स्थित अमेरिकन राजदूतका आग्रहले यौय अमेरिकन कैथोलिक मिसनका फादर एम० डी० मोरिनलाई काठमान्डुमा यउटा गिरजाघर र मिसनको हेडक्वाटर खोल्ने आज्ञा दिएर तिनीहरुले आफ्नास्वार्थ अन्धताको परिचय दिएकोछ ।

यस किसिमले स्वयंभू नेपालामात्य मोहनशम्सेर तथा मिनिष्टर ववरशम्सेर, केशरशम्सेर, सिंहशम्सेर, कृष्णशम्सेर, शंकरशम्सेर, मदनशम्सेर तथा बहादुरशम्सेर कम्पनीको मार्सलला दमन चक्रपूर्ण नेपालमा आतंक र दमनको राज्य भएको छ । वर्तमान कालमा भारतवर्षको राष्ट्रीय पक्षले अनेक अन्तर्राष्ट्रीय कुरामा फँसेको ले भारतका तत्कालिक दुर्बलताको फायदा उठाई सर्वतंत्र स्वतंत्रताको मैत्री सँधि भए पछि गरिदएको बृटिस संधिले मत्त भए

तिनीहरुले नेपाल माथि आफ्नो दमन चक्रको विस्तार एति विकराल गरी ल्याएको छ कि जुल्फ पाल्ने, खुकुलो सुरुवाल लाउने, चश्मा लाउने मानिस जम्मै कांग्रेसी हुन, कांग्रेसका नाऊँ मा कौं सम्म उच्चारण गर्ने नेपाल राज्य भित्रका मानिसलाई पक्रेर कुटपिट गरि बंदी गर्ने मार्सल कानून प्रचलित गरेको छ। कैंवरखलकका राणाहरुका १०४ वर्षका शासनमा गरिएका एक एक कुकृत्यहरुको पुनरावृत्ति मोहनशम्सेर कम्पनीले अविकलरुपमा प्रत्येक दिन गरेर आफ्नो पैशाचिक रुप प्रकट गर्दै आएका छन्। आफ्ना पूर्व पुरुष "अशिक्षित जंगबहादुरले अंग्रेजा दासता बाट दृढ़ पारेको आफ्नो नेपालको दस्यु सत्तालाई परम्परागत स्वार्थ लिप्साले पुन: शिक्षित र पण्डित भकाउँदा मोहनशम्सेर कम्पनीले पनि नेपालको पश्चिमी भाग अमेरिकन पुंजीपतिहरुलाई ठेक्का दी तिनका दासताले स्थिर राखन सक्ने छौ भनी मानेका छन् क्यार?

मोहनशम्सेरका कार्यकालको प्रत्येक स्वेच्छाचारी निरंकुश घटना र तिनका दमनचक्रमा पिसिने शहीद र वीरहरु र नेपाली कांग्रेसको ससस्त्र आक्रमण र त्यसका सेनापात श्रीथीरवममल्लले वीरगती पाएको र जनताको सशस्त्र विद्रोह र नेपाली राष्ट्रीय कांग्रेसको सत्याग्रह संग्रामको घोषणा-र उठाएको कदमहरुको वर्णन र विवेचना क्रमवश लेखियेको यस इतिहासको परिसिष्ठ भाग अलग छापिदैछ त्यसमा गरिएकोछ। यहाँ मुख्य दुई कुराको वर्णन गरा यस इतिहास ग्रन्थलाई समाप्त गरिएकोछु।

ता० ७ म.चैं १९५० मा विराटनगरमा कोइराला दल र महेन्द्रविक्रम दलले आफ्ना दुवै 'नेपाली राष्ट्रीय कांग्रेस' र 'नेपाली प्रजातंत्र कांग्रेस'लाई विघटित गरी एक दल गर्ने विचार स्थिर गरे। त्यस विचारानुसार रेग्मी लाई पनि आफ्नो "नेपाली राष्ट्रीय कांग्रेस" लाई विघटित गरी त्यसमा सम्मिलित हुने आग्रह गरिएको थियो। त्यसमा रेग्मीले सहयोग गरेनन्। अन्तमा वीरगंजका खुला अधिवेसनमा ता० ९ अप्रैलका दिन कोइराला र महेन्द्रको दल सम्मिलित भयो र सम्मिलित दुवै दल एकीभूत भए पछि "नेपाल कांग्रेस" का नाऊँमा प्रसिद्ध भयो।

त्यसका सभापति मातृकाप्रसाद कोइराला र महामन्त्री महेन्द्रशाह छानिए। विगत अगस्त महिनामा त्यस संस्थाले आफ्नो कार्यकारी संगठनको विघटन गरेर त्यसको सर्वाधिकार सभापतिका प्रति केन्द्रित गराई संस्थाको कार्यलाई ( underground ) गुप्तरुपले चलाउने निश्चयको घोषणा गरे।

त्यसका केहिदिन पछि गत इन्द्रयात्रा ( २५ सेप्टेम्बर ) का दिन मोहनशम्सेर समेत सबै रोलदार भनाउदाहरुलाई एकै पटक विस्फोट गरी उडाउने यौटा आयोजक दल आफ्ना संग्रहीत शस्त्रास्त्रका साथ समातिए। त्यस आयोजनमा सम्मिलित हुने तोरणशम्सेर र सुन्दरराज चालिसे प्रभृति पचास साठ मानिसहरु बहादुर शम्सेर कम्पनी का क्रूर अत्याचारको यातना सही नेपालका कालकोठरीमा सडी रहेका छन। त्यसै अपराधमा अपराधी घोषित गरिएका गणेशमान नेपालबाट भागेका मार्गमा भिखनाठोरीमा समातिएर नेपाल पठाइएका थिए। तिनलाई पनि कँवरखलकको पाशविक यातना सहनु परेको र पछि कालकोठरी मा थुनिनु परेको छ। वीर गणेशमानले आफ्नु जाती सोधिएकामा तीन सय कोर्रा खाँदा पनि म नेपाली हुँ भन्ने बाहेक अरु केहि भनेन्।

भारतवर्ष संगको संधि भए पछि आफुलाई सर्वतंत्र स्वतंत्र सम्झने ठिकेदार कँवरखलकेहरुले भारतलाई समेत होच्याई, बृटेन संग आफ्ना इच्छानुरुपको सन्धि गरे पछि तिनीहरुले आफ्नुलाई र नेपालको आफ्ना लूट शासनको पट्टालाई अजर र अमर मान्न लागेछन् क्यार। त्यस कुराले र उपरोक्त इन्द्रजात्राका दिनको घटना घटेकोले त्यसमा श्री ५ महाराज त्रिभुवनवीरविक्रमशाह माथि समेत शंका गरि वहाँका व्यक्तिगत कार्यकलापका प्रतिवन्धमा झन कडाई गर्नथाले। यहाँ सम्म की अन्तमा ती आफ्ना भृत्य मुख्तियारहरुको अहंमन्यताले स्वयं नेपाल नरेश युवराज र नवरक्त शाहजादा हरुलाई समेत पागल करार गरी गोरखाम

राखिने र युवराजका दुधे जेष्ठ शिशुलाई सिंघासनमा थापना गर्ने षडयंत्र गर्नथाले को कुरा श्री ५ धिराज मा अवगत भएको थियो।

त्यस वेला महानवंशका प्रत्युत्पन्न मति श्री ५ महाराजधिराज बाट आफ्नो तथा युवराजको र शाहजादाहरुको गरी तीन पुस्ताका सबै सदस्यहरुको प्राण संकष्टमा हालेर आफ्ना प्रपितामहको विश्वास र आफ्ना पिता र आफ्ना बालखकालको नाजायज फाइदा उठाई बलिया भएका स्वेच्छाचारी भृत्य शत्रुहरुको दर्पदलनलाई महान ऐतिहासिक कदम उठाउने दृढ निश्चय गरि बक्सियो।

त्यसैका परिणाम स्वरुप ता० ६ नमेम्बर १९५० कार्तिक मैन्हाका २० गते २००७ का विहान ६ बजे दुवै साम्राज्ञी युवराज शाहजाद र जेठा नातीशाहजादा र शाहजादीका साथ ४ मोटरमा बसी वन-भोज खान निउँले आफ्ना दरबारबाट निस्की भारतीय दूतावासमा प्रवेश गरा बक्सिएको थियो।

श्री ५ धिराजको हजुरियाका नाउँलं तर वास्तवमा पहरेदार भई बसेका कर्णेलले राजपरिवारका ती मोटरहरु बाटो बाट एक्कासी भारतीय दूतावास तिर लाग्दा विरोध गर्न आँटेका थिए। त्यस बखत स्वयं साम्राज्ञीहरु बाट पिस्तौलको नाल सोझ्याइएकोले ती कर्णेलले चुप लाग्नु परेको थियो।

यस प्रकार भएको महाराजाधिराजको अद्भुत साहसिक अभियानको खबर बिजुलीका गतिले शहरमा फैलिएको थियो। यस किसिमले राणा मनाउने कँवरखलकेहरुले आफ्ना १०४ वर्षको दस्युतन्त्रको भित्ती श्री ५ धिराज तथा युवराजलाई आफ्ना दलका बन्दूकका नालका परिधि बाहिर पुगी सकेको देखि तिन्का मुटुले ठाउँ छाडेकोले प्रचण्ड भुजदण्ड शक्तिवान ठिकेदार र तिनकका भाईहरु मूर्च्छा माथि मूर्च्छा खान लागे। महाराजाधिराजको सवारी फर्काउनलाई ठेकेदारका पुत्र विजयशमशेरले तीन साथ भारत दूतावास गएकोमा महाराजाधि-

राजले तिन्लाई दर्शन पर्यन्त न बक्सिएको ले तिनीहरुका हृदय गतिहीन भई सकेको थियो।

त्यसै बेला महाराजाधिराजले साहै बालक भएकाले ल्याउन असजिलो हुने हुँदा आफ्ना दुई जना माहिला र कान्छा नाती शाहजादा र तीन जना नातिनी शाहजादीहरुलाई आफ्नै दरबार मै छोडेर आउनु परेको थियो। कँवरखलकका उद्भट दिमागमा आएको कार्यक्रम र त्यसै अनुरूप काम गर्ने आफ्ना चलन अनुरूप मोहनशम्सेरले पनि तिनै शिशु नाती शाहजादा मध्ये माहिला नाती शाहजादालाई नेपाल राज्यासनमा बसाई महाराजाधिराज घोषित गरे। निज नाती शाहजादा लाई नेपालेश्वर घोषित गर्नु भन्दा पहिले मोहनशम्सेरका उद्भट मगजमा शाह वंशको अस्तित्व नै बाँकी न राख्ने विचारधारा पनि खेल्न लागेको थियो। त्यसैका फलस्वरूप तिनले आफुले पार्लियामेन्ट र भारदारी नाँऊ दी सङ्गठित गरिएको दलका छलफलमा आफ्ना पिट्ठू माहिला गुरुज्यू श्रीहेमराजजी बाट शास्त्रको प्रमाण दी राज्य छाडी भागेका नरेशको वंशै समेतलाई पदच्यूत गरी स्वयं मोहनशम्सेरले प्रेसिडेन्ट तथा प्राइमिनिष्टरको अहिभारा लिएमा कुनै बाधा छैन भनी भनाउन कत्ती लाज मानेका थिएनन्। त्यस कुराको अनुमोदन बबरशम्सेर र अन्य गुरुज्यू पिठ्ठू र नरेन्द्रमणि आचार्यदिक्षित प्रभृतिले पनि गरेका थिए। जस्ता प्रकार दस्यूतन्त्र स्थापक स्वयं जंगबहादुरले र चन्द्रशम्सेरले नेपालामात्य पद उत्तराधिकार पदलाई पुत्र सन्ततीमा गर्ने गरेको प्रयत्नमा लागेको हडताल झै यस पाला पनि आफ्ना भाई केशरशम्सेरको विरोध भई तथा आतंक बल्ले कँवरखलकका मुखियारहरुलाई मान्ने र अन्तस्करणले महाराजाधिराज वंशका भक्त समस्त भाई भारदारले त्यस कुराको कडा विरोध गर्‍यो। अन्तमा मोहनशम्सेरले आफ्ना नीच विचारलाई त्याग गरी शिशु शाहजादा ज्ञानेन्द्रवीरविक्रमशाहलाई राज्यासनमा अलंकृत गराएका हुन्। त्यस विषयमा ८ नवम्बरमा छापिएको गोरखा

पत्रमा यसरि समाचार लेखिएकोछ। "तेत्रो ठुलो ओहदामा पुगेका महाराजाधिराजले आफ्नो सरकारलाई सूचना समेत न दी भागेर देशको ठूलो वेइज्जती गर्नै वंशलाई नै सिंघासन न वक्सी स्वयं सरकारले सिंघासनासिन होइ वक्सियोस भनी समस्त पार्लियामेन्टका भाईभारदारहरुले भनेकोमा पनि श्री ३ महाराज बाट हामीले परम्परा देखि मानी आएको राजवंशलाई हटाउन उचित हुँदैन, भनी महाराजधिराज ज्ञानेन्द्रविक्रमलाई राज्याभिषेक गरी, असर्फी मोहर राखी सलामी चढाई वक्सियो, भन्ने लेखेको छ। यस कुराले यो प्रत्यक्ष भएको छ कि ति कँवरखलरुका राणा भनाउँने स्यागुताहरु विदेशी दस्युहरुका पक्षका हावाले साढे भैं फुर्ने पनि साढे हुन सक्तैनन् तथा तिनीहरुले आफ्ना प्रदर्शनहरुमा मालिक धिराजलाई मालिक माने र तिन्का प्रति भक्ति तथा सम्मान प्रदर्शन गर्नु नै पर्दछ। यस प्रकार आफ्ना मालिक अन्नदाता पदप्रवर्तक स्वामीहरुलाई आफ्ना बन्दूकका नाल परिधि भित्र पारी देशलाई मनपरी गरी लूटेर अन्धकारमा राखने ती कँवरखलकका राणा भनाउदाहरु जस्का डाँकू र हत्यारा स्वरुपका प्रत्यक्षदर्शी डिग्वेले आफ्ना Friendship needed & friendship forgotten भन्ने आजका ६४ वर्ष पहिले लेखेका पुस्तकमा वीरशम्सेरलाई सेक्सिपयरका नाटकको पात्र आफ्ना राजा तथा काका को हत्यारा "मैकवेथ" सित तुलना गरेको छ। हालै मा सन् १९४८ मा मोहनशम्सेरका कार्य कालमा नेपाल गएका अमेरिकन प्रथम राजदूत जा० डब्लू० हन्डरसन् ले अमेरिकाका प्रेसिडेन्ट ट्रूमनले महाराजा धिराजलाई लेखेको मान पत्र दिन खोज्दा कँवरखलकहरुले प्रकट गरेको आतुरता तथा ठुला बिचार विमर्श पछि तिनीहरुले दरबारमा उपस्थित गरिएका महाराजाधिराजको लाजमानेको भावभंगीमाले हन्डरसन्‌लाई महाराजाधिराजलाइ जनताबाट छुट्याइएर एकान्तमा राखिएको कुराको स्पष्ट ज्ञान भएको थियो, भन्ने कुरा अमेरिका बाट प्रकाशित हुने

"टाइम" नामका पत्रिकाका गत नमेम्बर २० तारिखका अङ्कमा लेखि- एकोले कँवर राणाहरुले गरेको त्यो निच कार्य समग्र संसारमा समेत प्रत्यक्ष भै सकेकोछ।

यस प्रकार देशका स्वामी आफ्नै अन्नदाता नरेश रुपी सिंह लाई पिञ्जडाबद्ध गरी आफ्ना आवश्यकतामा तथा विदेशीहरुका सन्मुख वहाँको प्रदर्शन मात्र गर्ने भृत्य श्याल स्वरुपका कँवरखलकहरुले आफ्ना १०४ वर्षका कार्यकालमा देशलाई पतनोन्मुख गराएको ठाँऊमा देशको उद्धारका दृष्टिले महाराजाधिराजले भारतवर्ष आउने यस घटनाले देशको यस्तो ठूलो वेइज्जती गराउने देशद्रोही र राजद्रोही, राहु मोहनशम्सेर स्वयं ठहरिन्छन्। आफ्ना चेला शाहवंश र आफ्ना पृष्ठपोषक राणा मनाउँनेहरु वाट मात्र हैन कि नेवारहरुले सम्म कुलशील हीन हुँनाले विजयराजले नेपालका गुरुजुत्व पाएर पनि तिंनीहरुको हातको भात भान्सा न चलाएको र आज १०४ वर्ष सम्म पनि न खाने गरेका पुजाकोठे जस्तो सानु वृत्तिलाई आफ्नो जन्मभूमि कुमाऊँ छाडी गएका विजयराजपाण्डेले आफ्ना कृत्याकृत्यले जङ्ग- बहादुरका उत्थानमा मदत दिएको मा धिराजवंशको गुरुजुत्व पाए पनि आज १०४ वर्ष सम्म तिनीहरु श्री ५ धिराजका अन्नले पुष्ठ भई आएका छन्। आफ्ना चेला श्री ५ वंशको निर्वंश गर्न चाहने त्यस्ता गुरुहरुले र तिन्का मेठ अन्य पण्डितहरुका शास्त्रज्ञान उपयोगले आफु महा- पण्डित हुने हेमराजजीले मैले लेखेका यस ग्रन्थका सिंघावलोकनमा दिएका शास्त्र प्रमाणहरुमा दृष्टि दिएर आफ्नो शास्त्रज्ञानको परीक्षा गरुन्। भगवान श्रीरामचन्द्रले देशका उद्धारका लागी बाँदर सँग मित्यारी लगाई समुद्र पारी जानु अशास्त्रोक्त भएन, पाण्डवहरुले १४ वर्ष गुप्तवास वस्नु अशास्त्रोक्त भएन, महाराजाधिराज भीमजराजले आफ्ना काकाका जालले अनेकौं वर्ष गुप्त हुनु पर्दा त्यो अशास्त्रोक्त ठहरीएन र स्वयं श्री ५ पृथ्वीनारायणशाहले भारतवर्ष झरी काशीका लोलारक कुण्डमा खड्ग सिद्ध गरी फर्केकामा त्यो अशास्त्रोक्त ठहराएन, राजा रणबहादुर-

शाहले सिंघासन छाडी सन्यास लिएर पनि पुन: सिंघासनासीन हुँदा शास्त्रले बाधा गरेन र उसमाथि केहि दिन पहिले स्वयं इनै कँवरखलकका राणा भनाउदाहरुले महाराजाधिराज त्रिभुवन वीरविक्रमशाहलाई नै एक पटक तिर्थाटन र अर्कोपटक औषधी गर्न भनी दुई दुई पटक भारत ल्याएकामा शास्त्र विरुद्ध भएन भने महाराजाधिराज त्रिभुवनवीरविक्रमशाहले देशको उद्धारका निम्ति भारतमा आउनु कुन शास्त्र बाट अशास्त्रोक्त ठहरिन्छ। महाभारतका आपद्धर्म प्रकरणमा "अपाश्य राजधानिम् वा तरेद् द्रव्येण वा पदम्।" अर्थात् राजाले आपत्त परेमा पैसा खर्च गरेर वा राजधानीलाई छाडेर पनि आपत मुक्त हुने प्रयत्न गर्न शक्तछन्" भन्ने वचन वीरमित्रोदको राजनीति प्रकाशका ४२८ पृष्ठमा दिएकोछ। महाभारतका उद्योगपर्वमा विदुलाले आफ्ना पुत्रसंजयलाई आफ्ना भृत्य शत्रु सैन्धवहरुका नाशका उपायका वर्णनमा र विदुरनीति, शुक्र-नीति तथा चाणक्यनीतिहरुमा राजधर्म रक्षणका निमित्त उद्धरणमा दिएका महर्षि यज्ञावल्क्यका स्मृतिको यो श्लोकः—

"सन्धिं च विग्रहं यान मासनं संश्रयं तथा।
द्वैधीभावम् गुणां नेतान्न्यथा वत्पार कल्पयेत्॥"
(रा० ध० प्र० २३ अ० ३४७ श्लोक)

अर्थात् राजाले घर या बाहिरका आफ्ना शत्रु मात्रका विरोधमा आफु शक्तिहीन भएका बेलामा, प्रथम सन्धि गर्नु, दुश्रा सम्मुख युद्ध गर्न प्रस्तुत हुनु, तेश्रा शत्रुका विरोधमा कदम उठाई त्यसलाई धमकाउने प्रयत्न गर्नु, चौथो पर्खनु अर्थात् आफु तैयार हुनु, पाँचौं आफुलाई मद्दत दिन सक्ने शक्तिवानको शरणलिनु, छैठौं शत्रुमा विभेद गराउने प्रयत्न गर्नु, यी षडगुण राजालाई आपत कालमा मद्दत गर्छन् भन्ने स्पष्ट लेखेकोले भने नीतिपट्ट महाराजाधिराज त्रिभुवन वीरविक्रमले

आफ्ना शक्तिवान मित्र भारतको शरणमा आउनु हाम्रा पूर्वज ऋषिमुनिहरु का नीति उपदेशको पूर्णतः पालन गरेको हो ।

आफ्ना तीन पुत्तका परिवारका साथ महाराजाधिराज तारीख ११ नभेम्बर सम्म आफ्नै राजधानी काठमाण्डुका भारतीय दूतावासमा रहनु भइरहेको थियो । नेपालका महान संकष्टकालीन मित्र भारतीय राजदूत श्री चन्द्रेश्वरनारायणसिंह लाई नेपालनरेशलाई भारत पठाउन दिन्न भनी मोहनशम्सेरले द्रव्यको लोभ र पछि अकड सम्म देखाएका थिए । मोहनशम्सेरको त्यो अकडमा नीज चन्द्रेश्वरनारायणसिंह ले "महाराजाधिराजलाई रोकेमा तिमीहरुको खराबी छ, यसमा ढिपी गर्छौं भने तिमीहरु लाई खतरा सम्म पुग्न सक्ने छ" भन्ने मुहतोड उत्तर दिएका थिए । त्यस पछि मोहनशम्सेरले विनाशर्त महाराजाधिराजको सवारी चलाउने मन्जूरी दिएका हुन् ।

महाराजाधिराज दिल्ली पुगेमा विशाल भारत संघ राज्यका प्रधानमन्त्री, रक्षामन्त्री, आदि शिर्ष स्थानीय राजपुरुषहरुले वहाँको जस्तो स्वागत गरियो त्यो अपूर्वको थियो । त्यो सव देख्दादेखदै पनि आफ्ना अन्नदाता देशका नरेशका प्रति औचित्यको सीमा उल्लंघन गरिएका कार्य कलापमा दृष्टि न दिई आफुले गरीएका नमकहरामीयत पूर्ण कार्यलाई अझै राणाहरु वृटिश किम्वा अमेरिकि शक्तिका आडमा खडा राखौला भन्ने ठानेका र त्यसै गुम्वरमा भारत सरकारको समेत टेरपुछर न लगाएका देखिएकाछन् ।

विगत डिसेम्बर ता० २ का दिन नेपाल वाट दुई जना राणाप्रतिनिधि हरु जनरल कैशरशम्सेर र जनरल विजयशम्सेर दिल्ली आएका थिए । भारत आएर तिनीहरुले भारतका प्रधान मंत्री र उपप्रधान मंत्री सँग आफ्नो विचार विनिमय गरि श्री ५ महाराजाधिराजको समेत दर्शन पाएका थिए । अन्तमा कुराहरुको क्यै निश्चय न भई मोहनशम्सेर संग सल्लाह गरी पुनः आउँछौं भनी ति राणाप्रतिनिधि हरु नेपाल फर्केका छन् ।

यता नेहरुजीले आफ्ना संसदका भाषणमा खुला शब्द मा गरेको भाषण महाराजाधिराज त्रिभुवनवीरविक्रमलाई हामीले मान्यता दिएका छौं त्यही कुरा ...म फेरि पनि दोहऱ्याउदछु। भारतले आफ्ना सुरक्षाका दृष्टिकोणले पनि ...लाई सुरक्षित गराउनु नै पर्छ। हिमालयको उत्तरीयसीमा भारतको सीमा तथा नेपाल हिमालय भीत्र पर्छ तथा हामीले नेपालको संस्कृतिक राजनैतिक भूगौलिक सम्बन्ध पनि बिर्सन सक्तै नौ। भारतका राजदूतले आफ्नो ...पत्र महाराजधिराजलाई टक्राएको पनि हो भने हाम्रो संधि राजा ...भुवन वीरविक्रम सँग भएको होईन भनी कसरी भन्न शक्छौं। म आफै ...मवर्ती मार्गबाट यस कुराको फैसला गर्न तैयार छु" भनी भनेको कुराले ...रतले आफ्नो मतामत प्रकट गरेको स्पष्टतया बुझिन्छ।

ता० ३ दिसेम्बरका दिन ब्रिटेनका भारत स्थित उपहाईकमिश्नर श्री ...र ब्रिटिश परराष्ट्र विभागका विशेषज्ञ सर इस्टरडेनिंग नेपालको ...स्थिति बुझ्न काठकाण्डुमा पुगेका थिए। त्यसवेला काठमाण्डुका ...ई अड्डामा पुग न पुग ३०।४० हजार नेपाली जनताले तिनका ...द्ध प्रदर्शन गरेर त्रिभुवनवीरविक्रमशाहलाई फर्काउने र राणा राज्य ...र्दैनौ भन्न नारा लगाएका थिए। त्यस भिडले श्री रावर्टसलाई मोटर ...म पुऱ्याउन पुलिसले बल समेत प्रयोग गरेको थियो। महाराजाधिराजले ...पाल त्याग गरे देखि आजसम्म नेपालका कालेज तथा स्कूलका ...र्थीहरुले कालेज र स्कूलको वहिष्कार गरी राखेको छ।

ता० १९ डिसेम्बरमा नेपालका राणाहरुले आफ्ना भारदारी र ...ियामेन्टका रायले भारत सरकारलाई यौटा खरिता पठाएका छन्। ...मा तिनीहरुले "आफ्ना महान् छिमेकि भारत सरकारको मित्रतापूर्ण ...हमा धन्यवाद दिंदै चाँडो यसै महिना भित्र नेपालमा सुधार गरि ...वातान्त्रिक राज्य संगठन गर्नेछौं" भनी लेखेका छन्, भनी ता० २१ ...सेम्बरका दिन संसदमा नेहरुजीले भन्नु भएकोछ।

भारत सरकारले "प्रथम, प्रजा मनोनित संगठित सदस्यहरु बाट

संविधान निर्माणमा, द्वितीय संविधान न बनेका कार्यकालिक सरकार जस्मा प्रधान मन्त्री राणाहरु मध्येको यौटा सदस्य भई त्यस्को संगठन गर्नें, तृतीय नेपालका वर्तमान धिराज त्रिभुवन वीर विक्रमशाहले आफ्ना पदमा प्रतिष्ठित र आफु न भएका बखत रिजेन्ट नियुक्त गर्न सक्ने अधिकार पाउने लेखिएको तीन प्रस्तावको जबाब नेपालका राणाहरुले आफ्ना गोल भाषामा पठाएकोले तिनीहरुको आन्तरिक भावना अभै कलुषित रहेछ भनी स्पष्टतया बुझिएको छ ।

यसै विचमा दिल्लीमा श्री ५महाराजाधिराज बाट तां० २२ डिसेम्बरका दिन भारतका प्रति कृतज्ञता प्रकट गर्दै गरेको यो घोषणा "नेपालले शक्ति र सुव्यागराउदै समयकासाथ सबै सामाजिक, राजनैतिकर आर्थिक प्रगतिका निमित्त कदमबढाउने आवश्यकता छ। त्यो कार्य सम्पादन गर्न जनताले राजकाजमा सहयोग गर्नु र मुलुकका शासनमा दुनियाँले छानेका सदस्यहरुको समावेस हुनु आवश्यक छ । मेरो सरकार र जनताले मिलेर नेपालको स्वतंत्रता लाई सुरक्षित गराई राष्ट्रको अभ्यूदय प्रगतिशील ढंगले गरी राजनैतिक कुशलताको परिचय दिने छन् भन्ने मलाई आशा छ । नेपाल स्वतंत्र र समृद्धिशाली होस भन्ने मेरो एकमात्र शुभेच्छाछ" भनेकोले वहाँले आफ्ना वंश गौरवानुकुल महानताको परिचय दिएको छ । आफ्ना स्वेच्छाले प्रजातंत्र राज्यका निमित्त प्रजालाई आह्वान गर्ने यो महान आदर्श कार्य संसारका इतिहासको सर्व प्रथम घटना हो । देशका मर्यादा पुरुषोत्तम नरेशले गर्न चाहेका यस आदर्श कार्यमा अभै बाधा उपस्थित गरी ऐतिहासिक प्रगतिलाई रोक्न चाहने राजा र प्रजाका विचका लाम्रा राणा भनाउने कँवरहरुको कार्यकलाप पनिसंसारका इतिहासको सर्वप्रथम महान कलंक हो ।

जय नेपाल ।

# नेपालका इतिहास को
## सिंहावलोकन

आज संसारमा सर्वत्र जनतालाई अन्याय, अत्याचार र न्याय सत्याचारको समान रूपले अनुभव भएको छ। मनको चीरफाड़ गरेर फायड, आडलर, युंग, स्टेकल आदि पाश्चात्य विद्वान् हरूले "जीवको मन स्वभावतः आफ्ना नीच स्वार्थ तिर प्रवृत्त हुन्छ र आफ्ना त्यस नीच स्वार्थ घोर-नोच—स्वार्थलाई पनि लोक कल्याणको मार्ग हो भन्ने अंधेर गर्दछ" भन्ने निदानमा पुगेका छन्। त्यसैले हामीमा यो स्वार्थ हृदयका अंधकारमय कुनै कुनामा कतै लुकेर न रहोस् भन्ने विचारले हाम्रा पूर्वज ऋषि-मुनि हरूले आत्म विशेषण गरेर "आत्मानम्विद्धी" को मंत्र जगत् लाई दिएका हुन्। बुद्धले यही तत्व खोजे—महात्मा गान्धीले यसै सत्यका प्रयोगमा आत्मबलिदान गरे।

राजाका दायित्व का विषयमा महाभारतमा लेखेकोछः—

कालो वा कारणं राज्ञो राजा वा काल कारणम्।
इतिते संशयो मा भुत् राजा कालश्य कारणम्॥

अर्थात्ः—"जनताले भोग्ने सुख दुःखका कारण राजा हुन्।"

"शासन गर्ने हरूका सुचरित्र-कुचरित्र, स्वार्थ-निस्वार्थ, ज्ञान-अज्ञानका कारण कुनै कालमा सत्य, त्रेता, द्वापर र कलियुग संसारमा प्रकट हुन सक्तछन्। निरंकुश सत्ताधारी राजा चांडाल हो।" भनी महाभारतमा भीष्मजीले भन्नु भएको छ।

आज बृटेनमा महान् संकट परेको छ, तर बृटिश लोकतंत्र द्वारा शासित जनता सुखीछ—कुनै मानिस वेकार छैनन्। त्यहाँको प्रत्येक व्यक्तिका आवश्यकताको भार लोकतंत्रले आफ्ना माथा लिएको छ। बृटेनमा वेकार वा बिना इलमका मानिस लाई सरकार तिर बाट १००) रुपया महीना, स्त्रीजन लाई ६०) रुपया महीना र प्रत्येक बालक लाई ३०) रुपया प्रति महीना भत्ता दिइन्छ। त्यस वाहेक स्त्री जनले सुत्केरी भएमा डाक्टर, दाई औषधि पथ्य, पौष्टिक भोजनहरूको, जम्मै खर्च स्वयं सरकारले बहन गरेको छ। वास्तविक स्व-तंत्रता तिहीं छ, जहाँ सरकार जनताको सेवक भई जनताको पूर्णरूपले सेवा गरेको छ।

महर्षि याज्ञवल्क्यले लेखेको छः—

प्रजापीडन संतापात् समुद्भूतो हुतासनः,
राज्ञः कुल श्री पद प्राण न मध्वा न विवर्तते।

अर्थात्—"दुनियाँ लाई पीडन गर्दा उत्पन्न भएको आगो राजकुल श्री र प्राण लाई खाग न गरे सम्म निभ्दैन।" यो कुरा अक्षर सः सत्य हो—एसिया महाद्वीपको विशाल चीन देश आफ्ना सामन्तशाही शासनले जर्जर र मृतप्राय भइसके-को थियो। त्यसबेला चीन देशका स्वदेशाभिमानीहरूले राष्ट्रीय संगठनका निमित्त "कुओ-मीन्-टांग्" को स्थापना गरेर चीन-लाई एकसूत्रमा आवद्ध गरी संसारका पाँच महान् राष्ट्र मध्ये-को एउटामा परिणत गराएका थिए। त्यसै कुओ-मीन्-टांग संस्थाका नेता र एक दिन युग-प्रवर्तक र युग-पुरुष कहलाइएका जेनरलिस्मो च्यां-काई-सेक हो आज आफ्ना तानाशाही र धन-लिप्सा र अत्याचार ले जनतमा त्राहि त्राहि पारेकोले कुन दुर्दशामा पुग्नु परेको छ, संसारले देखेको छ।

चीन देशको एउटा दन्ते कथा छ—थाई नाऊ का एउटा पहाडमा एउटी स्त्री अलाप बिलाप गरी रोई बसेकी थिइन्, त्यस ठाऊँमा पुगेर चीनका दार्शनिक महात्मा खुङ्गले ती स्त्री सँग सोधे। "तिमीले यसरी रोएको ले तिमी माथि ठूलो आपत परेको छ भन्ने बुझिन्छ।"

उत्तर मा त्यस स्त्रीले—यस ठाऊँमा मेरा पतिका पिता लाई बाघले मारेको थियो, याहीं त्यस किसिमले नै मेरा पतिको पनि मृत्यु भयो र आज मेरो छोरो लाई पनि बाघले त्यसै किसिमले मारेर लग्यो। त्यो कुरा सुनेर खुङ्गले भने "तब तिमी यो स्थान किन छाडि दिन्नौ?" स्त्रीले जवाफ दिइन्—"यहाँ अत्याचारी शासन छैन।" स्त्रीको त्यो उत्तर सुनेर खुङ्गले आफ्ना चेलाहरू सँग भने—"याद राख अत्याचारी शासन बाघ भन्दा भयंकर हुँदो रहेछ।"

तिनै महात्मा खुङ्गले अत्यन्त सरल र खुला शब्दमा उत्तम शासन वा स्वराज्यको पहिचान का विषयमा "जुन देशमा बस्ने मानिस आनन्द मग्न रहछन्, विदेशमा बसेका मानिस हरू समेत जहाँ बस्न लालायित हुन्छन्" त्यही हो भनेका छन्। राम-राज्यको ता कुरै के? राम-राज्यमा आनन्द को मात्रा अत्यधिक थियो। "ना कुण्डलि ना मुकुटी, न स्रग्वी,नाल्प भोगवान्" अर्थात्—अयोध्या मा सबै कुण्डल पहिरन्थे, माथमा मुकुट धारण गर्दथे, गलामा माला लगाउँथे, अल्प आनन्द होइन कि पूर्णानन्द भोग्दथे" भन्ने श्लोक रामायणमा लेखेकोछ।

राज्यं कुलं च लक्ष्मी च यदि वा जानकी मपि।
आराधनाय लोकानां मुञ्चते नास्ति मे व्यथा॥

भगवान् रामचन्द्रजीका यस परमपावन सिद्धान्त र

तदनुसार भएका आचरणले वर्तमान कालका क्रान्तिवादीहरू समेत् रामराज्यलाई आदर्श मानिरहेका छन्।

परापूर्व कालमा भारतवर्षमा शासक वा राजा को पद निर्वाचनीय हुन्थ्यो भनी हाम्रा प्राचीन ग्रंथहरूबाट प्रमाण पाइएको छ। स्वराज्यको प्रथम कल्पना र त्यसका निर्वाचित अध्यक्षको प्रमाण हामी ऋग्वेदका प्रथम अष्टकका ८० वौं सूक्तमा पाउँछौं। यस सूक्तका देवता इन्द्र हुन्, इन्द्रको शाब्दिक अर्थ समर्थ वा सक्षम हो। उक्त सूक्तमा ऋचाहरूको संख्या १६ छ। त्यसका तिश्रा ऋचामा भनेको छ—"प्रेह्यमीहि धृष्णु हिनते वज्रो नियंसते इन्द्र नृम्णां हिते शवो…"अर्थात्—हे इन्द्र! अगाडि बढ, न डराऊ। शत्रुको सामना गर, तिम्रो वज्र व्यर्थ हुनेछैन, किन भने तिम्रो शरीर जनतामय हो" यसै प्रकार दशौं ऋचामा—" महत्त दस्य पौस्यम् " र पन्ध्रौं ऋचामा—"को वीर्यो परः। तस्मिन् नृम्ण मुतक्रतुं देवा ओजांसि सन्दधु अर्चन्नुस्वराज्यम्–" पद आएकाछन्, जस्को अर्थ-इन्द्रमा महान् पौरुष छ, ती भन्दा बलवान् दोश्रो को हुन सक्तछ। किन भने विद्वान्हरूले इन्द्रका जनतामय शरीरमा ओज अधिक मात्रामा यस निमित्त स्थापित गरेको छ, जस्ले सबै को उत्क्रमण गर्न सकुन्। इ पद हरू वाट स्पष्ट संकेत पाइन्छ कि इन्द्रको बल जनपदको संयुक्त बल हो, अतएव इन्द्र जनपदका निर्वाचित शासनाधिकारी थिए भन्ने प्रमाणित हुन्छ। अथर्ववेद ६।८७।१ को एउटा मंत्र ता यहाँ सम्म भन्दछ कि (Here art thou, I have chosen thou Stead fast and immovable, let all the classes disire thou, let not the king-ship fall away" Griffith) अर्थात् यहाँ स छस्, मैले तलाई छानेको छु, स्थिरता र दृढतापूर्वक

रुभिई, सब श्रेणीका मानिस तेरो इच्छा गरुन्, तेरो राजस्व तँ बाट भ्रष्ट न होओस् ।" यस मंत्र बाट प्रजाले राजाका चुनाव का साथ-साथ यो कुरा पनि जाहेर हुन्छ कि प्रजाका विरुद्ध भई राजाले राज्य गर्न पाउन्नथे, मनमाना गर्ने राजा लाई प्रजावर्गले पदच्युत समेत् गर्दथे । यस मंत्र का समर्थनमा अथर्ववेद का ३।३ का छैटौं मंत्रमा "राष्ट्रीय महासभाका वहुमतका अनुसार राजाको निर्वाचन हुने गरेको थियो, अत्याचारी राजा प्रजा द्वारा सपरिवार नष्ट गरिन्थ्यो ।" मनुस्मृतिमा पनि श्लोक ।७१११।। मा त्यो कुरा भनेको छ "मोहाद् राजा स्वराष्ट्रयः कर्षयत्य न वेक्षया । सोऽचिराद भ्रश्यते राजा-जीविताञ्च सबान्धवा ।। अर्थात् मूढतावश आफ्ना प्रजा माथि अत्याचार गर्ने राजा शीघ्रनै राज्य, जीवन र परिवार का साथ नष्ट हुन्छन् । मनुस्मृति का सातौं अध्यायका १६१ श्लोकमा उदाहरण पनि दिइएको छ—"वेनो विनष्टोऽविनयात् नहुषश्चैव पार्थिवः । सुदासो यावनिश्चैव सुमुखो निमिरेवच ।। अर्थात्— उद्दण्डता वा अत्याचारका कारण वेन, नहुष, यवन जातिका सुदास, सुमुख र निमि हरू विनष्ट भएका थिए भन्ने लेखेको छ । "ऐतरेय ब्राह्मण ग्रंथ" मा पनि निर्वाचित राजाले आफ्ना राज्याभिशेषका दिन "यदि म बाट जनता उत्पीडित होओस् ता जन्म देखि मरण सम्मका मेरा सुकर्म वा पुण्यकर्महरूको नाश होस्, मेरो लोक परलोक दुवै बिग्रोस्, म आफ्ना संतान हरू बाट वंचित रहुँ भन्ने प्रतिज्ञा गर्नु पर्दथ्यो भन्ने लेखेको छ । निर्वाचित अध्यक्ष द्वारा पंचायतको यो व्यवस्था भारतवर्षमा ऋग्वेद का प्रगैतिहासिक काल देखि प्रचलित भएर मौर्य र गुप्त राजाहरूका शासनकालमा उन्नति का चरम सीमामा पुगि-सकेको थियो । कौटिल्यशास्त्र का अनुसार गाऊँका जनता बाट

छानिएर भएको "ग्रामणी" नाऊँको अधिकारी, जस माथि शासनाधिकार प्रतिष्ठित गरिन्थ्यो; त्यसले गरेको अर्थ दण्ड अपरिमार्जनीय हुन्थ्यो। न्यायको सर्वोत्तम आधार केवल दुइटा मानिएका थिए (१) भूलोकमा पंच (२) स्वर्गलोकमा परमेश्वर।

बौद्धकालमा पनि अनियंत्रित एकेश्वर शासन नभई लोकसभा प्रणालीको प्रचलन थियो। त्यस बेला प्रस्ताव गणक संख्या सचेतक प्रथम द्वितीय, तृतीय वाचन, बहुमत द्वारा निर्णयको नियम, समितिहरू को नियुक्ति वादविवादको कार्य-प्रणाली राज्य शासनमा व्यवह्रित हुन्थ्यो भन्ने कुराको बौद्ध संघमा पर्याप्त प्रमाण पाइएको छ।

दुर्भाग्यवश पछि भारतवर्षमा विदेशी दस्यु यवन तथा अंग्रेज हरूको प्रवेश र प्रभुत्व भएकोले भारतीय शासन प्रणाली छिन्न-भिन्न भएको हो। ती विदेशी दस्यु हरूले आफ्ना देश जाति र व्यक्तिगत स्वार्थ पूर्तिका निमित्त चलाएको शासन प्रणाली ले भएको भारतको दुर्दशाको परिचय उनै विदेशी हरूले लेखेका विचार बाट बुझिनेछ।

अनेकौं शताब्दि पछि भारतवर्ष पुनः स्वतंत्र भएको छ। भारतवर्षमा आज फेरि जनताले आफ्ना देशमा स्वराज्य स्थापित गर्ने प्रयत्न गरिरहेका छन्। भारतीयहरूले देशका समग्र अधिवासीहरूका विशाल संमेलनमा नवीन भारतको संविधान बनाएर त्यसको घोषणा गरेकाछन्। देशमाथि देशीय शासक वा नेताहरूले कस्तो शासन व्यवस्था चलाउनु पर्दछ त्यो भारतीय संघ राज्यको संविधान पढेर बुझ्न सकिन्छ। "हामी भारतीयहरू भारतवर्षलाई एउटा सम्पूर्ण प्रभुत्व सम्पन्न लोकतंत्रात्मक गणराज्य बनाउन तथा त्यसका समस्त नागरिक

हरूलाई सामाजिक आर्थिक र राजनीतिक, न्याय, विचार, अभिव्यक्ति, विश्वास, धर्म र उपासनाको स्वतंत्रता प्रतिष्ठा र अवसर र समता प्राप्त गराउन र ती सब व्यक्तिको गरिमा र राष्ट्रको एकता सुरक्षित गराउन, बंधुता बढाउन का लागी दृढ संकल्प भएर आफ्नो यो संविधान सभामा यस संविधान लाई अङ्गीकृत, अधिनियमित र आत्मार्पित गर्दछौं।" यो हो भारतीय संविधान को प्राक्कथन।

माथि लेखिएको वैदिककाल प्रागैतिहासिककाल,बौद्धकाल र वर्तमान स्वराज्य प्राप्त कालका भारतको शासन प्रणालीलाई हेर्नुभयो। अब आफ्नु अपराजित सदा स्वतंत्र रहिआएको सानु पहाडी राज्य नेपाल माथि विदेशी दस्यु होइन विशुद्ध स्वदेशी कँवर खलकका राणा भनाउनेहरूले चलाएको शासन प्रणाली माथि पनि केही विचार गर्नु हवस्।

हाम्रा देशमा राजतंत्रका नाऊँमा स्वेच्छाचारी दस्युतंत्र मूलक शासनप्रणाली प्रचलित छ। नेपाल नरेश श्री ५ महाराजाधिराज देशका सर्वमय प्रभू होइवक्सिन्छ ता पनि वर्तमानकालमा वहाँ कै आडमा वहाँको अस्तित्व समेत बाँकी राखिएको छैन।नेपाल संगठयिता र संस्थापक प्रतापि श्री ५ राजा पृथ्विनारायण शाह का जुत्ता उठाउने तथा उनका पुराले आफ्नो उदरपोषण गर्ने श्रीरामकृष्णकँवर का सन्तान राणा वंश प्रवर्तक जंगबहादुर कँवर किम्बा तिनका उत्तराधिकारी कँवर खलकका राणा भनाउँदा हरूले आफ्ना यस विचित्र शासन प्रणालीमा वर्तमान श्री ५ महाराजाधिराजलाई नेपालको पूर्णतः सत्वाधिकारी पनि मान्नै कर परेको छ। कँवर खलक राणा दलका मुख्तियार हुने प्रत्येक व्यक्ति श्री ५ महाराजाधिराज बाट पंजाछाप सनद पाएर मात्र आमरण काललाई मुख्तियार किंवा ठिकेदार रूपी प्राइमिनिष्टर

बहाल हुन्छन् । आमरण काललाई मुख्तियारी ठिकेदारी पाएका मुख्तियारलाई त्यसका जीवन कालमा मारी, काटी, पाता फर्काई किंबा धपाई त्यो ठाऊँ उछिन्न खोज्ने अर्को व्यक्तिलाई पनि त्यस मुख्तियारी ठिकेदारी पदमा स्वयं महाराजाधिराजले नै आफ्नो पंजाछाप सनद बक्सी बहाल गराउनु पर्दछ। यस कुराले नेपालको वर्तमान अठ्याँएर लिएको सत्तापूर्ण महामंत्री पदको अदला बदली गर्ने अधिकार महाराजाधिराजमा सुरक्षित रहेछ भन्ने मान्नु पर्दछ। कँवर खलकका राणाहरूमा हुने मुख्तियार, ठिकेदार, निजकी पत्नि, मित्रेनीहरूलाई पाइने महाराजा, बड़ा महारानी, रानीसाहबको पदवीमा पनि श्री ५ महाराजाधिराजको हुकुम् चाहिन्छ। देशका अरू कम्यांडर-इन-चीफ लगायत का समग्र राजकर्मचारीहरूको पद बहाली थमौती, उपाधि वितरण, राजस्व वसूली, शासन, बिर्ता बक्सीस प्रभृति प्रत्येक कुरामा श्री ५ महाराजाधिराज का सनदपत्रमा मुख्तियार ठिकेदारले श्री ५ को हस्ताक्षरको प्रतीक लालमोहर लगाई आफु मार्फतदार भई जारी गरेको हुन्छ। परराष्ट्र सम्बन्धी पत्र व्यवहारमा धिराजको प्रतीक त्यही लालमोहर लगाइन्छ। राजकीय दरबार वा विदेशी राजदूतका परिचयपत्र ग्रहणमा श्री ५ धिराज आफ्ना सत्ताधिकारमा अधिष्ठित देखिइ बक्सिइन्छ। राज्यका उत्सव समारोहादि मा पनी श्री ५ महाराजाधिराज आफ्ना राज्यासनमा अलंकृत र नेपालका प्राइम्मिनिष्टर नाऊँका ठिकेदार लगायत समस्त राज्य कर्मचारीहरूले वहाँ को सलामी उठाएको देखिन्छ ।

यस प्रकार पूर्णतः प्रभुता सम्पन्न नेपालका महाराजाधिराज लाई वहाँ बाट नै बहाल गरिएका सेवक कवँर खलकका राणा भनाउदाहरूले "डाकूँ दलले कुनै गृहस्थका घरमा पसी

घरका धनीका छातीमा बन्दूक सोझ्याई, त्यस लाई आफ्ना मानिस किंवा छिमेकीहरुलाई गुहार्ने मौका न दिई, घर भित्र मनपरी गरे सरी, आफ्ना चालिस पचास जना खलक दलका रिवाल्भरका नालले घेरिएका महाराजाधिराजका अधिकार प्रयोग वलले कँवर खलकका राणाहरूको सर्दारले देशमा मनपरी चलाएको छ। त्यस निमित्त यस दुनियाँ को निकृष्टतम प्रतिगामी शासनतंत्रलाई दस्युतंत्र मूलक भन्नु परेको हो। एउटा व्यक्तिलाई धेरै मानिसले घेरेर मनपरी गर्दछन् भने त्यो शक्ति या सत्यको विजय मानिन्न,त्यो विशुद्ध डाँकेजनी हो।

यस शासनतंत्रलाई दस्युतत्र मूलक भन्दा संभवतः डाँकूहरूले समेत आफ्नो मानहानि भएको मान्न सक्दछन्। डाँकू वा डाँकूदलले आफ्ना परिवार संतानका सुख वा सुविधालाई दूर देश बाट धन लुटेर ल्याई आफ्ना संतान परिवारमा समान रूपले वितरित गर्दछ,त्यस ठाऊँमा नेपालका हुने कँवर खलकका मुख्तियार ठिकेदारहरू आफ्नु घररूपी देश र परिवाररूपी जनताको सर्वस्व अपहरण गरी, दूर देशमा ओसारी,देशलाई हरतरफ बाट सर्वहारा बनाउँदै गएका छन्। यस प्रकारले दस्युहरू बाट समेत थुकिने निकृष्टतम कार्यप्रणालीलाई दस्युतंत्रको संज्ञा दिनु समेत त्यस शब्दको दुरुपयोग होला।

प्रातःस्मरणीय, शिशौदिया कुलप्रदीप प्रबलप्रतापी राजा पृथ्वीनारायणशाह, राजा सिंहप्रतापशाह, शाहजादा-बहादुर शाह र राजा रणबहादुरशाह आदि चार जना महापुरुष हरूका भगीरथ प्रयत्नले वाइसी, चौविसीका नाऊँले सानासाना राज्य रूपमा विश्रृंखल भइरहेको नेपाललाई साम्राज्यको रूप मिलेको थियो। शाह नरेशहरूका त्यस विजयाभियान तथा साम्राज्य संस्थापन कालमा प्रत्येक नेपाली प्रजाजनले आफ्ना

रक्तदानले नेपाली भूमिलाई सिंचित गरेर नेपाली विजयाभियानलाई पूर्व देखि पश्चिम सम्म ग्यारह सै क़ोश सम्म फैलाई वीर नेपालीहरूको यशो गाथालाई समस्त भारतमा व्याप्त गराइसकेको थियो। यहाँ यो विर्सनु हुन्न कि—त्यस विजयमा मिलेको श्री सम्पत्ति वा भूभाग माथि नेपालनरेश भारदार या जनताले समान रूपले उपभोग गर्न पाएका थिए।

यस प्रकार वीरताका आदर्श ले संगठित भएको नेपाल साम्राज्यको शासनदंड प्रजाका सहयोगले नेपालका शाह नरेशहरूका सबल बाहुली माथि अवलंबित गर्दथ्यो। पछि राजा रणबहादुरशाहका वंश विद्वेषले राज-शक्ति डोलायमान भएका दुर्भाग्य जनित कालमा स्वामीभक्त भारदारहरू का संमिलित सहयोग र सहायताले राज्य-दंड स्थिर रहन सकेको थियो। त्यसै वेला त्यस सहयोग समिति का नेता स्वरूप वर्तमान रूपको प्रधानामात्य पदको शृष्टि भएको हो। तर तिन्ताक प्रधानामात्यपद कुनै वंश वा खलकमा आमरण काललाई दिइन्थ्यो। जस्ता प्रकार आज सम्म राजका गैह राजकर्मचारीहरूको सालिन्दा पजनी वा थमौती हुन्छ—त्यसै किसिमले प्रधान मंत्रीहरूको पनि पजनी र थमौती हुन्थ्यो।

क्षेण अव्यवस्थित चित्तका कायर राजा राजेन्द्रवीरविक्रम शाह,जो नाउँ लाई राजेन्द्र ( राज हरूमा सर्वश्रेष्ट ) भनिइन्थे, तर वास्तवमा ती राहु थिए। जसले प्रातःस्मरणीय चार जना शाह महापुरुष हरूले र महात्मा भीमसेन थापाले आर्जन गरेको नेपालको दिव्यतालाई ग्रसेर त्यस लाई अधपतित सामन्त हरू जो जनता सँग पशु तुल्य व्यवहार गर्दथे, तिनका हातमा देशलाई सुम्पेर देशलाई षडयंत्र जर्जर बनाए पछि आफ्ना कुकृत्यका दंडमा गैह्र २६१ जना भाईभारदारका

प्रेरणाले पदच्युत हुनु परे पछि युवराज सुरेन्द्रवीरविक्रम शाह ले नेपाल राज्यको सिंहासनलाई सुशोभित गरे। पिताको मतिमन्दता र कायरता तथा आफ्नी कान्छी आमा महारानी राज्यलक्ष्मी देवीको षडयंत्रचक्र र रक्तलिप्साले सदा आतंकित रही विकृत मस्तिष्क भएका राजा सुरेन्द्रले राज्यासन पाए पछि एकान्त सुखभोगमा मन दिए। त्यस बेला राज्य शासनको बागडोर मेधावी शाहजादा उपेन्द्रवीर विक्रमशाह का बुद्धि तथा सतर्कतामा निर्भर भएको थियो। धूर्त तथा महानचक्रचाली जंगबहादुर कँवर जो महारानी राज्यलक्ष्मीका षडयंत्रचक्रका मुख्य यंत्र थिए तथा जसका दुराकांक्षा र कुटिलताले नेपाल वीर शून्यभइसके को थियो, स्वयं राज्यलक्ष्मी देवीका पतनका बेलामा राजा सुरेन्द्र र शाहजादा उपेन्द्रका चरण भर परी स्वामीभक्त रूपमा प्रकट पोषित बिरालो झैं तिनीहरूका आज्ञानुवर्ति सेवक भइरहेका थिए। त्यस बेला आफ्ना त्यस डबल खेल चक्रले आफ्नो ज्यान जोगाई सुरेन्द्र र उपेन्द्र का प्रकट विश्वासपात्र तर एकान्त विश्वासघाती जंगबहादुरले कोतपर्व र भँडारखाल पर्वले रिक्त भएका श्रेष्ठ पद हरूमा आफ्ना भाई भतिजाहरू लाई बहाल गराउने मौका पाए। एक एक गरी राज्यका श्रेष्ठपद हरूमा आफ्ना भाई भतिजा हरू लाई बहाल गराइसके पछि अंग्रेजी षडयंत्र सूत्रले राजकाजको निमित्त पारी आफ्ना निहित स्वार्थका पूर्तिलाई जंगबहादुरले लंडनको समेत यात्रा गरे। आफ्ना त्यस विलायत यात्रामा कूटचक्री अंग्रेजहरूको वश्यताका विनिमयमा आफ्नो पक्ष सबल गरी फर्केर जंगबहादुरले हठात् शाहजादा उपेन्द्रलाई राजा सुरेन्द्रका नजरबाट खसाइ निर्वासित गरी अंग्रेजहरूका बंदी गराए। शाहजादा उपेन्द्र निर्वासित भए

पछि दुनियाँका सम्पर्कबाट छुट्याइएका उसमाथि विकृत मस्तिष्कका राजा सुरेन्द्र ले विश्वास गरी स्वेच्छाले जंगवहादुर लाई शासन कार्य चलाउने सुविधा दिए। यस प्रकार राज्य शक्ति हात परे पछि अप्रतिद्वन्दी भएका जंगबहादुरका कार्यकलापको कसले विरोध गर्ने। यता दरबारमा पूर्णतः विश्वासपात्र सेवक तुल्य जंगबहादुर बाट राजा सुरेन्द्रका सेवामा स्वयं हाजीर रही राजा लाई पिठ्यूंमा वोकी डुलाउनु, जागागराउनु, ज्यूनार गराउनु, चखुवा हुनु, पुरा खानु इत्यादि कार्य मा रत्तिभर त्रुटी न गरी दर्वार वाहिर आफ्ना शक्तिको पूर्णता गर्ने र महामंत्रीपदको प्रदर्शन गर्नमा बड़ा सतर्कताले काम लिन थाले।

यस प्रकार राजा राजेन्द्रका अदूरदर्शिता पूर्ण कार्यकलाप र महारानी राज्यलक्ष्मीदेवीका घृणित अभिसंधि ले अव्यवस्था उत्पन्न भएका बेलामा राजा सुरेन्द्रवीर विक्रमशाहको विश्वासको घाँटी अठ्याएर देशको त्यस संमानित प्रधानामात्य पद अधिकारका लोभले भारतका दस्यु प्रभू अंग्रेज हरूका संगीन का नोकले उनै हरूको आदर्श खडा गरी—( लार्ड क्लाइव ले वंगाल मा सन् १७६५ देखी १७७२ सम्म चलाएको राज्यको ठिकेदारी तुल्य ) द्वैध शासन पद्धति चलाई दुनियाँमा कहीं कतै न भएको एउटा अनौठो भाईक्रमरोलले ( जेठो भाई पछि वयक्रम ले कान्छो भाई ले प्रधानामात्य हुने देशलाई सर्वहारा तुल्याउने अवांछनीय प्रणालीलाई जंगवहादुरले देशमा लादेका हुन्।

सत्ताधिकार हात लगाई राज्यका ठिकेदार बनि सके पछि कँवरखलकका राणा हरूले विस्तारै विस्तारै फौजी कानून शक्तिका प्रयोगले मूक जनताको मुख बन्द गराए। अधि

शाह नरेशहरूका शासन कालमा धन-शिक्षा र स्वतंत्र कलामा नेपाली जनताको निकै उन्नति थियो। इनै साधारण जनता मा ठूला ठूला लेखक—कवि—विद्वान-राजनीतिक तथा वीराग्रणी समेत भएका थिये। तिन्ताक साधारण नागरिक हरू समेत प्रसस्त धनी हुन्थे तथा देशका आवश्यकतामा नेपाल नरेशहरूले जमीन वंधक राखी तिनै जनता संग कर्ज समेत लिने गरेका थिए।

कँवरखलकका राणाहरुले आफ्ना प्रारम्भिक कार्यकाल देखिनै प्रजावर्गका त्यस् उन्नति तथा प्रगतिमा गतिरोध उप-स्थित गर्न थाले। जंगबहादूरका कार्यकाल सम्म जनता ले आफ्ना उन्नतशील प्रगतिलाई राम्ररी बुझे को थियो। स्वार्थि कँवरखलकका नीचता ले क्रमशः प्रजावर्गको बुद्धिबल-विद्या या पराक्रमको तेज थिचिएकोले प्रजालाई असहनीय हुँदै गयो। त्यसैका फल स्वरूप जनता ले आफ्नु त्यो विक्षोभ लाई अठतिस सालका पर्वका रूपमा प्रकट गरें। तर त्यो पर्व कँवर खलक का राणाहरूका पाशविक शक्ति का प्रभाव का संमुख बडा न राम्रा तरह ले असफल रह्यो।

कँवरखलकका राणा हरूले अठतिस सालपर्वको दमन गरी प्रजावर्गमा उठने चेतना लाई दवाउन यौटा अर्थकृत मध्यम वर्ग का पिठ्ठु (Burgious Class) लाई प्रजा र आफ्ना बीच को दिवाल खडा गराए। त्यस मध्यम वर्गका पिठ्ठु हरुमा धर्माध्यक्ष गुरू प्रोहित ( वंशानुक्रमिक ) हाकिम, जज, सर्दार, काजी सुब्बा प्रभृति मध्य सरकारी पदहरू वितरित गरियो। यस प्रकार कँवर खलकका राणाहरूले जनतामा विभेद गराई जनसाधारणलाई धन सम्बलहीन तुल्याएर तिनीहरू लाई बलिदानको बाखो तुल्याए। क्रमशः जनता को समाज

या राजनैतिक क्षेत्रमा केई स्थान रहेन न ता तिन्को क्वै पूछ-ताछ नै बाकी रह्यो। कँवरखलक ले देशको सार चुसेर फ्याँके का सिठ्ठी का लोभी मध्यवर्ग का पिठ्ठ हरू क्रमशः अभिमानी हुँदै गए तथा आफ्नै भाईहरू संग घृणा गरि कँवरखलकका राणाहरूको शक्तिलाई सुदृढ़ गराई जनतालाई आजका यस अधो अवस्थामा ल्याई पछारेका हुन्।

सबका अन्तमा नेपाल को किसान समाज छ। नेपाल को आर्थिक जग किसान वर्ग माथिनै निर्भर गर्दछ। किसान वर्गले दिएका मालमोतले समस्त राज्य कार्य र सेनाको संचालन हुन्छ। कँवर खलकका कार्यकालका पहिले माल पोत नाँऊ मात्र लाइ लिइन्थ्यो। अर्थात् तराई प्रान्तमा एक हल पिछे ॥) ।।।) मालपोत पर्ने ठाँऊमा आज विगहा पिछे १२) १५) रुपया मालपोत गराएर हल पिछे १००) १२०) रुपया सम्म लिने गरेको छ। यस मालपोत वृद्धि ले आज देशको किसान वर्ग मृत-प्राय भई रहेको छ। मालपोत वसूल गर्ने अधिकारी लाई पोता असुलीमा सबै तरहको निर्दयता गर्ने खुला छूट दि, धन संचयका साथ किसान वर्ग लाई आफ्ना लूट शासनका विरुद्ध मंटो उठाउने लायक को पनी राखे का छैनन्। आफ्ना वर्ष दिनको पसिना को कमाई गुमाएर सिस्नो र ढिर्णो सम्म खान न पाउदा कँवरखलकका कार्य कालका यस १०४ वर्ष भित्र ३०।३५ लाख जनता जननी जन्मभूमि लाई छाडि विदेशमा यत्र तत्र छरीएर कुलि, खलासी—दरवानी जीवन व्यतीत गर्न कर लगाइएका छन्।

यस प्रकार राजा र प्रजा लाई दवाए पछि कँवर खलक का राणाहरूले न्याय विभागलाई पनि जिल्लागत तुल्याई देश लाई-अठ्याई राख्नमा एनलाई समेत आफ्नो हतियार

बनाएका छन्। कँवर खलकका सर्दार ठिकेदार मुख्तियार को सनक नै हाम्रा देशमा विधानको काम गर्दछ। यस प्रकार न्याय विभाग लाई आफ्ना प्रति केन्द्रित गराई कँवर खलक का राणा हरुले न्याय पद मा आफ्ना वर्णशंकर वंशज, अशिक्षित पिटठु वा विलासी जनलाई नियुक्त गरी मुद्दा को हारजीत तिनैका प्रसन्नतामा निर्भर गराएका छन्। कँवर खलकका राणा सर्दारका इच्छा मात्र ले हज्जारा मानिस समातिन, काटिन घरखेत जफ्त गरिन सक्दछ तथा डंडाज्ञा पाउँने मानिसलाई न्यायालयमा पुकारा गर्न सम्म अधिकार हुँदैन। (अन्य राष्ट्र वा देशमा अपराधिका दंडमा जफ्त भएको घरखेत सरकार लाग्दछ तर त्यो न भई अजब नेपालमा जफ्तभएको सम्पतीलाई तत्कालिक ठिकेदार मुखियारले आफ्ना आमदनी को मद तुल्याएका छन्)। यस शताब्दिका भूमंडल भरीमा नेपाल वाहेक अरू कुनै यस्तो देश वा राष्ट्र छैन जहाँ "ऐनमा यस्तोछ ता पनी हाम्राहुकुमले" भन्ने न्याय कानून माथी फौजी तोक लगाएर न्याय वा ऐनको खुले आम मखौल गरीएको होस्। ऐनका यस हुकमी हतियार प्रयोग शक्ति ले कँवर खलक का राणा हरु ले नेपालका ६४००० लाख जनता संग खेलवाड गर्न, जनता को विचार गर्ने स्वतंत्रता को अपहरण गर्न, र राज-नैतिक दमन तथा हाम्रा हजूरका हुकुमका नाँऊ ले कानूनको अनादर जत्तिको गरिएको छ त्यो जर्मनी का हिटलरीज्म वा फासिज्ममा पनी भएको थिएन, जस्का निमित्त संसारको द्वितिय महासमर भएको थियो। आफ्ना त्यसै सुलभ जिह्वागत कानूनका भरले कँवर खलकका राणा हरूले समग्र देशलाई भ्यालखानको रूप दिएका छन्।

संसारमा कुनै देशका राजा, प्रेसिडेंट, प्रधानमंत्री

हरू आफ्ना राज्यरोहण, सत्ताधिकारग्रहण वा पदग्रहणमा राजा राष्ट्रका प्रति श्रद्धा सम्मान राखी पूर्णतः कर्तव्य-परायणता ले राज्य व्यवस्था चलाउने सफत ग्रहण गर्दछन्। त्यस ठाँऊमा देशमाथी जंगबहादुर ले चलाएको ठिकेदारी मुख्तिआरी पदग्रहण मा तिनीहरूले कुनै सफत या प्रतिज्ञा गर्नू पर्दैन, उल्टो ठिकेदारी पद को पंजा सनद पाएका दिन देखि तिनीहरूले गरिने देश राजा जनता को उत्पीडन र राष्ट्र घातक लूट मार अत्याचार तिन्का इच्छाधीन भंइ तिनीहरूले त्यस्मा तांडव गरेको देखिन्छ। सिविल अधिकार लाइ तिनी हरूले नेपाल मा जत्ति को कुच्ली राखेकोछ त्यस्को उदाहरण पनी संसारमा खोजेर पाइने छैन। जनता का सिविल अधिकार लाइ जत्तिको थिचेकोछ, त्यस्भन्दा बढता कँवर खलकका राणा भँनाउदाहरूलाई क्रिमिनल लिवर्टिज दिइएकोछ। तिनीहरू स्वार्थका केन्द्रविंदुवाट पृथक भई राष्ट्रीय स्तरमा आएर सोच्न या बिचार गर्ने आवश्यकता समझँनन्, तिन्का सम्मुख जीवन या राष्ट्रको संपूर्णता केवल मात्र धन लूटनुनै छ। राज्य संचालन तथा व्यवस्था सँग तिनीहरुलाई केई प्रयोजन छैन। आफ्नो कर्तव्य उत्तरदायित्व या जवाब-देहि लाई तिनीहरूले आज सम्म संझे (महसुस) गरेका समेत छैनन्। सुरा र सुन्दरीमा लिप्त रही तिनीहरूले गरेको स्वेच्छाचार र उच्छृंखलता संसारमा बेजोड छ।

देशमा कँवर खलक का राणाहरूले आफ्ना ४०।५० जना भाई क्रम बद्ध रोल्दार भँनाउदाहरूको यौटा कौंसिल नाऊँको दलको संगठन गरेको छ। त्यसै दलका सहायताले दल को बय-जेष्ठ सर्दारले प्राइमिनिष्टरी का नाऊँमा आफ्नो अनौठो लूट शासन प्रणाली को व्यवस्था चलाउँछ। त्यसै शासन व्यवस्था

लाई आज १०४ वर्ष देखी गैरखलक का ६४०००० लाख जनता र नेपाल नरेश हरूले पशुवत् मूक रही शिरोधार्य गर्नु पर्दछ। अशिक्षित, असंस्कृत, अज्ञानका अन्धकारमा डुबेका, अयोग्य वा अकर्मण्य राणा भनाउँदाहरू भाई क्रमले देशको जंगी वा निजामती का संमानित तथा मुख्य मुख्य पदलाई जन्मना साथ प्राप्त गर्दछन्। उस्माथी यौटै मानिस एक साथ निजामती, जंगी तथा अन्य गरि तिन विभाग सम्मको हाकिम पदमा शोभायमान् हुन सक्छन्। गैर खलकका ६४००००लाख जनतालाई निचोरेका कागती सरी जिम्मेदारी र विश्वसनीय पदहरू वाट अलग फ्याँकि दिइएको छ। पराधीन भारतमा वृटिश राज्यकालमा सन् १८३३ का चार्टर एक्ट द्वारा "कुनै मनुष्य आफ्ना जाति धर्म रंग आदिका कारण कुनै पद वाट वंचित गरिने छैन" भन्ने कानून वनेको थियो, त्यस ठाऊँमा आफ्नै देशमा एक मात्र कँवर दलका वलमिच्याँई ले ती वाहेक समस्त जातिको सत्वो-पहरण पनि संसारका इतिहासको स्वेच्छाचारिताको यौटा वेजोड दृष्टान्त हो। आश्चर्य ता यो छ कि, तिनीहरूलाई आफ्ना पदका निमित्त योग्यता वा कार्यशक्तिको आवश्यकता पनि चाहिंदैन। तिनीहरू र तिनका वर्णशंकर दाजु भाई हरू देशमा कप्तान लगायत कम्मान्डर-इन-चिफ र अन्तमा ठिकेदार मुख्तियार सम्मको जंगीपद र निजामतिका भए भरका हाकिमी दर्जामा रोलचक्र क्रमले स्वयं अधिष्ठित हुन्छन्। देशमा देखा-उन लाई खडा गरिएका संस्था यथा-अर्थ विभाग, वैंक, शिक्षा-विभाग, कृषिविभाग, उन्नतिविभाग, जलकल विभाग, साहित्य समिति वा म्युनिसपैल्टी इत्यादिमा पनि एक मात्र तिनैहरू अध्यक्ष पदका पदाधिकारी र मोटा तलबका अधिकारी हुन्छन्। देशकार्यका प्रतिनिधित्वमा विदेश आउने दलका नेता वा

विदेशी राजदूतका पदहरूमा पनि एकमात्र "शम्सेर जंग राणा" को पुच्छर हुने कँवर खलकका राणाहरूको मात्र एकाधिपत्य छ। यहाँ यति यो पनि याद राख्नु होला कि ती कँवरखलकका जन्मना पदारूढ पदाधिकारीहरूले आफ्ना पदानुसार कहीं कतै गई कुनै कार्य गर्नु पर्दैन। तिनी हरूले आफ्ना ऐशगाहमा बसी दस आठ आज्ञापत्रहरूमा दस्तखत गर्नु नै तिनीहरूका कार्य-कालिक कर्तव्यको पूरण मानिएको छ। हाँ, चूडान्त पदोन्नतिको ठिकेदारी पद नपाए सम्म तिनीहरूले आफ्ना पदहरूको यौटा ठेकिएको जागीर र भत्ता मात्र पाउँछन् र ती सबका ऊपर एक-मात्र सर्वतंत्र स्वतंत्र ठिकेदार सर्दारको नियंत्रण रहन्छ। देशका खर्च बाट बाँचेको यावत् रकममा एकमात्र ठिकेदार मुख्ति-यार को एकाधिपत्य रहन्छ। ठिकेदार मुख्तियारले देशका आय व्यय को कुनै वजेट वा फाँट प्रकाशित गर्नु पर्दैन, न ता तिन्ले त्यस्को कुनै हिसाब-किताब नै कसैलाई बुझाउनु पर्दछ। ठिकेदारी तुल्य आफ्ना हातले आफ्नै खातामा जवाहिरात खरीद खाता के····राजदूत स्वागत खाता के···सरी अण्डवण्ड खाता के··· भनी लेखी आफुले विदेश ओसारेका रकमको वसूल बाँकी तयार गराए पुग्दछ। ठिकेदार मुख्तियारका संमुख भावी ठिकेदार कम्यांडर-इन-चिफ को समेत कुनै स्वतन्त्र अस्तित्व हुँदैन, न ता त्यस देशका लूटका आयमा तिन्को केही हिस्सा नै रहन्छ। वयोजेष्ठ सर्दार मुख्तियारका मृत्यु पछि वा तिन्को हत्या वा पदच्युति गराउन सके रोलचक्रक्रम वा रोलव्यतिक्रम गरी हुने दरिद्री नवा ठिकेदार मुख्तियारलाई देशका लूटको एका-धिकार पाइन्छ। त्यसैले कँवर खलकका भएका प्रत्येक ठिकेदार हरूको आफ्ना लूटको छूट पाएका कार्यकालको एकमात्र आक्रान्त देशको समस्त आय, समस्त वस्तु, उपलब्ध भूभाग

आफ्ना नाऊँमा गराई सकेसम्म को धन रत्न वैभव विदेशी बैंक हरूमा सुरक्षित गराउने हतपत हुन्छ ।

संसार भरीमा नेपाल नै यौटा यस्तो देश वा राज्य छ, जहाँ को प्रत्येक कँवरखलकको प्रधान मंत्री, जो आफ्ना उपप्रधान काल सम्म २००)४००) रुपयाका कर्जभारले लदेका रहन्थे, आफ्ना लूट को छूट पाएका कार्यकाल भित्र सहसा करोडपति र क्रमशः अरबपति समेत भएका देखिएका छन् । रोलक्रम या व्यतिक्रमले हुने ठिकेदार मुख्तियार, जसका घरमा ठिकेदारी सनद पाएका एक दिन प्रथम आफ्ना जहान बचालाई ख्वाउने अन्नदाना को लालावाला हुन्छ । त्यस्का घरमा सनद पाएका दिन देखिनै "अल्लाउद्दीनकाचिराग सरी" स्वर्णयुग बदलेको देखि स्वयं हुने ठिकेदार सर्दारले समेत अचम्भ हुनु पर्दछ । त्यस्का घरमा स्वयं लक्ष्मी अवतरित भए सरी अनायास अवांछनीय रीतले स्वयमेव सुवर्णको खोलै वगेर आएको देखिन्छ । नेपाल भरीका हरएक मालअड्डामा जम्मा रहेको लाखालाख रुपयालाई कुन बैंकमा जम्मा गराउनु भन्ने परवानगीका निमित्त प्रत्येक मालअड्डाका हाकिमहरूको विंतिपत्र पुगेको हुन्छ । त्यसै दिन देखि गत ठिकेदारका बदलामा नया हुने ठिकेदार मुख्तियार का नाऊँका खातामा नेपालराज्यको समस्त आय विदेशी बंकहरूमा जम्मा हुन थाल्छ । आफ्ना यसैप रंपरानुसार समस्त संसारलाई आफ्ना कौटुम्बिक कूप भित्र देख्ने तथा मपाँईत्वले केवल 'म र मेरो रक्त सम्बन्ध" वाहेक शेष विश्वको निर्माण आफ्ना इच्छा र आवश्यकताका पुष्टिका निमित्त बुझ्ने कँवरखलकका प्रत्येक ठिकेदार मुख्तियारले आफ्ना-आफ्ना पालामा देशको सर्वस्व अपहरण गरी आफ्ना यस वंशीय लूट कार्यकालका १०४ वर्ष भित्र देशको पुग न पुग

दस अरब रुपया विदेश ओसारेका छन्।

रामायणकाल वा महाभारतकाल देखि ईस्वी सन्का ५५७ वर्ष पहिले राजकुमार सिद्धार्थ ( गौतम बुद्ध ) ले गृह त्याग गर्ने बेलामा""शतद्रू नदी सम्म यूनानी महावीर अलेकजेन्डर (सिकन्दर) को विशाल अश्वारोही सेना आई पुगेको बेलामा"" आफ्ना पूर्वज शिशुनाग वंशीय नन्दहरूको नाश गरी मौर्य साम्राज्य स्थापक चन्द्रगुप्तमौर्यका पालामा""बौद्धधर्मका दिग्विजय कालमा""बौद्ध भिक्षु, बौद्ध विहार, बौद्ध राजा, आसमुद्र हिमांचल व्यापी साम्राज्याधिपति अशोक""सुदूर दक्षिणका ताम्रपर्णी नदीका तीरमा...सिंहल, ग्रीस, मिश्र सिरिया सम्म "गुरुजनका प्रति श्रद्धाशील बन" "सत्यनिष्ठ बन" भन्ने भारतीय आदर्श फैलिरहेका बेलामा""विन्दूसार का अयोग्य पुत्र, चारै तिर विश्रृङ्खलता""विराट मौर्य साम्राज्य को टुक्रा-टुक्रा भएको""अन्तिम मौर्य सम्राट् वृहद्रथ लाई तिन्का ब्राह्मण सेनापति पुष्पमित्रले मारेर, गुरू महाभाष्यकार पतञ्जलीका सहायताले शुंग साम्राज्य स्थापना भएका कालमा""त्यस पछि कण्व, पछि आन्ध्रहरूका पालामा"" विदेशी दस्यु हरूको भारत आक्रमण""ग्रीक पछि शक, प्रायः साथ साथै तक्षशिलामा पार्थियन साम्राज्य स्थापन कालमा"" शकहरूको उज्जैन को आधिपत्य""दस्यु कुशानहरूका आक्रमणका बाढीमा सबै विलीन हुनु""कुशान अश्वारोहीहरूले हिन्दूकुशलाई अतिक्रम गरी दलको दल भारवर्षमा फैलिदै जानु""गांधार, तक्षशिला, पंजाब विस्तार विस्तार नर्मदा नदी तट पर्यन्त स्थापित हुँदैग एको कुशान साम्राज्य""तृतीय कुशान सम्राट् कनिष्कले दस्यूत्व त्याग गरी भारतेश्वर पद ग्रहण गर्नु"" सर्व धर्म समन्वय गर्न प्रयत्न""जरथूस्त्र, हिन्दू, ग्रीक पारसी

सबैं धममा तिनको श्रद्धा…शेषावस्थामा बुद्धधर्म ग्रहण…तै पनि युद्ध पिपासा न छुट्नु…काशगर, खोतान,यारकंद र चीन सम्म ,कनिष्क को सफल विजयाभियान…सर्वत्र विजय… युद्धज्वालाले पागल भएका आफ्नै सेनापतिका हात बाट घाँटी अँठ्याइएर कनिष्कको हत्या भएका बेलामा…गुप्त साम्राज्य स्थापक चन्द्रगुप्त…लिच्छवी नेपाल राज दुहिता कुमार देवी गर्भपात सम्राट् मात्र होइन कवि पंडित संगितज्ञ समुद्रगुप्त का किरण ले उद्भाषित भारत साम्राज्य…द्वितीय चन्द्रगुप्त… स्कन्धगुप्त…फाहियानको भारत भ्रमणका पालामा…हूण दस्यु हरूको आक्रमण…गुप्त साम्राज्यको समस्त सौन्दर्य र ऐश्वर्यको लोप…हूण दस्यु तोरमान महाराजाधिराज…पछि मिहिरगुल…मालवा नरेश यशोधर्मन् र मगधपति बालादित्य का संमिलित आक्रमणमा मिहिरगुल पराजित…कश्मीरा-धिपतिका शरणमा मिहिरगुल…धोकाले कश्मीर नरेश को हत्या गरी कश्मीर माथि विश्वासघाती मिहिरगुलको आधि-पत्य…त्यस्का अत्याचारले बौद्ध श्रमण श्रमणी सबै संत्रस्त, बौद्ध स्तूप, बौद्ध विहारहरूको विध्वंस…हूण प्रतापको अस्त… दस्यु हूण अवलुप्त भएर भारतका राजपूत जातिमा रूपान्तरित भएका कालमा…हर्षवर्धन…गौडाधिपति शैव राजकुमार शशांकले थानेश्वरपति बौद्ध हर्षवर्धन माथि गरेको आक्रमण युद्ध…ह्यूङ्ग-साङ्गको भारत यात्रा…गृह विवादका अन्धकारमय कालमा…प्रजा निर्वाचित गोपालदेव…धर्मपालको दिग्विजय …अन्तिमपाल…देवपालका पालामा…सुबुक्तगीनको भारत आक्रमण…कान्यकुब्ज र चौहानहरूले संयुक्त गतिरोध न गरेको ले पराजय…गजनी बाट आएको अर्को लूटेरा सुल्तान महमूदलाई रोक्ने जयपालको विफल प्रयत्न…भारतमा

मुसलमानी बीजारोपण···मुलतान, थानेश्वर, सोमनाथको लूएठनका अराजकमय कालमा··· वंग देशमा, सेनवंशको राज्य···कर्नाटक का सेनवंशीय राजाहरूले बौद्धहरूको दमन गर्नु···विजयसेन····बल्लालसेन···कान्यकुब्ज बाट आएका पंच ब्राह्मणहरूको वंगालमा कुलीनताको स्थापना···वंगाल का अन्तिम राजा लक्ष्मणसेन····सत्र जना अस्वारोही साथी हरूका साथ आएको वख्तियार खिजलीको वंग विजय····खिलजी वंश को प्रादुर्भाव····काकाका रक्तले मुछिएको हातले अलाउद्दीन खिलजीको भारत साम्राज्याधिकार····मेवाड़ (चित्तौड़) माथि आक्रमण····यौटा मेवाड़ी जीवित रहे सम्म पठानहरू लाई चित्तौड़मा पस्न दिन्नौ भन्ने मेवाड़ीहरूको प्रतिज्ञा···· वीर गोरा, किशोर वादलको आत्मोर्सग···मेवाड़पतन···अला-उद्दीनको चित्तौड़ प्रवेश····राजपूत रमणीहरूको जौहर···· पद्मिनी र लाखौं राजपूतिनीहरूको चिता प्रवेश···त्यसै चिता का अग्निले मानू तैमूरको रूप लियो···चारै तिर लाशको थुप्रो, नरमुण्डको पहाड····खिलजी वंशको पतनका बेलामा···मोगल बाबर को भारत प्रवेश···महाराजा संग्रामसिंह (सांगा) को प्रतिरोध···जातीय विश्वासघातले सांगा असफल···मोगल साम्राज्य स्थापन····हुँमायूँ···पठान शेरशाह को अभ्युदय तथा लुप्त हुनु···महान् अकबर····शाहजहाँ····औरङ्गजेव···जहाँगीर मोगल साम्राज्यको अवनति महाराष्ट्रको उत्थान····मोगल साम्राज्य र भारतीय नरेशहरू पेशवाका संमुख नतमस्तक···· स्वेत दस्यू अंग्रेजहरूको प्रवेश···गृहकलह र संघर्ष····ईस्ट-इण्डियन कम्पनी को ताण्डव····सन् १८५७ को राष्ट्रीय संग्राम··· वृटिशसाम्राज्य स्थापनकाल सम्ममा हामीले कहीं कतैं नेपालमा चलिरहेको वर्तमान दस्युतंत्र मूलक शासनपद्धति पाउँदैनौं।

ईस्वी सन् का १९१ वर्ष पूर्व राजधर्म क्षमता गर्व शक्तिले उद्धत भएका र अर्थ विलास उच्छृङ्खल बौद्ध भिक्षुहरूका हस्त-चालित पुत्तली अन्तिम मौर्य सम्राट् बृहद्रथको हत्या गरी तिनैका सेनापति पुष्पमित्रले भारतमा वैदिकधर्मको पुनरुद्धार गरे सरी नेपालका कँवरखलकका राणाहरूले नेपालको शाह वंशलाई निर्वंश गरी सिंहासन हस्तगत गर्न समर्थ भए गरी—नेपाललाई आफ्नै देश संझेको भए आज नेपाल को इतिहास को धारा नै अर्को हुने थियो।

ईस्वी सन् ५५१ मा कश्मीर नरेशको शरण पाई ज्यान जोगाउने हूणराज मिहिरगुलले पछि धोका गरी—कश्मीर राज्य हस्तगत गरेको थियो। त्यस घटनालाई इतिहासले विश्वासघात भनी संबोधन गरेको छ, भने पुस्तौं देखि नमक खाई आएका नेपालका महाराजाधिराजका सामान्य नोकर कँवरखलकका राणाहरूले चलाएको स्वेच्छाचारी शासन पद्धति र देशको शोपण गरी अवैध रूपले देशको सत्वलाई विदेश ओसारेको लाई डकैती वा दस्युतंत्र मूलक न भनी के भन्नु ?

संसारका इतिहासमा राजा किंवा प्रजाका स्थानमा फ्रांस का दुर्बल राजा १३वाँ लुइका राज्यकालमा आर्मण्ड जीन डुप्ले रिसेलू नामको धर्माचार्यको प्रधान मंत्री शासन पद्धति, जापानको सोगन वंश शासन, मराठाको पेशवा वंश शासन र मैसूर राज्यमा हैदरअलीले चलाएका शासन पद्धतिमा पाइन्छ। देश र जातिका दुर्दिनमा देशलाई आपत वाट छुटाए र राजा र प्रजा का सहयोगले फ्रांसको धर्माचार्य रिशेलू जापानको सोगन र मराठाका पेशवा र राजाज्ञाले हैदरअलीहरूले देशमा मान्यता पाएका थिए। उपरोक्त मंत्रिशासन चलेका राज्यमा फ्रांसका रिशेलू वाहेक प्रधान

मंत्रित्व उत्तराधिकारको क्रम पुत्र संतान तिर हुन्थ्यो तथा त्यसमा तिनीहरूको खलकीय स्वार्थ निहित भए पनी देश तथा राष्ट्रका प्रति विश्वासघात गर्ने भावनाले प्रवेश गर्ने गुंजायस थिएन।

रिशेलू सोगन पेशवा वा हैदरअलीका हातमा शाही सत्तात्मक प्रधानत्व आएर पनी देशका अन्य भारदार सर्दार वा जनताका हकमा रत्तीभर पनि न्यूनता गरिएको थिएन। जनताले आफ्ना योग्यतानुसार उमराव, सर्दार, जागीरदार र दस दस हजारी मनसबदारको पद पाउने गरेका थिए। त्यस शासन पद्धतिमा राजालाई ईश्वरवत् गराई तिन्का सम्मान या सार्वभौमिक सत्तामा खलल न गरी प्रधानमंत्रीले भारदार तथा जनताका सहयोगले शासन संचालन गरी देशलाई सर्वथा सुखी तथा सम्पन्न गराएका थिए। सब भन्दा मुख्य कुरो ता—तिनीहरूले देशको एक पैसा विदेश लगेका थिएनन् बरु—त्यस ठाँऊमा अन्य राष्ट्रका संमुख आफ्ना राष्ट्रलाई प्रमुख स्थानमा पुऱ्याई विदेशबाट धनलाभ गरी देशलाई वैभवशाली तुल्याएर देशका रक्षामा आत्मोसर्ग सम्म गर्ने गरेकोले नै तिनीहरू राजाका विश्वासपात्र तथा जनताका श्रद्धाभाजन भएका थिए।

त्यस ठाँऊमा देशका शत्रु अंग्रेजहरूका प्रश्रयले देशाभिमानी वीर भारदारहरूको कायरतापूर्ण हत्या कोतपर्व र भांडारखालपर्वको नृशंस हत्याकाण्ड गरेर कँवरखलकका राणा शासनको प्रादुर्भाव भएको र भाई क्रमरोलले देशलाई शोषण गर्ने घृणित प्रथा चलेको हो। जंगबहादूर कँवरले सत्ताधिकारमा आफ्ना सात भाईको सहायता र सहयोग पाएको थियो तथा जस्तो किसिमका विश्वासघाती हत्या र षड्यन्त्रपूर्ण कार्यकलापले तिन्ले

शासनाधिकार हात लगाएका थिए,त्यस्ले तिन्लाई तिन्को त्यो पद स्थिर रहला भन्ने रत्तीभर विश्वास थिएन। आफ्ना त्यसै विश्वासले तिन्ले देशको समस्त धनलूटेर आफ्नाघरका ७इनार मा गाडी दुर्दिनमा काम लाग्नेछ भनी सुरक्षित गराएका थिए। जस्ता प्रकार स्वयं जंगबहादूरले अनायास धन कूवेर भई वैभव तथा ऐश-पूर्ण जीवन विताउन पाएका थिए, त्यै किसिमले आफ्ना भाई भतिजाहरूलाई पनि धन सम्पन्न हुने तथा ऐशको जीवन बिताउने मौका दिन दाज्यूका मृत्यु पछि भाईले नेपाल राज्यको ठिकेदार मुख्तियार हुने रोलको चलन चलाएका हुन्। आफ्ना त्यस् अनर्गल तथा दस्यूतंत्र मूलक शत्तालाई दृढ गराउन निजले समस्त देशवासीहरूको गाँस खोसेर देशका उच्च र संमानित पदहरूमा आफ्ना वंश खलकका मानिसहरूलाई मात्र अधिष्ठित गराएका थिए। त्यै अराष्ट्रीय भावना आज पर्यन्त देश मा भएकोले भएभरका कँवरखलक का मुख्तियारहरूले आफ्ना कार्य कालमा केवल मात्र आफुलाई धनी बनाउन देशको सके सम्म दोहन गरेको छ। त्यस् राष्ट्रघातक निरंकुश लूटले गर्दा देशको कोष रिक्त भई देशको धन यौटा प्राइमिनिष्टर नाऊँका डाकू सर्दारका धनागारमा जम्मा हुन थाल्यो। पछि देशघाती कँवरखलकका राणाहरूले यौटाका घरमा जम्मा भएकोत्यो धन र सत्ताका अधिकारमा लुब्ध भई आफ्नै काका दाज्यू भाईहरूको समेत हत्या गरी रोल उच्छीट्याउनलाई वंशघात गर्नमा पनी द्विविधा मानेका छैनन्। अर्थ लोलुप मित्र केवल अर्थ लोभ मा नै रहन सक्तछ, पिता पुत्र वा रक्त सम्बन्ध ले पनी अर्थ-लिप्सुहरूको मन फर्काउन सक्तो रहेन छ। आफ्नै काका वा दाजू भाईका हत्यारा कँवरखलकका राणाहरूलाई देश वा देशी-यताको विचार गर्ने समय नै काहाँ छ। जंगबहादूरले बीज वपन

गरेको चक्रवर्तिन्द्र लूटको र आत्मपोषणको भावना गरिएको कृत्याकृत्य र वीर शम्सेरले चलाएको पितृ-वंश-गोत्र हत्या आज देशका निमित्त जहरबात तुल्य भई आएको छ। त्यसै भावनाका वशीभूत कँवरखलकका राणाहरूले देशको लूटेको धन देशमा न राखि विदेश पुन्याएर देशलाई नै उजाड गरि देशको श्री सम्पत्ति नष्ट गरि दिएको छ।

फ्रांसमा चतुर्थ हेनरी छि पदुर्बल राजा तेरहवाँ लुई भयो, तर त्यस्का राजत्व कालमा फ्रांसमायउटा अर्को राजनीतिज्ञ शक्तिमान भै उठेको थियो,त्यस्को नाऊँ आर्मण्ड जीन डूप्ले कार्डिनल रिशेलू थियो, त्यस्ले यूरोप का राष्ट्रहरूमा फ्रांसलाई प्रमुख स्थानमा खैचेर ल्याएको थियो।

पादरी धर्माचार्य रिशेलू राजमाता मेरी डी मैडिची को प्रीति-पात्र थियो, तर राजदर्बारका अन्य प्रीतिपात्रहरूका प्रतिकूल त्यो शक्तिवान मानिस थियो र फ्रांस को कल्याण गर्नु नै त्यस्का जीवन को ध्येय थियो। त्यो यूरोपका महान् राजनीति ज्ञातामा पहिलो थियो, जस्ले आफ्ना राजा या राष्ट्रका नाऊँ मा स्वयं शासन गरेको थियो।

रिशेलूले नै समुद्र पारी सम्म विस्तृत साम्राज्य फैलाएर मर्यादामा उच्च र संस्कृति र समृद्धिले पूर्ण यौटा महान फ्रांस राष्ट्रको जग बसाएको हो। आफ्ना मृत्यूका पहिले त्यसले फ्रांस को शक्ति र मर्यादा लाई चरमसीमा सम्म पुन्यायेको थियो।

सन् ११९२ मा जापान देशमा बर्बर दस्यूहरूको उत्पात बढेको र त्यस उत्पातलाई दमन गर्ने तत्कालिक जापानका महामंत्री योरी-तो-मे लाई जापान सम्राटले सी-ए-ताई सोगन (बर्बर दस्युहरूको दमन गर्ने महान् सेनापतिको) उपाधि दिएको थियो। त्यसै बेला देखी जापान मा सोगन

शासन पद्धति चलेको थियो। सोगन शासन कालमा जापान सम्राट मिकाडो देवता तुल्य मान्य थिए तथा देशको जनता पूर्णतः सुखी भई जापान वैभवशाली समेत भएको थियो। उन्निसौं शताब्दि मा जापानले आफुलाई सामन्ति सिमाबाट निकालेर अभ्यूदय पथमा अग्रसर हुन खोजे पछि स्वयं सोगन-हरूले अपूर्व त्याग देखाएर आफ्ना शक्तिलाई मिकाडोका पाऊमा समर्पित गरे। त्यस पछि जापानले गरेको सय वर्ष भित्रको उन्नति संसारले देखे को छ।

ठीक त्यै किसिमले सत्रौं शताब्दिमा छत्रपति महाराजा शिवाजील स्थापित गरेको मराठा राज्यको तिन्का पुत्र शंभा-जीका पालामा अस्तित्व सम्म बाँकी रहेको थिएन। त्यस बेला मराठा मंडलको स्थापना भए पछि बाजीराव प्रथम लाई पेशवा (नेता) को पद मिल्यो। त्यस पछि पेशवा-हरूले शिवाजी को लुप्त राज्य को उद्धार मात्र हैन कि सम्पूर्ण भारतमा मराठाहरूको एकाधिपत्य कायम गरेका थिए। यहाँ सम्म कि पछि दिल्ली का मुगल सम्राट शाहआलमले समेत पेशवालाई आफ्ना भारत साम्राज्य को "वजीरए मुतलिक" (शाहि सत्ता सम्पन्न महामंत्री) बताएर निजलाई महाराजाधिराजको पदवी समेत दिएका थिए। त्यस बखत पनी पेशवाहरूले आफ्ना स्वामी छत्रपति महाराजको आज्ञा लाईनै सर्वोपरी मान्ने गरेको थिए। पेशवाहरूले विदेश बाट जय लाभ गरी ल्याएका धन रत्न या बिजीत भूभागलाई राजा, सामन्त र प्रजामा बराबर वितरित गर्ने गरेका थिए। आज पनी भारत भरीमा सर्वत्र फैलिएको मराठा राज्य, तिन्का जागीर राज्यहरूको दुई अढाई सयको संख्या र राजघाट देखि अस्सी-काशीका देवमंदिर मठ राज्यहरू र

घाट सम्म बनेका घाटहरू त्यस्का प्रत्यक्ष प्रमाण छन् । पेशवा वा तिन्क सर्दारहरूले आफ्ना प्रत्येक देश विजयमा गरिएका मारकाटका प्रायश्चित स्वरूप काशीका मन्दिर र घाटहरूको निर्माण भएको हो । देश विदेश बाट विजय लाभ गरी ल्याए का धन वैभवले सबै मराठाराज्य अलकापुरी तुल्य देखिन्थ्यो भन्ने कुरा अंग्रेजहरूले पनी स्वीकार गरेका छन् । अन्तमा पेशवाहरूले अंग्रेज दस्युहरूका विरुद्ध आफ्ना देशका रक्षा-मा आफ्नो बलिदान गरेको कुरो र तिन्का अन्तिम वंशज पेशवा नानारावले हाम्रै देशका माटामा पुरिएको कुरा यसै इतिहास का पृष्टमा पाउनु हुने छ ।

अठारौ शताब्दिमा मैसूरका हिन्दूराज्यमा हैदरअली भन्ने कुनै एक मुसलमान सैनिकले स्थापित गरेको शासन प्रणालीको नेपालमा जंगबहादुरले लादेको ठिकेदारी मुख्ति-यारी को अवश्य समानता हुन्छ । जस्ता प्रकार हैदरअलीले मैसूरका हिन्दू राजालाई महल भित्र थुली, तिनूलाई स्वामी, मानेर पनी स्वय आफु सुल्तान भएको थियो, ठीक त्यै प्रकार जंगबहादुरले पनी श्री ५ नेपालेश्वर सुरेन्द्रवीरविक्रमशाह बाट कास्की र लम्जुङ् जागीर को जागीरें महाराजा पद बक्साई त्यस् जागीरे महाराजपदबीका प्रदर्शन ले दुनियाँमा आफुलाई नेपालको महाराज नै प्रदर्शन गर्न थालेका हुन् । दुर्भाग्यले तथा कँवर खलकका राणाहरूका निमक हरा-मियत पूर्ण सफल षडयंत्रहरूले जगबहादुरले आफ्ना मालिक राजा सुरेन्द्रवीर विक्रम शाहको विश्वास को र पछि हुने ठिकेदार मुख्तियारहरूले आफ्ना समयमा आफ्ना अन्नदाता तथा पद-प्रवर्तक महाराजधिराजलाई नाबालिक पाउदै गएको ले तिनीहरूले त्यस्को नमकहरामियत पूर्ण नाजायज फायदा

उठाएर क्रमशः आजको दस्यु तंत्र मूलक सत्ता अधिकार कायम गरेका हुन् । हैदरअली विदेशी मुसलमान थियो तथा मौका पाएर त्यस्ले मैसूरका हिन्दू राजालाई हटाएर आफु सुल्तान हुनमा त्यस्का देश वा धर्ममा अधर्म मानिन्थ्यो । साथ साथ त्यस्ले राजा कृष्णवदारियरलाई तिन्का काका शिववरम् वदारियरका आक्रमणबाट बचाई आफ्नो पराक्रम र बाहुबल का भरले त्यस पदलाई प्राप्त गरेको थियो । तेति हुँदा पनि पछि विदेशी लूटेरा अंग्रेजहरूका दौरात्म कालमा देश रक्षार्थ एक्लै वा मराठाहरूका सहायताले हैदरअलीले अंग्रेजहरूलाई पद पदमा लाँछित गरेको थियो । त्यस्को पुत्र टीपू सुल्तानले ता अंग्रेज हरू बाट स्वदेशका रक्षामा आफ्नो आत्मदान गरेको कुरामा इतिहास साक्षी छ । त्यस ठाँऊमा विशुद्ध देशवासी, घिराज कुलको पुस्तौ देखि नमक खाई आएका तथा राजा सुरेन्द्र विक्रमका विश्वास्त पात्र नोकर जंगवहादुर कँवरले देश तथा स्वामीघातक कार्य द्वारा देशमा अंग्रेजहरूको प्रभाव स्थापित गरी, आफ्नो तथा आफ्ना वंशको लूट सत्ता देशमा लादेका हुन् भन्ने कुरा विर्सनु हुदैन ।

देशमा लूट शासनको चलन चलाउने जंगवहादुरकँवर तथा पछि हुने कँवरखलकका मुख्यतियार हरूले देशको समस्त आय लूटेर पनी चित्त न बुझेको ले हिजो आज तिनीहरू टक(Mint) का खेलले समेत देशवासी हरूको पाकेटको धन आफ्ना हात लगाउने नारकीय लूटमा संलग्न छन्। कँवरखलकका प्रथम ठेकेदार मुख्यतियार सानु औकातका जंगवहादुरलाई आफ्नो जागीर,वीर्ता,भत्ता प्रशस्त छदाँ छदै पनि तिन्ले भारतका गदरमा लुटेको अगाध धन र नेपालका आयको वचतका धनले आफ्ना घरको सात ईनार पुरेको थिये ! दुस्रा ठेकेदार बम्ब-

बहादुरले आफ्ना सानो कार्य कालमा विशेष लुट्न न पाए पनि प्रशस्त वीर्ता र रुपियाँ जमा गरेका थिए। तेस्रा ठेकेदार रणोद्दीपसिंहले आफ्ना मन्त्रित्व कालमा देशका प्रति अधर्माचरण न गरेको ले आफ्ना भतिजाहरूको गोलीको शिकार हुनु पर्‍यो। आफ्ना वृद्ध र निस्सन्तानी काकाको रक्तले हात मुछेर भएका तथा राजा पृथ्वीवीरविक्रमशाहको नावालगियत राज्यकाल पाएका चौथा मुख्तियार वीरशमशेर आफ्ना विलासप्रियता स्वेच्छाचारिता तथा धनलिप्सा चरितार्थ गर्नमा प्रसिद्ध छन। तिनले आफ्ना कार्यकालमा देशको आयका लूटका साथ मुलकीखान अड्डाबाट समेत रुपिया झिकेर प्राईमिनिस्टर हुनेले खजाना लुटने-प्रथाको प्रचलन चलाएका हुन्। पाँचौ मुख्तियार सुधार प्रिय देवशमशेर आफ्ना सुधार प्रियताले हुत्तिएकाले तिन्ले देशको विशेष धन बिदेश पठाउन पाएनन्। महान धनलिप्सु तथा महाराजधिराज त्रिभुवन वीर विक्रम को नावागित को नाजायज फाईदा उठाई तानाशाह भएका चन्द्रशमशेरले आफ्ना पाला मा कलकत्तामा Buying बाइङ्ग एजेन्सी नाँउको कोठी स्थापना गरे पछि देशको समस्त आय नोट सटनीका नाँउले बिदेशी बैंकहरुमा हुने मुख्तियार हरूका नाँउमा जम्मा हुने नयाँ किसीमको लूटको आविष्कार भएको हो। तिन्का पदानुयायी भाई सातौं मुख्तियार भीमशमशेर जस्का पालामा तिन्का अनैतिक पुत्रहरूको हुकुम हाकिमि चल्दथ्यो र तिनीहरूले आफ्ना पिताका कार्यकालका लघुताका दृष्टिमा देशको ज्यादा से ज्यादा धन चुस्ने प्रयन्त गरेका र तिन्का जेठा पुत्र हिरण्यशमशेरले जबरजस्ती तीन साँचो ल्याई श्री ५ सर्कारको बडाठुकुटी तोषाखानाको रुपिया समेत बलजफ्ति झिके का थिये। इनले भाउले १७)

रुपिया सैकड़ा भरीका मोलको चालीस लाख रुपियाको चाँदीमा टक लगाएर तेसलाई करोडाँ रुपियाँमा परिवर्तित गरी देशवासीहरुका पाकेटको धन वेसरि लूटेका थिए। आठौं मुख्यतियार युद्ध शमशेरजंगको शासन वैचित्र तथा लूट आफ्ना सबै दाजु भाईहरू भन्दा एक विता बढता नै थियो। तिन्का पालामा भए को यूरोपीय द्वितीय महासमरले गर्दा चाँदीको भाउ बढ़ेको ले तिन्ले पाँच करोडको कागजी नोट चलाई तेस्को नगद आफ्ना उदरस्थ गरेका थिए। नवौं मुखितयार सुधारप्रिय तथा दम्बु पद्म-शमशेरले पनि देशका लूट बाट र टकका खेलमा राम्रो कमाई चलाई आफ्ना द्वैध खेल, जनतामा सुधार दिने कहलाउने र आफ्ना दाजू भाईमा कडा देखाउने चालले राजकोषको दुई करोड़ रुपियाँ पुरस्कार ली पदच्यूत हुनु पर्‍यो। देशका वर्तमान दसवाँ कँवरखलक का प्रधानमंत्री मोहन शमशेर जो आफ्ना धन लिप्सु पिताका धनका विशिष्ठ भागका अधिकारी भएर पनि आफ्ना धन-लिप्सामा आफ्ना पिताका आदर्शका अनुयायी हुन् आज देशको सर्वतोमुखी, शोषण गर्न र देशलाई ध्वंसका गर्तमा गिराउन कटिबद्ध भएका छन्। देशको समस्त धन रत्नलाई लूटने परम्परा बाहेक इन्ले पनि टकका खेलमा निकलको करोड़ौं करोड़ रुपियाँ चलाई सहज प्रयासमा दुनियाँको धन लूटने चेष्टा गरिरहेका छन्।

यस किसिमले देशको सकेसम्म शोषण गरेर तथा समाज-लाई पतनका गर्तमा खसाएर मात्र कँवरखलकको चित्त बुझेन। तिनीहरूले आफ्ना ऐश र विलासका निमित्त देशको नैतिकता तथा चरित्रगुणलाई समेत भ्रष्ट गर्न केही बाँकी राखेका छैनन्। इटली को भ्रष्ट अधिनायकतंत्रको नेता मुसोलिनी

जसले अवसीनियाँका विजयका उपरान्त अबनिशीयाँका राजा सामन्तहरूले आफ्ना आफ्ना प्रमोदलाई राखिएको "हरेम" केटी रखौटी प्रथालाई एक दिनमा हटाएको थियो, तेती सम्म पनि हाम्रा स्वयंभू कँवरखलकका राणा हरूलाई विचार गर्ने शक्ति छैन। विलासी नारकीय पशु कँवरखलकका राणाहरूले नेपाली मातृजातीका लाखौ अवलाहरुलाई साम दाम दण्ड भेद नीतिले आफ्ना महलका पर्खाल भीत्र वंद गराएको छ। त्यसप्रकार जबरजस्ती हजराँ बनाइएका गोपिनीहरूका कृष्ण केवल मात्र महल को मालिक हुन्छ, चाहे त्यो यौटा भडुवाँ बाट तिनी हरू तृप्त हुन वा नहुन, तिनीहरुलाई परपुरुष संग बोल्न सम्म दिईन्न। शंका मात्रले तिनीहरू भीषणोत्तर सजाय पाउछन्। राणा भनाउनेहरूले अफ्ना इच्छानुरूप गोपिनीहरू संग क्रीडा-रत हुन आफ्नो जन्म सिद्ध अधिकार मानेका छन्। ती नार-कीय पशुहरूले मातृजाति बाट सर्वाङ्ग नग्न भई खुला ठाउँमै पोसाक फेराउनु, दिसा-पिसाव गरी आफ्ना गुह्याङ्ग धुवाउनु यहाँ सम्म कि संभोग जनितकालमा पनि ईश्वर प्रदत्त आफ्ना बाहुलीको प्रयोग न गरि तिनैहरू बाट आफ्ना गुह्याङ्गको प्रयोग पछि त्यस्को स्वच्छता गराउदछन्। तिनीहरू ले खाने कुरा खुवाउनु पान सुपारी खुवाउनु ता तिनीहरूको मुख्य कर्तव्य नै भएको छ। तेत्तिले न पुगेर ती नीच कामुक हरूले आफ्ना व्यभिचार शक्तिको प्रदर्शनलाई आफ्ना नाता कुटुम्ब दिदी बहिनी भाउजुहरूको. यहाँ सम्म कि दूध खुवाउने धाई जनित संसर्ग लाई पनि ठुलो काम गरे झैं माने को छ। यस किसीम का अनाचारिताले संत्रस्त भएर देशको मातृजाती आफ्ना देश बाट वाहीर भारतमा आउन लालायित भयेका ले तिनी कुटनीहरूको सहज बहकावामा लागी देश बाट

भागेर विदेश आउन पाए आफ्नो ठूलो सौभाग्य सम्झन लागेका छन् । स्वयं सत्ताधारी कँवरखलकका बैन्हीछोरीहरू पनि भारतवर्षका गरीब गृहस्त सँग वैवाहिक सम्बन्ध हुन पाएमा अहोभाग्य संझी रहेका छन्।

त्यस प्रकार देशमा आफ्नो निरंकुश शासन स्थापित गर्न समर्थ भएका जंगबहादुर वा तिन्का पछिका मुख्तियार ठेकेदार-हरूले देशरूपि जेलखानामा कैदी तुल्य भएका ६४००००० लाख प्रजाजन संग भेट वा कुराकानी सम्म न गर्न पाउने स्वयं देशका नरेश तथा वहाँका सन्तानहरूलाई र अग्ला अग्ला डाडाका परिधिले घेरिएका समग्र देशवासीहरूलाई आधुनिकता तथा राजनीति ज्ञान बाट छुट्याएर राख्न कँवर खलकका राणाहरूले देशको शिक्षा व्यवस्थालाईनै बन्द गराएका छन । जंगबहादुर देखि वीरशमशेर सम्मका प्रत्येक हुने मुख्तियारहरूले आफ्ना त्यस पचास वर्ष भित्रका कार्यकालमा अरबौं रुपिया, असंख्य रत्न र विशाल भूमाग लुटेर जम्मा गरेर पनि देशमा यौटा विद्यालय सम्म न हुनदिनु त्यसको प्रत्यक्ष प्रमाण हो । चन्द्रशमशेर जसले एक्लै आफ्ना तीस वर्षका कार्यकालमा देशको असीमित भूभाग, अगाध रत्न, अरबौं रुपिया विदेशी बैंकमा सुरक्षित गराएका थिए, तिले आफ्ना बढी रहेका सन्तानहरुका शिक्षाका निमित्त बनाइए को काठमान्डूको यौटा विद्यालय र कालेज र दुई चार स्कूल र पाठशाला वाहेक आजका यस परमाणु युगमा पनि ६४००००० लाख जनताको ५०० स्काएर माईल परिधि भएको देशमा विश्वविद्यालय तथा वैज्ञानिक विद्यालयका ठाउँमा स्वतंत्र शिक्षाका निमित्त प्राईमरी विद्यालय सम्म पनि छैन ।

जंगबहादुरका कार्यकालका पहिले नेपाली मात्रको हैन की समस्त हिन्दूजातिको शिक्षाको माध्यम संस्कृत थियो। त्यस बेला नेपाली प्रजाजन मात्रले आफ्नो योग्यताले राज्यको प्रत्येक पद प्राप्तगरी समुचित अर्थ पाउने र आफ्ना कार्यका पुरष्कारमा जागीर बीर्ता पाउने गरेको ले तिनीहरुले भारत झरी विद्या अध्ययन र संसारको आधुनिकताको ज्ञानार्जन गरी देश को उत्थान कार्यमा सहयोग गर्ने मौका पाउँथे। तीनै विद्वान मनिषीहरुले हाम्रा आर्य परम्परा अनुसार आफ्ना घरमा गाउँ र छिमेकका बालकहरुलाई निशुल्क शिक्षा दानगरी देशमा शिक्षाको प्रसार गराउँथे। त्यस ठाँउमा कँवर खलकका राणाहरुले आज १०४ वर्ष सम्ममा राज्यको सबै श्रेष्ठ पदहरु आफैले लिनेर देशको लाखौं विगाहको भूभाग बीर्ताका नाउँले अठ्याउँदै गएकोले, निजामती र जंगी का हाराहारी २०) रुपिया महिना वेतन पाउने र खेतीगर्ने सम्म लाई खेत न पाई देशमा मात्र हैन की परदेशमा समेत कुली खलासी र दर्वानी को मजुरी गर्न कर लगाइएका दुनियाँले देशमा शिक्षा व्यवस्था नभएकोले आफ्ना छोरा संतानहरुको शिक्षा भारत पठाई कसरी दिलाउन सक्के हुन्। यसप्रकार आफ्ना स्वार्थमय डकैती र निरंकुशतालाई दुनियाँले वुझ्न न पाउन भनी आफैले आखाँमा पट्टी बाँधी संसार ज्ञान बाट वंचित र अशिक्षित गराइएका जनताको अज्ञानताको आडर त्यस्को दुहाई दी तिनीहरु आज प्रजातन्त्र राज्य संगठन गर्न इच्छुक हुँदा हुँदै पनि जनता अशिक्षित भएको ल त्यसलाई क्रमशः गर्ने निश्चय गरका छौं, भनी ती देशलाई शोचनीय अवस्थामा पुर्‍याउने देशद्रोही राणा भनाउदाहरु कती लाज नमानी आज सभ्य संसारका सम्मुख

गाला-बजाई अझै आफ्नो लूट शासनको स्थिरताको स्वप्न देखि रहेकाछन् क्यार ? राणा भनाउदाहरुले शासन गरेको गत एक शताब्दी भीत्र जुन ठाउँमा अनेक साना साना युरोपीय राज्य, जापान, जरजर भएको टर्की, यहाँ सम्म की धर्मान्ध तथा पिछड़ेका मुस्लिम राज्य मिश्र, ईराक, ईरान या अफगानिस्तानले आफ्नो उन्नति र वैज्ञानिक अनुसन्धान मौलिकता, मानसिकबोध र आत्मचेतनालाई प्रगतिशील र उन्नतिशील बनाई संसारमा आफ्नो यौटा स्थान बनाएका छन्, त्यस ठाउँमा हाम्रो प्यारो देशलाई एकान्त स्वार्थी राणा भनाउदाहरुले आदर्श शून्य, विद्याहीन कलाकौशलले बञ्चित गरी आफ्ना स्वेच्छाचारी लूएठनले देशलाई निस्पन्द प्राणहीन गराई अंधकारका गर्तमा खसाएका छन।

विकृत मस्तिष्कका राजासुरेन्द्रका पंजापत्र र सबै भारदारले छानेर नेपालामात्य भएको भन्दछन् भने पनि जंगबहादुरले राजकुलको नुनको सोझो चिताई, दुनियाँलाई सुखी र सम्पन्नपारी, राजकाज चलाउने आहिभारा पाएर तथा पछि हुने मुख्तियारहरुले शिशु राजाहरु वाट त्यस सनद पत्रलाई दोहऱ्याउन पाएकोले नेपालका स्वयंभू ठेकेदार वनेका हौं भनी भन्छन भने पनि कवँर खलकका ति मुख्तियारहरुले देशलाई पतन्नोमुख गराउने, राज-कोष शून्य गराउने, देशको समस्त भूमार्ग वीर्ता जागीर र पेवा रूपमा आफ्ना चालीस जनामा वाडने, देशको धन आफ्ना नाउँमा विदेशी वैंकहरूमा पुऱ्याउने, जनतालाई अशिक्षित र कलाकौशलहीन र दरिद्र तथा निशक्त तुल्याउने,मातृजातिलाई आफ्ना विलासक्रीडा साधन बनाउने र देशलाई आधुनिक संसार बाट विच्छिन्न गराउने अधिकार ता पाएका थिएनन्। लुटेरा वर्वर डाकुहरुले सम्म न गरीने घृणित

काय गन हाम्रा कँवर खलकका राणा भनाउँदाहरुका शासनमा नैतिकता भन्ने वस्तुको कुनै स्थाननै छैन्।

यती हुँदा हुँदै पनि यस आधुनिकतम संसार लाई अंधो सम्झने कूपमण्डूक राणा भनाउने ती नकच्चराहरू अझै पनि आफ्ना यस लूट शासन कालमा केवल आफ्ना सुख सुविधाका निमित्त गरीएका यत्किंचित कार्यहरूलाई नेपालमा गरिएको महान् सुधार को नाऊँ दि आफ्ना जीवन कालमा स्वयं मपाईं भई आफ्नो विशाल विशाल सालिक बनाई त्यस्मा विरुदावलीहरू लेख्न लगाएका छन्। कँवरखलकका राणाहरूका त्यस सुधारहरूले तिनीहरूले र चौसट्ठी लाख देशवासीहरूमा विशेष कस्ले उपभोग गरेको छ र देशलाई आफ्ना पंजामा अठ्याई राख्नमा खलकका राणाहरूले गरिएका ती सुधारहरूले तिनीहरू लाई कत्रो मदत दिएको छ। त्यस्को बिचार तल गरीएकोछः-

सड़क को प्रवन्धः—आफ्ना गोडाका भरले हिडने चौसट्ठी लाख दुनियाँका निमित्त मधेस वा पहाड़का प्रत्येक गाऊँमा प्रकृतिले बनाएको गोरेटो वा खोला बगरका मार्ग बाहेक अरु कुनै मार्ग छैनन्। अवश्य आफुले वस्तु परेको शहर र जिल्लामा बनाएका सडकमा ठिकेदार खलक ले आफ्नो या आफ्नो परिवारको सुख सुविधामा विशेष विचार राखेको छ। ती सड़कहरू पनि १०) रुपया दरमाह खाने नेपाल का पदातिक सैनिक तथा तद्स्थानीय जनताका बेगारले बनेको छ। त्यस्का निन्नानवे प्रतिसत सुख सुविधामा कँवर खलकका राणाहरूको एकाधिपत्य छ।

जलकल प्रवन्धः—आफुले बसेका या वस्तु पर्ने स्थान शहर वा जिल्लामा मात्र गरिएको छ। त्यस्मा पनी दुनियाँका ती बाल्लवच्चाले बोबाटोमा बसेका सार्वजनिक धारा बाट

पानी व्यवहार गर्न पाउने स्थानमा ठिकेदार खलकले त्यसको उपभोग आफ्ना विशाल कंपौण्ड भएका बगैंचा उद्यान र क्रीडाउपवनको सिंचन, फोहाराहरू र प्रत्येक कोठाचोटामा गरी त्यस्का उपभोगका हकमा पनि आफ्नै एकाधिपत्य राखेकोछ।

टेलीफोन प्रबन्धः—दुनियाँले मुश्किल साथ पैसा खर्च गरी व्यवहार गर्न पाएका ठाऊँमा कँवरखलकका राणामात्रले आफ्ना मनोविनोद र ऐश आरामका निमित्त प्रत्येक कोठामा त्यस्को प्रयोग गरेको छ। साथ साथ आफ्ना लूट सत्ताका रक्षाका दृष्टिकोणले जिल्ला जिल्लाका कचहरीहरू सँग त्यस्को कनेक्शन मिलाएको छ।

बिजली प्रबन्धः—खलकदलले आफ्ना ऐश आरामका दृष्टिले आफ्ना महल कोठा चोटामा इच्छानुरूप व्यवहार गर्न पाएको र तिनीहरूका रेडियो, रेडियोग्राम पाइप पानी ओसार्न र घर घरमा चल्ने वायस्कोपहरूमा जती बिजली को व्यय गरिन्छ, त्यस्को सैकड़ा एक प्रति पनि ६४ लाख जनता ले उपभोग गर्न पाएको छैन। उस्माथि मोहन आकाश-वाणीका नाऊँले नेपालमा लगाइएको ट्रांसमिटर तथा रेडियो वार्ता गर्ने अधिकार मुख्तियार ठिकेदार वाहेक अरु कसै लाई छैन। नेपाल नरेश वा दुनियाँले व्यवहार गर्न पाएका रेडियोको व्यवहारमा पनि तिनीहरूको नै नियंत्रण रहन्छ, तथा तिनीहरूका विरुद्धको वा मन न परेको भाषण या राजनीति विषयका संभाषण, संसारको समाचारहरू आउने समयमा नरेश किंवा दुनियाँको बिजुलीको कनेक्सन काटीदिने गरेकोछ।

रोप-वे प्रबन्ध :—जनताले आफ्ना आवश्यकीय उपयोगी वस्तुहरु ओनार्स न पाई ठूलो कष्ट खाएका वखतमा पनि ठिकेदार मुख्तियार खलकका ऐश आरामको सामग्री, शृंगार साधन,

विदेशी शराब वा तिन्का केलि कौतुकका मालहरु निशुल्क तथा विना परिक्षण सदा अवांछित गतिले गई रहेको ले त्यसमा पनी कँवर खलकका राणाहरुको एकाधिपत्य देखिन्छ।

रेल प्रवन्धः—आफ्ना यशगाथाका निमित्त र आफ्ना पालामा धीराजवाट वक्सिस पाएका नाऊँमा अठ्याएर लिए को विर्ताका जंगली भूभागलाई आबाद गराउन बनाइएकोले त्यस्मा पनि कँवरखलकका राणाहरूको शत् प्रतिशत् अधिकार सिद्ध भएकोछ।

सेना संगठन प्रवन्ध :—सिंहदरबारमा गरिएका एकमात्र शस्त्रास्त्रको संग्रह र आफ्ना कमानमा राखिएको सेनाका संगठनले खलकदलले देशका मुटुमा संगीन गाडी आफ्ना लूट शासनको आभ्यांतरिक दृढ़ता गराएकाछन्। अगि अंग्रेज प्रभू भारतवर्षमा रहे सम्म तिनीहरुका आज्ञाले संसारका कुनै युद्ध भूमिका लाखौं देशवासीहरूलाई कटाई आफ्नो वाह्यिक दृढ़ता संझने कँवरखलककाराणाहरूको देशद्रोहिताको चरम चमत्कार हो।

शस्त्र प्रवन्ध :—देशमा अगि सैनिक शिविर न भएका कालमा देशका आवाहनमा आफ्ना घरमा भएका हात हतियार ले युद्धाभियानहरूमा अग्रसर भई सफल हुने वीरनेपाली जनता लाई शस्त्र प्रवन्धका निहूँले निरस्त्रपारी खसी बनाएर खलक दलले आफ्नो लूटको स्थिरता देखेकाछन्। वृटेन वा यूरोपको कुनै राज्य या अफगानिस्तान आदि एशियाई राज्यहरूमा बन्दूक या पिस्तौलको लाइसेंस लिनु भारतवर्षमा रेडियोको लाइसेंस लिए जत्तिकै सुलभछ। त्यस ठाउँमा राज्य भरीमा ठिकेदार. दलका पिछूहरू बाहेक अरु कसैले पिस्तौल र बन्दूकको

लाइसेंस पाउन सक्तैनन् । राजधानीमा ता खलक बाहेक अरु कसैले पाउनु असंभवछ ।

यस किसिमले कँवर खलकका राणाहरूले आफु तथा आफ्ना वर्णशंकर खलकका राजकर्मचारीहरूलाई श्रेष्ठ र नेपाल का अन्य चौसट्ठी लाख जनता र अन्य राज्य कर्मचारीहरू लाई निकृष्टताका दुई श्रेणीमा विभक्त गरी मनुषत्व भन्ने कुराका विचारमा समेत तिलाञ्जली दिएको छ। नेपाल का कँवर खलकका राणा राजकर्मचारीहरूका निमित्त अरु जनता वा राजकर्मचारीहरू अछूत तुल्य छन् । प्रत्येक कुरामा समान भएर पनी ती दुवैमा फरक यत्ती मात्र छ कि—यौटा नमक-हरामियत बलले अधिक जागीर खाने श्री ५ नेपालेश्वरको स्वयंभु नोकर र अर्को नुनको सोझो चिताई कमति जागीरखाने श्री ५ नेपालेश्वरको नोकर हो । यस किसिमले गरिएका कँवर खलकका राणाहरूको प्रच्छन्न अत्याचार, उद्धत उच्छृङ्खलता, ऐश्वर्य र आडम्बरको प्रदर्शन गरिएका समारोहका संमुख अन्य चौसट्ठी लाख जनताको दरिद्रताको कठोर र घृणित उपेक्षणीय स्वरूप, अकारण संकोच, निकृष्टताको बोध, पंक्ति बहिष्कृत् वा अपंक्तिय हुने ग्लानिले देशको समाज पतन को उच्च पराकाष्ठमा पुगी सकेकोछ ।

स्वदेशी कँवर खलकका राणा भनाउदाहरूले नमक हरा-मियतले अठ्याएको अधिकारमा प्रमत्त भई आफ्ना स्वदेशमाथी जस्तो मनपरी—चलाएका छन्, त्यसका संमुख भूमंडलमा गुलामीलाई प्रसिद्ध अत्याचारको साम्राज्य फैलाएको अफ्रिका को जंजीबार, ट्यूनिस, मरक्को र अलजीरिया माथी विदेशी शक्ति बेल्जीयम, बृटेन, फ्रांस र पुर्तगालको शासन व्यवस्था र अमेरिकामा ........ हब्सीहरूलाई दिईएको द्वितीय

श्रेणीको नागरिकता पनि सराहनीय मानिने छ तथा विदेशी दस्यू अंग्रेजहरूले पराधीन भारतमा गरेको अत्याचार र लूण्ठन पनि तुच्छ देखिने छ। उदाहरणार्थ सन् १८५७ सम्ममा भारतवर्ष माथी आफ्नो एकाधिपत्य गरी त्यस एकसय वर्षका आफ्ना शासनकालमा अंग्रेजहरूले गरेको आफ्नो चरम अत्याचार र लूटेर लगेको दस अरब रुपयाका विषयमा आफ्नो विचार लेखेको दुईजना प्रमुख अंग्रेजहरूका पत्रलाई तल उद्धृत गरेको छ।

मद्रास सुप्रिम कोर्टका जज मैलम लूईनले कुनै भारतीयले "कालेज आफ दि इण्डियन रिभोल्ट" पत्रमा लेखेका पुस्तकका भूमिका लेखेको छ :—

"भारतवर्षमा समाजका सदस्यताका हैसियतले भारतीय र अंग्रेजहरु अनभिज्ञ छन्। हामी संग जनता को त्यै सम्बन्ध छ जो मालिक र कमारोमा हुन्छ। हामीहरूले प्रत्येक त्यस्ता वस्तुमा आफ्नो एकाधिपत्य गरेको छ, जसबाट देशवासी हरूलाई समाजमा उठाउन सक्दथ्यो या मनुष्यका हैसियतले तिनीहरूलाई ऊच्च गराउन सक्दथ्यो, हामीहरूले त्यसलाई जनता बाट खोसेको छ। हामीले जनता लाई भ्रष्ट चरित्र पारि तिन्का उत्तराधिकार हकलाई समेत रद्दगरेको छ। हामीहरूले तिन्का विवाह संस्थालाई बदलेको छ, र तिन्का गुठीलाई जफ्त गरेको छ र तिनीहरूलाई आपना उल्लेखमा कमारो तुल्य कलंकित गरेको छ। हामीहरूले भारतीय राजा हरूको राज्य खोसेको छ! आफ्ना लूट खसोटले देशलाई बर्बाद गरेको छ र हामीहरूले दुनियाँलाई दिनु सम्मको दुःखदी अधिकाधिक मालपोत वसूलेको छ। हामीहरूले भारतीय घरानियाँहरूलाई निर्मूल गरी तिनीहरूलाई आफ्ना कारिया तुल्याएको छ"।

सिंध बिजेता जनरल नेपियरले "लाइट एन्ड सेड्स आफ मिलिटरी लाइफ" भन्ने पुस्तकका पेज नम्बर २६७।२६८ मा लेखेको छ :—

"कुनै देशमा विदेशीहरू वाट पराधीन विदेशीहरूमाथी यस भन्दा नीच र क्रूर अत्याचारका निमित्त कुनै देशका शक्तिको उपयोग गरिएको होवैन। भारतलाई विजय गर्नमा अंग्रेजहरूको लक्ष्य—समस्त अत्यचारको लक्ष्य—धन हो, पैसा हो ! भारतवर्षमा पछिल्ला एकसय वर्ष सम्ममा हामीले देश वाट एक मिलियन पाउण्ड (प्रायः दस अरब रुपया) चूसेर लिएको छ । त्यस धनको प्रत्येक सिलिङ्ग रगत वाट उठाइएको हो, त्यस रगतलाई अंग्रेजहरूले पुछेको छ र ती हत्यारा हरूले, त्यसलाई आफ्ना पाकेटमा राखेको छ । तर अंग्रेजहरूले त्यस धन लाई जती सुकै पुछे वा धोए पनि त्यसमा लागेको रगतको टाटो मेटिन सक्तैन । त्यो टाटो त्यसमा सदाका लागी कायम रहने छ। यदि आकाशमा कुनै ईश्वर छ र जस्का संमुख "जातिको सामाजिक हित" देखिंदैन भने निस्संदेह अंग्रेजहरूले कुनै न कुनै दिन आफ्ना पापको अवश्य दंड पाउनेछन् । अन्यथा मनुष्यले ईश्वर लाई जे संझेको छ र आशा गरेको छ त्यो सब मिथ्या हो। "तिजारती माल बनाउने महान जाति" का नजरमा न्याय धर्म मजाकका वस्तु हुन् । यस किसिमका जातको सच्चा ईश्वर धन हो। यस विषय मा मेरा विचार विचित्र प्रतीत हुनेछन्। तर वास्तवमा ईष्टइण्डिया कम्पनीका स्वेच्छाचार का अपेक्षा स्वेच्छाचारी नेपोलियन लाई म अधिक मनपराउँछु। जो मानिस चक्रवर्ती राज्यको आकांक्षी हुन्छ त्यो आमतवरले पराजित जातिको भलाईको समेत विचार गर्दछ;

तर जुन मानिसलाई चक्रवर्तीन्त लूटको आकांक्षा हुन्छ, त्यस्ता मानिस आफुलाई मात्र धनी बनाउन शासन गर्दछन्। अंग्रेजहरूले दश करोड जनताको सुखको नाश गरेको छ। चक्रवर्ती राज्यको आकांक्षा गर्ने मानिस स्वर्गबाट पतित भएको फरिस्ता अर्थात् देवपुरुष हुन सक्तछ तर चक्रवर्तीन्त लूटको आकांक्षा गर्ने मानिस नरकमा जन्मेको शैतान हो।"

पाठकवर्गले माथि लेखिएका पत्रमा अंग्रेज, भारतीय विदेशी, दस करोड़ जनता, एक मिलियन पाउन्ड, जातिको सामूहिक हित, इष्टइण्डिया कम्पनी, तिजारती माल बनाउने महान् जाति लेखेका स्थानमा कँवरखलकका राणा, नेपाली, स्वदेशी, चौसट्ठी लाख जनता, दस अरब रुपया, नमकहरामीयत बलले, कँवर खलक कम्पनी, श्री ५ का पंजासनदका अधिकारी शब्दहरू बदली पढे गत १०४वर्ष भित्रमा आफ्ना स्वदेशी कँवर खलकका राणाहरूले देशमाथि गरेको अत्याचार राम्ररी बुझ्न सकिन्छ। कँवर खलकका राणाहरूले नेपालको सर्वतोमुखी शोषण त्यसै प्रकार र त्यसभन्दा अधिक परिमाणमा गरेका छन्, जस प्रकार र जस परिमाणमा अंग्रेजहरूले भारतको शोषण गरेका थिए। आफ्ना त्यस अनियंत्रित शासन तथा कृत्यका विषयमा ती विदेशी विजेता अंग्रेजहरूले ग्लानिता प्रकट गरेका छन्, त्यस ठाउँमा हाम्रा स्वदेशी देशका अन्नले पुष्ट भएका देशद्रोहीहरूले आफ्ना त्यस कुकृत्यपूर्ण कार्यलाई पनि ठूलो कार्य गरेको संझेका र गौरवताको अनुभव गरेका छन् र राजा, राष्ट्र, जाति, समाज र आफ्ना विरोधी व्यक्तिहरू सँग घृणा गर्नमा आफ्नो गौरवको रक्षा मानेका छन्। यस बीसवीं सदी का इतिहासमा हाम्रा कँवर खलकका राणाहरूको शासनको उल्लेख योटा भयंकर कालिमाका रूपमा छ।

पापको घड़ा एकनएक दिन फुटने छ तथा अति दबावले पानी बाट समेत विस्फोट हुन सक्तछ, भन्ने यति सानो कुराको समेत ज्ञान न भएका मूर्ख तर आफ्ना मपाई भावनाले आफुलाई संसार श्रेष्ठ सम्झने कवँर खलकका राणा भनाउदाहरूले बनाएको बालुवाको किल्ला, आफ्ना पूर्वज प्रबल प्रतापी बप्पा रावल, राणा हमीर, राणा प्रताप, प्रातःस्मरणीय पृथ्वीनारायण शाह आदि महापुरुषहरूका आदर्शानुयाई आफ्ना विमल र महान् वंशका यथार्थ वरपुत्र श्री ५ अधिराज त्रिभुवन वीरविक्रम शाहको अतुल धी-शक्तिपूर्ण महान् ऐतिहासिक उठाएको कदमले धरासाई भई सकेको छ । आफ्ना महान् वंशका श्रेष्ठ संतान तथा वीराग्रणी त्रिभुवनपतिले आफ्ना पितामह त्रैलोक्यवीरविक्रम, पिता पृथ्वीवीरविक्रमले अनुष्ठान गरेको आफ्ना भृत्यशत्रूहरूको विनाशको व्रत आफुले ४० वर्ष आफ्नै कमाराहरूको कैदीतुल्य भएर पनि त्यसका अन्तका निमित्त जुन् अदम्य साहसको परिचय दी बक्सेको छ, तेस्ले वहाँ पनि आफ्ना पूर्व पुरुषहरू तुल्य इतिहासमा स्वर्णाक्षरले लेखिने र नेपाली प्रजाजनमा प्रातःस्मरणीय भई बक्सेको छ ।

वीर सावरकरले लेखेको "सन् ५७ को भारतीय स्वतंत्रता संग्राम नाऊँका पुस्तकका पृष्ठ ३३३ मा" विदेशी दस्यु अंग्रेज मदारीका तुम्वडीका स्वरमा विमोहित भई दुई घूँट दूधका निमित्त भारतको नाश गर्ने जंगबहादुर लाई कालोनाग को संज्ञा दियेको छ । आफ्ना त्यसै भारत दमनका दासता को प्रदर्शनले नेपालमा लूट सत्ता कायम गरी दुई घूँट दूधले पुष्ट भएका तीक्ष्ण विष दन्तधारी जंगबहादुररूपी कालोनाग तथा अंग्रेजहरूका दासत्वमा प्रत्येक भारतीय स्वतत्रता संग्राम

हरुमा भारतीयहरुको रक्त बहाई तथा सुदूर युरोपीय युद्ध हरुमा आफ्ना देशवासी हरुलाई भेडाबाखाभैं कटाउने तिन्का विषधर बंशजहरुको विषमुखको फणा आज ठिक त्यै किसिमले सदा समरविजयी श्रीत्रिभुवनपति तथा वहाँका सिंह सावक-हरुका पाऊ ले रौदिन लागेको प्रत्यक्ष देखियेको छ। तथा तिनीहरूको दस्युतंत्र, आज आफ्नै कलंक तथा अपमानका ज्वालामा भस्म हुन लागेको छ, तिनीहरूका अहंमन्यताले तिनीहरू माथि नै आक्रमण गरेको छ, आफ्ना अत्याचारको पारितोषिक तिनीहरूलाई प्राप्त भइरहेको छ र तिनीहरू आफ्ना निश्चित अन्तको प्रतिक्षा गरि रहेका छन्। नैराश्यका काँडापूर्ण पंजाले तिनीहरूका शरीरलाई रक्ताम्य पारेको छ तथा आफ्ना त्यस रक्ताम्यको दानवीय शरीर लाई चारै तिर बाट कुक्कुर स्याल तथा गिद्धले लूछेको देखिरहेका छन्। तिनीहरू रातभरी आफ्ना सैय्याका तकियामा आफ्नो कपाल बजारेर आफ्ना दुर्भाग्यलाई सरापि रहेका छन् । तर यो दुर्भाग्य होइन, विधिको विधान हैन, करनीको फल हो, त्यसलाई तिनीहरूले अवश्य भोग्नुपर्नेछ।

जय नेपाल !



मुद्रक—गोपाल प्रेस, नाटियागेली रोड, काशी।

## सुब्बा होमनाथ उपाध्याय खतिवडा तथा लेखकको

### वंश परिचय

हाम्रो देश नेपाल अति प्राचीन तथा प्रसिद्ध देश हो। नेपालमा सत्ययुग देखितै मानिसको वस्ति राम्रो खेति पाति, सभ्यता र कलाकौशल वर्तमान थियो। भगवान् रामचन्द्रका कालमा नेपालका राजा सुधन्वाले जनकपुर गएको तथा भगवान् कृष्णका कालमा महाभारत युद्धमा नेपालका किराति राजा जितेद्राष्टिले पांडव तरफ भई युद्ध गरेको कुरा इतिहासमा स्पष्ट लेखेको छ। नेपालका काखामा योगिराज जनक तथा भगवती सीताजीको माइति देश जनकपुर राज्य थियो। त्यसैका दांजादांजी भित्र शुक्ल यजुर्वेद प्रणेता प्रसिद्ध स्मृतिकार याज्ञवल्क्य र विदुषी तथा उद्भट विद्वान् पत्नी गार्गीको आश्रम थियो। भगवान् गौतमबुद्धको जन्म नेपाल राज्यान्तरगत बुटवलको रुनेकेहि भन्ने स्थानमा भएको हो, बुद्धधर्म प्रचारमा नेपालको प्रमुख स्थान छ। स्वयं भगवान् बुद्ध र निजका भाई आनन्दले समेत नेपाललाई आफ्ना चरणरजले पवित्र गरेको थियो। विक्रमाब्द संस्थापक महान् चन्द्रगुप्त विक्रमादित्य तथा महान् भारत सम्राट् अशोक समेत नेपाल गएका थिए। सम्राट् अशोक की राजदुहिता चारुमतिले नेपाललाई आफ्नो वासभूमि बनाएकी थिइन्। तिनको विवाह नेपाल मै भएको थियो। निजले चाहबेल नगर बसाई त्यसठाऊँमा एउटा ठूलो वहाल पनि बनाए की थिइन्। नेपालले नै तिब्बत ( भोट प्रदेश ) मा शिक्षाको प्रसार गरे को थियो। नेपाली लिपिलाई नै तिब्बतीयहरूले ग्रहण गरेका हुन्। सातौं शताब्दिमा

नेपालका राजा उदयदेवकी भृकुटी नामकी छोरीको विवाह तिबूतका महान् सम्राट् "स्लोङ् सान् गम्बो" संग भएको थियो। तिब्बतमा बुद्धधर्म प्रचार गर्ने श्रेय तिनैलाई छ। तिब्वतीहरु अद्यावधि राजकुमारी भृगुटीलाई स्वेततारा देवीका रूपमा पूजा गर्दैछन् भन्ने कुरामा इतिहासले प्रकाश दिएको छ।

नेपाली कलाको प्रचार तिब्बत र चीन सम्म र त्यहाँबाट जापान, वर्मा, सिंहल, श्याम आदिका टाढा देश सम्म पुगेको थियो। बाह्रौं शताब्दिका प्रारम्भमा नेपाली कलाको चीनमा प्रदर्शन भएको थियो। आरनी नामक एउटा २२ वर्षीय नेपाली युवकले चीन देशमा गएर चमत्कारी स्तूप बनाए का थिये। त्यसै स्तूपबाट प्रभावित भएर तत्कालिक चीनसम्राट्ले त्यस नेपाली युवकलाई आफ्ना कलाविभागको नायक बनाएका थिए। त्यसै नेपाली कलाकारले बनाएको स्तूप, मंदिर, पगोडाहरु आज चीन, जापान आदि देशको शोभा बढ़ाई त्यसको साक्षी दिई रहेका छन्।

यस बाहेक परापूर्व काल देखि भारतीयहरुका काँधमा काँध जोरी भारतवर्ष माथि परेका संकटकालमा राजा जितेद्राष्टीले कौरव पांडव समरमा आउनु तथा चन्द्रगुप्तका पालामा विश्व-विजयी सिकन्दर शाहका मुख्य सेनापति सेल्यूकसलाई भारतबाट निकाल्ने संग्राममा नेपालले गरेको मदद तथा त्यही किसिमले हर एक विदेशी आक्रमणकारीहरुबाट अक्रांत भएका भारतका सहायतार्थ नेपाली वीरपुंगवहरुले शत्रुका प्रतिविरोध मा खड्गहस्त भएको कुराको पनि इतिहास साक्षी छ।

प्रातःस्मरणीय प्रबल प्रतापी गोरखेश्वर श्री ५ राजा पृथ्वी-नारायण शाहले नेपाल राज्य संगठन गर्न गरिएका युद्धहरुमा श्री कालू पांडे, वंशराज पांडे, कहरसिंह बस्नेत आदि गरिएका

वीराग्रणीहरुका भागीरथ प्रयत्नले साम्राज्य संगठित भएको तथा महान् चीन सम्राट्ले नेपाल माथि गरिएका आक्रमणकालमा आफ्ना प्रत्याक्रमणले श्री दामोदर पांडे आदि यथार्थ नेपालपुत्र-हरुले आफ्ना रक्तदानले नेपालको स्वतंत्रतालाई अक्षुण्ण राखेको कुरा पनि इतिहासले भनि रहेको छ।

सन् १८१४।१६ का अंग्रेज-गोरखा-युद्ध-कालमा भीमसेन थापा, अमरसिंह थापा, भक्ति थापा, बलभद्रसिंह कँवर आदि वीर श्रेष्ठ पुरुषसिंहहरुसे आफ्ना अपूर्व बहादुरी तथा आत्मोत्सर्गले नेपालको स्वतंत्रतालाई अक्षुण्ण राखेर नेपालको यशोगाथालाई समग्र भारत तथा सात समुद्र पारी विलायत सम्म पुऱ्याएको कुरामा स्वयं विदेशी अंग्रेज इतिहासकारहरुले संसारका इतिहासमा बेजोड छ भनि स्वीकार गरेका छन्।

यस प्रकार परापूर्वकाल ( हज्जारौं वर्ष ) देखि अगणित धर्माचार्य, कलाकार तथा वीरात्माहरुले आफ्ना धर्मोंपदेश, महत्तम् कलाकृति तथा आत्मदानले पवित्र, संगठित तथा सुरक्षित गरिएको नेपालीहरुको प्यारो देश नेपालमा धूमकेतु सरि प्रवेश गर्ने जङ्गबहादुर कँवर तथा तिनका उत्तराधिकारी कँवर खलकका राणाहरुले आफ्ना स्वार्थ वश विदेशी विधार्मी म्लेच्छहरुको पादानुवंदनले आफ्ना देशलाई एकै शताब्दिभित्र जस्तो पतनावस्थामा गिराई लूटेश्वर शक्तिपूर्ण शासन व्यवस्था चलाएको तथा नेपालका पुराना भारदार संतानहरुलाई निर्ममता पूर्वक मारे-काटेको तथा विदेश-धपाएको कुरालाई पनि इतिहास कराएर भनि रहेको छ।

यस कथानकका मुख्य नायक होमनाथ उपाध्याय खतिवड़ा पनि तिनै हतभाग्य पुराना भारदारहरु मध्येका थिए। तिनले कँवर खलकका राणा जंगबहादुर तथा तिनका उत्तरा-

धिकारीहरुले प्रचलित गरेको दलगत लूट, शासनप्रणालीको विरोध गरेका अपराधमा अडतीस सालपर्वमा परी भारत निर्वासित भई जीवन विताउनु परेको थियो ।

होमनाथ उपाध्यायको जन्म सम्वत् १९११ वैशाख शुक्ल सप्तमीका दिन नेपाल बाट १५ कोस पश्चिम कल्लेरी नगरका उच्च ब्रह्मणकुलमा भएको थियो । इनको जन्मका साथ महानताको स्वमेयमेव व्यवस्था पनि भइसकेको थियो। इनले आफ्नु वाल्यकाल तत्कालीन भावी सम्राट् वलीय-अहद महाराज त्रैलोक्यवीरविक्रमशाहका सहवासमा व्यतीत गर्ने सुयोग्य पाएका थिए। वलेट महाराज सँग निजको भ्रातृत्व संबन्ध थियो। तथा दुबै जना परस्परमा अनुरक्त पनि थिए। तिन्ताक सम्म नेपालमा आफ्नो लूटेश्वरी सत्ता स्थापित गर्न सक्ने स्वयं जंगबहादुर कँवरले व्याहन बेलूका हनुमान् ढोका दरबारमा हाजिरी दिनु पर्दथ्यो। निजले महाराजाधिराजको खोपीमा हाजिर हुँन जाँदा तल ढोका देखि नै कुर्नेश गर्दै जदौं २ भनी दुबै हातले सलाम गर्दै जानु पर्थ्यो। धिराजलाई जागा गराउनु, मुखारी गराउनु, र आफ्ना पिठ्यूमा बोकी गद्दी बैठक सम्म पुऱ्याउनु, गद्दे बैठकको कार्य सिध्याई ज्यूनार गराउनु तथा पछि धिराजको पुरा को अन्नखाई मात्र फर्कने नियम थियो। त्यसै दरबारमा लालित पालित भएका स्वाभिमानी देश तथा नरेश भक्त होमनाथले जंग-बहादुर किंवा तिनका उत्तराधिकारीहरुलाई "नराणांच नराधिप" न मानि तिनीहरुका लूटेश्वरी स्वेच्छाचारका विरुद्ध खड्गहस्त हुनु स्वाभाविक कुरो थियो। उसमाथि होमनाथ विचक्षण राज-नीति पटु शिक्षित तथा सुसंस्कृत पुरुष थिए। तिनी संस्कृतका योग्य विद्वान्, हिन्दी र बंगलाका ज्ञाता तथा अंग्रेजी बाट पनि परिचित थिए।

होमनाथ उपाध्यायका पिता कल्लेरी नगरका स्वामी पं० नन्दलाल मुखिया खतिवड़ा उच्च कुलीन धरानियाँ तथा राजभक्त पुरुष थिए। इनले सम्वत् १६२२ सालमा आफ्ना कल्लेरीमा वग्ने त्रिशूली गंगाको धारलाई डाँडो काटेर वाँधी प्रतिकूलगामी तुल्याएर ३।४ कोसको जमीन खेती योग्य बनाएका थिए। नन्द-लालका त्यस प्रयत्नलाई पहिले जंगबहादुरले अति दुस्कर मानेका थिए, तर बाँध बाँधेर खेति योग्य बनेको विशाल भूभागलाई देखि चकित भएर नीजले पं० नन्दलालको ठूलो प्रसंसा गरेका थिए।

मकवानपुर नरेश राजा मुकुन्दसेन द्वितीयले सन् १६४२ मा होमनाथका पूर्व पुरुष श्रीशंकरखतिवडा माथि प्रसन्न भएर कल्लेरी को इलाका वितलब, सर्वाङ्ग माफी विर्ता र त्यस इलाकाको शास-नाधिकार समेत ताम्रपत्रको सनद गरी दिएका थिए। त्यसको क्षेत्रविस्तार पुग न पुग १८।१६ कोशको घेरोमा छ। कल्लेरीको पूर्व सीमा त्रिशूली गंगा, पश्चिम सीमा धाधिङ्ग अड्डा, उत्तर सीमा कोसी खोलो, दक्षिण सीमा अदुवावारीले सीमित गरिएको छ।

महाराजाधिराज रणबहादुरशाहले वीर्ता अपहरण नीति ग्रहण गर्नु भन्दा पहिले कल्लेरीका स्वामीहरुको अधिकार आफ्ना इलाका भित्र सामन्त राजानुरुप नै थियो। कल्लेरी इलाकाका स्वामी श्रीमुकुन्दजोशीखतिबडाले श्री राजा पृथ्वीनारायण शाहका विजयाभियानका बखत गोरखालीहरुलाई ठूलो मदत दिएका थिए। त्यसै कारणले गोरखेश्वर प्रतापी श्री ५ पृथ्वीनारायण बाट कल्लेरीका खतिबडाहरुको अधिकार तथा संमान यथावत् स्वीकार गरिएको थियो। त्यस वेला सम्म आफ्ना इलाकामा पर्ने त्रिशूली गंगाका कल्लेरी घाट बाट भोट प्रदेश तिर जाने माल हरुको भंसार समेत कल्लेरीका वीर्तावासको रकम हुन्थ्यो।

सन् १८५४ सम्बत् १८८१ मा तिब्बतीय युद्धलाई नेपालबाट हिंडेको गोरखाली सैन्यले कल्लेरी घाटबाट तर्नु परेको थियो। कल्लेरीका स्वामीहरुको अनुमति प्राप्त न गरी त्यस घाटबाट तर्न खोज्ने गोरखाली सैन्य दलको कल्लेरी घाटका घाटवालहरुले विरोध गरे। त्यस कुराले धीरशम्सेर संग कल्लेरीका स्वामीहरु को एक पटक झडप पनि भएको थियो। पछि नेपालामात्य जंगबहादुरले त्यस कुरालाई मैत्री पूर्ण रीतिले निपटाई कल्लेरीका स्वामी बाट अनुमति गराएर मात्र त्यस घाटलाई गोरखा सैन्यले व्यवहार गर्न पाएका थिए। सुब्बा टंकनाथ, सुब्बा हेमनाथ उपाध्यायका पाला सम्म पनि आफ्ना इलाकाको न्याय व्यवस्था राजोचित कोतस्थान तथा कैदी राख्ने झ्यालखानहरु कल्लेरी को आफ्नै थियो।

नन्दलाल मुखिया खतिबडाका पितामहहरु जेठा कालू जोशी खतिबडा, माहिला शिवु जोशी खतिबडा, कान्छा धनंजय खतिबडा तीन भाई थिए। महाराजाधिराज रणबहादुर शाहले कल्लेरीका अधिकारमा हस्तक्षेप गर्न खोजेकाले कालू जोशी खतिबडाले तात्कालिक नेपालामात्य दामोदर पाण्डे र भारदार हरुले सन् १८००मा राजा रणबहादुरलाई सिंहासनच्युत गर्न गरेको प्रयत्न मा सहयोग दिएका थिए। त्यसै अपराधमा भारतबाट फर्कि सन् १८०४ मा पुनः राज्यासन ग्रहण गरे पछि राजा रणबहादुर शाहले कालू जोसी खतिबडालाई काशी निर्वासन तथा माहिला शिवु खतिबडालाई आजन्म रिडीवास दिएका थिए। कान्छा धनंजय मुखिया खतिबडा त्यस बखत ६ मैन्हाका बालख हुनाले बाँचे। इनै धनंजय मुखियाका नाती नन्दलाल मुखिया खतिबडा थिए। महाराजाधिराज रणबहादुर शाहका पाला देखि कल्लेरीको प्रतिनिधित्व सर्वथा विवाद रहित भएको थिएन। अन्तमा महा-

राजाधिराज सुरेन्द्रवीर विक्रमशाहले आपना पालामा त्यसको उत्तराधिकार निज पं० नन्दलाल मुखिया खतिवडाका नाऊँमा गरी त्यस विवादको अन्त गरि बक्सेको थियो। इनै नन्दलाल मुखिया खतिबडाका लक्ष्मीप्रसाद उपाध्याय खतिवडा, टंकनाथ उपाध्याय खतिबडा, होमनाथ उपाध्याय खतिवडा नाऊँका तिन छोरा भए। उक्त तीन भाईकी पूज्या माता श्री धर्मशीलादेवीले तात्कालिक भावी सम्राट् वलेट महाराज त्रैलोक्य वीर विक्रमशाह-देव लाई दुग्धपान गराएकी थिइन्।

वलेट महाराज त्रैलोक्यवीरविक्रमशाहदेव बाट आफ्ना सम-वयस्क मित्र तथा पारिषद होमनाथ उपाध्याय तथा निजका दाजू-हरु लक्ष्मी प्रसाद उपाध्याय, टंकनाथ उपाध्याय लाई बाल्या वस्थैमा महाराजाधिराज सुरेन्द्र वीर विक्रमशाह बाट राज्यको संमानोचित पदमान बक्सिएको थियो। होमनाथ उपाध्यायले आफ्ना ६ वर्षका उमेरमा लेफ्टिनेन्ट तथा ११ वर्षका उमेरमा सुव्याको पद तथा त्यस्का अनुरुप जागीरको भूभाग पाएका थिए।

देशको दुर्भाग्यजनित अवस्था र स्थायी तथा वंशानुक्रामिक प्रध्यानामात्य पद प्राप्त गर्ने जंगबहादुरको स्वेच्छाचार तथा अत्याचार बुझ्न सक्ने अवस्था भए पछि नेपाल राजवंश माथि प्रधानामात्य पदाधिकारीहरुको त्यो अप्रत्यक्षको अनुसासन नबयुवक वलेट महाराजलाई दुःसह नियंत्रण हुन थाल्यो। कँवरखलकका राणाहरुका स्वेच्छाचारले उत्पीडित जननीजन्मभूमि तथा शोषित प्रजाजनको कष्ट देखी तिन्को हृदय चिरित्र लागेको थियो। निजले त्यस प्रथालाई तोडी, कँवर कमारो [ तिन्ताक सम्म राजा सुरेन्द्र जंगबहादुरलाई प्यारो गरि, समधी, जंगबहादुर, जंगे, किम्बा कंवरकमारो भनी संबोधन गर्दथे ] को विनाश र जननी जन्म भूमि तथा प्रजाजनको उद्धार न गरे सम्म आफुले श्रीपंच समेत

लगाउने छैन भन्ने प्रतिज्ञा गरेका थिए। त्यस प्रतिज्ञानुसार निजले मृत्यु पर्यन्त श्री पेंच धारण गरेनन्। त्यस प्रतिज्ञा र परामर्श मा वलेट महाराजका समवयस्क मित्र सुब्बा होमनाथ उपाध्याय सर्व प्रथम तिन्का सहयोगी भए।

सम्वत् १९३३ सालमा शिकार खेल्न जंगबहादुर पथरघट्टा गएका थिए। त्यै शिकारमा हात्ती बाट लोटेर, झाडा वान्ताको वेरामीले तिन्को मृत्यु भयो। जंगबहादुरको त्यस किसिमले मृत्यु भएको समाचर धीरशम्सेर वाहेक अरु कसैले थाहा पाएनन्। धीरशम्सेरले त्यस समाचारलाई दबाई कपटाचरण द्वारा वलेट महाराजको सवारी पथरघटा तिर पठाए। त्यहीं सुअवसरमा पागल राजाधिराज सुरेन्द्रवीरविक्रमशाहबाट बक्साई रणोद्दीप सिंह लाई नेपालामात्य पदमा तथा जगतजंगलाई कम्पाउन्डर ईन चिफ पद मावहाल गराए।

यता पथ्थरघट्टा सवारी भएका वलेट महाराजले जंगबहादुरको मृत्यु संवाद सुनि आधै मार्गवाट नेपाल फर्कि वक्सियो। नेपाल पुगेर धीर शम्सेरको त्यस्किसीमको कपटाचरण देखि निजलाई निकै क्रोधित र मर्माहत तुल्याएको थियो। त्यसै वेला सुब्बा होमनाथले परिस्थितिको परिचय दिएर पुराना भारदार हरुको संगठन गरी मौकामा कार्य गरे सफलता पाइने छ भन्ने बुझाई निजको उद्वेगा र क्रोधलाई शान्त गरे। त्यसै दिन देखि धीर शम्सेरका प्राणनाशका निमित्त यउटा दलको संगठन हुन थाल्यो। चाँडै नै त्यस दलमा पुराना भारदार प्रधान मंत्री काजी खलक लगायत जम्मै भारदारहरु संमिलित भए।

धीर शम्सेरको निरंकुशताले दुई तीन मैन्हामा आफ्नो वास्तविक रूप प्रकट गर्न थाल्यो त्यसका फल स्वरूप जंगबहादुर पुत्र जगतजंगको समेत तिन्सग विरोध भयो। त्यहि अवसरमा

सुब्बा होमनाथले जंगत्जंगलाई आफ्ना दलमा मिलाए। त्यस किसिमले वलेट महाराजका त्यस दलमा तात्कालिक कमान्डर-इन-चिफ जगतजंग राणा कँवर, जंगबहादुरका माहिला भाई बमबहादुरका पुत्र बमविक्रम कँवरराणा, महात्मा भीमसेन थापाका नाति र प्रधानमंत्री माथवरसिंह थापाका छोरा कर्णेल श्रीविक्रमसिंह थापा, खवास वंशका प्रधानमंत्री गंगासिंहका पौत्र लेफ्टेन उत्तरध्वज, मेजर संग्रामसूर विष्ट, सुब्बा संकनाथ उपाध्याय, सुब्बा होमनाथ उपाध्याय प्रभृति अनेक युवक भारदार हरु संगठित भई गंभीर विचार विमर्श गरी सबैले धीरसम्शेरको त्यो निरंकुश हस्तक्षेपको अन्त गर्ने प्रतिज्ञा गरे।

संगठन भयो, विचार स्थिर भयो, प्रतिज्ञा समेत भयो। तर नियतिलाई त्यो मंजूर थिएन। सबै कुरा ठिक भई कार्य साधनको दिन तथा तिथि समेत निश्चय भइसके पछि एकाएक जगतजङ्ग ले वरखी भरी हत्याकांडमा संमिलित हुने असमर्थता प्रकट गरे-कोले त्य कुरा केहि दिनलाई स्थगित भयो।

यसै बीच रणोद्दीप सिंह प्रधानामात्य भएको एघारौं महिना मा वलेट महाराजको अकस्मात् एकदिनका पीडाले मृत्यु भयो। तिनको मृत्यू विष प्रयोगले भएको हो। भन्ने सबैले निश्चय माने। वलेट महाराजका मृत्यु पछि नवगठित दल विघटित भयो। त्यस् घटनाका चार मास पछि स्वयं धीरशम्शेर नेपालका कमान्डर-इन-चिफ वहाल भए।

कालगति विचित्र छ। वलेट महाराजका मृत्युका तीन वर्ष पछि सन् १८८० मा भादगाऊँका वंदी वृद्ध राजा राजेन्द्र विक्रम-शाहको देहावसान भयो। त्यसैका एक वर्ष पुग्दा न पुग्दै सन् १८८१ मा महाराजधिराज सुरेन्द्रवीर विक्रमशाह पनी परलोक सिधारें। त्यस पछि नेपाल राजसिंहासनको उत्तराधिकारी वलेट

महाराजका एकमात्र ५ वर्षे शिशु पुत्र पृथ्वीवीर विक्रमशाह होइ-बक्सियों। त्यस किसिमले शिशु राजा पाएर नमक हराम धीर-शम्शेरका प्रसन्नताको पारावार रहेन। त्यस्का फलस्वरूप त्यस घटनाका केहि दिन उपरान्त कँवरखलकका बाहेक अन्य साहेबज्यू र भारदारहरुको नेपाल दरवारको ढोका बन्द भयो। यस किसिमले श्री ५ नेपालेश्वर प्रतापी पृथ्वीनारायणशाहका सातौं पुस्तामा श्री ५ वंशमा एकमात्र दुधे बालख राजा पाएर श्री पृथ्वी नारायण शाह बाट अन्य राज्यबाट भागेर आई शरण पाई भएका सेवक राम-कृष्णकँवरका संतान जंगबहादुर तथा तिन्का उत्तराधिकारी कँवर खलकका राणाहरुले आफ्ना अनेक पुस्ता देखी खाई आएको नमक हरामी गरी शिशु राजालाई दरवार भित्र कैद गरि नेपाल देशका लूटको एकाधिपत्य बलियो तुल्याउने कृतघ्नताको कार्य गर्ने मौका भेट्याएका थिए।

त्यस घटनाले नेपालका यावत् साहेबज्यू र भारदारहरुका हृदयमा ठूलो अघात गरायो। तिन्का हृदयको प्रसुप्त अग्नि पुनः प्रज्वलित भयो। स्वर्गवासी बलेट महाराजा त्रैलोक्य वीर विक्रमशाहले संगठित गरिएका नवयुवक भारदारहरु मध्येका कर्णेल श्री विक्रमसिंह थापा श्री अमर विक्रम थापा, उत्तर-ध्वज खवास, कर्णेल इन्द्रसिंह टंडन छेत्री, कर्णेल चन्दसिंह पान्डे, मेजर संग्रामसुर विष्ट, खजाञ्ची शिवप्रसाद, सुब्बा दिग्वि-जय, भैरवप्रसाद अर्ज्याल, सुब्बा टंकनाथ तथा सुब्बा होमनाथ प्रभृति राज्यका ५२ जना युवक भारदारहरु शाहजादा नरेन्द्र वीरविक्रमशाहका नेतृत्वमा संगठित भए तथा धीर शम्शेर र कँवरखलका राणाहरुका प्राणनाशका निमित्त कटिबद्ध भए। त्यस संगठित दलका उपनायक श्री विक्रमसिंह थापा मानिएका थिए।

संयोगले त्यै वीचमा संगठित नवयुवकहरुलाई ठूलो अवसर समेत आई परेको थियो। सम्वत १९३७ सालका मंसिर महिनामा रणोद्दीसिंह शिकारका निमित्त तराई तिर झरेका थिए। जगत्‌जंग पनि तिर्थ यात्रालाई श्रीक्षेत्र जगन्नाथ पुरी गएका थिए। त्यसै वर्ष माघि संक्रांतिका एक दिन पूर्व आफ्ना सैन्य तथा भृत्यहरुका साथ ५२ जना भारदारहरुले एक्कासि रात्रीमा थापाथली माथी आक्रमण गरि धीर सम्शेरलाई मार्ने निश्चय गरे। धीरशम्शेरलाई मारेर कँवरखलकका राणाहरुको दमन गरी नेपालेश्वर श्री ५ पृथ्वीवीरविक्रमशाहका अभिभावक स्वरूप शाहजादा महेन्द्र वीर विक्रम शाहवाट नेपालको शासन सुधार द्वारा कुनै एक व्यक्ति विशेषको महामंत्री पद हटाई पुरानु परिपाठीले योग्य मंत्री सेनापती तथा प्रजाजनको सहयोगले शासन व्यवस्था चलाउने योजना वनाएको थियो। तर त्यो आयोजना पनी दुई कुराले विफल भयो। प्रथम काल विलम्ब दोश्रो विश्वासघातकता।

खवास खलक तथा थापा खलकको शत्रूता पुरानु थियो। त्यसं दलका श्री विक्रम थापाको प्रधान्यता हेरी खवास खलकका उत्तरध्वज लाई पोल्न थाल्यो। आफ्ना त्यै क्षुद्रवंश द्वेषले उत्तरध्वजले नेपाल नरेश, देश, भारदार तथा प्रजाजनका मुख्य शत्रु कँवर खलकका राणाहरुको नाश गर्ने महान् उद्देश्य माथी जलाञ्जली दिई दलको यावत् आयोजनको सम्पूर्ण वृतान्त धीरसम्शेरमा व्यक्त गरे।

नवयुवक भारदारहरुको संगठन तथा त्यस्को विवरण सुनेर धीरशम्शेर अतिशय भीत र व्याकुल भए। निजले तुरन्त आफ्ना भाई भतीजाहरु संग सल्लाह गरि भतिजा वम विक्रमलाई त्यस्को प्रति विश्वास गर्ने आज्ञा दिएकाथिए वमविक्रमले पनि त्यसै दिन;

रात्रीमा एक्कासि उपरोक्त ४१ जना भारदारहरुका घरमा घेरा हाली भारदारहरुलाई वेंद गरें। त्यै दिन शाहजादा नरेन्द्रवीर विक्रमशाह पनी आफ्ना दरबारमा नजरबन्द गरिएका थिए।

यस किसिमले गैह्र भारदारहरु बन्दी भए पछि तिन्का विचार को नाटक गरियो। बिचारका फैसलाबाट शाहजादा नरेन्द्रविक्रम-शाह माथी बालक महाराजाधिराज पृथ्वी वीर विक्रमशाहलाई राज्यच्यूत गरि स्वयं महाराजाधिराज हुन खोज्ने तथाकथित अपराध लगाएर देश निर्वासन तथा आजन्म नजरबन्द गरिने फैसला गरिएको थियो। श्री विक्रमसिंह थापा, अमरविक्रम थापा संग्रामसूर विष्ट प्रभृति ४१ जना वहादुर नवयुवकहरुलाई तथा-कथित षड्यंत्रमा संमिलित भई गाथगादी ताक्ने अभियोगमा पोढे द्वारा काटिने आज्ञा मिलेको थियो। सुब्बा टंकनाथ, सुब्बा होमनाथ प्रभृति १० जना ब्राह्मण नवयुवकहरुलाई पनि तथा-कथित षड्यंत्रमा संमिलित हुने आरोपमा मुडेर आजन्म वन्दी गरिने सजाय मिलेको थियो।

त्यस मुद्दामा बन्दीहरुका विरुद्ध मुख्य साक्षि उत्तरध्वज-खवास थिए। तिन्को साक्षि भएका दिन उत्तरध्वज बाट संगठन को रहस्य खुलेको हो भन्ने कुरा बन्दीहरुले थाह पाए। त्यसले गर्दा मेजर संग्रामसूर विष्टले स्वर्गवासी वलेट महाराज द्वारा संगठित प्रथमं आयोजनमा उत्तरध्वज, जगतजङ्ग र वमविक्रमलै सामेल भएको यावत कुरा भनेर कर्णेल अमृतसिंहलाई यो सबै कुरा थाहा छ भनी प्रकट गरे।

पूर्व षडयन्त्रको रहस्य खुल्ना साथं वमविक्रम तुरन्त बन्दी भए। वमविक्रम स्वयं आफ्ना दोषले बन्दी भएका हुन्। प्रथम षडयन्त्रमा रहेको हुँदा निजले दोश्रा षडयन्त्रमा धीरशम्सेरको सहायता गर्नमा युक्ति पुऱ्याएनन्। वमविक्रम

वन्दी भए पछि अमृतसिंहको साक्षि भयो। अदालतमा कर्णेल अमृतसिंहले पूर्व आयोजनको आद्योपान्त वर्णन गरे। निजले त्यस षडयन्त्रमा उत्तरध्वज, जगतजङ्ग, वमवीरविक्रम सामेल भएको स्वीकार गरी सुब्बा होमनाथ द्वारा जगतजङ्ग त्यस दलमा सम्मिलित भएको कुरा पनि भन्दा भए। अन्तमा मुद्दाका फैसलानुरूप शाहजादा नरेन्द्रविक्रमशाहका साथ वम-विक्रम पनि अंग्रेजहरुका हातमा सुम्पिएर र आजन्म भारतवर्षका चुनारका किल्लामा कैदी गरिए। नेपालका राज-पुरुष वर्गले कँवरखलकका राणाहरु द्वारा सुपुर्द गरिएर अंग्रेज-हरुको बन्दी हुने यो दोश्रो घटना हो। श्रीक्षेत्र दर्शन गरि नेपाल फर्कन लागेका बखत भारतका वाइसरायले तार द्वारा रोकेकोले जगतजङ्गले पनि भारतवर्षमा निर्वासित जीवन बिता-उनु पऱ्यो। विश्वासघाती पोलाहा उत्तरध्वजलाई कर्णेल पद मिल्यो। तर अन्त्यमा विश्वासघातको पापका फलस्वरूप कुष्ट रोग भई कीरा परी अत्यन्त कष्ट पाई तिन्ले मर्नु परेको थियो।

श्री विक्रमसिंह थापा, अमरविक्रमसिंह थापा, संग्रामसूर-विष्ट हरुको कायरतापूर्ण निर्मम रीतले १८।१८ पटकको खुँडाको चोट गरी गर्धन छुट्याइएको थियो। ती वहादुर शहीदहरुले आफ्ना गर्धनमा पर्ने खुँडाको १८।१८ पटकका चोटलाई सह्य गरी आफ्ना प्राणको धुकधुकि रहे सम्म "लौहान" लौहान भन्दै वीरगति प्राप्त गरेका थिए।

मुडिएर आजन्म बन्दी हुने सजाय पाएका सुब्बा टंकनाथ, सुब्बा होमनाथ प्रभृति दस जना ब्राह्मणयुवकहरुको कपाल मुंडेर, सुगुँरको छाउराको माला पैह्राई, गदहा माथि सवार गराई, शहर भरी प्रदर्शन गरियो। श्री ५ दरबारका मानिसहरुलाई आतङ्कित गर्न तिनीहरुलाई हनुमानढोकादरबारका सम्मुख ल्याएर

उभ्याइएको थियो। देश तथा नरेश भक्त ती नवयुवकहरुको दुर्दशा देखेर दरबारका समस्त जन हाहाकार गरी रुन थाले। तर वीर प्रसवा माता धर्मशाला देवीका नेत्रमा नाऊलाई पनि आँसु थिएन। तिन्को मुहुडा प्रसन्न तथा झन् तेजिलो भइ रहेको थियो। दरबारका महिलाहरुले उत्सुकता साथ "तपाईंका दुवै पुत्र रत्न यस्तो निकृष्टतम यातना भागी आजन्मलाई बन्दी भई गई रहेका बखत पनि तपाईंको मुख झन् प्रसन्न देख्तछौं किन" भन्ने प्रश्न गरे। त्यस प्रश्नका उत्तरमा धर्मशीला देवीले "किन मैले शोक गर्ने, देश वा नरेश भक्तिका मार्गमा एक दुई ता के मेरा सय जना पुत्र भएका भए र तिनीहरुले पनि यसै गरि मर्नु परेको भए म आफुलाई धन्य मानि नैसर्गिक सुखको नै अनुभव गर्ने थिए" भन्ने उत्तर दिइन। कस्तो भव्य विचार, कस्तो दिव्य भावना, अन्तमा आफ्ना साथीहरु समेत सुब्बा टंकनाथ तथा सुब्बा होमनाथयावत् जीवनलाई बन्दी गरी पाल्पा जेलमा पठाइएका थिए।

डेढ वर्षको जेलजीवन बिताई सम्बत् १९४० जेठ मासका नवमीका दिन कुनै प्रकार उम्की सुब्बा टंकनाथ तथा सुब्बा होमनाथ बुटौलको मार्ग बाट भारतवर्षमा पसे। दैवात् त्यस ठाऊँमा पनि यौटा विघ्न आई परेको थियो। तर त्यो विघ्न पछि ती दुवै वीर पुरुषहरुका निमित्त ठूलो सम्बल नै भयो। अर्थात् शरहद नाँघेका ती दुवै भाइलाई कुनै एक कँवरखलकका राणा अनुचरले चिन्हे छ। त्यस्ले स्थानीय दारोगालाई ती दुवै जना नेपालका राजनीतिक कैदी हुन्, तिन्लाई समातेमा ठुलो पुरष्कार पाउने लोभ देखाई समात्न लागायो। दारोगा द्वारा समातिएर दुवै भाईले त्यो रात थानाका हवालातमा बिताउनु परेको थियो।

सोलिपल्ट गोरखपुरका अंग्रेज जिलाधीशका कचहरीमा तिनीहरु उपस्थित गरिए। राजनीतिक कैदीहरुलाई त्यस किसिमले पक्रनु अवैध हो भन्ने जिलाधीशले बुझेको थियो। तिन्ले त्यस दारोगालाई निकै हप्काएर त्यस बाट अपमान गरे बावत ५००) रुपया दिलाई माफी समेत माग्न लगाई दुवै भाइलाई मुक्त गरे। भारत प्रवेश मार्गमा मिलेको त्यो ५००) रुपयाले दुवै भाइहरुलाई ठूलो काम दियो। ती दुवै भाई गोरखपुर बाट सोझै कलकत्ता गए।

त्यसै साल आफ्ना कलकत्ता प्रवासकालमा सुब्बा होमनाथले बंगला बंगला भाषामा "वर्तमान इतिवृत्त" भन्ने यौटा पुस्तिका लेखी प्रकाशित गराएका थिए। केहि काल पछि सुब्बा टंकनाथ तथा सुब्बा होमनाथ दुवै भाई उदयपुर राज्यमा गई वस्ता भए। स्वतंत्र प्रकृतिका सुब्बा होमनाथलाई उदयपुर राज्यको सीमित वातावरण मन परेन र तिनी पुग न पुग २।३ वर्ष पछि काशी फर्के। दाज्यू टंकनाथ उपाध्यायले आफ्नू जीवन उदयपुर राज्य मै विताउनु भयो। निजलाई उदयपुर राज्यकोष बाट १२५) महिना भत्ता मिल्दथ्यो। काशीवासी सुब्बा होमनाथलाई पनि उदयपुर राज वुदी राज, काश्मीर राज, तथा बनारसका राजकोष बाट सब मिलाई ३००) प्रति मास भत्ता मिलेको थियो। तात्कालिक दरभङ्गा नरेश महाराजा लक्ष्मणेन्द्रसिंह संग सुब्बा होमनाथ उपाध्यायको पुरानु परिचय तथा मित्रता थियो। त्यसै साल महाराजा लक्ष्मणेन्द्रसिंह पनि काशी आएका थिए। निजले आफ्ना पुराना मित्र सुब्बा होमनाथको त्यो अवस्था देखि वलान् उन्का नाऊमा आफ्ना राज्यको दिघिया मौजेको १००) वीघा जमीन लेखिदिएका थिए।

सन् १८८५ सम्बत् १९४२ मा धीरशम्सेर पुत्र वीरशम्सेर १७ भाई हरुले आफ्ना काका नेपालामात्य रणोद्दीपसिंहको हत्या

तथा जंगबहादुर आदि ६ भाई खलक संतानहरुको कत्लेआम गरी नेपालामात्य पदमा स्वयं वहाल भएका थिए। त्यसै कत्ले-आम कालमा भागेर वृटिश लैन पसी, ज्यान जोगाउने रणवीर जंग, जीतजंग, पद्मजंग, ध्वजनरसिंह तथा अमरजंग प्रभृति लैन सैन्यका संरक्षणना भारत सीमा सम्म पुर्‍याइएर काशी आएका थिए। सुब्बा होमनाथ संग तिनीहरुको काशीमा भेट-वाट भयो। निर्वासित भादारहरुका त्यस मिलनले तिनीहरुका चित्तमा नेपाल माथी सशस्त्र आक्रमण गर्ने उत्साहको समावेश भयो। त्यस आयोजन लाई सफल गर्न सुब्बा होमनाथले आफ्ना बंगाली मित्रहरुका सहायताले फ्रेंच इंडिया चन्द्रनगर वाट अस्त्र शस्त्र को संग्रह गर्नथाले।

यस किसिमले अस्त्र-शस्त्रको संग्रह गरी सम्बत १६४४ सन् १८८६ मा नेपाल तराईका जलेश्वर भन्ने स्थानमा सुब्बा होमनाथ ले प्रवेश गरे। साथ साथ भैरव बहादुरले हनुमान् नगर तथा शेरनरसिंले वरेवामा प्रवेश गरेका थिए। रणवीर जंग त्यस बेला मोतिहारीमा रही युद्धको गतिविधि तथा घटे बढेका शस्त्रास्त्रको प्रवन्ध मिलाउन वसेका थिए।

सुब्बा होमनाथ उपाध्यायहरुले सहजै जलेश्वर हनुमान नगर तथा कलेवाको कचहरीलाई आफ्ना अधिकारमा गरें। तिनीहरु ले स्थानिय नागरिक र प्रजाजनलाई मिलाएर, जेलका कैदीहरु-लाई समेत मुक्त गरी आफ्नो सैन्यवल बढाएका थिए। त्यस युद्धमा हनुमान नगरका सुब्बा गोरखसिंह कँवर सुब्बा होमनाथका गोलीले मारिए पछि हनुमाननगर मालको समस्त धन सुब्बा होमनाथका सेनाले लुटेको थियो। त्यस किसिमले आक्रमण-कारीहरुले सफलता पाउदै गएको समाचारले नेपालमा वीर-शम्सेरहरु थकथमान हुदै गएका थिए। जंगबहादुरका मन्त्रित्व

कालमा जगतजङ्गहरुका वलेका प्रतापाग्निका सम्मुख धीरशम्सेर तथा तिन्का पुत्र वीरशम्सेरहरुको आर्थिक अवस्था निकै दुर्दशा पूर्ण थियो। त्यस बखत सम्पन्न कुलका तथा वलेट महाराजका कृपाभाजन सुव्वा होमनाथ उपाध्याय बाट वीरशम्सेरहरुले समय समयमा आर्थिक मदत लिने गरेको थियो। आफ्ना त्यै पूर्व-कालीन मित्रतापूर्ण सम्बन्धको सम्झना गराई वीरशम्सेरले त्यस आक्रमणकालमा सुव्वा होमनाथलाई आफ्ना तरफ मिला-उने प्रयत्न गरेका थिए। तर स्वाभिमानी सुव्वा होमनाथले वीरशम्सेरका त्यस आमंत्रणलाई लत्याई, तिन्लाई स्वयं रणक्षे-त्रमा आउने आह्वान गरे। नेपालका निर्बोध बिजुली गारदका संरक्षणमा प्रचण्ड भुजदंड धारण गर्ने गोत्रपीडक पितृघाती कायर वीरशम्सेरलाई रणक्षेत्रमा आउने साहस कसरि हुन्थ्यो। तिन्ले तुरन्त गोरखदल, भैरवदल, कालीदल गरि ३ पल्टन सेना लाई कम्यान्डिङ्ग कर्णेल कुलविक्रम राणाका नेतृत्वमा आक्र-मणकारीहरुको सामना गर्न खटाई पठाए। नेपालको सुशिक्षित तथा शस्त्रास्त्रले सज्जित सैन्यदलका सम्मुख मुट्ठी भरी सैन्य भएका तथा टोटाका कमीले गोरखपुरे ढ्याकको प्रयोग गर्ने युवकहरुको सेना काहाँ सम्म टिक्न सक्दथ्यो। ता पनी साहसी सुव्वा होमनाथले नेपाली सेना सँग एक पटक वल परीक्षा गर्न बाँकी राखेनन्। रणक्षेत्रमा स्वयं सुव्बा होमनाथ अग्रसर भई सेनाको संचालन गर्ने गरेका थिए।

नेपाली सेना आएका प्रथम दिन युद्धारम्भका पहिले सुव्वा होमनाथ ते दुवै सैन्यका माझमा आएर नेपाली सैन्यलाई सम्बो-धन गरि भने:—"हे नेपालका वीर सैनिक हो! तिमीहरु आफ्ना संसार ज्ञानसून्य दस वर्षे बालख राजालाई कैदी तुल्याई दुनियाका सम्पर्क बाट छुट्याई राख्ने र आफै महाराजाधिराज तुल्य प्रदर्शन

गर्ने नमकहराम वीरशम्सेर प्रभृतिलाई मानछौं कि आफ्ना महाराजाधिराजलाई मुक्त गरि सबै प्रजाजनको संयोगले राज्य-व्यवस्था चलाउन चाहने जंगबहादुरका छोरा गोरेजर्नेल रणवीर-जंगलाई चाहन्छौं" त्यस कुराले नेपाली सैनिकहरु एक छिन ता अकमक्क परें। पछि तिनीहरूले सल्लाह गरि "हामी आफ्ना प्राण भन्दा प्यारा महाराजाधिराजको राज्यासन चाहन्छौं। तथा जंगबहादुरका छोराका नेतृत्वमा त्यो कार्य हुन्छ भने हामी वीर-शम्सेरका विरुद्ध हुन तैयार छौं। खै रणवीरजंग काहाँ छन् भनी कराउन थाले। दुर्भाग्यले रणवीरजंग त्याहाँ थिएनन्। नेपाली सैन्यका मागका अनुसार रणवीरजंगलाई उपस्थित गर्न न सकेकोले युद्ध प्रारम्भ भयो। दुई चार दिनका युद्ध पछि विफलीभूत भएर आक्रमणकारीहरुले पछि हटी भारतमा पस्नु पऱ्यो।

त्यसै साल फरवरी महिनामा भारतीय भायसराय लार्ड डफरिन सँग भेट गर्न वीरशम्सेर भारतवर्ष आएका थिए। त्यस यात्रामा निजको काशी आउने समेत विचार थियो। वीर शम्सेरको काशी आउने समाचारले काशीमा बसेका रणवीरजंग तथा सुब्बा होमनाथ प्रभृतिहरुले यउटा अरु सुअवसर आई परेको देख्न थाले। तिनीहरुले काशी आई वीरशम्सेरले अवश्य गंगा स्नान गर्ने छन्। त्यस बखत गोताखोर मानिसका सहायताले तिन्लाई गंगा भित्र तानेर जल समाधि गराउने कार्य-क्रम बनाएको थियो। त्यस्का निमित्त गोताखोर मानिस संग विचार विमर्श समेत भै सकेको थियो। त्यस विचारको यावत कुरा गुप्त रितले अमरजंगले वीरशम्सेरलाई विदित गराए। त्यस्ता किसिमले आफ्ना प्राणनाशको षड्यंत्रको समाचार पाएर

प्रचण्ड भुजदण्ड युक्त वीरशम्सेर घोडाको डाक द्वारा भागेर नेपाल पुगेका थिए।

त्यस घटना पछि सुब्बा होमनाथले असीलाई छाडी मसीलाई ग्रहण गरी आफ्नो सैनिक जीवनलाई साहित्यिक जीवनमा परिणित गरे। निजले सम्बत् १९५० देखी लगायत १९५३ सम्ममा महाभारत विराटपर्व, रामायण रामास्वमेधकाण्ड, श्रीमद्भागवत कृष्णचरित्र, महाभारत सभापर्व, नृसिंहचरित्र आदि पुस्तकहरुको रचना गरे तथा सम्बत् १९५४ सालमा विन्ध्यवासिनी प्रेस स्थापित गरी उपरोक्त ग्रन्थहरुलाई प्रकाशित गराए। त्यस प्रकार निजले आफ्नु राजनीतिक पराभव बाट संतप्त भएको हृदय लाई शान्ति दिने चेष्टा गरेका थिए।

त्यसै बीचमा सम्बत् १९५७ सन् १९०१ मा वीरशम्सेरको मृत्यु भई नेपालामात्य पदमा देवशम्सेर बहाल भएका थिए। आफ्ना नामानुरूप देवशम्सेर देवता पुरुष थिए। निजलाई आफ्ना स्वामी महाराजधिराजका प्रति विशेष भक्ति थियो। नेपाल शासनाधिकारमा आफ्ना वंश द्वारा गरिने धाँधलि तथा स्वेच्छाचार तिन्लाई कत्ति मन परेको थिएन। निजले आफु महामात्य हुना साथ नेपालमा स्थान स्थानमा पाठशालाहरुको स्थापना गराए। निजले राज्य शासन प्रबन्ध सुधार गरि पार्लियामेन्ट प्रणालि ग्रहण गर्ने विचारले यूरोप बाट सलाहकार मगाउने प्रयत्न पनि गरेका थिए। देवशम्सेरको त्यो कार्य ब्रिटिस रेजिडेन्टलाई किन मन पर्दथ्यो। त्यो मौका चन्द्रशम्सेरले छोप्न बाँकी राखेनन्। आफ्नै सहोदर तथा रोजिन्दा व्याहान चरणोदक खाने भई चन्द्रशम्सेर तथा भतिजा गेहेन्द्रशम्सेरका षडयंत्रले निजले पदच्यूत भई धनकुटा छपिनु पर्‍यो। निजले मौका पाई पछि धनकुटा

बाट भागेर भारतवर्ष बसी झरीपानी भन्ने स्थानमा आफ्नु शेष निर्वासित जीवन बिताए।

देवशम्सेरकी पत्नी कर्मकुमारीदेवी बलेट महाराजाकी शाहजादी थिइन्। निजले अघि नेपाल छँदा सुब्बा होमनाथउपाध्याय लाई भाई तेहारमा टीका लगाएकी थिइन। त्यसै कारण देवशम्सेर काशी आएका वखत पत्नी कर्मकुमारीका आग्रहले तिनी काशीपुरी स्थित होमनाथका घरमा भेट गर्न आएका थिए। त्यसै वेला सुव्वा होमनाथले देवशम्सेरलाई पुनः नेपाल हिंड्ने परामर्श र त्यसमा सहायता दिने वचन दिए।

त्यस घटनाको नौ दस महिना पुग्दा न पुग्दै सन् १९०२ मा महाराजाधिराज पृथ्वीवीर विक्रमशाहको सवारीका साथ चन्द्रशम्सेर शिकारलाई तराई झरेका थिए। महाराजधिराजको सवारी भिछाखोरीमा पुऱ्याई तिनी आफु भारतका तात्कालिक भायसराय लार्ड कर्जन द्वारा आयोजित दिल्ली दरबारमा सम्मिलित हुन गएका थिए। त्यै अवसरमा देवशम्सेरले सुब्बा होमनाथका साथ अनायास भिछाखोरी पुगी नेपालेश्वर पृथ्वी वीर बिक्रमशाहलाई आफ्ना तरफ मिलाउन पाए आफ्नो लुप्त पद प्राप्त भई चन्द्रशम्सेरलाई भारत मै डल्याउने विचारले नेपाल जाने आयोजन गर्नथाले। तर तिनीहरुको त्यो विचार पूर्ण हुनु भन्दा पहिलै विश्वासघाती अमरजङ्गले त्यो सब कुरा चन्द्रशम्सेरमा लेखी पठायो। त्यो कुरा थाहा हुना साथ तुरन्त चन्द्रशम्सेर दिल्ली बाट हानिदै भिछाखोरी पुगेका थिए। निजले भिछाखोरी पुगे पछि भारत सरकार सँग लेखा पढि गरी देवशम्सेर तथा सुब्बा होमनाथ माथी राजद्रोहको अभियोगको मुद्दा चलाउने प्रार्थना गरे। चन्द्रशम्सेरका प्रार्थनाले भारत सरकारले सुब्बा होमनाथलाई दियिया मोजमा गएका वखत गिरफ्तार गऱ्यो।

पुलिस संरक्षणमा सुब्बा होमनाथ बनारस पुऱ्याइए। देवशम्सेर आफ्ना झरीपानीका घरमा नजरबन्द भएका थिए।

त्यसका केहि दिन पछि बनारसका बृटिस अदालतमा देव शम्सेर र होमनाथहरु माथी नेपाल राज द्रोहको मुद्दा चल्यो। त्यस मुद्दामा चन्द्रशम्सेरका मुख्तियार आम अमरजंग थिए। देव शम्शेर तिर वाट एलाहाबादका प्रसिद्ध व्यारिस्टर पियू साहब तथा होमनाथ तिर वाट बनारसका मुन्शी बहादुर लाल एडभोकेट पैरवीमा नियुक्त गरिएका थिए। निज पियू साहबले बड़ा योग्यता पूर्वक, नैपालका राजा पृथ्वी वीर विक्रमशाह देव हुन्, चन्द्र शम्सेर तिन्का वेतन भोगी नौकर मात्र हुन्, आफ्ना मालिक नेपालेश्वर महाराजधिराजको दर्शन गर्न नेपालामात्य पदलाई स्वेच्छाले त्याग गर्ने देवशम्शेर तथा तिन्का साथीहरुको तराईमा जान खोज्ने प्रयत्न कदापि राज द्रोह ठहरिदैन भन्ने प्रमाणित गरें। न्यायालयले पिऊ साहबका त्यस उक्तिलाई सत्य मानी चन्द्रशम्शेर तिरवाट लगाईएको झूटा अभियोगलाई खारेज गरे। मुद्दा बाट विफल भएका चन्द्रशम्सेरले भारत सरकार वाट दबाव पुऱ्याउन लगाई सुब्बा होमनाथलाई उदयपुर, बुँदी, काश्मीर तथा काशीराज वाट पाइने भत्ताहरु वंद गराएका थिए।

आफ्ना त्यस अन्तिम राजनीतिक अभियानका विफलता पछि सुब्बा होमनाथले आफ्नो विशुद्ध साहित्यिक जीवनको प्रारम्भ गरें। नेपालाभियान संकल्प भएमा निजले आफुले लेखेका ग्रंथहरु काशीका विश्वराज हरिहर शर्मा नामका प्रकाशकलाई १६०) प्रति मासमा प्रकाशित गर्ने अधिकार दिएका थिए। पछि निजले आफ्नो त्यो अधिकार स्वयं आफ्ना हातमा लिएर "सुब्बा होमनाथ केदारनाथ अध्यक्ष:—हितैषी कम्पनीका नामले बडाबाजार कलकत्ता तथा काशीमा कार्यालय स्थापित गरि भाषा-

का पुस्तक प्रकाशनको व्यवसाय प्रारम्भ गरें। त्यो कार्यालयले अद्यावधि साहित्य प्रकाशन द्वारा नेपाली जनताको सेवा गरि आएको छ। सुब्बा होमनाथ उपाध्ययको सम्वत् १९८४ सालका वैसाख मासमा पंचमी तिथिका दिन काशीमा देहावसान भयो।

सुब्बा होमनाथका एकमात्र पुत्र पं० केदारनाथ खतीवड़ाले पिता द्वारा स्थापित प्रकाशनकार्यलाई उत्तरोत्तर वढाएका थिए। निजले पनी अनेक ग्रन्थ महाभारत १६ पर्व श्रीमद्भागवत ११ स्कन्ध, श्रीमद् भगवत गीता तथा अनेक स्फूट कविता ग्रन्थहरुको रचना तथा अनुवाद गरि प्रकाशित गरेका थिए। निजको मृत्यु सन् १९४६मा अफ्ना मौजा दिघिया धरहरा गएका वेलामा भयो। इन्का ४ भाइ छोरा मद्धे जेठा कृष्णप्रसाद उपाध्यायको मृत्यु बाल्यकाल मै भएको थियो। महिला भैरव प्रसाद उपाध्ययको मृत्यु सन् १९४४ मा हृदय गति रुकनाले भयो।

भैरव प्रसाद बड़ा स्वाभिमानी उन्नत मना तथा कँवरखलक का राणाहरुका विरोधि विचारका थिए। सन् १९३७ दिसेम्बर महिनामा श्री ५ नेपालेश्वर वंसोद्भव श्री ५ रामराजा साहबको रामनगर राज्यमा राज्यारोहण भएको थियो। यस शदिमा श्रीरामराजा साहब श्री ५ वंशका परिष्कृत मस्तिष्कका वंशाभिमानी पुरुप थिए। इन्मा पूर्ण मात्रामा नेपाल राजवंश तथा देश माथी कँवर खलकका राणाहरुको अनियंत्रित शासनका प्रति विद्रोह भावता वर्तमान थियो। रामराजा साहबले सममनोभावी भैरवप्रसादलाई स्वयं काशीवाट भीकाई आफ्नो निजि मंत्री बनाएको थियो। गत यूरोपीय महायुद्धमा भैरब प्रसादका प्रयत्नले जापानी राजदूत ( कौन्सिलले ) नेपाल माथी सशस्त्र आक्रमण गर्नका लागी प्रचुर मात्रामा शस्त्रहरु दिने वचन सम्म दिएका थए। वर्मामा नेताजी सुवाषवोस द्वारा संगठित सैन्य दलका रितले

गुप्त हिसाबले जापानी शस्त्र तथा सैन्य संगठन गरी नेपाल माथि आक्रमण गर्ने योजना समेत वनी सकेको थियो।

दुर्भाग्यले त्यसै वेला रामनगर राजपरिवारमा झंझट चल्न थाल्यो तथा त्यसै झंझटले पछि मुद्दाको रूप लियो। त्यस्ता किसिमले राजपरिवारलाई मुद्दाका जालमा फंसेको ले आफ्नु नेपालाभियानको कुरा पर रहोस स्वयं राजपरिवारको ठूलो क्षति उपस्थित भएको देखी भैरवप्रसाद वड़ा चिन्तित भए। निजले आफ्ना अविरल प्रयत्नले रामराजा साहब तथा वहाँका जेष्ठ राजपुत्र शिव राजा साहब हरुमा सुलह गराए। त्यस सुलहनामा वाट राजपरिवारका प्रत्येक व्यक्तिलाई यथेष्ट अंश दिलाई सवैको चित्त बुझाएका थिए। सुलहको सम्पूर्ण कुरो को मसौदा भई सके पछि एकदिन हठात् हृदय गति वन्द भई काशीमा निजको मृत्यु भयो। तिन्का मृत्युले विचलित भएका रामराजा साहवले पठाएका तार I Lost my brother friend & well-wisher वाट निजलाई कत्रो मर्मान्तक पीडा भएको रहेछ, वुझ्न सकिन्छ। भैरव प्रसादका मृत्युले श्री ५ रामराजा मात्र हैन कि समस्त रामनगर राजपरिवार शोकाकूल भएको थियो। भैरव प्रसादका मृत्यु पछि रामराजा साहवका आदेशानुसार शिवराजासाहबका प्रयत्नले रामराजा की स्नेह परायण पत्नी श्री ५ सीता महारानी साहबले आफ्ना अंशका हरिहर पुर ग्राम को ६००) एकड़ भूभाग दिएर भैरव प्रसादका परिवारका प्रति आफ्नु सहानुभूति देखाएको छ।

पं० केदारनाथउपाध्यायका साहिला पुत्र यस नेपालका इतिहासका लेखक रामजीउपाध्याय हुन्। काहिला पुत्र देवनाथउपाध्यायको उदररोग पीडाले सन् १९४७ मा काशीमा देहान्त भयो। कन्छा गोपीनाथ उपाध्याय आफ्ना वंशोचित विद्याव्यसनानुकूल

व्यवसायको झंझट आफ्ना माथी हुँदा हुँदै पनि "नेपाली राष्ट्रीय कांग्रेस" को सहयोग गरी नेपाल बाट कँवरखलकका राणाहरुका दलगत लूट प्रणाली शासन व्यवस्थाका विरुद्ध गरिने प्रयत्न हरुमा कार्य गर्दै रहेको छन्।

सुब्बा टंकनाथउपाध्यायले शेष समस्त जीवन उदयपुरमा बिताएका थिए। निजका यामिनीप्रसाद र भवानीप्रसाद नामका दुई पुत्र थिए। यामिनीप्रसादको मृत्यु बाल्यावस्थामा भएको थियो। भवानी-प्रसाद उपाध्याय संस्कृतका योग्य विद्वान थिए। काशी बाट इन्का सम्पादकत्वमा "सुक्तिसुधा" नामको संस्कृत मासिक पत्र प्रकाशित भएको थियो। सन् १९२८।२९ ताक "तरुण गोर्खा" तथा "गोरखा संसार" नामक राष्ट्रीय पत्रहरुमा इन्का अनेक ओजस्वी राजनीतिक कविताहरुले कँवरखलकका राणाहरुको निकै पोल प्रकाश गरेको थियो। इन्को देहावसान पनि सन् १९३० मा काशी धाम मै भयो। इन्का तीन छोरा मध्ये जेठा राजाराम शर्मा, माहिला कृष्णकुमार शर्मा, कान्छा नन्दकिशोर शर्मा हिजो आज कल-कत्तामा स्वतन्त्र व्यवसाय गरी वसेका छन्।

लेखक—

उदयराज शास्त्री।

इति समाप्तम् शुभम्।

जय-नेपाल!